सूक्ष्म शब्दको जनक भयो । त्यही शब्दद्वारा ती नारायणको लिङ्गस्वरूप आकाश उत्पन्न भयो ।।३१।। त्यसपछि काल (क्षोभक), माया र अंश ( चिदाभास) को योगले भगवान्द्वारा दृश्यमान आकाशबाट आफैं उत्पन्न स्पर्शको रूपान्तर गरेर वायु बनाइयो ।।३२।। आकाशसित मिलेर त्यस असाधारण बलवान् वायुले तन्मात्रात्मक रूपको रचना गऱ्यो । त्यसपछि उसले लोकको नेत्रस्वरूपा ज्योति (तेज) बनायो ।।३३।। त्यस परमात्माको दृष्टिगोचर हुँदै तेजले आफ्नो रूप मात्रेर काल एवं माया (उपादान) को अंश ( चिदाभास र वायु ) को योगबाट रसमय जलको सृष्टि गऱ्यो ।।३ ।। फेरि उनै परमात्माको छत्रछायामा उनैबाट तेज, काल र मायाको अंशको योगबाट गन्धगुणात्मिका पृथ्वीको उत्पत्ति भयो ।।३५।। हे भव्य (विदुर) त्यसपछि जति कार्य भए, जुन कार्य र अगाडिका कारणहरूको संसर्गबाट क्रमशः धेरै गुणहरू उत्पन्न भए । जस्तै—(आकाशको एकमात्र शब्द गुण र वायुको स्पर्श गुण जब आकाशमा मिल्दछन् तब शब्द उत्पन्न हुन्छ । यसै गरी जब आकाश, वायु र तेज यी ती थरि मिसिएपछि, यी तीन रूपको रचना हुन्छ इत्यादि ) ।। ३६ ।। महादादि तत्त्वहरूका अभिमानी

दि गतः स्वं लिङ्गमात्मनः ॥ ३१ ॥ कालमायांशयोगेन तद्भवद्वीक्षितं नभः ॥ नभसोऽनुसृतं स्पर्शं विकुर्वन्निर्ममेऽनिलम् ॥ ३२ ॥ अनिलोऽपि विकुर्वाणो नभसोरुबलान्वितः ससर्ज रूपतन्मात्रं ज्योतिर्लोकस्य लोचनम् ॥ ३३ ॥ अनिलेनान्वितं ज्योतिर्विकुर्वत्परवीक्षितम् ॥ आधत्ताम्भो रसमयं कालमायांशयोगतः ॥३४॥ ज्योतिषाम्भोऽनुसंसृष्टं विकुर्वद्ब्रह्मवीक्षितम् ॥ महीं गन्धगुणाधात्कालमायांशयोगतः ॥ ३५ ॥ भूतानां नभआदीनां यद्यद्भव्यावरावरम् ॥ तेषां परानुसंसर्गाद्यथासंख्यं गुणान् विदुः ॥ ३६ ॥ एते देवाः कला विष्णोः कालमायांशलिङ्गिनः ॥ नानात्वात्स्वक्रियानीशाः प्रोचुः प्राञ्जलयो विभुम् ॥३७॥ देवा ऊचुः ॥ नमाम ते देव पदारविन्दं प्रपन्नतापोपशमातपत्रम् ॥ यन्मूलकेता यतयोऽञ्जसोरुसंसारदुःखं बहिरुत्क्षिपन्ति ॥ ३८ ॥ धातर्यदस्मिन्भव ईश जीवास्तापत्रयेणोपहता न शर्म ॥ आत्मँल्लभन्ते भगवंस्तवाङ्घ्रिच्छायां सविद्यामत आश्रयेम ॥ ३९ ॥ मार्गन्ति यत्ते मुखपद्मनीडैश्छन्दःसुपर्णैर्ऋषयो विविक्ते ॥ यस्ताघमर्षोदसरिद्वरायाः पदं पदं तीर्थपदः प्रपन्नाः ॥ ४० ॥ यच्छ्रद्धया श्रुतवत्या च भक्त्या संमृज्यमाने हृदयेऽवधाय ॥ ज्ञानेन वैराग्यबलेन धीरा व्रजेम तत्तेऽङ्घ्रिसरोजपीठम् ॥ ४१ ॥ विश्वस्य जन्मस्थितिसंयमार्थे कृतावतारस्य

समस्त देवताहरू ती नारायणके अंशका प्रतीक मानिएका छन् । ती सबैको समानता थियो । ती एक नभएर अनेक थिए । त्यसैले ती आफाफ्ना काम गर्न समर्थ भएनन् । यस्तो स्थितिमा ती सबै देवता देव ! हात जोरेर भगवान्सित भन्नलागे—।।३७।।हे हामी हजुरका चरण-कमलमा प्रणाम गर्दछौं । हजुरका चरणदुःखी हरूलाई दुःखरूपी आतपबाट बचाउनको निम्ति आतपत्र ( छाता) को काम गर्दछन् । ठूला-ठूला योगीजन त्यसैको छायामा बसेर सहजै आफ्ना कष्टहरू निवारण गर्दछन् ।। ३८ ।। हे पिता ! दैहिक, दैविक र भौतिक यी तीनै तापबाट पिल्सिएका यस संसारका प्राणी जबसम्म हजुरका चरणकमलको छाया पाउन्नन्, तबसम्म कदापि सुखी हुन सक्तैनन् । किनकि त्यसलाई पाएपछि नै मनुष्यलाई ज्ञानको प्रकाश दृष्टिगोचर हुन्छ ।।३९ । यही कारण छ कि ठूला-ठूला ऋषि-मुनि हजुरका चरणको शरणमा गएर हजुरको मुख-कमलरूपी नीड ( गुँड ) मा बस्ने वेदरूप पक्षीहरूको भरले आफ्नो शान्त मनले हजुरका चरणको खोजी गर्दछन् । त्यहीबाट निस्केकी गङ्गा पद-पदको भूमिलाई तीर्थस्थान बनाइसकेकी छन् । तात्पर्य—गंगाजीको अपेक्षा हजुरको आराधना लाभदायक छ।।४०।।

हजुरका जुन चरण-कमल श्रद्धापूर्वक आफ्नो हृदयमा राखेर हामीहरू वैराग्यबल प्राप्त गरेर धैर्यशाली बन्नसक्यौं र हजुरका श्रवणपूर्विका भक्तिद्वारा शुद्ध गरिएको आफ्नो हृदय द्वारा ध्यान गर्दै हामी हजुरका चरणमध्य पुग्नसकौं ( हामीलाई यस्तो ज्ञान दिनुहवस् ) ॥४१॥ हे नाथ ! यस विश्वको उत्पत्ति, स्थिति र पालनको निम्ति नै हजुरको अवतार भएको हो। अतः हामी हजुरका चरणको शरणमा प्राप्त भएका छौं। किनकि स्मरण मात्रले हजुरका चरणकमल आफ्ना भक्तलाई अभयदान (मोक्ष) दिन्छन् ॥४२॥ तिनलाई बिर्सर मानिस आफ्नो नाशवान् शरीरलाई दुराग्रहवश आफ्नो ठान्न थाल्दछन् र नित्य आफ्नो शरीरमै विद्यमान हजुरका चरणलाई टाढा ठान्दछौं। अब हजुर मलाई यस्तो बुद्धि दिनुहोस्, जसले हामी हजुरका चरणको भजन बराबर गर्दै रहौं ॥४३॥ हे परेश ! तुच्छ विषयहरूमा अल्झेका व्यक्ति बाहिरी तडक-भडक देख्ने इन्द्रियहरूद्वारा आफ्नो मनलाई अन्तःकरणबाट बाहिर खिचिदिन्छन्, त्यसैले ती आफ्नो मनमै भएको हजुरको पदन्यासविलासका शोभाले युक्त चरण-कमल देख्न पाउन्नौं ( अनि तिनमा प्रेम कसरी हुने ? ) ।४४॥ हे देव ! हजुरको कथारूपिणी सुधा-रस पान गरेर अति व्यक्तिले बढेको भक्तिद्वारा आफ्नो अन्तःकरण निर्मल पारिसकेका छन्, ती वैराग्य-बल युक्त ज्ञान प्राप्त गरेर अनायास वैकुण्ठ लोक प्राप्त गर्दछन् ॥ ४५ ॥

पदांबुजं ते ॥ व्रजेम सर्वे शरणं यदीश स्मृतं प्रयच्छत्यभयं स्वपुंसाम् ॥ ४२ ॥ यत्सानुबन्धेऽसति देहगेहे ममाहमित्यूढदुराग्रहाणाम् ॥ पुंसां सुदूरं वसतोऽपि पुर्यां भजेम तत्ते भगवन् पदाब्जम् ॥ ४३ ॥ तान्वै असद्वृत्तिभिरक्षिभिर्ये पराहृतान्तर्मनसः परेश ॥ अथो न पश्यन्त्युरुगाय नूनं ये ते पदन्यासविलासलक्ष्म्याः ॥ ४४ ॥ पानेन ते देव कथासुधायाः प्रवृद्धभक्त्या विशदाशया ये ॥ वैराग्यसारं प्रतिलभ्य बोधं यथाऽञ्जसाऽन्वीयुरकुण्ठधिष्ण्यम् ॥ ४५ ॥ तथाऽपरे चात्मसमाधियोगबलेन जित्वा प्रकृतिं बलिष्ठाम् ॥ त्वामेव धीराः पुरुषं विशन्ति तेषां श्रमः स्यान्नतु सेवया ते ॥ ४६ ॥ तत्ते वयं लोकसिसृक्षयाऽद्य त्वयाऽनुसृष्टास्त्रिभिरात्मभिः स्म ॥ सर्वे वियुक्ताः स्वविहारतन्त्रं न शक्नुमस्तत्प्रतिहर्तवे ते ॥ ४७ ॥ यावद्बलिं तेऽज हराम काले यथा वयं चान्नमदाम यत्र ॥ यथोभयेषां त इमे हि लोका बलिं हरन्तोऽन्नमदन्त्यनूहाः ॥ ४८ ॥ त्वं नः सुराणामसि सान्वयानां

यी बाहेक धेरै परि व्यक्ति समाधि अर्थात् चित्तको एकाग्रताको बलले बलवती प्रकृतिलाई जितेर धैर्य धारण गर्दै हजुरमा लीन भएर जान्छन्, तर तिनले यसको निम्ति ठूलो परिश्रम गर्नुपर्दछ, किन्तु जुन व्यक्ति हजुरका चरणको सेवा गरेर मोक्ष प्राप्त गर्दछन्, तिनले यति धेरै श्रम गर्नु पर्दैन ॥ ४६ ॥ ( देवता यसरी स्तुति गरेर अब आफ्आफ्नो मतलबको कुराहरू बिन्तिगर्दै भन्दछन् )–हे नारायण ! हे आदिपुरुष ! हजुरले हामी सबैलाई सत्व, रज, तम यी तीन गुणको मेलले संसारको सृष्टि गर्नका लागि बनाउनु भयो, तर परस्पर विरुद्ध स्वभाव हुनाले हामीलाई हजुरले जे निम्ति बनाउनु भएको थियो, त्यस कार्यलाई हामी पूर्ण गर्न सक्तैनौं र हजुरका लीलासम्पन्न गर्न आवश्यक सामग्रीहरू एकत्रपारेर हजुरलाई अर्पण गर्नमा आफूलाई असमर्थ पाइरहेका छौं ॥४७॥ हे अज ! बेला बेलामा हामी हजुरको निम्ति बलि अर्पण गर्दछौं। जसरी हामीहरू अन्न खान्छौं जसरी संसारी व्यक्ति अन्नात्मक बलि निवेदन गर्दछन् र हामी र हजुर दुवैको निम्ति बलि पुऱ्याउँदै हजुरले प्रदान गरिएको भवनमा बसेर यी सबै जीव निर्विघ्नभावले त्यस अन्नलाई खान्छन् ( त्यो म हेन इच्छा गर्दछु, यसको निम्ति हजुर नेत्र प्रदान गर्नुहवस् ) ॥ ४८ ॥ हजुर नै हाम्रा कार्य र आदि कारण हुनुहुन्छ, किनकि वास्तवमा हजुर नै कूटस्थ ( विकारशून्य ) अधिष्ठाता र पुरातन

पुरुष हुनुहुन्छ । हे देव ! हजुरले अजन्मा भएर पनि सत्वादि तीनै गुण जन्मादि कर्महरूको कारण भूतयोनि (कारणभूतशक्ति माया) मा सबभन्दा पहिले हजुरले वीर्य राख्नुभयो ॥४९॥ हे आत्मदेव ! त्यो शक्ति (माया) मार्न महदादि तत्त्व र हामी हरू जुन कामको निम्ति उत्पन्न भएका छौं–हजुरनै भन्नुहवस् कि यस्तो परिस्थितिमा हामीहजुरको कुन काम गरौं ? यदि हजुर 'सृष्टि गर' भन्ने आज्ञा दिनुहुन्छ भने हामीलाई चक्षुस्वरूप ज्ञान र आफ्नो शक्ति प्रदान गर्नोस् । हजुरले दिएका ज्ञान र शक्तिले नै सृष्टिको काम हामी सम्पन्न गर्न सक्नेछौं–नत्र सक्दिन्न ॥५०॥ इति श्रीमद्भागवते महापुराणे तृतीय स्कन्धे नेपाली भाषाटीकायां पंचमोऽध्यायः ॥५॥ ( विराट् देहको उत्पत्ति )–मैत्रेय भन्दछन्–'हे विदुर ! नारायणले जब आफ्नो महदादि शक्तिहरूमा परस्पर मतभेदको स्थिति देखे र विश्वको रचना सम्बन्धी कार्यबाट सबैलाई उदासीन पाए ॥१॥ अनि भगवान् आफ्नाआफ्नाकार्यको निम्ति प्रेरित गर्न भनी त्यो कालसंज्ञक प्रकृति, आफ्नो शक्ति तथा तेईस ( महदादि सात प्रकृति र तिनका सोह्र विकार ) तत्त्वहरू साथै लिएर उसमा प्रविष्ट भए ॥२॥ ती देवताहरूको शरीरमा प्रविष्ट भएर

कूटस्थ आद्य पुरुषः पुराणः ॥ त्वं देव शक्त्यां गुणकर्मयोनौ रेतस्त्वजायां कविमादधेऽजः ॥४९॥ ततो वयं सत्प्रमुखा यदर्थे बभूविमात्मन्करवाम
किं ते ॥ त्वं नः स्वचक्षुः परिदेहि शक्त्या देव क्रियार्थे यदनुग्रहाणाम् ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पञ्चमोऽध्यायः ॥ ५ ॥
ऋषिरुवाच ॥ इति तासां स्वशक्तीनां सतीनामसमेत्य सः ॥ प्रसुप्तलोकतन्त्राणां निशाम्य गतिमीश्वरः ॥ १ ॥ कालसंज्ञां तदा देवीं बिभ्रच्छक्तिमु-
रुक्रमः ॥ त्रयोविंशतितत्त्वानां गणं युगपदाविशत् ॥२॥ सोऽनुप्रविष्टो भगवांश्चेष्टारूपेण तं गणम् ॥ भिन्नं संयोजयामास सुप्तं कर्म प्रबोधयन् ॥३॥
प्रबुद्धकर्मा दैवेन त्रयोविंशतिको गणः ॥ प्रेरितोऽजनयत्स्वाभिर्मात्राभिरधिपूरुषम् ॥४॥ परेण विशता स्वस्मिन्मात्रया विश्वसृग्गणः ॥ चुक्षोभान्यो-
न्यमासाद्य यस्मिँल्लोकाश्चराचराः ॥ ५ ॥ हिरण्मयः स पुरुषः सहस्रपरिवत्सरान् ॥ आण्डकोश उवासाप्सु सर्वसत्त्वोपबृंहितः ॥६॥ स वै विश्वसृजां गर्भो
देवकर्मात्मशक्तिमान् ॥ विबभाजात्मनाऽऽत्मानमेकधा दशधा त्रिधा ॥७॥ एष ह्यशेषसत्त्वानामात्मांशः परमात्मनः ॥ आद्योऽवतारो यत्रासौ भूत-
ग्रामो विभाव्यते ॥८॥ साध्यात्मः साधिदैवश्च साधिभूत इति त्रिधा ॥ विराट् प्राणो दशविध एकधा हृदयेन च ॥९॥ स्मरन्विश्वसृजामीशो विज्ञापितमधो-

नारायणले आफ्नो क्रियाशक्ति द्वारा ती तेईस तत्त्वहरूलाई भिन्न-भिन्न काममा लगाइदिए र ती देवताहरूका निदाएका कर्महरूलाई उठाएर काममा लगाए ॥३॥ जब ती तेईस तत्त्वहरूको क्रियाशक्ति जागृत भयो तब ईश्वरको प्रेरणाले सर्वप्रथम उनले आफ्ना-आफ्ना अंशबाट अधिपुरुष (विराट शरीर) को रचना गरे ॥४॥ जब ती परम पुरुष आफ्नो शक्तिसहित ती विश्व-सृजनमा प्रविष्ट भए, तब ती तेईस तत्त्वका समुदाय आफ्ना केही अंशमा नै क्षुब्ध भयो—सम्पूर्ण रूपबाट होइन । त्यति नै अंशमा सचराचर लोक स्थित थियो ॥५॥ त्यो हिरण्मय विराट् पुरुष समस्त जीव र प्राणिहरूका साथै पूरा एक हजार वर्षसम्म अण्डकोष ( ब्रह्माण्ड ) को जलमा परिरह्यो ॥६॥ तब तत्त्वहरूको गर्भ त्यस विराट् पुरुषले आफ्नो देव-शक्तिद्वारा आफ्नो हृदयमा स्थित चैतन्यरूपी एक भेद, कर्म शक्तिले प्राणरूपी दस भेद र अध्यात्म, दैविक तथा भौतिक यी तीन भेद बनाए ॥ ७ ॥ विराट् पुरुष नै समस्त प्राणीहरूको आत्मा हो । अतः सर्वप्रथम उनैको अवतार भयो । यसकारण त्यसमा नै सर्व प्राणिहरूको समुदाय दृष्टिगोचर हुन्छ ॥८॥ त्यो विराट् पुरुष आध्यात्मिक, आधिदैविक र आधिभौतिक

इन्द्रियहरूसित रहलाले नै तीन प्रकार र प्राणहरूको दस भेद अर्थात् नाग, कूर्म कृकल, देवदत्त र धनञ्जय तथा यी पाँचका पाँच वृत्तिहरूद्वारा दस प्रकार भयो॥९॥ ती विश्व-सृष्टाहरूले कृपाहरू स्मरण गरेर त्यस विराट् पुरुषले आफ्नो तेज ( चिद्शक्ति ) द्वारा यस कुरामा विचार गरे—मैले अगाडि के गर्नु छ, जसले विविध वृत्तिहरूमा जागृति उत्पन्न होओस् ॥१०॥ यस प्रकार पर्यालोचन गर्दै त्यस परम पुरुषबाट देवताहरूको केही निवासस्थान उत्पन्न भए। अब तिनको भेद सुन—॥११॥ जब ती विराट् पुरुषको मुख उत्पन्न भयो तब आफ्नो अंश र वचन सहित लोकपाल अग्निले त्यसलाई आफ्नो निवास बनाए। त्यही उनका देवता कहिए र वचनको उत्पत्ति त्यसैबाट भयो ॥ १२ ॥ जब ती विराट् पुरुषको तालु उत्पन्न भयो तब वरुण आफ्ना जिह्वारूपी अंश सहित आएर बसे। त्यसैबाट रसको उत्पत्ति भयो ॥१३॥ जब ती विराट्का दुइ नासिका उत्पन्न भए ता दुवैमा अश्विनीकुमार गएर बसे। ती आफ्नो प्राण शक्तिरूपी अंशलाई आफूसित लिएका थिए। त्यसैले गन्धको उत्पत्ति भयो ॥१४॥ अब ती विराट्का नेत्र उत्पन्न भए तब तिनमा नेत्ररूपी अंशलाई लिएर लोकपाल सूर्य

क्षजः ॥ विराजमतपत्स्वेन तेजसैषां विवृत्तये ॥१०॥ अथ तस्याभितप्तस्य कति चायतनानि ह ॥ निरभिद्यन्त देवानां तानि मे गदतः शृणु ॥ ११॥ तस्याग्निरास्यं निर्भिन्नं लोकपालोऽविशत्पदम् ॥ वाचा स्वांशेन वक्तव्यं ययाऽसौ प्रतिपद्यते ॥ १२ ॥ निर्भिन्नं तालु वरुणो लोकपालोऽविशद्धरेः ॥ जिह्वयांशेन च रसं ययाऽसौ प्रतिपद्यते ॥ १३ ॥ निर्भिन्ने अश्विनौ नासे विष्णोराविशतां पदम् ॥ घ्राणेनांशेन गन्धस्य प्रतिपत्तिर्यतो भवेत् ॥ १४ ॥ निर्भिन्ने अक्षिणी त्वष्टा लोकपालोऽविशद्विभोः ॥ चक्षुषांशेन रूपाणां प्रतिपत्तिर्यतो भवेत् ॥ १५ ॥ निर्भिन्नान्यस्य चर्माणि लोकपालोऽनिलोऽविशत् ॥ प्राणेनांशेन संस्पर्शं येनासौ प्रतिपद्यते ॥ १६ ॥ कर्णावस्य विनिर्भिन्नौ धिष्ण्यं स्वं विविशुर्दिशः ॥ श्रोत्रेणांशेन शब्दस्य सिद्धिं येन प्रपद्यते ॥ १७ ॥ त्वचमस्य विनिर्भिन्नां विविशुर्धिष्ण्यमोषधीः ॥ अंशेन रोमभिः कण्डूं यैरसौ प्रतिपद्यते ॥ १८ ॥ मेढ्रं तस्य विनिर्भिन्नं स्वं धिष्ण्यं क उपाविशत् ॥ रेतसांशेन येनासावानन्दं प्रतिपद्यते ॥ १९ ॥ गुदं पुंसो विनिर्भिन्नं मित्रो लोकेश आविशत् ॥ २१ ॥ वायुनांशेन येनासौ विसर्गं प्रतिपद्यते ॥ २० ॥ हस्तावस्य विनिर्भिन्नाविन्द्रः स्वर्पतिराविशत् ॥ वार्तयांशेन पुरुषो यया वृत्तिं प्रपद्यते ॥ २१ ॥ पादावस्य विनिर्भिन्नौ

देवता गएर बसे। त्यसैबाट रूपहरू देख्ने शक्ति उत्पन्न भयो ॥ १५ ॥ जब तिनको शरीर त्वगिन्द्रिय ( छाया ) उत्पन्न भयो तब वायुदेव आफ्नो प्राणरूपी अंशलाई आफूसित लिएर त्यसमा बसे; यसैले स्पर्श गुणको उत्पत्ति भयो ॥१६॥ जब ती परम पुरुषको कान उत्पन्न भए तब दिग्देवता श्रोत्ररूपी अंश साथमा लिएर त्यसमा बसे। जसले शब्दको उत्पत्ति भयो ॥१७॥ जब तिनको त्वचामा छिद्र ( प्वाल ) उत्पन्न भयो तब औषधि-देवताले आफ्नो रोमरूपी अंश लिएर त्यसमा निवास गरे, जसले चिलाउने उत्पन्न भयो ॥१८॥ अब ती परमपुरुषको मेढ् ( लिंग ) उत्पन्न भयो तब प्रजापति देवता वीर्यरूपी अंशलाई साथमा लिएर त्यसमा विराजमान भए, जसबाट आनन्द (विषय-सुख) को उत्पत्ति भयो ॥१९॥ त्यसपछि उस पुरुषको गुदा उत्पन्न भयो, जसमा आफ्नो वायुरूपी अंशसित मित्रदेवता विराजमान भए, त्यसैबाट मल-त्यागको मार्ग उत्पन्न भए तब स्वर्गका अधिपति इन्द्र आफ्नो वार्तारूपी अंशलाई लिएर त्यसमा विराजमान भए। यसै द्वारा जीविकाको निम्ति व्यापारको उत्पत्ति भयो ॥२१॥ जब तिनका दुइ खुट्टा उपजे तब तिनमा लोकपति विष्णु आफ्नो अंश

रूपी अंगमित वस्नलागे त्यसबाट हिँड्ने-डुल्ने क्रिया उत्पन्न भयो ।।२२।। त्यसपछि हृदय उत्पन्न भयो अनि चन्द्रमा देवता आफ्नो मनरूपी अंशलाई साथमा लिएर त्यसमा रहन लागे । यसैले संकल्प-विकल्प तथा कर्तव्य-अकर्तव्यको विचार उत्पन्न भयो ।।२३।। जब आत्मा उत्पन्न भयो तब आफ्नो कर्मरूपी अंशलाई साथ लिई अभिमान ( रुद्र ) देवता उसमा मएर विराजमान भए ; त्यसैबाट अहङ्कार युक्त कर्तव्य उत्पन्न भयो ।।२४।। अब अन्तःकरण उत्पन्न भयो तब चित्तरूपी अंश साथमा लिएर क्षेत्रज्ञ देवता त्यसमा विराजमान भए, त्यसैबाट विज्ञानको उत्पत्ति भयो ।।२५।। त्यस विराट् पुरुषको मस्तकबाट स्वर्ग, पाउबाट पृथ्वी र नाभिबाट आकाश उत्पन्न भयो । यसैले यहाँ स्वर्ग, पृथिवी र आकाशमा सत्वादि गुणहरूको परिणाम स्वरूप उत्पन्न देवता र दैत्य देखिन्छन् ।।२६।। सत्वगुणको आधिक्यले देवताहरूले स्वर्ग र रजोगुणको आधिक्यले मनुष्यहरूले पृथ्वीलोक प्राप्त गरे ।।२७।। तमोगुणको आधिक्यले पृथ्वी र स्वर्ग यी दुवैको माथ भगवानको नाभिरूपी आकाशमण्डलमा शिवका गण भूत-पिशाच भएर बस्न लागे ।। २८ ।। ती परम पुरुषको मुखबाट ब्राह्मण उत्पन्न भए ।

लोकेशो विष्णुराविशत् ।। गत्या स्वांशेन पुरुषो यया प्राप्यं प्रपद्यते ।। २२ ।। हृदयं चास्य निर्भिन्नं चन्द्रमा धिष्ण्यमाविशत् ।। मनसांशेन येनासौ विक्रियां प्रतिपद्यते ।। २३ ।। आत्मानं चास्य निर्भिन्नमभिमानोऽविशत्पदम् ।। कर्मणांशेन येनासौ कर्तव्यं प्रतिपद्यते ।। २४ ।। सत्त्वं चास्य विनिर्भिन्नं महान्धिष्ण्यमुपाविशत् ।। चित्तेनांशेन येनासौ विज्ञानं प्रतिपद्यते ।। २५ ।। शीर्ष्णोऽस्य द्यौर्धरा पद्भ्यां खं नाभेरुदपद्यत ।। गुणानां वृत्तयो येषु प्रतीयन्ते सुरादयः ।। २६ ।। आत्यन्तिकेन सत्त्वेन दिवं देवाः प्रपेदिरे ।। धरां रजःस्वभावेन पणयो ये च ताननु ।। २७ ।। तार्तीयेन स्वभावेन भगवन्नाभिमाश्रिताः ।। उभयोरन्तरं व्योम ये रुद्रपार्षदां गणाः ।। २८ ।। मुखतोऽवर्तत ब्रह्म पुरुषस्य कुरूद्वह ।। यस्तून्मुखत्वाद्वर्णानां मुख्योऽभूद्ब्राह्मणो गुरुः ।। २९ ।। बाहुभ्योऽवर्तत क्षत्रं क्षत्रियस्तदनुव्रतः ।। यो जातस्त्रायते वर्णान्पौरुषः कण्टकक्षतात् ।। ३० ।। विशोऽवर्तन्त तस्योर्वोर्लोकवृत्तिकरीर्विभोः ।। वैश्यस्तदुद्भवो वार्तां नृणां यः समवर्तयत् ।। ३१ ।। पद्भ्यां भगवतो जज्ञे शुश्रूषा धर्मसिद्धये ।। तस्यां जातः पुरा शूद्रो यद्वृत्त्या तुष्यते हरिः ।। ३२ ।। एते वर्णाः स्वधर्मेण यजन्ति स्वगुरुं हरिम् ।। श्रद्धयाऽऽत्मविशुद्ध्यर्थं यज्जाताः सह वृत्तिभिः ।। ३३ ।। एतत्क्षत्त भगवतो दैवकर्मात्मरूपिणः ।। कः श्रद्दध्यादुपाकर्तुं योगमायाबलोदयम् ।। ३४ ।। अथापि कीर्तयाम्यङ्ग यथामति यथा श्रुतम् ।। कीर्तिं हरेः स्वां सत्कर्तुं

मुखबाट उत्पन्न हुने हेतुले उनलाई प्रधानता मिल्यो र ती सबै वर्णहरूका गुरु मानिए ।। २९ ।। ती विराट् पुरुषका पाखुराबाट क्षत्रिय उत्पन्न भए । ती उत्पन्न भएर चारै वर्णहरूमा आइलागेका संकटबाट रक्षा गर्ने काममा लागे ।। ३० ।। वैश्यहरूको उत्पत्ति त्यस परमपुरुषको अंशबाट भयो । उनले आफ्नो व्यवहार-कुशलताबाट समस्त मनुष्यमात्रको जीविका सम्पादन गरे ।। ३१ ।। सेवा-धर्मलाई सार्थक पार्नको निम्ति भगवानका पाउबाट उत्पन्न भए । नारायण तिनको सेवा कार्यले प्रसन्न हुन्छन् ।। ३२ ।। यी चारै वर्ण आफ्ना धर्म अनुसार श्रद्धापूर्वक आत्मालाई शुद्ध पार्नको निम्ति आफ्ना गुरु विष्णु भगवानको आराधना गर्दछन्, किनकि यिनीहरू आफ्ना-आफ्ना वृत्तिका साथ ती परम पुरुषबाट नै उत्पन्न भएका हुन् ।। ३३ ।। हे विदुर ! काल, धर्म तथा स्वभाव-शक्ति सम्पन्न ती भगवानको योगमायाको बलले परिपूर्ण त्यस विराट् पुरुषको स्वरूपको पूर्ण निरूपण गर्ने साहस कसले गर्न सक्छ ? ।। ३४ ।। तापनि हे प्रिय विदुर ! जस्तो कि मैले गुरुजनहरूको मुखबाट सुनेको छु र जहाँसम्म मेरो बुद्धिको बल पुग्छ,

अरु-अरु कुराहरूले दूषित वाणीलाई पवित्र पार्नको निम्ति म भगवान्‌को गुण-गान गर्नेछु ॥३५॥ केवल वाणी पवित्र पार्न मात्र उद्देश्य होइन । यदि कोही प्राणी तिनको महिमा नजाने पनि उनको नाम मन्दछ वा सुन्दछ भने त्यसलाई पनि अवश्य मोक्ष हुन्छ किनकि भगवान्‌को गुणानुवाद वचनलाई त पवित्र पार्छ नै, संगसंगै एकाग्र मन पारेर तिनका गुण गाउने व्यक्तिलाई मोक्षलाभ हुन्छ ॥३६॥ योगबाट परिपक्व बुद्धिद्वारा हजार वर्ष तपस्या गरेर पनि ब्रह्माजीले ती प्रभुको स्वरूप जान्न सके वा सकेनन्, यसमा सन्देह नै छ ॥३७॥ यसले भन्न कर लाग्छ कितिनकीमायामायावीहरूलाई पनिभ्रममा पारिदिन्छन् ।मायाकाअधिपतिनारायणपनिआफ्नीमायाकोबार-बार मेट्टाउन्नन्, अनिअरूकोविषयमा के भन्न सकिन्छ ? ॥३८॥ तिनको ज्ञान प्राप्त गर्ने चेष्टामा प्रवृत्त वाणी पनि मनको संगसंगै उनीसम्म पुग्न नसकी फर्कर आउँछिन्, किनभने ठूलो कष्ट सहेर नै तिनको ज्ञान प्राप्त हुन्छ ।

गिरमन्याभिधासतीम् ॥३५॥ एकान्तलाभं वचसो नु पुंसां सुश्लोकमौलेर्गुणवादमाहुः ॥ श्रुतेश्च विद्वद्भिरुपाकृतायां कथासुधायामुपसंप्रयोगम् ॥३६॥ आत्मनोऽवसितो वत्स महिमा कविनाऽऽदिना ॥ संवत्सरसहस्रान्ते धिया योगविपक्वया ॥ ३७ ॥ अतो भगवतो माया मायिनामपि मोहिनी ॥ यत्स्वयं चात्मवर्त्मात्मा न वेद किमुतापरे ॥ ३८ ॥ यतोऽप्राप्य न्यवर्तन्त वाचश्च मनसा सह ॥ अहं चान्य इमे देवास्तस्मै भगवते नमः ॥ ३९ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे षष्ठोऽध्यायः ॥ ६ ॥ श्रीशुक उवाच ॥ एवं ब्रुवाणं मैत्रेयं द्वैपायनसुतो बुधः ॥ प्रीणयन्निव भारत्या विदुरः प्रत्यभाषत ॥ १ ॥ विदुर उवाच ॥ ब्रह्मन् कथं भगवतश्चिन्मात्रस्याविकारिणः ॥ लीलया चापि युज्येरन्निर्गुणस्य गुणाः क्रियाः ॥ २ ॥ क्रीडायामुद्यमोऽर्भस्य कामश्चिक्रीडिषाऽन्यतः ॥ स्वतस्तृप्तस्य च कथं निवृत्तस्य सदाऽन्यतः ॥ ३ ॥ असाक्षीद्भगवान्विश्वं गुणमय्याऽऽत्ममायया ॥

केवल मन र वाणी मात्र होइन, ठूला-ठूला ऋषि, अहङ्कारका अधिष्ठाता रुद्र र विविध इन्द्रियहरूका अधिपति देवता पनि त्यहाँ पुग्न समर्थ हुन्नन् ॥३९॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां षष्ठोऽध्यायः ॥६॥ ( विदुरको प्रश्न ) श्रीशुकदेव भन्दछन्—यसरी तत्त्व बुझाउने मैत्रेयलाई प्रसन्न पार्दै व्यास-पुत्र र विज्ञ विदुर निकै कोमल वाणीमा बोले—॥१॥ हे ब्रह्मन् ! ती अविकारी, निर्गुण र चिन्मय प्रभुका गुण र उनका कर्महरूको रहस्य एवं तिनका लीलाहरू कुन प्रकारले जान्न सकिएला ? ॥२॥ (यदि हजुर भन्नुहुन्छ—केटाकेटीका खेल जस्तै तिनका सबै काम हुन्छन्—तर यो कुरा पनि मनमा स्थिर बसिरहेको छैन, किनकि) सानो बालक अर्कों पालनपित खेल्न प्रवृत्त हुनुपर्छ कुन

---

※ उदाहरण ( प्रभुको रूप )—जहाँ राम हुन्छन् त्यहाँ काम रहन्न । जहाँ काम हुन्छ त्यहाँ राम रहन्नन्—कथनको तात्पर्य हो राम र काम एकै स्थानमा रहन सक्दैनन् । रावण ठूलो पराक्रमी थियो तर कामी थियो । त्यसैले त्यसको नाश भयो, किनकि त्यसले 'परदारान्न गच्छेत' यो शास्त्रीय आज्ञा उल्लङ्घन गरेको थियो । सीताको स्वयंवरमै राम र रावणमा वैरत्व भइसकेको थियो, किनकि त्यसलाई सीतामा मोह थियो । राम जब पिताको आज्ञा पालन गर्न वनमा गए तब त्यो संन्यासीको रूप धारण गरेर गयो र छल कपट गरेर सीतालाई हरण गरेर लग्यो र लंकापुरीको अशोक वाटिकामा राखेको थियो । सीताजीलाई डग्न त्यसले अनेक रूप बनायो, तर सती शिरोमणि सीताजी डगिनन् । एक दिन त्यसका मन्त्रीहरूले रावणलाई भने—'तपाईं रामको भेष धारण गरेर सीताकहाँ जानोस् त ती काबुमा आउने छन् । किनकि इन्द्रले गौतमको रूप धारण गरेर अहिल्यालाई पक्षमा पारेका थिए ।' रावणले उत्तर दियो—'तिमीहरूको कथन यथार्थ छ, तर जब म रामचन्द्रको रूप धारण गर्ने कुरामा विचार गर्दछु तब मलाई ब्रह्मलोक र त्यहाँको सुख-भोग पनि तुच्छ झैं लाग्छ । अनि परस्त्रीको कुरा के भन्नु !' रावण जस्तो कामान्ध पनि जब रामको स्वरूप विचार गरेर विषयवासना हीन हुन सक्दछ भने सज्जनहरूको विषयमा के भन्नु छ ?

कामना रहन्छ ( फेरि त्यो मनोरंजन नै किन नहोस् । ) तर ती लीलाधारी त सदैव स्वयं तृप्त र विषयहरूबाट तृप्त रहन्छन् । यस्तो स्थितिमा कुनै अन्य व्यक्तिपनि खेल्ने इच्छा किन र कसरी गनछन् ? ॥३॥ हजुरले नै भन्नुभयो—भगवान्‌ले आफ्नी गुणमयी माया द्वारा यस विश्वको रचना गरेका छन् । उनै माया संस्थापन गर्दछिन् र अन्तमा संहार पनि उनै गर्दछिन् ॥४॥ तापनि सब कुराको ज्ञान राख्ने पूर्ण ज्ञानी यो जीव—जुन साक्षात् ब्रह्मको स्वरूप हो—अविद्याको चक्रमा अल्झिन्छ, किनकि देश, काल, अवस्था तथा आफ्नो र विरानो कसैको द्वारा पनि आत्मा नष्ट हुन सक्तैन ॥५॥ संसारका सबै जीवहरूमा भोक्ता रूपले त तिनै भगवान् नै विराजमान रहन्छन् । जब यस्तो छ भने यो जीव दुर्भाग्यमा किन पाछिन्छ र आफ्ना कर्मद्वारा नै कष्ट किन भोगिरहन्छ ? ॥६॥ हेविद्वन् ? यस अज्ञानरूपी संकटमा परेर मेरो मन दुःखी भइरहेको छ । हजुर कुनै प्रकारले मेरो यो मानसिक महाकष्ट पर सारिदिनोस् । श्रीशुकदेव भन्दछन्—यस प्रकार ती तत्त्व-जिज्ञासु विदुरले सोधेपछि मैत्रेय मुनि आफ्नो ज्ञानको प्रौढता दर्शाउँदै आश्चर्यहीन भावले भन्दछन्

तया संस्थापयत्येतद्भूयः प्रत्यपिधास्यति ॥ ४ ॥ देशतः कालतो योऽसाववस्थातः स्वतोऽन्यतः ॥ अविलुप्तावबोधात्मा स युज्येताजया कथम् ॥५॥
भगवानेक एवैष सर्वक्षेत्रेष्ववस्थितः ॥ अमुष्य दुर्भगत्वं वा क्लेशो वा कर्मभिः कुतः ॥६॥ एतस्मिन्मे मनो विद्वन्खिद्यतेऽज्ञानसंकटे ॥ तन्नः परा-
णुद विभो कश्मलं मानसं महत् ॥ ७ ॥ श्रीशुक उवाच ॥ स इत्थं चोदितः क्षत्त्रा तत्त्वजिज्ञासुना मुनिः ॥ प्रत्याह भगवच्चित्तः स्मयन्निव गत-
स्मयः ॥ ८ ॥ मैत्रेय उवाच ॥ सेयं भगवतो माया यन्नयेन विरुध्यते ॥ ईश्वरस्य विमुक्तस्य कार्पण्यमुत बन्धनम् ॥ ९ ॥ यदर्थेन विनाऽमुष्य
पुंस आत्मविपर्ययः ॥ प्रतीयत उपद्रष्टुः स्वशिरश्छेदनादिकः ॥ १० ॥ यथा जले चन्द्रमसः कम्पादिस्तत्कृतो गुणः ॥ दृश्यतेऽसन्नपि द्रष्टुरात्मनो
नात्मनो गुणः ॥ ११ ॥ स वै निवृत्तिधर्मेण वासुदेवानुकम्पया ॥ भगवद्भक्तियोगेन तिरोधत्ते शनैरिह ॥ १२ ॥ यदेन्द्रियोपरामोऽथ द्रष्टात्मनि
परे हरौ ॥ विलीयन्ते तदा क्लेशाः संसुप्तस्येव कृत्स्नशः ॥ १३ ॥ अशेषसंक्लेशशमं विधत्ते गुणानुवादश्रवणं मुरारेः ॥ कुतः पुनस्तच्चरणारविन्द-
परागसेवारतिरात्मलब्धा ॥ १४ ॥ विदुर उवाच ॥ संछिन्नः संशयो मह्यं तव सूक्तासिना विभो ॥ उभयत्रापि भगवन् मनो मे संप्रधावति ॥१५॥

॥७-८॥ मैत्रेयले भने—भगवान्‌की माया अगम्य छन् । त्यहाँसम्म तर्क पनि पुग्न सक्तैन । अतः यो ठोकेर भन्न सकिन्न कि त्यो नित्य-मुक्त परम-पुरुष स्वयं अविद्याको बन्धनमा बाँधिन्छ अथवा दीनताले गर्दा उसले बाँधिनै पर्छ ॥९॥ मेरो त विश्वास छ—जस्तै स्वप्नमा टाउको काटिन्न तर स्वप्न देख्ने व्यक्ति साँच्चै नै मेरो सिर काटियो भन्ने भ्रममा पर्दछ । यस प्रकार अविद्याको कारण जीव आफूलाई बन्धनमा परेको छु भने ठान्न लाग्दछ, तर वास्तवमा त्यो नित्य मुक्त नै रहन्छ ॥१०॥ जस्तै जलमा प्रतिबिम्बित चन्द्रमामा नै कम्पन भए आउँदछ, आकाश स्थित चन्द्रमामा होइन । ठीक त्यसै गरी मिथ्या दैहिक धर्म पनि जीवहरूमा नै आउँछ, ईश्वरमा होइन ॥११॥ त्यो माया पनि शम-दम आदि निवृत्तिपरक धर्मको आचरण गर्नाले, भगवान्‌को कृपाले अथवा भक्तियोग द्वारा बिस्तार-बिस्तार स्वयं लुप्त भएर जान्छ ॥१२॥ अन्तर्यामी परमात्मामा जब मनुष्यका इन्द्रियहरू निश्चलभावले लाग्दछन् तब सम्पूर्ण कष्ट स्वयं नष्ट हुन्छन् । जस्तै—सुतेका मनुष्यको स्वप्न बिउँझनासाथ नष्ट भएर जान्छ॥१३॥ भगवान्‌को गुणानुवाद सुन्नाले मात्र पनि सबै क्लेश नष्ट हुन्छन् । यदि त्यो ध्यान-

पूर्वक सुनेर श्रद्धासहित तिनका चरणको सेवा गर्न हो भने त भन्ने कुरै छैन ॥ १४ ॥ यति सुनेर विदुर भन्दछन्–'हे विभो ! हजुरको उपदेशले मेरो सारा संशय हराएर गइसक्यो, अब ईश्वरको स्वतन्त्रता र जीवको परतन्त्रताको विषयमा मेरो मन संशय-शून्य भइसक्यो ॥१५॥ हजुरले दर्शाउनु भयो कि जीवलाई विविध प्रकारका द्वन्द्वहरूको सामना गर्नु पर्दछ, त्यसमा माया नै कारण छ, अरु कोही छैन । त्यो पनि ठीकै छ ॥१६॥ यस संसारमा दुइ प्रकारका व्यक्ति सुखी रहन सक्छन्–एउटा अत्यन्त मूर्ख र अर्को अतिशय बुद्धिमान् । माझका व्यक्तिले अनेक कष्ट भोग्नुपर्दछ ॥१७॥ वस्तुतः यस संसारमा कुनै अर्थ साधिन्न, तर भ्रमवश मेरो यस्तो धारणा भएको थियो कि यसबाट निकै लाभ प्राप्त गर्न सकिन्छ । हजुरका चरणको सेवाले त्यो धारणा पनि निवारण हुनेछ ॥१८॥ ती कूटस्थ र मधु दानवका द्वेषी नारायणको आराधनाले नै उनको चरणमा तीव्र प्रेम जागृत हुन्छ र त्यस प्रेमको द्वारा संसारका सबै कष्ट अनायास हराएर जान्छन् ॥ १९ ॥ थोरै तपी व्यक्तिहरूलाई नारायणका पथको प्रदर्शन गर्ने सन्तहरूको सेवाको अवसर निकै कष्टले प्राप्त हुन्छ ।

साध्येतद्व्याहृतं विद्वन्नात्ममायायनं हरेः ॥ आभात्यपार्थं निर्मूलं विश्वमूलं न यद्बहिः ॥ १६ ॥ यश्च मूढतमो लोके यश्च बुद्धेः परं गतः ॥ तावुभौ सुखमेधेते क्लिश्यत्यन्तरितो जनः ॥ १७ ॥ अर्थाभावं विनिश्चित्य प्रतीपस्यापि नात्मनः ॥ तां चापि युष्मच्चरणसेवयाऽहं पराणुदे ॥ १८ ॥ यत्सेवया भगवतः कूटस्थस्य मधुद्विषः ॥ रतिरासो भवेत्तीव्रः पादयोर्व्यसनार्दनः ॥ १९ ॥ दुरापा ह्यल्पतपसः सेवा वैकुण्ठवर्त्मसु ॥ यत्रोपगीयते नित्यं देवदेवो जनार्दनः ॥ २० ॥ सृष्ट्वाऽग्रे महदादीनि सविकाराण्यनुक्रमात् ॥ तेभ्यो विराजमुद्धृत्य तमनु प्राविशद्विभुः ॥ २१ ॥ यमाहुराद्यं पुरुषं सहस्रांघ्रयूरुबाहुकम् ॥ यत्र विश्व इमे लोकाः सविकासं समासते ॥ २२ ॥ यस्मिन् दशविधः प्राणः सेन्द्रियार्थेन्द्रियस्त्रिवृत् ॥ त्वयेरितो यतो वर्णास्तद्विभूतीर्वदस्व नः ॥ २३ ॥ यत्र पुत्रैश्च पौत्रैश्च नप्तृभिः सह गोत्रजैः ॥ प्रजा विचित्राकृतय आसन् याभिरिदं ततम् ॥ २४ ॥ प्रजापतीनां स पतिश्चक्लृपे कान्प्रजापतीन् ॥ सर्गांश्चैवानुसर्गांश्च मनून्मन्वन्तराधिपान् ॥ २५ ॥ एतेषामपि वंशांश्च वंशानुचरितानि च ॥ उपर्यधश्च ये लोका भूमेर्मित्रात्मजासते ॥ २६ ॥ तेषां संस्थां प्रमाणं च भूर्लोकस्य च वर्णय ॥ तिर्यङ्मानुषदेवानां सरीसृपपतत्त्रिणाम् ॥ वद नः सर्ग-

जसमा नित्य देवाधिदेव जनार्दनको गुणगान रहन्छ ॥२०॥ जुन महाप्रभुले पहिल्यै विकार युक्त तत्वादिहरूको सृष्टि गरे उनैबाट नै विराट्मा मिसिए ॥२१॥ जसलाई तत्व-ज्ञानी मानिस हजार हात-पाउ र हजारै मुंडा भएका भन्दछन्, जसको विशाल शरीरमा समस्त विश्व अटाएको छ ॥२२॥ जसमा इन्द्रियहरू, इन्द्रियका विषयहरू, तिनका देवता र हजुरले बताएका दस प्राण विद्यमान छन्, हजुर मलाई तिनै परमेश्वरका विभूतिहरूको विस्तार बताउनुहोस् ॥२३॥ जनका [illegible] पुत्र-पौत्र, नाती तथा गोत्रज आदि विविध आकृतिका प्रजाहरू विद्यमान छन् र उनै द्वारा यस विश्वको विस्तार भएको छ ॥२४॥ प्रजापतिहरूका पनि [illegible] [illegible] प्रजापति र नौ प्रकारका सर्ग र तिनका भेद, अनुसर्ग, मनुष्य र मन्वन्तराधिपतिहरूलाई बनाए ॥२५॥ हे मित्रका आत्मज ! हजुर मलाई वंश र तिनमा हुने भएका पुरुषहरूका [illegible] भन्नु तथा स्वर्ग र पाताललोकको पनि वर्णन गर्नोस् जहाँ तिनीहरू बस्दछन् ॥२६॥ ती सबै लोक तथा भूलोकको विस्तार र प्रमाण के छ ? तिर्यक्, मनुष्य, देवता, सर्प, पक्षी तथा गर्भज, स्वेदज र उद्भिज यी चार प्रकारका

प्राणीहरूको उत्पत्ति क्रम के हो ? हजुर मलाई यो सबै विस्तारले अह्राइबक्सियोस् ॥२७॥ भगवान् आफ्ना गुणावतार द्वारा जसरी सृष्टि, स्थिति र पालन गर्दछन्, हजुर मलाई तिनको उदार पराक्रम सुनाउनोस् ॥२८॥ तिनको रूप, शील र स्वभाव अनुसार वर्ण र आश्रमहरूको विभाग, ऋषिहरूको जन्म-कर्म र वेदका विभागको वर्णन गर्नुहवस् ॥२९॥ यज्ञको विस्तार-को क्रम, निष्कर्ष ज्ञानको समर्थक सांख्ययोगको जुन मार्ग भगवानूले आज्ञा गर्नुभएको छ, त्यो भन्नुहवस् । पाखण्डीहरूको प्रवृत्तिरूपी मार्गमा जुन विषमता छ प्रतिलोम विवाह आदि जति प्रकारका हुन्छन् र गुण-कर्म अनुसार जीवको जुन-जुन गति हुन्छन्, ती पनि हजुर आज्ञाहवस्॥३०॥३१॥जुन धर्म, अर्थ, काम र मोक्षका परस्पर विरोधशून्य निमित्त हुन्, तिनलाई र वाणिज्य-व्यवसाय, अर्थशास्त्रोक्त, दण्डनीतिपूर्ण एवं शास्त्र प्रतिपादित राजा पनि भन्नुहवस् ॥३२॥ हे ब्रह्मन् ! श्राद्धविधि, पितृहरूको निस्तारको उपाय, कालचक्रमा ग्रह, नक्षत्र ताराहरूको स्थिति बताउनोस् ॥३३। दान, तप, इष्ट (देवताहरूको पूजात्मक यज्ञ-याग) तथा आपूर्त ( सरोवर, कुवा, तलाउ आदि बनाउने ) को के फल छ ? परदेशमा मनुष्यको

संव्यूहं गार्भस्वेदद्विजोद्भिजाम् ॥२७॥ गुणावतारैर्विश्वस्य सर्गस्थित्यप्ययाश्रमम् ॥ सृजतः श्रीनिवासस्य व्याचक्ष्वोदारविक्रमम् ॥ २८ ॥ वर्णाश्रम-विभागांश्च रूपशीलस्वभावतः ॥ ऋषीणां जन्मकर्मादि वेदस्य च विकर्षणम् ॥ २९ ॥ यज्ञस्य च वितानानि योगस्य च पथः प्रभो ॥ नैष्कर्म्यस्य च सांख्यस्य तन्त्रं वा भगवत्स्मृतम् ॥ ३० ॥ पाखण्डपथवैषम्यं प्रतिलोमनिवेशनम् ॥ जीवस्य गतयो याश्च यावतीर्गुणकर्मजाः ॥ ३१ ॥ धर्मार्थ-काममोक्षाणां निमित्तान्यविरोधतः ॥ वार्ताया दण्डनीतेश्च श्रुतस्य च विधिं पृथक् ॥ ३२ ॥ श्राद्धस्य च विधिं ब्रह्मन्पितॄणां सर्गमेव च ॥ ग्रहनक्षत्रताराणां कालावयवसंस्थितिम् ॥ ३३ ॥ दानस्य तपसो वापि यच्चेष्टापूर्तयोः फलम् ॥ प्रवासस्थस्य यो धर्मो यश्च पुंस उतापदि ॥ ३४ ॥ येन वा भगवांस्तुष्येद्धर्मयोनिर्जनार्दनः ॥ संप्रसीदति वा येषामेतदाख्याहि चानघ ॥ ३५ ॥ अनुव्रतानां शिष्याणां पुत्राणां च द्विजोत्तम ॥ अनापृष्टमपि ब्रूयुर्गुरवो दीनवत्सलाः ॥ ३६ ॥ तत्त्वानां भगवंस्तेषां कतिधा प्रतिसंक्रमः ॥ तत्रेमं क उपासीरन्क उ स्विदनुशेरते ॥ ३७ ॥ पुरुषस्य च संस्थानं स्वरूपं वा परस्य च ॥ ज्ञानं च नैगमं यत्तद्गुरुशिष्यप्रयोजनम् ॥ ३८ ॥ निमित्तानि च तस्येह प्रोक्तान्यनघ सूरिभिः ॥

के कर्तव्य हुन्छ ? कुनै आपत्ति आयो भने के गर्नुपर्दछ ? ॥ ३४ ॥ हे अनघ ( पूतात्मन् ! ) यदि सबै बुझाइसकेपछि मलाई यो भन्नुहवस्—यस्तो कुन काम छ, जसले धर्मका मूल कारण नारायण प्रसन्न हुनुहुन्छ र कस्ता मनुष्यमा उनको विशेष कृपा रहन्छ ? यो कुरा पनि मलाई राम्ररी बुझाइदिनोस् ॥ ३५ ॥ हे द्विज श्रेष्ठ ! आफ्ना अनुयायी शिष्यगण र छोरालाई दयालु गुरुजन नसोधिका कुरा पनि धेरै थरि बुझाइदिने गर्दछन् ॥३६॥ हे भगवन् ! मेरो यो पनि जान्ने इच्छा छ कि जुन तत्वहरू हजुरले बताउनु भयो, ती सबैको प्रलय कति प्रकार र कसरी हुन्छ ? फेरि प्रलय भइसकेपछि जुन पुरुष शेष शय्यामा सुतछन्, तिनको सेवा कसले गर्दछ ? फेरि त्यो गएर जब सृष्टि कार्यमा लाग्दछ तब त्यसको ठाउँमा को गएर सुतछ ? ॥३७॥ यस पुरुष अथवा जीवको तत्त्व के हो ? परमात्माको स्वरूप के हो ? जीव, ईश्वर यी दुवैमा फौटाको पनि स्वरूप प्राप्त गराइदिने उपनिषद्हरूमा कहिएका ती कुन ज्ञान हुन् जो यी दुवैद्वारा गुरु र शिष्य भै उचित बाटोमा हिंडाउँछ ॥ ३८ ॥ हे अनघ ( पापरहित ) ! विद्वानूजनको त्यस ज्ञानको सम्पादन गर्नको निमित्त जुन साधन

नआएका हुन, त्यो हजुर मलाई भन्नुहवस् । यो पनि बुझ्ने मेरो इच्छा छ—कुन पनि गुरुको शरणमा नगइकन आफैं मनुष्यको हृदयमा ज्ञान, वैराग्य र भक्ति कसरी जाग्न सक्छ ॥३९॥
हे भगवन् ! मैले हजुरसित जुन धेरै प्रश्न गरें, तिनको एकमात्र हेतु हो, भगवानूका कर्महरूलाई जान्नु । हजुर कृपा गरेर म अज्ञानी र अविद्याले गर्दा नेत्र नष्ट भएको (अन्धो) मित्रलाई
यो सबै कुरा बुझाइदिनोस् ॥४०॥ हे अनघ ! जीवलाई अभयदान दिनाले जुन पुण्य प्राप्त हुन्छ, त्यो सबै वेद, यज्ञ, तप र दान आदि त्यसको षोडशांशको पनि समान हुनसक्तैन॥४१॥
श्रीशुकदेव भन्नुहुन्छ—पुराणहरूका मूर्तिमान स्वरूप महर्षि मैत्रेय कुरुवंशीहरूमा प्रधान विदुरले यसरी भगवत्कथा-प्रसंग सोधेकोमा प्रसन्न भए र हाँसेर भन्नलागे ॥ ४२ ॥
इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशङ्कर 'वसिष्ठ' कृत नेपाली-भाषाटीकायां सप्तमोऽध्यायः ॥७॥ (ब्रह्माको उत्पत्ति वर्णन)—मैत्रेय भन्नलागे—यो पुरुवंश धन्य हो—
यस्ता धर्मराज युधिष्ठिर जस्ता भगवद्भक्त भए। तिमी पनि उनकै समान कीर्तिमान छौ र भगवानको गुणानुवाद सुनी-सुनीकन त्यसलाई नयाँ पारिरहन्छौ ॥ १ ॥ तिम्रो यस

स्वतो ज्ञानं कुतः पुंसां भक्तिर्वैराग्यमेव वा ॥३९॥ एतन्मे पृच्छतः प्रश्नान् हरेः कर्मविवित्सया ॥ ब्रूहि मेऽज्ञस्य मित्रत्वादजया नष्टचक्षुषः ॥ ४० ॥
सर्वे वेदाश्च यज्ञाश्च तपो दानानि चानघ ॥ जीवाभयप्रदानस्य न कुर्वीरन्कलामपि ॥ ४१ ॥ श्रीशुक उवाच ॥ स इत्थमापृष्टपुराणकल्पः कुरु-
प्रधानेन मुनिप्रधानः ॥ प्रवृद्धहर्षो भगवत्कथायां सञ्चोदितस्तं प्रहसन्निवाह ॥ ४२ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे सप्तमोऽध्यायः ॥ ७ ॥
मैत्रेय उवाच ॥ सत्सेवनीयो बत पूरुवंशो यल्लोकपालो भगवत्प्रधानः ॥ बभूविथेहाजितकीर्तिमालां पदे पदे नूतनयस्यभीक्ष्णम् ॥ १ ॥ सोऽहं नृणां
क्षुल्लसुखाय दुःखं महद्गतानां विरमाय तस्य ॥ प्रवर्तये भागवतं पुराणं यदाह साक्षाद्भगवानृषिभ्यः ॥ २ ॥ आसीनमुर्व्यां भगवन्तमाद्यं संकर्षणं
देवमकुण्ठसत्त्वम् ॥ विवित्सवस्तत्त्वमतः परस्य कुमारमुख्या मुनयोऽन्वपृच्छन् ॥ ३ ॥ स्वमेव धिष्ण्यं बहु मानयन्तं यं वासुदेवाभिधमामनन्ति ॥
प्रत्यग्धृताक्षाम्बुजकोशमीषदुन्मीलयन्तं विबुधोदयाय ॥ ४ ॥ स्वर्धुन्युदार्द्रैः स्वजटाकलापैरुपस्पृशन्तश्चरणोपधानम् ॥ पद्मं यदर्चन्त्यहिराजकन्याः
सप्रेम नानाबलिभिर्वरार्थाः ॥५॥ मुहुर्गृणन्तो वचसाऽनुरागस्खलत्पदेनास्य कृतानि तज्ज्ञाः ॥ किरीटसाहस्रमणिप्रवेकप्रद्योतितोद्दामफणासहस्रम् ॥ ६ ॥

सराहनीय श्रद्धा देखेर म निकै प्रभावित भएको छु। अलिकति सुखको आशावश अन्ध-परम्परामा हिंड्दै महान् क्लेशहरू भोग्ने संसारीहरूको दुःख निवारण गर्नका निम्ति अब म तिमीलाई
श्रीमद्भागवत महापुराणको कथा सुनाउँछु—त्यो साक्षात् भगवानूले ऋषिहरूलाई सुनाएका थिए ॥२॥ एकपल्ट ज्ञानीशिरोमणि बलरामलाई पाताल-लोकमा बसेका देखेर तिनका लघुभ्राता
गुणहरूमा श्रेष्ठ कृष्णचन्द्रका तत्त्वहरू जान्ने इच्छाले सनकादि मुनिहरूले सोधे॥३॥ आफ्नो आत्मालाई नै आफ्नो आश्रय मान्ने भएका परमानन्दस्वरूप वासुदेवभगवानलाई ध्यानमा ल्याए
तथा सर्वश्रेष्ठ मानेर पूजा गर्दै एवं नारायणलाई आफ्नो मन-मन्दिरमा बसाली सनत्कुमार आदिको कल्याणार्थ आफ्ना आँखा अलि बर्ता उघार्दै बलराम जीसित मुनिहरूले सोधे ॥४॥
गङ्गाजलले आर्द्र (भिजेका) जटाहरूले स्पर्श गरेको—जसको नागकन्याहरू प्रेमपूर्वक विविध सामग्रीले वर-प्राप्तिको निम्ति पूजा गर्दै रहन्थे र जो भगवानका चरणोपधान (पाउपोश)
छ, त्यसको स्पर्श गर्दै ती तत्त्वज्ञानी ऋषिगण अनुरागपूर्ण वाणीले भगवानूको गुणानुवाद गान गर्दै थिए। ती सबै संकर्षण भगवानको अनादि उपस्थित भए, उनका मस्तकमा किरिटको

सदृश उत्तम मणिहरूले परिपूर्ण हजार फणा झल्किरहेका थिए ॥५॥६॥ मैत्रेय विदुरसित भन्दछन्—हे अङ्ग विदुर ! ती तजस्वी भगवान् बलरामले यो श्रीमद्भागवत्को कथा निवृत्तिपरायण र धर्मव्रती सनत्कुमारले सोधेपछि उनैसित भनेका थिए । फेरि सनत्कुमारले सांख्यायनलाई यो कथा सुनाए ॥७॥ परमहंसव्रतका सर्वश्रेष्ठ व्रती ती सांख्यायन ऋषिले नारायणको अनन्त विभूतिहरूका वर्णन गर्दै आफ्ना भक्त पराशर र बृहस्पतिसित यो कथा भने ॥८॥ ती दयालु पराशरले *पुलस्त्यको मुखबाट निःसृत यो आदिपुराण मसित भनेथे । हे वत्स ! उही पुराण आज म तिमी जस्ता श्रद्धालु र नित्यका अनुगामी भक्तसित भनिरहेको छु ॥९॥ यसरी बलरामद्वारा भक्त सम्प्रदायको परम्परा बताएर भगवान्का विभूतिको वर्णन गर्नका-लागि अब ब्रह्माको उत्पत्तिको वृत्तान्त बताउँदै भन्दछन्—यो विश्व जब समुद्रमा निमग्न थियो, भगवान्ले आफ्ना खुलेका नेत्र पनि भुनी त्यस बेला ती एक्लै थिए र शेषनागको

प्रोक्तं किलैतद्भगवत्तमेन निवृत्तिधर्माभिरताय तेन ॥ सनत्कुमाराय स चाह पृष्टः सांख्यायनायाङ्ग धृतव्रताय ॥ ७ ॥ सांख्यायनः पारमहंस्यमुख्यो विवक्षमाणो भगवद्विभूतीः ॥ जगाद सोऽस्मद्गुरवेऽन्विताय पराशरायाक्ष बृहस्पतेश्च ॥ ८ ॥ प्रोवाच मह्यं स दयालुरुक्तो मुनिः पुलस्त्येन पुराणमाद्यम् ॥ सोऽहं तवैतत्कथयामि वत्स श्रद्धालवे नित्यमनुव्रताय ॥ ९ ॥ उदाप्लुतं विश्वमिदं तदाऽऽसीद्यन्निद्रया मीलितदृङ्न्यमीलयत् ॥ अहीन्द्र-तल्पेऽधिशयान एकः कृतक्षणः स्वात्मरतौ निरीहः ॥१०॥ सोऽन्तःशरीरेऽर्पितभूतसूक्ष्मः कालात्मिकां शक्तिमुदीरयाणः ॥ उवास तस्मिन्सलिले पदे स्वे यथाऽनलो दारुणि रुद्धवीर्यः ॥ ११ ॥ चतुर्युगानां च सहस्रमप्सु स्वपन्स्वयोदीरितया स्वशक्त्या ॥ कालाख्ययाऽऽसादितकर्मतन्त्रो लोकानपीतान्ददृशे स्वदेहे ॥१२॥ तस्यार्थसूक्ष्माभिनिविष्टदृष्टेरन्तर्गतार्थो रजसा तनीयान् ॥ गुणेन कालानुगतेन विद्धः सूष्यंस्तदाऽभिद्यत नाभिदेशात् ॥१३॥

शय्यामा शयन गरिरहेका थिए । उनले मायाको खेलबाड त्यागिदिएका थिए, अतः तिनका सबै क्रियाहरू बन्द भएका र त्यस बेला ती स्वयंमै आनन्दित भइरहेका थिए ॥१०॥ तिनले आफ्नू शरीरमै परमाणुस्वरूप महदादि तत्त्वलाई समाविष्ट गरेका थिए र आफ्ना कालात्मिका शक्तिलाई यस निम्ति प्रेरित गरिरहन्थे कि त्यो मौकामा मलाई जागा गराइदेओस् । ती अधिष्ठानस्वरूप त्यस जलमा यसरी बसिरहेका थिए जसरी काठमा अग्नि आफ्नू शक्ति लुकाइराख्तछन् ॥११॥ चारै युग एकेक हजारपल्ट व्यतीत भइसके, तयसम्म ती योगनिद्राको वशीभूत भएर सुतिरहे । त्यसपछि आफै द्वारा प्रेरित आफ्नो कालात्मिका शक्तिद्वारा तिनलाई धेरै कार्य मिले । तब ती उठे र तिनले आफ्नै शरीरमा लीन विविध लोकहरूलाई देखे ॥१२॥ जब लोक ऋषिको निमित्त तिनको दृष्टि सूक्ष्म कुरातिर गयो र कालको अनुसरण गर्न भएका रजोगुणले पनि केही बल गरे अनि सूक्ष्म अर्थको आविर्भाव गर्न विचार

*उदाहरण—माथि '*पुलस्त्यको मुखबाट निःसृत' भो वाक्य आइसकेको छ । यसमा थोरै सानो आख्यान छ । पुनै समय राक्षसहरूले ऋषि पराशरका पितालाई मारेर खाइदिए । त्यसले पराशर मुनिलाई निकै रिस उठ्यो र ती यज्ञ गरेर राक्षसहरूको यज्ञमा पुगेर राक्षसहरूलाई एकैपटक नष्ट पारिदिन थाले । तर मुनि वसिष्ठले सम्झाइ बुझाइ तिनलाई शान्त पारे । आफ्ना छोराहरूको जीवन बचाउने पुलस्त्य मुनि प्रसन्न भएर पराशरलाई यस्तो आशिर्वाद दिए कि—'सबै पुराणहरू म जान्दछु तिमी ती सबैका वक्ता हुने छौ ।'

थियो। नाभिबाट उत्पन्न भयो ॥१३॥ तिनै, नारायणको सूक्ष्म अर्थ जीवहरूको भाग्यलाई जगाउने कालको प्रेरणाबाट सहसा पद्मकोषको रूपमा प्रकट भयो। त्यसको तेजले त्यो विशाल जलराशि तथा त्यस कमललाई उत्पन्न गर्ने नारायण पनि देदीप्यमान भए ॥१४॥ पछि ती विष्णु भगवान् आफूले उत्पन्न गरेका सबै गुणको परिचायक त्यस कमलमा अंशरूपले प्रविष्ट भए। त्यही अंश त्यस कमलबाट विधाता ( ब्रह्मा ) को रूपमा उत्पन्न भयो। ब्रह्मा स्वयं वेदमय थिए र उनले आफ्नो उत्पन्न गर्ने पितालाई देख्न पाएका थिएनन्। अतः ती स्वयम्भू पनि कहिए ॥१५॥ ती संसारलाई देख्न नपाए पनि कमलमा बसी-बसी घाँटी घुमाउँदै आफ्ना नेत्र उघार्ने चेष्टा गर्न लागे। यस्तो स्थितिमा चारैतिर नेत्र घुमाएर हेर्नाले नै तिनका चार मुख भए ॥१६॥ ती आदिदेव त्यो प्रलयकालीन वायुका वेगले उठेका अग्ला-अग्ला तरंगहरूका उत्पन्न त्यस कमलमा नै यद्यपि बसेका थिए तापनि त्यसलाई जान्न सकेनन् कि यो के हो—कतिसम्म भने—ती स्वयं आफूलाई बुझ्न असमर्थ भए कि म को हुँ ? र को ? ॥१७॥ अब ती यस कुराको तर्क गर्नलागे—यो कमलको पुष्पमा बसेको म को हुँ

स पद्मकोशः सहसोदतिष्ठत् कालेन कर्मप्रतिबोधनेन ॥ स्वरोचिषा तत्सलिलं विशालं विद्योतयन्नर्क इवात्मयोनिः ॥ १४ ॥ तल्लोकपद्मं स उ एव
विष्णुः प्रावीविशत्सर्वगुणावभासम् ॥ तस्मिन्स्वयं वेदमयो विधाता स्वयंभुवं यं स्म वदन्ति सोऽभूत् ॥१५॥ तस्यां स चाम्भोरुहकर्णिकायामवस्थितो
लोकमपश्यमानः ॥ परिक्रमन्व्योम्नि विवृत्तनेत्रश्चत्वारि लेभेऽनुदिशं मुखानि ॥ १६ ॥ तस्माद्युगान्तश्वसनावघूर्णजलोर्मिचक्रात्सलिलाद्विरूढम् ॥
उपाश्रितः कञ्जमु लोकतत्त्वं नात्मानमद्धाऽविददादिदेवः ॥ १७ ॥ क एष योऽसावहमब्जपृष्ठ एतत्कुतो वाऽब्जमनन्यदप्सु ॥ अस्ति ह्यधस्तादिह
किञ्चनैतदधिष्ठितं यत्र सतानुभाव्यम् ॥ १८ ॥ स इत्थमुद्वीक्ष्य तदब्जनाडीभिरन्तर्जलमाविवेश ॥ नार्वाग्गतस्तत्खरनालनालनाभिं विचि-
न्वंस्तदविन्दताजः ॥१९॥ तमस्यपारे विदुरात्मसर्गं विचिन्वतोऽभूत्सुमहांस्त्रिणेमिः ॥ यो देहभाजां भयमीरयाणः परिक्षिणोत्यायुरजस्य हेतिः ॥२०॥
ततो निवृत्तोऽप्रतिलब्धकामः स्वधिष्ण्यमासाद्य पुनः स देवः ॥ शनैर्जितश्वासनिवृत्तचित्तो न्यषीददारूढसमाधियोगः ॥२१॥ कालेन सोऽजः पुरुषा-
युषाभिप्रवृत्तयोगेन विरूढबोधः ॥ स्वयं तदन्तर्हृदयेऽवभातमपश्यतापश्यत यन्न पूर्वम् ॥ २२ ॥ मृणालगौरायतशेषभोगपर्यङ्क एकं पुरुषं शयानम् ॥

र यो यस्तो कमल कहाँबाट उत्पन्न भएको हो। यसमा म कुनै शंका छैन कि जसको भरमा यो कमल अडिएको छ, त्यसको कुनै आधार अवश्य होला ॥१८॥ यसरी विचार गरेर आफ्नो त्यो कमल दण्ड पक्रेर बिस्तार-बिस्तार जलमा पसे। त्यो काँढा भएको कमलनाल समाई जलमा तल ओर्लंदै ब्रह्मा उसको जरो खोजिरहेका थिए। धेरै समयसम्म उनले त्यसलाई खोजे, तर पाएनन् ॥१८॥ त्यो घोर अन्धकारमा ती यसै गरी आफ्ना पितालाई खोज्दै रहे। खोज्दै-खोज्दै चातुर्मास-लक्षणात्मक सय वर्ष व्यतीत भए तर तिनलाई खोजेको स्थान प्राप्त हुन सकेन—जहाँबाट कमलको उत्पत्ति भएको थियो ॥२०॥ त्यति प्रयत्न गरेर पनि जब अभिलाषा पूर्ण भएन, तब ब्रह्मदेव फेरि फर्केर आएर पुनः कमलमै बसिरहे। त्यसपछि उनले बिस्तार-बिस्तार श्वास तानेर आफ्नो चित्तवृत्तिहरूलाई चारैतिरबाट समेटे अनि समाधिस्थ भए ॥ २१ ॥ पूरा सय वर्षपछि तिनलाई संसर्गसिद्धि प्राप्त भयो र त्यसको संगसँगै आत्मज्ञान पनि प्राप्त भयो। यस्तो अवस्थामा जसलाई उनले बाहिर खोजेर पनि पाउन सकेका थिएनन्, ती स्वतः उनको हृदयमा आभासित भए ॥२२॥ उनले देखे—त्यस प्रलयकालीन समुद्रको

जलमा मृणाल (कमलको जरो) जस्तै सेतो सर्पको शय्यामा एकलो पुरुष सुतिरहेको छ । त्यसको शिरमा त्यही शय्या बनेर सर्पका फणा छाया गरिरहेका छन् र ती फणाका मणि त्यस स्थानलाई आलोकित पारिरहे छन् ॥२३॥ ती सुतेका पुरुषको मरकत मणिको पर्वतलाई परै बस भन्ने श्याम शरीर थियो र सायंकालीन मेघको पहेँलो र टल्कने छटालाई तिरस्कृत पार्न पहेँलो वस्त्र थियो । अगणित स्वर्ण–शृङ्गलाई लज्जित पार्ने किरीट तिनको मस्तकमा थियो । रत्नहरू, जलकाधारा, औषधि र कुसुम समूहलाई लज्जित पार्ने वनमाला तिनको घाँटीमा थियो र वेणुदण्ड लज्जित तुल्याउने तिनका हात पाउ थिए ॥२४॥ ती आफ्नो देहको लम्बाईमा नै तीन लोकको संग्रह गरेका थिए । विचित्र प्रकारका दिव्य आभूषण र वस्त्र धारण गरेका थिए । यद्यपि ऊ स्वयं सुन्दर थियो–तापनि उनको लावण्यमय शरीरलाई आभूषणहरूको खाँचो थिएन । तापनि आभूषणहरूले तिनको अनुपम सौन्दर्य देखिइरहेको थियो । त्यस्ता दिव्य पुरुषलाई ब्रह्माजीले त्यहाँ विराजमान देखे ॥२५॥ आफाफ्ना इच्छित कामनाहरू पूर्ण गर्ने इच्छाले धेरैथरि वैदिक पद्धति द्वारा तिनको पूजा गरिरहेका थिए र ती उनीहरूमा कृपा गरेर आफ्नो कमल समान कोमल चरण उचालि उनीहरूलाई स्पर्श गर्ने अवसर दिन्थे । ती पाउका औंलाहरूका नङ्को द्युतिबाट यस्तो ज्ञात हुन्थ्यो कि

फणातपत्रायुतमूर्धरत्नद्युभिर्हतध्वान्तयुगान्ततोये ॥ २३ ॥ प्रेक्षां क्षिपन्तं हरितोपलाद्रेः सन्ध्याभ्रनीवेरुरुरुक्ममूर्ध्नः ॥ रत्नोदधारौषधिसौमनस्य-
वनस्रजो वेणुभुजांघ्रिपांघ्रेः ॥ २४ ॥ आयामतो विस्तरतः स्वमानदेहेन लोकत्रयसंग्रहेण ॥ विचित्रदिव्याभरणांशुकानां कृतश्रियाऽपाश्रितवेषदेहम्
॥ २५ ॥ पुंसां स्वकामाय विविक्तमार्गैरभ्यर्चतां कामदुघांघ्रिपद्मम् ॥ प्रदर्शयन्तं कृपया नखेन्दुमयूखभिन्नांगुलिचारुपत्रम् ॥ २६ ॥ मुखेन
लोकार्तिहरस्मितेन परिस्फुरत्कुण्डलमण्डितेन ॥ शोणायितेनाधरबिम्बभासा प्रत्यर्हयन्तं सुनसेन सुभ्र्वा ॥ २७ ॥ कदम्बकिञ्जल्कपिशङ्गवाससा
स्वलंकृतं मेखलया नितम्बे ॥ हारेण चानन्तधनेन वत्स श्रीवत्सवक्षस्थलवल्लभेन ॥ २८ ॥ परार्ध्यकेयूरमणिप्रवेकपर्यस्तदोर्दण्डसहस्रशाखम् ॥
अव्यक्तमूलं भुवनांघ्रिपेन्द्रमहीन्द्रभोगैरधिवीतवल्शम् ॥ २९ ॥ चराचरौको भगवन्महीध्रमहीन्द्रबन्धुं सलिलोपगूढम् ॥ किरीटसाहस्रहिरण्यशृङ्ग-

ती पुरुषका चरण कमल हुन् र तिनका औंला पंखुडीहरू हुन् ॥२६॥ ती आफ्नो मन्द-हास्यले समस्त दुःखीहरूको दुःख निवारण गरिरहेथे । तिनका कानमा कुण्डल झुलिरहेका थिए । अरुण वर्ण तिनका दुवै ओंठ भित्रै आफ्नो प्रभाव देखाइरहेथे । तिनको सुन्दर नाक र मनोहर आँखीभौं बलपूर्वक मनलाई तानिरहेथे र ती आफ्नो पूजा गर्नेहरूको उचित सम्मान गरिरहेका थिए ॥२७॥ ती कदम्ब-पुष्पका केशरझैं पहेँलो वस्त्रले सुशोभित थिए । तिनको नितम्बमा करधनी ( मेखला ) थियो । श्रीवत्स मणिले सुशोभित वक्षस्थलमा अनेक अमूल्य हार थिए–जसले उनको कान्ति अझ बढी कमनीय भइरहेको थियो ॥२८॥ यौटा ठूलो श्रीखण्डको वृक्षसित उपमा दिदैं भन्दछन्–जसमा बहुमूल्य मणि जडिएको थियो, यस्तो भुजबन्धले अलंकृत त्यसका बाहुदण्ड महान् चन्दन-वृक्षका हाँगाजस्तै थिए । ती पुरुषका मूल ( आदिकारण ) को पत्ता थिएन र महान् चन्दनवृक्षको जरोको पनि केही पत्ता थिएन । यदि त्यो महापुरुष भुवनरूपी वृक्षका अधिपति थिए भने चन्दन वृक्षपनि संसारका समस्त वृक्षहरूका नाइके (मुखिया) मानिन्थे । जस्तै-चन्दन वृक्षका शाखा-प्रशाखाहरूमा ठूला-ठूला सर्प बेरिइरहन्छन्, त्यसै गरी ती परमपुरुष पनि सर्पहरूद्वारा आवेष्टित थिए ।२९।ती महापुरुष जगत्का चराचर जीवादिका वासस्थान थिए । ती सबै पर्वतहरूका जनक थिए र सर्पजातलाई मित्र

बनाएर त्यसैमा शयन गरिरहेका थिए । समुद्रको जलमा ती आफूलाई लुकाएर बसेका थिए, सयकडौं सुमेरु आदि स्वर्णशृङ्ग पर्वत तिनको किरीट बनेका थिए र ती कौस्तुभ रत्नका जनक थिए॥३०॥ तिनको घाँटीमा वनमाला विराजमान थियो र वेदरूपीभ्रमर तिनको चारैतिर घुमिरहेथे, यस्तो समवायबाट जुन शोभा भएको थियो, त्यसले ती परमपुरुष सुशोभित भइरहेथे सूर्य,चन्द्र, वायु र अग्नि आदि देवता–जुन आफ्नो तेजद्वारा तीनै लोक प्रकाशित पार्न गर्दछन्, ती सबै उनको नजीकसम्म पुग्न सक्तैनथे । तैपनि तिनको रक्षा गर्नका लागि उनको चारैतिर पहरा दिइरहेथे । त्यसले गर्दा सुदर्शनचक्र आदि शस्त्रहरूको पहुँच पनि त्यहाँसम्म पुग्न सकिरहेको थिएन ॥३१॥ यस प्रकारका नारायणलाई ब्रह्माले जसै देखे, त्यसै बखत विविध प्रकारका जीवहरूको सृष्टि गर्ने दृष्टि खुल्यो र तत्काल तिनले ती परमपुरुषको नाभिरूपी सरोवरमा उत्पन्न त्यस कमललाई, त्यसमाथि बसेको स्वयं आफूलाई महाजलराशिलाई, वायु र आकाशलाई देखे ॥३२॥ त्यसपछि रजोगुण युक्त ब्रह्माजीले सृष्टि गर्ने इच्छा गरेर लोक-सृष्टिका मूल कारणस्वरूप विष्णुको नाभिबाट उत्पन्न कमल आदितिर नियालेर हेरे अनि अव्यक्त मार्ग भएका ती भगवान्मा मन लगाएर स्तुति गर्नलागे ॥३३॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धेऽष्टमोऽध्यायः ॥८॥ब्रह्माजी भन्दछन्–हेभगवन् ! धेरै दिनसम्म आराधना

माविर्भवत्कौस्तुभरत्नगर्भम् ॥ ३० ॥ निवीतमाम्नायमधुव्रतश्रिया स्वकीर्तिमय्या वनमालया हरिम् ॥ सूर्येन्दुवाय्वग्न्यगमं त्रिधामभिः परिक्रमत्प्राधनिकैर्दुरासदम् ॥ ३१ ॥ तर्ह्येव तन्नाभिसरःसरोजमात्मानमम्भः श्वसनं वियच्च ॥ ददर्श देवो जगतो विधाता नातः परं लोकविसर्गदृष्टिः ॥३२॥ स कर्मबीजं रजसोपरक्तः प्रजाः सिसृक्षन्नियदेव दृष्ट्वा ॥ अस्तौद्विसर्गाभिमुखस्तमीड्यमव्यक्तवर्त्मन्यभिवेशितात्मा ॥ ३३ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धेऽष्टमोऽध्यायः ॥ ८ ॥ ब्रह्मोवाच ॥ ज्ञातोऽसि मेऽद्य सुचिरान्ननु देहभाजां न ज्ञायते भगवतो गतिरित्यवद्यम् ॥ नान्यत्त्वदस्ति भगवन्नपि तन्न शुद्धं मायागुणव्यतिकराद्यदुरुर्विभासि ॥ १ ॥ रूपं यदेतदवबोधरसोदयेन शश्वन्निवृत्ततमसः सदनुग्रहाय ॥ आदौ गृहीतमवतारशतैकबीजं यन्नाभिपद्मभवनादहमाविरासम् ॥ २ ॥ नातः परं परम यद्भवतः स्वरूपमानन्दमात्रमविकल्पमविद्धवर्चः ॥ पश्यामि विश्वसृजमेकमविश्वमात्मन् भूतेन्द्रियात्मकमदस्त उपाश्रितोऽस्मि ॥ ३ ॥ यद्वा इदं भुवनमंगल मंगलाय ध्याने स्म नो दर्शितं त उपासकानाम् ॥ तस्मै नमो भगवतेऽनु-

गरेपछि धेरै आज मैले हजुरलाई जान्नसकें । देहधारी जीवहरूमा यो ठूलो दोष छ–की हजुरको गति बुझ्दैनन् । यद्यपि हजुरलाई जान्नमा नै मानव-जीवनको सार्थकता छ । किनकि हजुर बाहेक अरु केही छँदा पनि छैन–जे जति छ, सबै हजुरनै हुनुहुन्छ आँखाले जे गति देखिन्छ त्यसलाई म शुद्ध भन्न सक्तिन, किनकि हजुर त माया र गुणहरूबाट विकृत भएर अनेक रूपमा देखिनु हुन्छ ॥१॥ यदि हजुर यो आज्ञा हुन्छ–अहिले त तिमीले मलाई जान्न सकेका छैनौ । जो मेरो यो स्वरूप देखिरहेका छौ, यो पनि मायामय हो । वास्तविक र सत्य स्वरूप त निर्गुण ब्रह्म हो । तब म भन्नेछु–हजुरको चित्शक्तिको बलद्वारा जायमान र नित्यप्रकाशमान हजुरको स्वरूप–जसलाई आफ्ना भक्तहरूमा कृपा गरेर हजुरले प्रकट गरेको छ, त्यही सबै अवतारहरूको बीज हो र यसैको नाभि कमलरूप भवनबाट म उत्पन्न भएको हुँ ॥२॥ हे परमपुरुष ! हजुरको अप्रतिहत तेज सर्वत्र व्याप्त भएको छ । यसले हजुरमा भेदभाव छैन । हजुरको स्वरूप आनन्दमय छ ! हजुरको त्यो रूपदेखि पर मलाई केही देखिइरहेको छैन । जे-जति छ, त्यो हजुरको रूप नै छ । यो विचार गरेर मैले हजुरको स्वरूपको

हालमा आफूलाई सुम्पिदिएको छु । मेरा विचारमा त हजुरको यो स्वरूप पृथक् रहेर पनि भूतात्मक विश्वको उत्पत्तिमा मूल कारण छ ॥३॥ हे भुवन-मङ्गल ! हजुरले हामी जस्ता अनन्य उपासकहरूको कल्याण गर्नका लागि नै ध्यानमा आफ्नो यो अद्भुत रूप देखाउनु भयो। हजुर अव्यक्त र पूर्ण पुरुषमा मन लगाएर भजन गर्न हामी भक्तहरूलाई आफ्नो वास्तविक स्वरूप नदेखाएर हजुर सोपाधि स्वरूप देखाएर कुनै धोखा त दिनुहुन्न ? अनि म हजुरलाई अनादि ब्रह्म नमानूँ ? हे भगवन् ! म हजुरलाई नमस्कार गर्दछु । अँ, केही व्यक्ति यस्ता पनि अवश्य छन्, जो कुसंगतिमा अल्झेर थरि-थरिका कुतर्क गर्दै हजुरको यस स्वरूपमा दोष झिक्ने छन् ॥४॥ जो सज्जन वेदरूप वायुले उडाएर ल्याएको हजुरका चरणारविन्दको सुगन्धलाई सुँघ्दै र परमश्रद्धासंग हजुरका चरणको शरण पर्दछन् तब हे नाथ ! हजुर ती भक्तहरूको हृदय-कमलबाट कहिल्यै हट्नु हुन्न तथा सदा विराजमान रहनु हुन्छ ॥५॥ हजारौं जनहरूको गेह, धन र आफ्ना सम्बन्धी आदिको शोकले तब तस्मद्वाकिराख्दछ र विविधआकांक्षाहरू विविध प्रकारका पराजय र विपुल लोभ,तबसम्म सताउँ छन्, जबसम्म प्राणीलाई दुःखको कारणस्वरूप ती सबै वस्तुहरूमा मोह बनिरहन्छ र त्यो अभयदायक चरणको शरणमा आउन्नन ॥६॥ दुर्भाग्यले जसको मति बिग्रिएको छ, तीनै व्यक्ति समस्त अमंगल-

विधेम तुभ्यं योऽनादृतं नरकभाग्भिरसत्प्रसंगैः ॥ ४ ॥ ये ते त्वदीयचरणाम्बुजकोशगन्धं जिघ्रन्ति कर्णविवरैः श्रुतिवातनीतम् ॥ भक्त्या गृहीत-चरणः परया च तेषां नापैति नाथ हृदयाम्बुरुहात्स्वपुंसाम् ॥ ५ ॥ तावद्भयं द्रविणगेहसुहृन्निमित्तं शोकः स्पृहा परिभवो विपुलश्च लोभः ॥ तावन्म-मेत्यसदवग्रह आर्तिमूलं यावन्न तेऽङ्घ्रिमभयं प्रवृणीत लोकः ॥६॥ दैवेन ते हतधियो भवतः प्रसङ्गात्सर्वाशुभोपशमनाद्विमुखेन्द्रिया ये ॥ कुर्वंति काम-सुखलेशलवाय दीना लोभाभिभूतमनसोऽकुशलानि शश्वत् ॥ ७ ॥ क्षुत्तृट्त्रिधातुभिरिमा मुहुरर्द्यमानाः शीतोष्णवातवर्षैरितरेतराच्च ॥ कामाग्निना-ऽच्युत रुषा च सुदुर्भरेण सम्पश्यतो मन उरुक्रम सीदते मे ॥ ८ ॥ यावत्पृथक्त्वमिदमात्मन इन्द्रियार्थमायाबलं भगवतो जन ईश पश्येत् ॥ तावन्न संसृतिरसौ प्रतिसंक्रमेत व्यर्थाऽपि दुःखनिवहं वहति क्रियार्था ॥ ६ ॥ अह्न्यापृतार्तकरणा निशि निःशयाना नानामनोरथधिया क्षणभग्ननिद्राः ॥ दैवाहितार्थरचना ऋषयोऽपि देव युष्मत्प्रसंगविमुखा इह संसरन्ति ॥१०॥ त्वं भावयोगपरिभावितहृत्सरोज आस्से श्रुतेक्षितपथो ननु नाथ पुंसाम् ॥

हरूका विनाशक हजुरका कथा श्रवण आदि प्रसंग तथा आफ्ना इन्द्रियहरू विमुख राख्दछन् । ती अलिकति कामजनित सुखको निम्ति लोभले विवश भई चारैतिर दीन बनेर रुन्छन्, अनेक थरिका अनर्थ गर्दै रहन्छन्, जसले गर्दा तिनले सधैं अमंगलसित नै जुधिरहनु पर्दछ ॥७॥ ती बिचरा भोक, प्यास र वात-पित्त-कफ यी तीन धातुद्वारा दुःखी रहन्छन् । शीत, उष्ण, वायु र वर्षा आदि अनेक थरिका उपाधिहरूले व्याकुल रहन्छन् । कामरूपी अग्नि र असीम क्रोध तिनलाई भित्री पकाउँदै रहन्छन् । हेउरुक्रम ! ती दुःखीहरूलाई देखेर मेरो हृदयमा अपार क्लेश हुन्छ ॥८॥ हे स्वामिन् ! जबसम्म प्राणी आफ्नो देहादिलाई हजुरदेखि भिन्न मान्दै इन्द्रियहरूकी विषयरूपिणी मायालाई बलवती ठान्दै रहन्छ, तबसम्म त्यो यस दुःखपूर्ण संसारबाट मुक्ति प्राप्त गर्न सक्तैन । त्यसलाई दुःखका समूहले ढाकिरहन्छन्, किनकि त्यो आफूले गरेका कर्महरूको फल भोग्नको निम्ति विवश रहन्छ ॥९॥ यो मनौं कि—उपरोक्त सबै कष्ट त संसारका सबै प्राणीहरूको टाउकामा घुमिरहन्छ । अनि विवेकशील प्राणी भक्ति किन गरुन् ! त्यसमा म भन्दछु—हे देव ! जो दिनभरि विषयहरूमा लीन रहन्छन् र बेला-बेलामा

अनेक प्रकारका चिन्तन गरिरहनाले जसलाई निद्रा लाग्दैन, जसलाई दुर्भाग्यवश बारम्बार काम गर्दै रहे पनि सफलता प्राप्त हुँदैन, यस्ता ऋषि पनि भगवद्भक्तहरूको सत्सङ्गबाट विमुख र हेर संसारी आवागमनको चक्रमा परिरहन्छन ॥१०॥ हे नाथ ! हजुर भक्तियोगले युक्त पवित्र हृदमा आएर निवास गर्नुहुन्छ, हे सर्वगुणसम्पन्न ! हजुर तिनले रोजेका मार्गहरूबाट हिँड्नुहुन्छ ती आफ्नो मनले जुन-जुन रूपहरूको ध्यान गर्दछन् तब हजुर कृपा गरेर तिनै-तिनै रूपमा तिनको समक्ष प्रकट हुनुहुन्छ॥११॥ हे देव ! हजुर ती सकाम जीवहरूको विविध उपचारद्वारा गरिएका पूजनद्वारा त्यति नै प्रसन्न हुनुहुन्छ, जति सबै प्राणीहरूमा दया गरेर सबैको उपकार गर्नमा तत्पर प्राणीहरूमा प्रसन्न हुनुहुन्छ, किनकि हजुर त जगत्का सबै प्राणीहरूको शुभ-चिन्तक बनेर सबैका अन्तरात्मामा निवास गर्नहुन्छ ॥१२॥ हजुर वासनाका भिखारीहरूको* सकाम पूजाले प्रसन्न हुनुहुन्न । त्यसैले ती कामहरूको उत्तम फल प्राप्त हुँदैन । ती सकाम पुरुष अतिशुकै ठूलो यज्ञ गरुन्, दान दिउन्, उग्रतप गरुन् र कठोर व्रतको पालन गरुन्, तर त्यसबाट केही लाभ हुँदैन । यसको विपरीत जसले निष्काम भावनाबाट हजुरको आराधना

यद्यद्धिया त उरुगाय विभावयन्ति तत्तद्वपुः प्रणयसे सदनुग्रहाय ॥ ११ ॥ नातिप्रसीदति तथोपचितोपचारैराराधितः सुरगणैर्हृदि बद्धकामैः ॥
यत्सर्वभूतदययाऽसदलभ्ययैको नानाजनेष्ववहितः सुहृदान्तरात्मा ॥ १२ ॥ पुंसामतो विविधकर्मभिरध्वराद्यैर्दानेन चोग्रतपसा व्रतचर्यया च ॥ आरा-
धनं भगवतस्तव सत्क्रियार्थो धर्मोऽर्पितः कर्हिचिद्‌भ्रियते न यत्र ॥ १३ ॥ शश्वत्स्वरूपमहसैव निपीतभेदमोहाय बोधधिषणाय नमः परस्मै ॥ विश्वो-
द्भवस्थितिलयेषु निमित्तलीलारासाय ते नम इदं चकृमेश्वराय ॥ १४ ॥ यस्यावतारगुणकर्मविडम्बनानि नामानि येऽसुविगमे विवशा गृणन्ति ॥
ते नैकजन्मशमलं सहसैव हित्वा संयान्त्यपावृतमृतं तमजं प्रपद्ये ॥ १५ ॥ यो वा अहं च गिरिशश्च विभुः स्वयं च स्थित्युद्भवप्रलयहेतव आत्म-
मूलम् ॥ भित्त्वा त्रिपाद्‌ववृध एक उरुप्ररोहस्तस्मै नमो भगवते भुवनद्रुमाय ॥ १६ ॥ लोको विकर्मनिरतः कुशले प्रमत्तः कर्मण्ययं त्वदुदिते भवद-

गर्दै कर्मफल हजुरलाई अर्पण गरिदिन्छन् तिनका काम कहिल्यै बिग्रिँदैनन्—केही उत्तम फल अवश्य प्राप्त हुन्छ॥१३॥हजुर आफ्नो नित्य विद्यमान रहने स्वरूपबाट सबै प्रकारका भेद भ्रम हटाइदिनुहुन्छ । हजुर ज्ञानका अवतार हुनुहुन्छ र हजुर नै परमपुरुष हुनुहुन्छ । म हजुरलाई प्रणाम गर्दछु । यस विश्वको उत्पत्ति, पालन र संहारका एकमात्र हजुर नै कारण हुनुहुन्छ, यस कार्यलाई सम्पन्न पार्न हजुरकी मायाको विलास पनि हजुरद्वारा नै हुन्छ, यसैले हजुरलाई नमस्कार गर्दछु ॥१४॥ हजुरका विविध अवतारमा जुन अनेक थरिका कौतुक भएका छन्, तिनको स्मरण गरेर जो प्राणी प्राण त्याग्ने अवसरमा विवश भावले पनि हजुरको नाम सम्झन्छ, मने त्यो अनेक जन्मका पापहरू त्यागेर आवरणहीन परब्रह्मको लोक प्राप्त गर्छ ॥१५॥ यस विश्वरूपी महान् वृक्षका अधिष्ठाता हजुरका केवल थोटा पाउबाट ब्रह्मा विष्णु र शिवरूपी तीन शाखाहरू निस्के । ती प्रत्येक शाखाबाट कैयौं उपशाखाहरू निस्के र ती मरीचि-मनु आदि नामले बढे । यस्ता भुवनरूपी वृक्ष हजुरलाई प्रणाम गर्दछु ॥१६॥ यसरी भगवानका गुणावतार सम्बन्धी विस्तृत स्तुति गरेर उनको कालस्वरूपलाई नमस्कार

* उदाहरण ( यसै मार्गे हुन )—पुनै धर्मीले महात्मा जाजलीको सामुन्ने स्वर्णमुद्राले भरिएको थैला पैलो दर्शन-भेट राखे । उनले भने—'म माग्नेहरूसित केही पनि लिन्न ;' धनीले भने—'म माग्ने होइन, म त ठूलो धनी हुँ ।' यति सुनेर महात्मा जाजलीले भने—'तिमीसित कति धन छ, जोमन्त्र अझ बढी पाउने इच्छा गर्दैनौ कि गर्दैनौ ?' धनीले उत्तर दिए—'स हि भवति दरिद्रो यस्य तृष्णा विशाला । मनसि च परितुष्टे कोऽर्थवान् को दरिद्रः ॥'

गर्दै ब्रह्माजी भन्दछन्—यो संसार आफ्नू स्वार्थमा लिप्त भएर घरि-घरिका दूषित कर्म गर्दछन् । यस्ता प्राणीलाई आफूले भनेको बाटोमा ल्याएर जुन बलवान् ज्याक्क तिनको बारम्बारको जीवन-मरणको बन्धन तत्काल काटेर फ्याँकिदछ, यस्ता हे कालस्वरूप भगवान् ! म हजुरलाई प्रणाम गर्दछु ॥ १७ ॥ अरुको कुरा छाडौं—म स्वयं जब हजुरका सर्व लोकसंग नमस्कृत सत्यलोकमा थिएँ, तब मलाई हजुरसंग डर लाग्दथ्यो, हजुरकहाँ पुग्नको लागि मैले धेरै वर्षसम्म उग्र तप गरेँ । हे यज्ञादिका अधिष्ठाता ! म हजुरलाई प्रणाम गर्दछु ॥ १८ ॥ अब बेला-बेलामा गरिएका भगवान्‌का अवतार लीलाहरूको उल्लेख गर्दै भन्दछन्—आफ्नू इच्छाले तिर्यक् आदि योनिमा जन्म लिएर आफैंले बनाएका धर्म-सेतुको मर्यादा पालन गर्नको लागि जगत्‌ले अनेक प्रकारका कौतुक गरेका थिए, विषय-सुखका अनिच्छुक ती पुरुषोत्तमलाई बारम्बार प्रणाम गर्दछु ॥ १९ ॥ प्रत्यक्ष विद्यमान मूर्तिलाई प्रणाम गर्दै भन्दछन्—जो सदा जागरूक रहेर पनि आफ्नू उदरमा समस्त विश्व स्थापित गरेर शेषशय्यामा यो दर्शाउँदै प्रलयकालीन समुद्रका अग्ला-अग्ला तरङ्ग भएको जलमा शयन गर्दथे—यस

चेनं स्वं ॥ यस्तावदस्य बलवानिह जीविताशां सद्यश्छिनत्त्यनिमिषाय नमोऽस्तु तस्मै ॥ १७ ॥ यस्माद्बिभेम्यहमपि द्विपरार्धधिष्ण्यमध्यासितः सक-
ललोकनमस्कृतं यत् ॥ तेपे तपो बहुसवोऽवरुरुत्समानस्तस्मै नमो भगवतेऽधिमखाय तुभ्यम् ॥ १८ ॥ तिर्यङ्मनुष्यविबुधादिषु जीवयोनिष्वात्मे-
च्छयात्मकृतसेतुपरीप्सया यः ॥ रेमे निरस्तरतिरप्यवरुद्धदेहस्तस्मै नमो भगवते पुरुषोत्तमाय ॥१९॥ योऽविद्ययाऽनुपहतोऽपि दशार्धवृत्त्या निद्रामुवाह
जठरीकृतलोकयात्रः ॥ अंतर्जलेऽहिकशिपुस्पर्शानुकूलां भीमोर्मिमालिनि जनस्य सुखं विवृण्वन् ॥२०॥ यन्नाभिपद्मभवनादहमासमीड्य लोकत्रयोपक-
रणो यदनुग्रहेण ॥ तस्मै नमस्त उदरस्थभवाय योगनिद्रावसानविकसन्नलिनेक्षणाय ॥२१॥ सोऽयं समस्तजगतां सुहृदेक आत्मा सत्त्वेन यन्मृडयते भग-
वान्भगेन ॥ तेनैव मे दृशमनुस्पृशताद्यथाहं स्रक्ष्यामि पूर्ववदिदं प्रणतप्रियोऽसौ ॥२२॥ एष प्रपन्नवरदो रमयात्मशक्त्या यद्यत्करिष्यति गृहीतगुणावतारः॥
तस्मिन्स्वविक्रममिदं सृजतोऽपि चेतो युञ्जीत कर्मशमलं च यथा विजह्याम् ॥ २३ ॥ नाभिह्रदादिह सतोऽम्भसि यस्य पुंसो विज्ञानशक्तिरहमासम-
नन्तशक्तेः ॥ रूपं विचित्रमिदमस्य विवृण्वतो मे मा रीरिषीष्ट निगमस्य गिरां विसर्गः ॥ २४ ॥ सोऽसावदभ्रकरुणो भगवान्विवृद्धप्रेमस्मितेन

संसारका अज्ञ व्यक्ति कसरी सुत्तछन् ॥२०॥ जसको नाभिकमलबाट तीनै लोकको सृष्टि गर्न मेरो उत्पत्ति भएको हो । संसारलाई आफ्नू उदरमा बसालेर योगनिद्राको अन्त्यमा प्रफुल्ल नेत्रद्वारा अवलोकन गर्ने परमेश्वरलाई म प्रणाम गर्दछु ॥ २१ ॥ यसरी प्रार्थना गरिसकेपछि ब्रह्माजी बिन्ती गर्दछन्—हे नारायण ! जुन ज्ञान र ऐश्वर्यद्वारा हजूर यस संसारलाई सुखी पार्नुहुन्छ, हजूर त्यही ज्ञान र ऐश्वर्य मेरो बुद्धिमा पनि भरिदिनोस्, त्यसै द्वारा म सृष्टि-कर्म गर्नसकूँ, जस्तै पहिलेका कल्पहरूमा समर्थ हुन सकेको थिएँ । म हजूरसंग यस कारण विनय गर्दछु कि समस्त जगत्‌का सुहृद् केवल हजूर नै हुनुहुन्छ र प्रणतजनमा हजूर तुरुन्त कृपा गर्नुहुन्छ ॥ २२ ॥ हे शरणागत-वरदायक ! हजूर आफ्नो शक्ति लक्ष्मीका साथ जुन गुणावतार ग्रहण गरेर जे-जे कार्य गर्नुहुन्छ, त्यो हजूरकै भरमा जब म सृष्टिकार्य गर्न थालूँ भने हजूर मेरो मनमा यस्ता भाव भरिदिनोस्—जसले म सृष्टिमा विषमता आदि भेदभावका पापमा नफसिऊँ ॥ २३ ॥ जुन महापुरुषका नाभिकमलबाट म विज्ञान-शक्तिद्वारा उत्पन्न भएको छु, त्यसमा अनन्त शक्ति-सम्पन्न परम-पिताका विचित्र रूपहरूको

विस्तार गर्न थालेँ, तब जुन मसित वैदिक वाणीको भण्डार छ, त्यो वेद म नबिसौँ ॥२४॥ यसरी सृष्टि कार्य गर्दा जगत्को कल्याण गर्नका लागि परम दयालु बनेर हजुर ठूलो प्रेमपूर्वक मुसुक्क हाँस्तै आफ्ना नेत्रलाई अलिकति विकसित पार्दै आफ्नो शेष-शय्यामा उठेर बेला-बेलामा मीठो वाणी बोल्दै मेरो विषाद पर पार्दै रहनु होला ॥२५॥ यस प्रकार ब्रह्माजीको स्तुतिको वर्णन गरिसकेछि मैत्रेय भन्दछन्—हे विदुर ! ब्रह्माजी आफ्ना जनकलाई त्यसरी जप, तप, विद्या ( उपासना ) र समाधि ( चित्तको एकाग्रता ) ले प्रसन्न पारेर मौन भए । ती त्यस बखत थाके जस्ता भएका थिए ॥२६॥ ब्रह्माको अभिप्राय बुझेर नारायण त्यो प्रलयकालीन डरलाग्दो जलराशि देखेर खिन्न भएका ब्रह्मासित भन्न लागे ॥२७॥ लोकको स्थिति विज्ञान बुझन नसक्नाले खिन्न ब्रह्माजीको कष्ट निवारण गर्दै भगवान् भन्नुहुन्छ—॥२८॥ हे वेदगर्भ ! तिमी यो विषाद-जनित आलस्यलाई फालेर आफ्नो सृष्टि कार्यमा लाग । जुन वस्तुको निम्ति तिमी मसित प्रार्थना गर्दछौ, त्यो मैले पहिलेदेखि नै ठिक्क पारिदिएको छु ॥२९॥ अब तिमी फेरि तपस्यामा लाग र मेरो ध्यान गर्दै रहनु ।

नयनाम्बुरुहं विजृम्भन् ॥ उत्थाय विश्वविजयाय च नो विषादं माध्व्या गिराऽपनयतात्पुरुषः पुराणः ॥ २५ ॥ मैत्रेय उवाच ॥ स्वसम्भवं निशाम्यैवं
तपोविद्यासमाधिभिः ॥ यावन्मनोवचः स्तुत्वा विरराम स खिन्नवत् ॥ २६ ॥ अथाभिप्रेतमन्वीक्ष्य ब्रह्मणो मधुसूदनः ॥ विषण्णचेतसं तेन
कल्पव्यतिकराम्भसा ॥ २७ ॥ लोकसंस्थानविज्ञान आत्मनः परिखिद्यतः ॥ तमाहागाधया वाचा कश्मलं शमयन्निव ॥ २८ ॥ श्रीभगवानुवाच ॥
मा वेदगर्भ गास्तन्द्रीं सर्ग उद्यममावह ॥ तन्मयापादितं ह्यग्रे यन्मां प्रार्थयते भवान् ॥ २९ ॥ भूयस्त्वं तप आतिष्ठ विद्यां चैव मदाश्रयाम् ॥
ताभ्यामन्तर्हृदि ब्रह्मन् लोकान्द्रक्ष्यस्यपावृतान् ॥३०॥ तत आत्मनि लोके च भक्तियुक्तः समाहितः ॥ द्रष्टाऽसि मां ततं ब्रह्मन्मयि लोकांस्त्वमात्मनः
॥३१॥ यदा तु सर्वभूतेषु दारुष्वग्निमिव स्थितम् ॥ प्रतिचक्षीत मा लोको जह्यात्तर्ह्येव कश्मलम् ॥३२॥ यदा रहितमात्मानं भूतेन्द्रियगुणाशयैः ॥
स्वरूपेण मयोपेतं पश्यन्स्वाराज्यमृच्छति ॥ ३३ ॥ नानाकर्मवितानेन प्रजा बह्वीः सिसृक्षतः ॥ नात्माऽवसीदत्यस्मिंस्ते वर्षीयान्मदनुग्रहः
॥ ३४ ॥ ऋषिमाद्यं न बध्नाति पापीयांस्त्वां रजोगुणः ॥ यन्मनो मयि निर्बद्धं प्रजाः संसृजतोऽपि ते ॥ ३५ ॥ ज्ञातोऽहं भवता त्वद्य दुर्विज्ञेयोऽपि

हे ब्रह्मन् ! यस तपस्यामा र ध्यानद्वारा तिमी आफ्नो हृदयमा सबै लोकहरू स्पष्टरीतिले देख्नसक्नेछौ ॥३०॥ हे ब्रह्मन् ! जब तिमी भक्तियुक्त भएर आफ्नो चित्त एकाग्र पार्नेछौ तब आफ्नो आत्मामा र सबै लोकमा मलाई व्याप्त देख्नेछौ ॥३१॥ जब कुनै प्राणी मलाई सबै प्राणीहरूमा उसै गरी विद्यमान देख्नथाल्दछ, जस्तै काठमा आगो, त्यसै बखत त्यो आफ्नो पापहरू त्यागिदिन्छ अर्थात् पाप फेरि ती प्राणीमा रहन सक्तैन ॥३२॥ जब प्राणी आफ्नो आत्मालाई सत्त्वादि गुण तथा तत्त्वहरूबाट भिन्न मगा लागेको बुझ्दछ, अनि मात्र त्यो मुक्त हुन्छ ॥३३॥ विविध प्रकारका कर्महरूको विस्तार गर्दै तिमी जब धेरै प्रजागणको सृष्टि गरिरहने छौ तब तिम्रो आत्मालाई कुनै कष्ट हुने छैन । तिमीमाथि मेरो ठूलो दया छ र तिमीले आफ्नो मन ममा लगाइदिएका छौ, यस निम्ति प्रजाको सृष्टि गर्ने कार्य गर्ने बखतमा पापी रजोगुण तिमीलाई आफ्नो बन्धनमा बाँध्न सक्नेछैन ॥३४-३५॥ किनकि तिमी मलाई पृथिव्यादि पञ्चमहाभूतहरू, इन्द्रियहरू, सत्त्वादि गुण तथा अहङ्कारबाट पृथक् मान्दछौ, यसैले आज तिमीले प्राणीमात्रको निम्ति दुर्विज्ञेय मेरो स्वरूप देख्न पाएका छौ र

त्यस बखत जब तिमी कमलनालको भरमा हिड्दै त्यसको मूलभाग खोजिरहेका थियौ, तब मैले तिम्रो अन्तरात्मा भित्र नै तिमीलाई आफ्नो दर्शन दिएथें ॥३६-३७॥ हे ब्रह्म ! तिमीले मेरो अभ्युदयबाट अङ्कित मेरो उत्तम स्तुति गरेका छौ र तपस्यामा तिम्रो ठूलो निष्ठा छ, यसैले तिमीप्रति मेरो ठूलो कृपा छ ॥३८॥ तिमीले सृष्टि कार्य गर्न इच्छाले सगुणरूपमा देखिए पनि निर्गुण रूपमै वर्णन गर्दै मेरो स्तुति गरेका छौ, अतः म तिमीप्रति प्रसन्न छु । तिम्रो कल्याण होस् ॥३९॥ जो व्यक्ति नित्य यस स्तोत्रले मेरो स्तुति गरेर मलाई भज्दछ भने त्यो सबै कामनाहरूलाई पूर्ण पार्नमा समर्थ छ र म ईश्वर त्यसमाथि चाँडै नै प्रसन्न हुन्छु ॥४०॥ व्रत, तप, यज्ञ, दान र समाधिद्वारा सिद्ध मोक्षरूपी फलात्मक अति पनि कार्यछन्, ती सबैका एकमात्र उद्देश्य मलाई प्रसन्न पार्नु हो । यही नै तत्त्वज्ञानीहरूको मत छ ॥४१॥ हे ब्रह्मन् ! म अहङ्कारोपाधियुक्त जीवहरूको आत्मा र प्रियतमहरूको पनि प्रियतम हुँ । यसैनिम्ति प्राणी जसको निम्ति लालायित रहन्छ, त्यो पाउनको निम्ति मसित प्रेम गरोस् ॥४२॥ यो त तिमी पनि जान्दछौ कि आत्मा तीनैलोकमा विद्यमान रहन्छ ।

देहिनाम् ॥ यन्मां त्वं मन्यसेऽयुक्तं भूतेन्द्रियगुणात्मभिः ॥३६॥ तुभ्यं मद्विचिकित्सायामात्मा मे दर्शितोऽबहिः ॥ नालेन सलिले मूलं पुष्करस्य विचिन्वतः ॥३७॥ यच्चकर्थाङ्ग मत्स्तोत्रं मत्कथाऽभ्युदयाङ्कितम् ॥ यद्वा तपसि ते निष्ठा स एष मदनुग्रहः ॥ ३८ ॥ प्रीतोऽहमस्तु भद्रं ते लोकानां विजयेच्छया ॥ यदस्तौषीर्गुणमयं निर्गुणं माऽनुवर्णयन् ॥ ३९ ॥ य एतेन पुमान्नित्यं स्तुत्वा स्तोत्रेण मां भजेत् ॥ तस्याशु सम्प्रसीदेयं सर्वकामवरेश्वरः ॥ ४० ॥ पूर्तेन तपसा यज्ञैर्दानैर्योगसमाधिना ॥ राद्धं निःश्रेयसं पुंसां मत्प्रीतिस्तत्त्वविन्मतम् ॥ ४१ ॥ अहमात्माऽऽत्मनां धातः प्रेष्ठः सन्प्रेयसामपि ॥ अतो मयि रतिं कुर्याद्देहादिर्यत्कृते प्रियः ॥ ४२ ॥ सर्ववेदमयेनेदमात्मनात्माऽऽत्मयोनिना ॥ प्रजाः सृज यथापूर्वं याश्च मय्यनुशेरते ॥ ४३ ॥ मैत्रेय उवाच ॥ तस्मा एवं जगत्स्रष्ट्रे प्रधानपुरुषेश्वरः ॥ व्यज्येदं स्वेन रूपेण कञ्जनाभस्तिरोदधे ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नवमोऽध्यायः ॥ ९ ॥ विदुर उवाच ॥ अन्तर्हिते भगवति ब्रह्मा लोकपितामहः ॥ प्रजाः ससर्ज कतिधा दैहिकीर्मानसीर्विभुः ॥ १ ॥ ये च मे भगवन्पृष्टास्त्वय्यर्था बहुवित्तम ॥ तान्वदस्वानुपूर्व्येण छिन्धि नः सर्वसंशयान् ॥ २ ॥ सूत उवाच ॥ एवं संचोदितस्तेन क्षत्त्रा कौषारवो मुनिः ॥ प्रीतः प्रत्याह तान्प्रश्नान्हृदिस्थानथ भार्गव ॥ ३ ॥ मैत्रेय उवाच ॥ विरिञ्चोऽपि तथा चक्रे दिव्यं वर्षशतं तपः ॥ आत्मन्यात्मानमावेश्य

अब तिमी अघिका कल्पहरूमैं जस्तै सुल्ने प्रजाहरूको सृष्टि गर ॥ ४३ ॥ महामुनि मैत्रेय भन्दछन्–प्रधान पुरुषहरूका पनि प्रभु ती कमलनाभ नारायण जगत्को सृष्टि गर्न ब्रह्मालाई यसरी सम्झाइ-बुझाइ अन्तर्धान हुनुभयो ॥४४॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नवमोऽध्यायः ॥९॥ ( सृष्टिका दस भेद वर्णन ) विदुर भन्छन्—हे मैत्रेय ! अब तपाईं मलाई यो बुझाउनोस् कि जब भगवान् ब्रह्मालाई बुझाएर अन्तर्धान हुनुभयो तब ती सर्वव्यापक ब्रह्माले कति प्रकारका दैहिकी र मानसी प्रजाको सृष्टि गरे ॥१॥ हे बहुज्ञ ! मैले हजुरसित जो प्रश्न गरें, हजुर क्रमशः तिनका उत्तर दिंदै मेरो सबै शंका निवारण गरिदिनोस् ॥२॥ यता सूतजी शौनकादि ऋषिहरूसित भन्दछन्–हे शौनक ! यसरी विदुरले सोधेपछि मैत्रेय मुनि प्रसन्न भए र तिनका प्रश्नहरू हृदयङ्गम गरेर भन्नलागे–॥३॥ हे विदुर ! नारायणको आदेशानुसार ब्रह्माजीले मन एकाग्र पारेर दिव्य ( देवताहरूको ) सय वर्षसम्म

उहाँ तप गर्नुभयो ॥ ४ ॥ त्यसपछि ब्रह्मा जुन कमलमाथि बसेका थिए, त्यो र जललाई पनि उनले प्रलय-वायुको वेगद्वारा कम्पित देखे ॥ ५ ॥ उस बखत आफ्नू बढेको तप र आत्मामा रहने ज्ञान तथा विज्ञानको बलद्वारा उनले त्यो जलको संगसँगै वायुलाई पनि पिइदिए ॥६॥ अब उनले आकाशसम्म उठेको त्यस कमललाई देखे र मनमनै यस्तो निश्चय गरे कि म यो कमलबाट नै प्रलयको गर्भमा रहेको तीनै लोकको सृष्टि गर्दछु ॥७॥ त्यसपछि नारायणको प्रेरणाले ती त्यस कमल-कोशभित्र पसे र त्यो एकलो कमलको तीन खण्ड पारेर तीनलोक बनाइदिए। यदि यो शंका गर्नौं कि त्यसयौटै कमलबाट तीन लोक कसरी बन सक्यो-तब सुन—) त्यो कमल यति विशाल थियो कि त्यसबाट चतुर्दश लोकहरूको अतिरिक्त पनि अनेकानेक लोक बनाउन सकिन्थे ॥८॥ इनै तीनै लोकहरूको जीवादिको रचनामा सम्पूर्ण विशेषता भरिएका छन। ( यदि यस्तो भनौं—ब्रह्मा पनि त यौटा जीव नै हुन्, फेरि तिनमा र ब्रह्मलोकका जीवहरूमा कुनै विशेषता किन मानिएन—यसको उत्तर यो हो—) ब्रह्माजी निष्काम कर्मका मूर्तिमान फल हुन्। यसै कारण सत्यलोक तथा महः प्रभृति लोक र त्यहाँका निवासी ती नै रहन्छन्, जो उपर्युक्त तीनै लोकहरूमा जस्तो सुकर्म-दुष्कर्म गरेका हुन्छन्, तीनै फल भोग्नको निम्ति त्यहाँ जान्छन्। त्यसैले सबै

यथाह भगवानजः ॥ ४ ॥ तद्विलोक्याब्जसम्भूतो वायुना यदधिष्ठितः ॥ पद्ममम्भश्च तत्कालकृतवीर्येण कल्पितम् ॥ ५ ॥ तपसा ह्येधमानेन विद्यया चात्मसंस्थया ॥ विवृद्धविज्ञानबलो न्यपाद्वायुं सहाम्भसा ॥ ६ ॥ तद्विलोक्य वियद्व्यापि पुष्करं यदधिष्ठितम् ॥ अनेन लोकान्प्राग्लीनान्कल्पिताऽस्मीत्यचिन्तयत् ॥ ७ ॥ पद्मकोशं तदाविश्य भगवत्कर्मचोदितः ॥ एकं व्यभाङ्क्षीदुरुधा त्रिधा भाव्यं द्विसप्तधा ॥ ८ ॥ एतावाञ्जीवलोकस्य संस्थाभेदः समाहृतः ॥ धर्मस्य ह्यनिमित्तस्य विपाकः परमेष्ठ्यसौ ॥९॥ विदुर उवाच ॥ यदात्थ बहुरूपस्य हरेरद्भुतकर्मणः ॥ कालाख्यं लक्षणं ब्रह्मन्यथा वर्णय नः प्रभो ॥ १० ॥ मैत्रेय उवाच ॥ गुणव्यतिकराकारो निर्विशेषोऽप्रतिष्ठितः ॥ पुरुषस्तदुपादानमात्मानं लीलयाऽसृजत् ॥ ११ ॥ विश्वं वै ब्रह्मतन्मात्रं संस्थितं विष्णुमायया ॥ ईश्वरेण परिच्छिन्नं कालेनाव्यक्तमूर्तिना ॥ १२ ॥ यथेदानीं तथाग्रे च पश्चादप्येतदीदृशम् ॥ सर्गो नवविधस्तस्य प्राकृतो वैकृतस्तु यः ॥१३॥ कालद्रव्यगुणैरस्य त्रिविधः प्रतिसंक्रमः ॥ आद्यस्तु महतः सर्गो गुणवैषम्यमात्मनः ॥१४॥ द्वितीयस्त्वहमो यत्र द्रव्यज्ञान

विशेषता तीन लोकमा नै मानिन्छन् ॥९॥ यति सुनेर विदुर भन्छन्–हे मैत्रेय ! जुन तपाईं ती अद्भुत कर्म गर्ने नारायणका काल–लक्षणात्मक स्वरूप भन्दै हुनुहुन्थ्यो त्यसैलाई अलि विशदरूपमा भन्नुहवस्—कालको कल्पना कसरी गरिन्छ र त्यसको स्थूल तथा सूक्ष्मरूप के हो ? ॥१०॥ मैत्रेय भन्दछन्–सत्वादि गुणहरूको महदादि परिणाम र त्यसको कार्य नै काल भनिन्छ, त्यो काल स्वयं विशेषताशून्य छ र अप्रतिष्ठित छ, कहीं पनि त्यसको अन्त्य छैन। ती परमपुरुष परमात्माले कालरूपी कारणलाई लिएर क्रीडाको लागि आफूलाई नै विश्वरूपमा सृजन गरे ॥ ११ ॥ त्यो भन्दा अघि विष्णुमायाले यस विश्वको संहार गरिदिएकी थिइन् र विश्वको तन्मात्रा ब्रह्मको स्वरूपमा लीन गरिसकेकी थिइन्। उनलाई ती अव्यक्त मूर्ति नारायणले काललाई निमित्त तुल्याएर फेरि व्यक्त पारिदिए ॥१२॥ यो विश्व अहिले जस्तो छ, त्यस्तै पहिले थियो र पछि पनि यस्तै रहने छ। यसले प्राकृत ( प्रकृतिबाट उत्पन्न हुने ) र वैकृत ( विकृतिबाट उत्पन्न मनुष्य आदि जीव ) भेदले नौ प्रकारका सृष्टिहरू हुन्छन्। दशौं सृष्टिमा ती परम पुरुष स्वयं रहन्छन् ॥ १३ ॥

काल, द्रव्य र गुण यी तीनैबाट तीन थरिको प्रलय हुन्छ। माथि जुन नौ थरिका सृष्टि कहिएका छ, तीमध्ये पहिलो सृष्टि ती परम पुरुषद्वारा गुणहरूमा विद्यमान महत् लक्षणात्मक हुन्छ ॥ १४ ॥ दोस्रो सृष्टि अहङ्कारको हुन्छ—यसमा द्रव्य, ज्ञान र क्रियाको उत्पत्ति हुने गर्दछ। तेस्रो सृष्टिमा वायु आदि ( सूक्ष्म ) भूत उत्पन्न हुन्छन्। यो सृष्टि द्रव्य शक्तिमती हुन्छ र यसबाट पञ्चमहाभूत उत्पन्न ( जायमान ) हुन्छन् ॥ १५ ॥ चौथो सृष्टिद्वारा ज्ञानक्रियात्मक इन्द्रियहरूको उत्पत्ति हुन्छ। पाँचौं सृष्टि द्वारा वैकारिक ज्ञान-शक्तिस्वरूप र इन्द्रियहरूका अधिष्ठाता देवतागणको उत्पत्ति हुन्छ ॥ १६ ॥ छैठौं सृष्टि द्वारा अन्धकार उत्पन्न हुन्छ यो अज्ञानको जन्मदाता हो। यी छ प्रकारका प्राकृत सृष्टिहरूको वर्णन गरियो। अब वैकृत सृष्टिको स्थिति सुन—॥ १७ ॥ माथि जुन सृष्टिहरूको वर्णन गरियो, ती सबै भगवान्‌का रजोगुणात्मक लीलास्वरूपिणी हुन्। सातौं मुख्य सृष्टिमा छ प्रकारका वृक्षहरूको उत्पत्ति हुन्छ ॥ १८ ॥ जस्तै—वनस्पति ( फूल नभइकन फल दिने वृक्ष गूलर आदि ), ओषधि ( रोपेपछि फल दिएर समाप्त हुने धान, जौ, गहुँ आदि ), लता ( अर्काको भरमा माथिसम्म जाने ), त्वक्सार ( जसको बोक्रामा तत्त्व रहन्छ, जस्तै—बाँस, बेत आदि ), वीरुध ( यो पनि लताजस्तै हुन्छ, तर यसलाई माथिसम्म टाँसिइरहने आवश्यकता

क्रियोदयः ॥ भूतसर्गस्तृतीयस्तु तन्मात्रद्रव्यशक्तिमान् ॥१५॥ चतुर्थ ऐन्द्रियः सर्गो यस्तु ज्ञानक्रियात्मकः ॥ वैकारिको देवसर्गः पञ्चमो यन्मयं मनः ॥ १६ ॥ षष्ठस्तु तमसः सर्गो यस्त्वबुद्धिकृतः प्रभो ॥ षडिमे प्राकृताः सर्गा वैकृतानपि मे शृणु ॥ १७ ॥ रजोभाजो भगवतो लीलेयं हरिमेधसः ॥ सप्तमो मुख्यसर्गस्तु षड्विधस्तस्थुषां च यः ॥ १८ ॥ वनस्पत्योषधिलतात्वक्सारा वीरुधो द्रुमाः ॥ उत्स्रोतसस्तमः प्राया अंतःस्पर्शविशेषिणः ॥ १९ ॥ तिरश्चामष्टमः सर्गः सोऽष्टाविंशद्विधो मतः ॥ अविदो भूरितमसो घ्राणज्ञा हृद्यवेदिनः ॥२०॥ गौरजो महिषः कृष्णः सूकरो गवयो रुरुः ॥ द्विशफाः पशवश्चेमे अविरुष्ट्रश्च सत्तम ॥२१॥ खरोऽश्वोऽश्वतरो गौरः शरभश्चमरी तथा ॥ एते चैकशफाः क्षत्तः शृणु पञ्चनखान् पशून् ॥ २२ ॥ श्वा सृगालो वृको व्याघ्रो मार्जारः शशशल्लकौ ॥ सिंहः कपिर्गजः कूर्मो गोधा च मकरादयः ॥२३॥ कङ्कगृध्रवटश्येनभासभल्लूकबर्हिणः ॥ हंससारसचक्राह्वका-

पर्दैन—जस्तै जुही आदि ) र द्रुम ( जुन फुलिसकेपछि फल्दछ—जस्तै—आँप आदि ) यी छ प्रकारका वृक्ष पृथ्वीको भित्रबाट आफ्नो आहार तान्दछन्। यिनमा चेतनाशक्ति देखिन्न। इनको भित्र स्पर्शशक्ति प्रबल हुन्छ र देश कालको व्यवस्था अनुसार इनमा विविध प्रकारका परिणाम पनि परिलक्षित हुन्छन् ॥ १९ ॥ आठौं सृष्टिबाट तिर्यक् ( पशु पक्षी ) योनिका जीवहरूको उत्पत्ति हुन्छ। यिनका अट्ठाइस भेद हुन्छन्। जस्तै—अविद ( स्तनादि ज्ञानशून्य ), भूरितम ( केवल आकृतिको जानकारी राख्ने ), घ्राणज्ञ ( नाकले सुँघेर बुझ्ने ), हृदि अवेद ( विशेष अनुसन्धान गर्नमा असमर्थ ) ॥ २० ॥ गाई, बाख्रा, भैंसी, हरिण, गवय, शूकर, रुरु ( मृगविशेष ), भेडा र ऊँट यी नौ प्रकारका पशु दुई खुर भएका हुन्छन् ॥ २१ ॥ गधा, घोडा, खच्चर, शरभ, चमरी, यी पशु एउटा खुर भएका हुन्छन्। हे विदुर ! अब म तिमीलाई पाँच खुर हुने पशु भन्दछु, सुन—॥ २२ ॥ कुकुर, स्याल, ब्वाँसो, बाघ, बिरालो, खरायो, शल्लक ( दुम्सी ), सिंह, बानर, हात्ती, कछुवा, गोही, कङ्क ( कङ्काकुल ), गिद्ध बटाई, बाज, भास, भालु, मयूर, हंस, सारस, चक्रवाक र उल्लु आदि पशु-पंक्षीका पाँच नङ्ग्रा हुन्छन्। ( माथि गणना गराइएका मगर आदि जन्तु र कङ्क आदि पक्षी सबै मिलाएर जम्मा अट्ठाइस प्रकारका तिर्यक् योनिका

हुन्छन् ॥२३-२४॥ हे विदुर ! उत्तानो परेर सुत्ने मनुष्यहरूको नवौं सृष्टि मानिएको छ । मनुष्य वर्ग रजोगुणात्मक तथा कर्मठ हुन्छन् र यो क्ष्राज्यादिका दुःखलाई पनि सुख मान्दछन् ॥२५॥ हे विदुर ! यी तीनै थरि वैकृत सृष्टि हुन् । देवताहरूको सृष्टि पनि वैकृत सृष्टिकै अन्तर्गत छ, तर सनत्कुमार आदिको सृष्टि उभयात्मक ( प्राकृत-वैकृतात्मक ) छ, किनकि यी देवता र मनुष्य दुवै नामले प्रसिद्ध छन् ॥२६॥ देव-सृष्टि आठ प्रकारको हुन्छ—देव, पितर, असुर, गन्धर्व, अप्सरा, सिद्ध, यक्ष, राक्षस, भूत, प्रेत, पिशाच, विद्याधर, तथा किम्पुरुष आदि । हे विदुर ! ब्रह्माको सृष्टिका भेद दशै हुन् ॥२७-२८॥ अब वंश र मन्वन्तरको वर्णन गर्दछु—प्रत्येक कल्पको प्रारम्भमा अव्यर्थ-विचारशील, स्वयंभू ईश्वर रजोगुणको आधारवाट स्वयं आफूलाई विविध आकृतिहरूमा व्यक्त गर्दै सृष्टिको कार्य गर्दछ ॥२९॥ इति श्रीमद्भागवते तृतीयस्कन्धे दशमोऽध्यायः ॥१०॥ ( मन्वन्तरादि

कोल्कादयः खगाः ॥ २४ ॥ अर्वाक्स्रोतस्तु नवमः क्षत्तरेकविधो नृणाम् ॥ रजोऽधिकाः कर्मपरा दुःखे च सुखमानिनः ॥ २५ ॥ वैकृतास्त्रय एवैते देवसर्गश्च सत्तम ॥ वैकारिकस्तु यः प्रोक्तः कौमारस्तूभयात्मकः ॥ २६ ॥ देवसर्गश्चाष्टविधो विबुधाः पितरोऽसुराः ॥ गन्धर्वाप्सरसः सिद्धा यक्षरक्षांसि चारणाः ॥ २७ ॥ भूतप्रेतपिशाचाश्च विद्याध्राः किन्नरादयः ॥ दशैते विदुराख्याताः सर्गास्ते विश्वसृक्कृताः ॥ २८ ॥ अतः परं प्रवक्ष्यामि वंशान्मन्वन्तराणि च ॥ एवं रजःप्लुतः स्रष्टा कल्पादिष्वात्मभूर्हरिः ॥ सृजत्यमोघसंकल्प आत्मैवात्मानमात्मना ॥ २९ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे दशमोऽध्यायः ॥ १० ॥ मैत्रेय उवाच ॥ चरमः सद्विशेषाणामनेकोऽसंयुतः सदा ॥ परमाणुः स विज्ञेयो नृणामैक्यभ्रमो यतः ॥ १ ॥ सत एव पदार्थस्य स्वरूपावस्थितस्य यत् ॥ वैकल्यं परममहानविशेषो निरन्तरः ॥ २ ॥ एवं कालोऽप्यनुमितः सौक्ष्म्ये स्थौल्ये

कालको परिमिति मैत्रेय भन्दछन्—हे विदुर ! पूर्वोक्त महत्तत्वादिहरूको अन्तिम अंश परमाणु कहिन्छ ( त्यसको अगाडि कुनै प्रकारको अंश विभाजन गर्न सकिन्न । अतिशय सूक्ष्म अंश परमाणु कहिन्छ ) ती नै अनेक परमाणु जब एकत्रित हुन्छन् तब मनुष्य भ्रममा परेर ती अनेक परमाणुहरूलाई बाँटै ठान्न थाल्दछन् ॥१॥ जुन पदार्थको अतिशय सूक्ष्म अंश परमाणु हुन्छ, त्यही पदार्थ जब अत्यन्त स्थूल अवस्थामा पुग्दछ तब 'परम महान्' कहिन थाल्दछ । त्यस परम महान्मा कुनै विशेषता वा भेदको सम्भावना रहन्न । यसैले भन्न सकै लाग्दछ कि यो विश्व नै 'परम महान्' छ ॥२॥ जस्तै—परमाणु स्थूल र सूक्ष्म हुन्छ, त्यसै गरी काल पनि स्थूल र सूक्ष्म मानिन्छ । त्यो अव्यक्त रहेछ

© उदाहरण ( सुख राज्यमा छैन )— एउटा राजाले कुनै अर्को राज्यमा हमला गरेर त्यहाँका राजालाई मारिदियो र उसको गद्दीमा अधिकार गरिलियो । केही दिनपछि राजाले त्यहाँका अधिकारीहरूलाई भने—'यस राजाका वंशको कोही छ भने डाक म त्यसलाई गद्दीमा बसाल्छु ।' अधिकारीले भने—'तिनको वंशमा त कोही पनि छैन । हाँ, तिनको एउटा सम्बन्धी छ र त्यो विरक्त भएर नदीतीरको मसानमा बस्दछ ।' राजाले उसलाई डाकन लगाए, तर त्यो आएन । अनि राजा स्वयं गए र भने—'म तिमीलाई यो राजगद्दी दिन्छु, लिइदेऊ ।' विरक्तले अस्वीकार गरिदिए । यद्यपि ती राजाले निकै आग्रह गरे तैपनि विरक्तले मानेन । अनि राजाले भने—'अनि केही वस्तु माग ।' विरक्तले भन्यो—'मलाई केही पनि चाहिन्न ।' राजाले फेरि आग्रह गरेपछि उसले भन्यो—'मलाई यस्तो जीवन चाहियो—जसको पछि मृत्यु नहोस् । मलाई यस्तो आनन्द चाहिन्छ जुन अविनाशी होस् र वृद्धावस्था कहिल्यै मनेर आउन नपाओस् ।' राजाले भन्यो—'यो त म दिन सक्दिन । यी सबै वस्तु त ईश्वरको हातमा छ ।' अनि विरक्तले भन्यो—'त्यसैले त मैले ईश्वरको शरण लिएको छु । म यो राज्य लिएर के गर्दछु ।'

पनि सबै व्यक्त पदार्थहरू भोग गर्दछ र सबै पदार्थहरूमा व्याप्त रहन्छ ॥३॥ जुन काल विश्वप्रपंचको परमाणु अवस्थाको भोग गर्दछ, त्यस काललाई परमाणु काल भन्दछन् । जुन काल पूर्ण अवस्थाको भोग गर्दछ, त्यसलाई 'परम महान्' भन्दछन् ( अर्थात् जुन जति समयमा परमाणु देशलाई नाघ्दछ, त्यतिनै समयलाई परमाणु काल र जति समयमा द्वादशराश्यात्मक भुवनको पारी पुग्छ, त्यसैलाई परम महान् भन्दछन् ) ॥४॥ दुइ परमाणुहरूको यौटा 'अणु' र तीन अणुहरूको यौटा 'त्रसरेणु' हुन्छ । त्यो त्रसरेणु आँखीझ्याल भित्र पस्ने सूर्यका किरणमा स्पष्ट देखिन्छ । त्यो बराबर माथि उड्दै रहन्छ–पृथ्वीमा झर्दैन ॥५॥ तीन त्रसरेणुहरूको भोग गर्ने काललाई 'त्रुटि' भन्दछन् । सय त्रुटिहरूको भोगकाल 'वेध' कहिन्छ, तीन वेधको भोगकाललाई 'लव' भन्दछन् ॥६॥ तीन लवको एक 'निमेष' तीन निमेषको एक 'क्षण', पाँच क्षणको एक 'काष्ठा' र पन्ध्र काष्ठाहरूको एक 'लघु' हुन्छ ॥७॥ पन्ध्र लघुहरूको एक 'नाडिका' हुन्छ । दुइ नाडिकाको एक मुहूर्त र छ वा सात घडिहरूको एक 'प्रहर' हुन्छ ॥८॥ छ पल तामाको

च सत्तम ॥ संस्थानभुक्त्या भगवानव्यक्तो व्यक्तभुग्विभुः ॥ ३ ॥ स कालः परमाणुर्वै यो भुङ्क्ते परमाणुताम् ॥ ततोऽविशेषभुग्यस्तु स कालः परमो महान् ॥ ४ ॥ अणुर्द्वौ परमाणुः स्यात्त्रसरेणुस्त्रयः स्मृतः ॥ जालार्करश्म्यवगतः खमेवानुपतन्नगात् ॥ ५ ॥ त्रसरेणुत्रिकं भुङ्क्ते यः कालः स त्रुटिः स्मृतः ॥ शतभागस्तु वेधः स्यात्तैस्त्रिभिस्तु लवः स्मृतः ॥ ६ ॥ निमेषस्त्रिलवो ज्ञेय आम्नातस्ते त्रयः क्षणः ॥ क्षणान्पञ्च विदुः काष्ठां लघुता दश पञ्च च ॥ ७ ॥ लघूनि वै समाम्नाता दशपंच च नाडिकाः ॥ ते द्वे मुहूर्तः प्रहरः षड्यामः सप्त वा नृणाम् ॥८॥ द्वादशार्धपलोन्मानं चतुर्भिश्चतुरंगुलैः ॥ स्वर्णमाषैः कृतच्छिद्रं यावत्प्रस्थजलप्लुतम् ॥ ९ ॥ यामाश्चत्वारश्चत्वारो मर्त्यानामहनी उभे ॥ पक्षः पंचदशाहानि शुक्लः कृष्णश्च मानद ॥ १० ॥ तयोः समुच्चयो मासः पितॄणां तदहर्निशम् ॥ द्वौ तावृतु षडयनं दक्षिणं चोत्तरं दिवि ॥ ११ ॥ अयने चाहनी प्राहुर्वत्सरो द्वादश स्मृतः ॥ संवत्सरशतं नृणां परमायुर्निरूपितम् ॥ १२ ॥ ग्रहर्क्षताराचक्रस्थः परमाण्वादिना जगत् ॥ संवत्सरावसानेन पर्येत्यनिमिषो विभुः ॥१३॥ संवत्सरः परिवत्सर इडावत्सर एव च ॥ अनुवत्सरो वत्सरश्च विदुरैवं प्रभाष्यते ॥१४॥ यः सृज्यशक्तिमुरुधोच्छ्वसयन्स्वशक्त्या पुंसोऽभ्रमाय

यौटा यस्तो पात्र बनाओस् जसमा एक प्रस्थ पानी अटाओस् । त्यस पात्रका पिंधको माझमा यौटा यस्तो प्वाल पारोस्, जसमा एक मासा सुनको चार अंगुल लामो सुइरो पस्नसकोस् । त्यस प्वालबाट जति बेरमा एक प्रस्थ पानी निस्कन्छ, त्यति समयलाई नाडी ( घटी वा दण्ड ) भन्दछन् ॥९॥ आठ याम ( प्रहर ) को एक दिन रात हुन्छ । अर्थात् चार प्रहरको दिन र चार प्रहरको रात । यस्ता पन्ध्र दिन र रातहरूको एक पक्ष हुन्छ । तिनका 'शुक्ल' 'कृष्ण' दुइ भेद हुन्छन् ॥१०॥ दुइ पक्षको एक महिना हुन्छ । यस प्रकार मनुष्यहरूको एक महीना पितृहरूको एक दिन र रातको बराबर हुन्छ । दुइ महीनाको एक ऋतु हुन्छ । तीन ऋतुको एक अयन हुन्छ । त्यो अयन दुइ प्रकारको हुन्छ–उत्तरायण र दक्षिणायन ॥११॥ दुइ अयन ( एक वर्ष ) देवताहरूको एक दिन र रातको समान हुन्छ । बाह्र महीनाको एक वर्ष हुन्छ । मनुष्यहरूको परमायु सय वर्षको मानिएको छ ॥१२॥ ग्रह ( चन्द्र-शनि आदि ) तथा नक्षत्र ( अश्विनी-भरणी आदि ) तारा ( साधारण तारिकाहरू ) मण्डलमा निवास गर्दै परमाणुबाट लिएर वर्ष भरिको समयसम्म यस भुवन-कोशको फेरो लगाउँदै रहन्छन् ॥१३॥

हे विदुर ! संवत्सर पनि पाँच थरिका हुन्छन्-संवत्सर, परिवत्सर, इडावत्सर, अनुवत्सर र वत्सर ॥१४॥ हे संसारी जन हो ! जुन सृष्टि कार्यलाई शक्तिहरूको कालात्मिका शक्तिद्वारा कार्यमा प्रवृत्त गर्दै बराबर आकाशमा हिंडिरहने र मनुष्यहरूको अम्लान नष्ट गर्दछन्, ती महाभूत स्वरूप र पञ्च-संवत्सर-प्रवर्तक सूर्य भगवान्लाई तिमी विविध सामग्रीहरू एकत्र पारेर पूजा गर ॥१५॥ यति सुनेर विदुर भन्दछन्-पितृहरू, मनुष्यहरूको परमायु हजुरले भन्नुभयो । अब मलाई ती ज्ञानीहरूको गति भन्नु हवस्, जो यस कल्प तथा त्रैलोक्यको बाहिर अरू-अरू लोकहरूमा बस्तछन् ॥१६॥ हजुर कालको गति राम्ररी जान्नुहुन्छ, किनकि धैर्यशाली योगी योगदृष्टिद्वारा समस्त विश्वलाई देख्दछन् ॥१७॥ मैत्रेयले भने–हे विदुर ! सत्य, त्रेता, द्वापर र कलि यी चार युग छन् । देवताहरूका बाह्र हजार वर्षमा युगसन्ध्या र संध्यांश सहित यी चारै युग बितेर जान्छन् ॥१८॥ देवताहरूको चार हजार वर्षको सत्ययुग हुन्छ । त्यस सत्ययुगको आदि र अन्त्यको परिमाण चार-चार सय वर्षको हुन्छ । देवताहरूको तीन हजार वर्षको त्रेता युग हुन्छ । यसको आदि-अन्त्यको समय तीन-

दिवि धावति भूतभेदः ॥ कालाख्यया गुणमयं क्रतुभिर्वितन्वंस्तस्मै बलिं हरत वत्सरपञ्चकाय ॥ १५ ॥ विदुर उवाच ॥ पितृदेवमनुष्याणामायुः परमिदं स्मृतम् ॥ परेषां गतिमाचक्ष्व ये स्युः कल्पाद्बहिर्विदः ॥ १६ ॥ भगवान् वेद कालस्य गतिं भगवतो ननु ॥ विश्वं विचक्षते धीरा योगाराद्धेन चक्षुषा ॥ १७ ॥ मैत्रेय उवाच ॥ कृतं त्रेता द्वापरं च कलिश्चेति चतुर्युगम् ॥ दिव्यैर्द्वादशभिर्वर्षैः सावधानं निरूपितम् ॥ १८ ॥ चत्वारि त्रीणि द्वे चैकं कृतादिषु यथाक्रमम् ॥ संख्यातानि सहस्राणि द्विगुणानि शतानि च ॥१९॥ संध्यांशयोरन्तरेण यः कालशतसंख्ययोः ॥ तमेवाहुर्युगं तज्ज्ञा यत्र धर्मो विधीयते ॥२०॥ धर्मश्चतुष्पान्मनुजान्कृते समनुवर्तते ॥ स एवान्येष्वधर्मेण व्येति पादेन वर्धता ॥२१॥ त्रिलोक्या युगसाहस्रं बहिराब्रह्मणो दिनम् ॥ तावत्येव निशा तात यन्निमीलति विश्वसृक् ॥२२॥ निशावसान आरब्धो लोककल्पोऽनुवर्तते ॥ यावद्दिनं भगवतो मनून्भुञ्जंश्चतुर्दश ॥२३॥ स्वं स्वं कालं मनुर्भुङ्क्ते साधिकां ह्येकसप्ततिम् ॥ मन्वन्तरेषु मनवस्तद्वंश्या ऋषयः सुराः ॥ भवन्ति चैव युगपत्सुरेशाश्चानु ये च तान् ॥ २४ ॥

तीन सय वर्षको हुन्छ । देवताहरूको दुई हजार वर्षको कलियुग हुन्छ र यसको आदि-अन्तको परिमाण सय-सय वर्षको मानिन्छ ॥१९॥ अघर संध्या ( युगको आदिमा ) र सन्ध्यांश ( युगको अन्त ) का अति सय वर्ष बताइएका छन्, तिनको बीचको समय युग कहिन्छ । समयका ज्ञाता जन तिनै समयमा आफ्ना धार्मिक कृत्यहरू सम्पन्न गर्दछन् ॥२०॥ सत्ययुगमा धर्मका चारै पाउ विद्यमान रहन्छन् । अतएव यस युगमा सबै व्यक्ति पूर्ण धर्मात्मा हुन्छन् । युगधर्मको अनुसार प्रत्येक युगमा धर्मका एक-एक चरण घट्तै जान्छन् ॥२१॥ त्रैलोक्यको बाहिर महर्लोकबाट ब्रह्मलोकसम्म देवताहरूको हजार चतुर्युगको एक दिन हुन्छ र त्यति नै समयको रात पनि हुन्छ। हे तात विदुर ! त्यस रातमा नै ब्रह्माजी सुत्दछन् ॥२२॥ रात बितेपछि ती उठेर आफ्नो सृष्टिकार्य आरम्भ गर्दछन् । ब्रह्माजीको एक दिनमा चौध मनु आफ्नो कार्यकाल समाप्त गरिसक्दछन् ॥२३॥ ती चौध मनु-हरूमा प्रत्येक मनुको कार्यकाल एकहत्तर चतुर्युगी भन्दा पनि केही बढी समयको हुन्छ । प्रत्येक मन्वन्तरमा मनु, मनुका वंशज राजाहरू, सप्तर्षि, इन्द्र र तिनका अनुयायी गन्धर्व

य सबै साथै उत्पन्न हुन्छन् ॥२४॥ तीनै लोकमा ब्रह्माजीको प्रतिदिनको सृजन-कार्यमा यही क्रम चलिरहन्छ र तिनको सृष्टिमा प्राणी आफाफ्ना कर्मानुसार तिर्यक्, मनुष्य, पितर तथा देवताहरूको योनिमा जन्म लिन्छन् ॥२५॥ प्रत्येक मन्वन्तरमा भगवान् सत्त्वगुणको आश्रय लिएर आफ्नो मूर्तिबाट नै मनु आदिको रूपमा अवतार लिएर आफ्नो पुरुषार्थको प्रदर्शन गर्दै जगत्‌को रक्षा गर्दछन् ॥ २६ ॥ दिनपछि रातको समयमा ब्रह्मा तमोगुणको केही अंशग्रहण गरेर सृष्टिकार्य थामेर निदाउँछन् र त्यो कालशक्तिको प्रेरणाद्वारा यो समस्त विश्व ब्रह्ममा लीन भएर जान्छ ॥२७॥ यस्तो अवस्थामा जब कि सूर्य र चन्द्रमा रहन्नन् तब त्यो घोर अन्धकारको बेलामा भूर्लोक आदि तीनै लोक पनि उनै भगवान्‌मा लीन हुन्छन् ॥२८॥ त्यस बेला शेष-भगवान्‌को मुखबाट निस्केको आगोको ज्वालामा तीनै लोक बल्न लाग्दछन् । त्यस ज्वालाले सन्तप्त भएर महर्लोकका निवासी भृगु आदि मुनि महर्लोकबाट जनलोकमा जान्छन् ॥२९॥ त्यस बल्दो त्रिभुवनमा कल्पान्तको बेला समुद्र बढ्दछ र वायु ठूलो वेगले बग्न थाल्दछ। वायुको प्रबल वेगबाट उठेको समुद्रको

एष दैनन्दिनः सर्गो ब्राह्मस्त्रैलोक्यवर्तनः ॥ तिर्यङ्नृपितृदेवानां सम्भवो यत्र कर्मभिः ॥ २५ ॥ मन्वन्तरेषु भगवान्बिभ्रत्सत्त्वं स्वमूर्तिभिः ॥ मन्वादिभिरिदं विश्वमवत्युदितपौरुषः ॥ २६ ॥ तमोमात्रामुपादाय प्रतिसंरुद्धविक्रमः ॥ कालेनानुगताशेष आस्ते तूष्णीं दिनात्यये ॥ २७ ॥ तमेवान्वपिधीयन्ते लोका भूरादयस्त्रयः ॥ निशायामनुवृत्तायां निर्मुक्तशशिभास्करम् ॥ २८ ॥ त्रिलोक्यां दह्यमानायां शक्त्या संकर्षणाग्निना ॥ यान्त्यूष्मणा महर्लोकाज्जनं भृग्वादयोऽर्दिताः ॥ २९ ॥ तावत्त्रिभुवनं सद्यः कल्पान्तैधितसिन्धवः ॥ प्लावयन्त्युत्कटाटोपचण्डवातेरितोर्मयः ॥ ३० ॥ अन्तः स तस्मिन्सलिल आस्तेऽनन्तासनो हरिः ॥ योगनिद्रानिमीलाक्षः स्तूयमानो जनालयैः ॥ ३१ ॥ एवंविधैरहोरात्रैः कालगत्योपलक्षितैः ॥ अपेक्षितमिवास्यापि परमायुर्वयःशतम् ॥ ३२ ॥ यदर्धमायुषस्तस्य परार्धमभिधीयते ॥ पूर्वः परार्धोऽपक्रान्तो ह्यपरोऽद्य प्रवर्तते ॥ ३३ ॥ पूर्वस्यादौ परार्धस्य ब्राह्मो नाम महानभूत् ॥ कल्पो यत्राभवद्ब्रह्मा शब्दब्रह्मेति यं विदुः ॥ ३४ ॥ तस्यैव चान्ते कल्पोऽभूद्यं पाद्ममभिचक्षते ॥ यद्धरेर्नाभिसरस आसील्लोकसरोरुहम् ॥ ३५ ॥ अयं तु कथितः कल्पो द्वितीयस्यापि भारत ॥ वाराह इति विख्यातो यत्रासीत्सूकरो हरिः ॥ ३६ ॥ कालोऽयं द्विपरार्धाख्यो निमेष उपचर्यते ॥ अव्याकृतस्यानन्तस्य अनादेर्जगदात्मनः ॥३७॥ कालोऽयं परमाण्वादिर्द्विपरार्धान्त ईश्वरः ॥ नैवेशितुं

अग्लो-अग्लो तरंगहरू तीनै लोकलाई डुबाइदिन्छ ॥३०॥ त्यस बखत योगनिद्राको वशीभूत भएर भगवान् त्यस जलमाथि शेष शय्यामा शयन गर्दछन् र जनलोक निवासी भृगु आदि मुनि तिनको स्तुति गर्न लाग्दछन् ॥३१॥ ब्रह्मदेवको त्यो सय वर्षको लामो आयु पनि दिन-रातको चक्रमा अन्तैर व्यतीत हुन्छन् ॥३२॥ ब्रह्माको आधा आयु 'परार्ध' कहिन्छ । त्यो पहिलो परार्ध बितिसक्यो, अब दोस्रो परार्ध चलिरहेछ ॥३३॥ प्रथम परार्धभन्दा पहिले ब्राह्मकल्प नामको यौटा महाकल्प भएको थियो, जसमा उत्पन्न ब्रह्मा वेदका स्वरूप थिए। त्यसै कारण ती 'शब्दब्रह्म' कहिन्छन् ॥३४॥ब्राह्मकल्पपछि पद्मकल्प आयो,जसमा नारायणको नाभिबाट विश्वसृष्टिको भण्डारस्वरूप कमल उत्पन्न भयो ॥३५॥ हे विदुर ! यो मैले तिमीलाई द्वितीय कल्पको कुरा बुझाएँ त्यसलाई वाराहकल्प भन्दछन् । जसमा भगवान्‌ले वाराह (सुंगुर) अवतार लिएका थिए॥३६॥ यसरी कालानुसार सृष्टि र आयुको परिमाण बताएर अब

कालको परिमाण रहित तत्त्वहरूको वर्णन गर्दछन्–यो समय द्विपरार्ध कहिन्छ। यो विकार रहित, अनन्त र अनादि छ। यो जगत्को आत्मस्वरूप भगवान्को केवल निमेष-मात्र हुन्छ ॥३७॥ यद्यपि जे पनि गर्नसक्ने सामर्थ्य कालमा छ, तापनि ती असीम र परिपूर्ण नारायणमाथि त्यसको कुनै पनि प्रभाव चल्न सक्तैन। त्यसको हात कामिनी र कांचन तथा देह-गेहको मायामा मरिमेट्ने मनुष्यसम्ममै सीमित रहन्छ ॥३८॥ सोह्र विकार र आठ प्रकृति द्वारा बनेको यस ब्रह्माण्डको विस्तार पचास करोड योजन छ र उत्तरोत्तर दसगुना बढ्दो पृथिवी आदि आवरणले आवृत छ ॥३९॥ यो विशाल ब्रह्माण्ड ती परम पुरुष परमात्मामा परमाणु समान देखिन्छन् र तिनको शरीरमा यस्ता यस्ता अग-णित ब्रह्माण्ड भरिएका छन् ॥४०॥ ती परमात्मालाई मानिस सबै कारणका पनि कारण, विष्णु भगवान्, परमधाम (तेज) र अक्षर (अविनाशी) ब्रह्म भन्दछन् ॥४१॥ इति श्रीमद्भागवते तृतीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायां एकादशोऽध्यायः ॥११॥ (सृष्टिको विस्तार) मैत्रेय भन्दछन्–हे विदुर ! यसरी मैले कालस्वरूप परमात्माको महिमाको

प्रभुर्भूत्न ईश्वरो धाम मानिनाम् ॥ ३८ ॥ विकारैः सहितो युक्तैर्विशेषादिभिरावृतः ॥ आण्डकोशो बहिरयं पञ्चाशत्कोटिविस्तृतः ॥ ३९ ॥ दशो-त्तराधिकैर्यत्र प्रविष्टः परमाणुवत् ॥ लक्ष्यन्तेऽन्तर्गताश्चान्ये कोटिशो ह्यण्डराशयः ॥ ४० ॥ तदाहुरक्षरं ब्रह्म सर्वकारणकारणम् ॥ विष्णोर्धाम परं साक्षात्पुरुषस्य महात्मनः ॥ ४१ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे एकादशोऽध्यायः ॥ ११ ॥ मैत्रेय उवाच ॥ इति ते वर्णितः क्षत्तः कालाख्यः परमात्मनः ॥ महिमा वेदगर्भोऽथ यथाऽस्राक्षीन्निबोध मे ॥१॥ ससर्जाग्रेऽन्धतामिस्रमथ तामिस्रमादिकृत् ॥ महामोहं च मोहं च तमश्चाज्ञा-नवृत्तयः ॥२॥ दृष्ट्वा पापीयसीं सृष्टिं नात्मानं बह्वमन्यत ॥ भगवद्ध्यानपूतेन मनसाऽन्यांस्ततोऽसृजत् ॥३॥ सनकं च सनंदं च सनातनमथात्मभूः ॥ सनत्कुमारं च मुनीन्निष्क्रियानूर्ध्वरेतसः ॥४॥ तान्बभाषे स्वभूः पुत्रान्प्रजाः सृजत पुत्रकाः ॥ तन्नैच्छन्मोक्षधर्माणो वासुदेवपरायणाः ॥५॥ सोऽ-वध्यातः सुतैरेवं प्रत्याख्यातानुशासनैः ॥ क्रोधं दुर्विषहं जातं नियन्तुमुपचक्रमे ॥ ६ ॥ धिया निगृह्यमाणोऽपि भ्रुवोर्मध्यात्प्रजापतेः ॥ सद्योऽजायत

वर्णन गरें। अब वेदगर्भ ब्रह्माले सृष्टिको कार्य कसरी सम्पन्न गरे भन्ने सुन ॥१॥ पहिले पाँच अविद्या-वृत्तिहरू सृष्टि गरे। जस्तै–तम अर्थात् स्वरूप प्रकाश, मोह (देहादिको अहंकार वृत्ति) महामोह (भोगेच्छा) तामिस्र (इच्छित भोग नपाउनाले क्रोध) अन्धतामिस्र (भोग र त्यसका साधन नष्ट भएपछि आफूमरेझैं ठान्ने भावना) इनमा पनि पहिले अन्धतामिस्रको रचना भयो ॥२॥ तर त्यो पापमयी सृष्टिलाई देखेर ब्रह्माजीलाई सन्तोष भएन अतः उनले फेरि भगवान्को ध्यान गरेर आफ्नो मन पवित्र पारे। अनि अन्यान्य वस्तुको रचना गरे ॥३॥ त्यसै क्रममा ब्रह्माजीले सनक, सनन्दन, सनातन, सनत्कुमार यी चार ऋषिहरूलाई उत्पन्न गरे। ती सबै पूर्ण ब्रह्मचारी थिए ॥४॥ तिनलाई उत्पन्न गरिसकेपछि ब्रह्माजीले ती सबैलाई भने–'हे पुत्र हो ! तिमीहरू सन्तान उत्पन्न गरेर प्रजाको सृष्टि गर। तर तिनीहरू जन्मदेखि नै मोक्षका अभिलाषी र भगवान्का भक्त थिए, अतः उनले सन्तान उत्पादन र प्रजाको सृष्टि गर्ने काममा अनिच्छा प्रकट गरे ॥५॥ आफ्नो आज्ञाको अवहेलनामा गर्ने पुत्रहरू द्वारा त्यसरी तिरस्कृत भएपछि ब्रह्माजीलाई निकै रिस उठ्यो, तर। तिनले

5

रोल्न थाले ॥६॥ यद्यपि आफ्नो बुद्धिद्वारा उनले करिर रोक्ने चेष्टा गरे, तर त्यो रोकिन सकेन। जिनको आँखीभौंको मध्यभागबाट नीललोहित कुमारको रूपमा प्रकट भए ॥७॥ देवताहरूका पूर्वज भगवान नीललोहित रुनलागे र उनले भने–हे ब्रह्मन् ! हे जगद्गुरो ! हजुर मेरो नामकरण गर्नोस् र बस्ने स्थान देखाउनोस् ॥८॥ तिनको कुरा सुनेर ब्रह्माजी भन्नु हुन्छ–तिमी नरोऊ। म शीघ्र नै तिम्रो नामकरण गरेर तिम्रो बस्ने स्थानको निधो गरिदिन्छु ॥९॥ हे सुरश्रेष्ठ ! तिमी जन्मनासाथ बालक झैं उद्वेगपूर्वक रुन लागेथ्यौ। यसनिम्ति तिमीलाई सबैले ( रुद्र ) भन्ने छन् ॥१०॥ हृदय, इन्द्रिय, प्राण, आकाश, वायु, अग्नि, जल, पृथ्वी, सूर्य, चन्द्रमा तथा तप इनलाई पहिलेदेखि नै तिम्रो बासस्थानको निम्ति

तन्मन्युः कुमारो नीललोहितः ॥ ७ ॥ स वै रुरोद देवानां पूर्वजो भगवान्भवः ॥ नामानि कुरु मे धातः स्थानानि च जगद्गुरो ॥८॥ इति तस्य वचः पाद्मो भगवान्परिपालयन् ॥ अभ्यधाद्भद्रया वाचा मा रोदीस्तत्करोमि ते ॥ ९ ॥ यदरोदीः सुरश्रेष्ठ सोद्वेग इव बालकः ॥ ततस्त्वामभिधास्यन्ति नाम्ना रुद्र इति प्रजाः ॥ १० ॥ हृदिन्द्रियाण्यसुर्व्योम वायुरग्निर्जलं मही ॥ सूर्यश्चन्द्रस्तपश्चैव स्थानान्यग्रे कृतानि मे ॥ ११ ॥ मन्युर्मनुर्महिनसो महाञ्छिवऋतुध्वजः ॥ उग्ररेता भवः कालो वामदेवो धृतव्रतः ॥ १२ ॥ धीर्वृत्तिरुशनोमा च नियुत्सर्पिरिलाऽम्बिका ॥ इरावती सुधा दीक्षा रुद्राण्यो रुद्र ते स्त्रियः ॥ १३ ॥ गृहाणैतानि नामानि स्थानानि च सयोषणः ॥ एभिः सृज प्रजा बह्वीः प्रजानामसि यत्पतिः ॥१४॥ इत्यादिष्टः स गुरुणा भगवान्नीललोहितः ॥ सत्त्वाकृतिस्वभावेन ससर्जात्मसमाः प्रजाः ॥ १५ ॥ रुद्राणां रुद्रसृष्टानां समंताद्ग्रसतां जगत् ॥ निशाम्य

बनाइराखेको छु ॥११॥ रुद्रबाहेक तिम्रा यी एघार नाम पनि हुनेछन्–मन्यु, मनु, महीनस, महान्, शिव, ऋतुध्वज, उग्ररेता, भव, काल, वामदेव र धृतव्रत ॥१२॥ हे रुद्र ! धी, वृत्ति, उशना, उमा, नियुत्सर्पि, इला, अम्बिका, इरावती, सुधा, दीक्षा र रुद्राणी यी एघार तिम्रा पत्नी हुनन् ॥१३॥ तिमी मैले बताएका नाम स्थान र स्त्रीहरू अंगीकार गरेर अनेक प्रजाहरूको सृष्टि गर, किनकि तिमी प्रजापति हौ ॥१४॥ ब्रह्माजीको आज्ञा पाएर रुद्र-भगवान्ले आफू जस्तै बलवान् आकृतिमान् ( नीललोहित सहित ) र तीक्ष्ण

---

उदाहरण ( दिन किरो )—यौटा महात्मा शान्त प्रकृतिका थिए। तिनको नियम थियो – कसैले कति नै ठूलो हानि गरोस्, तर रिस नगरेर त्यसको उपकार नै गर्दथे। यस्तो सरल स्वभावले गर्दा चारैतिर महात्माको कीर्ति फैलिन लाग्यो। तिनको नियम देखेर कहि अज्ञानि पनि अनुसरण गर्नलागे। यही गाउँमा यौटा दुष्ट मनुष्य बस्तथ्यो। परसन्तापी हुनाले त्यो ती साधुको कीर्ति सहन सकेन। अतः त्यो डाँवा डाहले गर्दथ्यो। एक दिन ती साधुकहाँ गएर भन्न लाग्यो—'बाबाजी ! चिलम देऊ !' महात्माले भने– म तमाखु खान्न। यस निम्ति मसित चिलम छैन। पीउने पानी माग्छौ भने दिन्छु !' दुष्टले भन्यो—'बाबा र सिद्ध भएर पनि तमाखु पनि राख्दैनौ ! अनि तिमीलाई बाबा कस ल्लाले सम्मान दियो ? तिमी जस्ता असल त साधु होइनन्, जो तमाखु न दिन सक्दछन्। तिमी त्यत्तिकै आएका हौ र हामीजस्ताको सत्कार पनि गर्दैनौ। तिम्रो जीवनलाई धिक्कार छ। सबैलाई ठगेर खाएका छौ र सिद्ध बनिरहेछौ। तमाखु जस्तो चीज पनि तिमीसित छैन भने समाधि कसरी लगाउँछौ ! तमाखु नखाइ कतै समाधि लाग्दछ ?' महात्माले हाँसेर भने—'हे भाई, केवल यो चीजको सर्वत्र निन्द छ। यसले तिमी बारंबार आएका छौ, थाके होला। लोभानि बनिका कुरा गर्यौ, कपाल पनि दुख्यो होला। अब त्यो दुःखको रिस शान्त भयो। उसले दुःखका भन्दा हजार गुना स्वादिष्ट सर्वत्र पियो। त्यसले मस्तिष्कमा चढेको तमाखूको गर्मी निस्कि र सात्त्विकता आयो। त्यसलाई आफ्नो दुर्गुणको ज्ञान भयो। अब त्यो ती महात्माको पाउमा ढल्यो र त्यसै बखतदेखि गाँजा, भाँग, तमाखू आदि छोडिदियो। त्यसैमात्र होइन, त्यसले अनेक व्यक्तिको लत छुटाइदियो र त्यसै प्रकारले त्यो पनि महात्माको अनन्य भक्त बन्यो।

स्वभावका सन्तान उत्पन्न गरे ॥१५॥ रुद्रद्वारा उत्पन्न अगणित रुद्रगण जब चारैतिरबाट संसारलाई खाइदिनलागे, तब ब्रह्माजीलाई शंका भयो र उनले रुद्रसित भने—॥१६॥ हे सुरश्रेष्ठ ! तिमी यस्ता प्रजा उत्पन्न नगर । यी प्रजाहरू त आफ्ना डरलाग्दा आँखाले मेरो सृष्टिलाई मानो भस्म पारिरहेछन् ॥१६॥ तिम्रो कल्याण होस ! अब तिमी गएर तपस्या गर, त्यसले सबैलाई सुख प्राप्त हुनेछ र तपोबलले तिमी उस्तै विश्वको सृष्टि गर्नमा समर्थ हुनेछौ—जस्तो कि पहिले गरेका थियौ ॥ १८ ॥ यस बाहेक सर्वोत्कृष्ट ज्योतिष्मान र घट-घटमा बस्ने नारायण पनि तपस्या द्वारा नै सुगमताले प्राप्त हुन सक्छन्, अरु उपाय छैन ॥१९॥ मैत्रेय भन्दछन्—यस्तो ब्रह्माको आज्ञा सुनेर रुद्र-भगवान्ले वाणीपति ब्रह्माका तीनपल्ट परिक्रमा गरे र तपस्याको निम्ति वनमा गए ॥२०॥ त्यसपछि भगवान्को शक्तिले सम्पन्न ब्रह्माजी फेरि सृष्टि कार्य गर्ने विचार गर्नलागे तब तिनको शरीरबाट यी दस पुत्र उत्पन्न भए । अस्तै ॥२१॥ मरीचि, अत्रि, अङ्गिरा, पुलस्त्य, पुलह, क्रतु, भृगु, वसिष्ठ, दक्ष र नारद ॥२२॥ तिनमा ब्रह्माजीको काखबाट नारद, औंलाबाट दक्षप्रजापति, श्वासबाट

संख्यशो यूथान्प्रजापतिरशङ्कत ॥ १६ ॥ अलं प्रजाभिः सृष्टाभिरीदृशीभिः सुरोत्तम ॥ मया सह दहन्तीभिर्दिशश्चक्षुर्भिरुल्बणैः ॥ १७ ॥ तप आतिष्ठ भद्रं ते सर्वभूतसुखावहम् ॥ तपसैव यथापूर्वं स्रष्टा विश्वमिदं भवान् ॥१८॥ तपसैव परं ज्योतिर्भगवन्तमधोक्षजम् ॥ सर्वभूतगुहावासमञ्जसा विन्दते पुमान् ॥१९॥ मैत्रेय उवाच ॥ एवमात्मभुवाऽऽदिष्टः परिक्रम्य गिरां पतिम् ॥ बाढमित्यमुमामन्त्र्य विवेश तपसे वनम् ॥ २० ॥ अथाभिध्यायतः सर्गं दश पुत्राः प्रजज्ञिरे ॥ भगवच्छक्तियुक्तस्य लोकसन्तानहेतवः ॥ २१ ॥ मरीचिरत्र्यङ्गिरसौ पुलस्त्यः पुलहः क्रतुः ॥ भृगुर्वसिष्ठो दक्षश्च दशमस्तत्र नारदः ॥ २२ ॥ उत्सङ्गान्नारदो जज्ञे दक्षोऽङ्गुष्ठात्स्वयम्भुवः ॥ प्राणाद्वसिष्ठः सञ्जातो भृगुस्त्वचि करात्क्रतुः ॥ २३ ॥ पुलहो नाभितो जज्ञे पुलस्त्यः कर्णयोर्ऋषिः ॥ अङ्गिरा मुखतोऽक्ष्णोऽत्रिर्मरीचिर्मनसोऽभवत् ॥ २४ ॥ धर्मः स्तनाद्दक्षिणतो यत्र नारायणः स्वयम् ॥ अधर्मः पृष्ठतो यस्मान्मृत्युर्लोकभयङ्करः ॥ २५ ॥ हृदि कामो भ्रुवः क्रोधो लोभश्चाधरदच्छदात् ॥ आस्याद्वाक्सिन्धवो मेढ्रान्निर्ऋतिः पायोरघाश्रयः ॥ २६ ॥ छायायाः कर्दमो जज्ञे देवहूत्याः पतिः प्रभुः ॥ मनसो देहतश्चेदं जज्ञे विश्वकृतो जगत् ॥ २७ ॥ वाचं दुहितरं तन्वीं स्वयम्भूर्हरतीं मनः ॥ अकामां चकमे क्षत्तः सकाम इति नः श्रुतम् ॥ २८ ॥ तमधर्मे कृतमतिं विलोक्य पितरं सुताः ॥ मरीचिमुख्या मुनयो विश्रम्भात्प्रत्यबोधयन्

वसिष्ठ, त्वचाबाट भृगु, हातबाट क्रतु ॥२३॥ नाभिबाट पुलह, कानबाट पुलस्त्य, मुखबाट अंगिरा, नेत्रबाट अत्रि र मनबाट मरीचि उत्पन्न भए ॥२४॥ ब्रह्माको दाहिने स्तनबाट धर्म उत्पन्न भए, जसमा नारायणको निवास रहन्छ । तिनको पिठिउँबाट अधर्मको उत्पत्ति भयो र अधर्मबाट संसारलाई भयभीत पार्ने मृत्युको जन्म भयो ॥ २५ ॥ ब्रह्माजीको हृदयबाट कामदेव, आँखीभौंबाट ओंठ क्रोध, तल्लोबाट लोभ, मुखबाट वाणी, लिंगबाट समुद्र र तिनको गुदाबाट पापहरूको केन्द्र राक्षस उत्पन्न भए ॥२६॥ ती चतुराननको छायाबाट कर्दम प्रजापति उत्पन्न भए, जुन देवहूतिका पति थिए । तिनको मन र देहबाट सम्पूर्ण विश्व उत्पन्न भयो ।॥२७॥ त्यसपछि ब्रह्माजीले सरस्वती नामकी चौटी कन्या सृष्टि गरे । तिनको मोहक सौन्दर्यले ब्रह्माजीको मन चलायमान भयो र ती उनलाई सकामभावले हेर्नलागे ॥२८॥ यस प्रकार अधर्मतिर न्हुरेका देखेर तिनका मरीचि आदि छोराहरूले प्रेमपूर्वक सम्झाउँदै

गर्ने—हे पिता ! आफ्नी छोरीसित यस प्रकारको कामुकताको व्यवहार न कहिले कसैले गरेको छ, न गर्नेछ ।।२९-३०।। हे जगद्गुरो ! यस प्रकारको निन्दित कर्म ठूला-ठूला तेजस्वी-हरूलाई पनि कलंकित पारिदिन्छ, फेरि हजुर त सबैका पिता हुनुहुन्छ। संसारका सबै प्राणी हजुरको चरित्रको अनुगमन गर्दछन् र यसैले उनको कल्याण हुन्छ, जसले आफ्नो शक्तिद्वारा यस विश्वको रचना गरेको छ, ती महामहिम भगवान्‌लाई प्रणाम छ। ती स्वयं आफ्नो धर्मको रक्षा गरुन् ।।३१-३२।। सामुन्ने उपस्थित आफ्ना छोराहरूको कुरा सुनेर ब्रह्माजीलाई धेरै लाज लाग्यो र उनले त्यहीं स्थितिमा आफ्नो त्यो शरीर त्यागिदिए। त्यसलाई सबै दिशाहरूले कुहिरोको रूपमा ग्रहण गरिलिए, जो आज पनि विद्यमान छ ।।३३।। त्यसको धेरै दिनपछि ब्रह्माजी विचार गर्नलागे—यी सबै जनहरू कसरी उस्तै बनाइन्छन्, जस्तो ती पूर्वकल्पमा थिए ।।३४।। त्यसै बखत तिनका चारै मुखबाट चारै वेद, उपवेद, ऋत्विजहरूको कर्म, यज्ञ-यज्ञ, नीतिशास्त्र, धर्मका चारै चरण एवं वृत्तिहरू सहित चारै आश्रम उत्पन्न भए ।।३५।। विदुरले सोधे—हे तपोधन मैत्रेय ! ती ब्रह्माजीले वेद आदिको जसरी उत्पत्ति

।।२९।। नैतत्पूर्वैः कृतं त्वद्य न करिष्यन्ति चापरे ।। यत्त्वं दुहितरं गच्छेरनिगृह्याङ्गजं प्रभुः ।। ३० ।। तेजीयसामपि ह्येतन्न सुश्लोक्यं जगद्गुरो ।।
यद्वृत्तमनुतिष्ठन्वै लोकः क्षेमाय कल्पते ।। ३१ ।। तस्मै नमो भगवते य इदं स्वेन रोचिषा ।। आत्मस्थं व्यञ्जयामास स धर्मं पातुमर्हति ।।३२।।
स इत्थं गृणतः पुत्रान्पुरो दृष्ट्वा प्रजापतीन् ।। प्रजापतिपतिस्तन्वं तत्याज व्रीडितस्तदा ।। तां दिशो जगृहुर्घोरां नीहारं यद्विदुस्तमः ।। ३३ ।।
कदाचिद्ध्यायतः स्रष्टुर्वेदा आसंश्चतुर्मुखात् ।। कथं स्रक्ष्याम्यहं लोकान्समवेतान् यथा पुरा ।। ३४ ।। चातुर्होत्रं कर्मतन्त्रमुपवेदनयैः सह ।। धर्मस्य
पादाश्चत्वारस्तथैवाश्रमवृत्तयः ।। ३५ ।। विदुर उवाच ।। स वै विश्वसृजामीशो वेदादीन्मुखतोऽसृजत् ।। यद्यद्येनासृजद्देवस्तन्मे ब्रूहि तपोधन ।।३६।।
मैत्रेय उवाच ।। ऋग्यजुःसामाथर्वाख्यान्वेदान्पूर्वादिभिर्मुखैः ।। शास्त्रमिज्यां स्तुतिस्तोमं प्रायश्चित्तं व्यधात्क्रमात् ।। ३७ ।। आयुर्वेदं धनुर्वेदं गान्धर्वं
वेदमात्मनः ।। स्थापत्यं चासृजद्वेदं क्रमात्पूर्वादिभिर्मुखैः ।। ३८ ।। इतिहासपुराणानि पञ्चमं वेदमीश्वरः ।। सर्वेभ्य एव वक्त्रेभ्यः ससृजे सर्वदर्शनः
।। ३९ ।। षोडश्युक्थौ पूर्ववक्त्रात्पुरीष्यग्निष्टुतावथ ।। आप्तोर्यामातिरात्रौ च वाजपेयं सगोसवम् ।। ४० ।। विद्या दानं तपः सत्यं धर्मस्येति पदानि

गरे, त्यो वृत्तान्त त हजुरले भन्नुभयो। अब मलाई यो बताउनोस् कि तिनको कुन मुखबाट के वस्तुको भयो ।।३६।। मैत्रेय भन्दछन्—हे विदुरजी ! ब्रह्माजीको पूर्व मुखबाट ऋग्वेद, यजुर्वेद, सामवेद, अथर्ववेद, शास्त्र ( होता द्वारा गरिने कर्म ) अध्वर्यु हरूको कर्तव्य कर्म, स्तुतियोग्य ऋचाहरूका समुदाय, उद्गाताहरू द्वारा गान गरिने योग्यमन्त्र र प्रायश्चित्तात्मक ब्रह्मकर्म उत्पन्न भए ।।३७।। तिनको दक्षिण मुखबाट आयुर्वेद ( चिकित्सा शास्त्र ) धनुर्वेद ( आयुधविद्या ) गान्धर्व ( गायन विद्या ) स्थापत्यकर्म ( विश्वकर्माको शास्त्र ) उत्पन्न भयो ।।३८।। इतिहास ( महाभारत ) पाँचौं वेद मानिन्छ, त्यसलाई र पुराणहरूलाई ब्रह्माजीले आफ्नो चारै मुखबाट उत्पन्न गरे ।।३९।। यसै प्रकार उनको पूर्व मुखबाट षोडशी र उक्थ, दक्षिण मुखबाट पुरीषी ( अर्थात् नयन कर्म ) तथा अग्निष्टोम, मुखबाट आप्तोर्याम तथा अतिरात्र र उत्तर मुखबाट वाजपेय तथा गोसव नामक यज्ञविशेष उत्पन्न भए ।।४०।। यसै प्रकार लोक-पितामह ब्रह्माजीले क्रमशः आफ्ना पूर्व, पश्चिम र दक्षिण आदि चारै मुखबाट विद्या ( शुचिता ), दान ( दया ), ताप र सत्य, धर्मका यी चारै चरण तथा [illegible]

अनुसार तथा तिनका समस्त वृत्तिहरू समेत चारै आश्रम र ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र उत्पन्न गरे ॥ ४१ ॥ त्यसपछि उनले आफ्ना पूर्व आदि चारै मुखहरूबाट चार थरिका ब्रह्मचर्य, जस्तै–सावित्री ( उपनयनको दिनदेखि तीन दिनसम्म गायत्रीको अध्ययन गर्नका लागि तीन दिनको अनुष्ठान ) प्राजापत्य ( एक वर्षसम्म वेदाध्ययनपूर्वक गरिने ब्रह्मचर्य-व्रत ) ब्राह्म ( वेदाध्ययन कालसम्म पालन गरिने ब्रह्मचर्य-व्रत ) र बृहत् ( आजन्म पालन गरिने ब्रह्मचर्य-व्रत ) ब्रह्माजीले चार थरिका नै गृहस्थ वृत्ति पनि रचना गरे । जस्तै - वार्ता ( शास्त्रोक्त कृषि आदि आजीविका कार्य ) संचय ( यज्ञ-याग आदि गर्ने कार्य ) शालीन ( आयस्थित वृत्ति ) शिलोञ्छ ( अन्न बटुलिसकेपछि खेतमा खसेका अन्नका दाना बटुल्ने ) यी वृत्तिहरू उत्पन्न भए ॥४२॥ यसै गरी उनले वानप्रस्थीहरूको पनि चार भेद गरे जस्तै–वैखानस ( जोत्ने-छर्ने नगरीकन उत्पन्न अन्नमा निर्वाह गर्ने ) वालखिल्य ( नयाँ अन्न पाएपछि पूर्व संचित अन्नलाई त्यागिदिने ) औदुम्बर ( बिहानै जुन दिशातिर दृष्टि पर्‍यो, त्यसैबाट अन्न वा फल-मूल ल्याएर जीवन-यापन गर्ने ) फेनप ( आफैँ झरेका फल आदिमा जीविका चलाउने ) यी चार संन्यास वृत्तिहरू पनि ब्रह्माजीका चारै मुखबाट उत्पन्न भएका हुन् । जस्तै-कुटीचकर आफ्नो आश्रम कर्म नै प्रधान मानेर

च ॥ आश्रमांश्च यथासंख्यमसृजत्सह वृत्तिभिः ॥ ४१ ॥ सावित्रं प्राजापत्यं च ब्राह्मं चाथ बृहत्तथा ॥ वार्ता सञ्चयशालीनशिलोञ्छ इति वै गृहे ॥ ४२ ॥ वैखानसा वालखिल्योदुम्बराः फेनपा वने ॥ न्यासे कुटीचकः पूर्वं बह्वोदो हंसनिष्क्रियौ ॥ ४३ ॥ आन्वीक्षिकी त्रयी वार्ता दण्डनीतिस्तथैव च ॥ एवं व्याहृतयश्चासन्प्रणवो ह्यस्य दह्रतः ॥ ४४ ॥ तस्योष्णिगासील्लोमभ्यो गायत्री च त्वचो विभोः ॥ त्रिष्टुम्मांसात्स्नुतोऽनुष्टुब्जगत्यस्थ्नः प्रजापतेः ॥ ४५ ॥ मज्जायाः पङ्क्तिरुत्पन्ना बृहती प्राणतोऽभवत् ॥ स्पर्शस्तस्याभवज्जीवः स्वरो देह उदाहृतः ॥ ४६ ॥ ऊष्माणमिन्द्रियाण्याहुरन्तःस्था बलमात्मनः ॥ स्वराः सप्त विहारेण भवन्ति स्म प्रजापतेः ॥ ४७ ॥ शब्दब्रह्मात्मनस्तस्य व्यक्ताव्यक्तात्मनः परः ॥ ब्रह्माऽवभाति विततो नानाशक्त्युपबृंहितः ॥४८॥ ततोऽपरामुपादाय स सर्गाय मनो दधे ॥ ऋषीणां भूरिवीर्याणामपि सर्गमविस्तृतम् ॥ ४९ ॥ ज्ञात्वा

त्यही अनुसार आचरण गर्ने ) बह्वोद ( कर्मभन्दा ज्ञानलाई प्रधान मान्ने ) हंस ( ज्ञानको अभ्यासमा सदैव तयार ) र निष्क्रिय ( तत्त्वज्ञान प्राप्त गरिसकेका ) ॥ ४३ ॥ यसै प्रकार ब्रह्माजीका मुखबाट आन्वीक्षिकी ( अध्यात्म शास्त्र ), त्रयी ( स्वर्ग आदि फल दिने र धर्म, अर्थ तथा कामलाई पूर्ण गरिदिने कर्म विद्या ) वार्ता जीविका सम्पादन गरिदिने विद्या ) दण्डनीति ( शासन कार्य सिकाउने विद्या ) तथा भूर्भुवः स्वः आदि व्याहृतिहरू उत्पन्न भए । यसैगरी ब्रह्माजीको हृदयरूपी आकाशबाट प्रणव (ॐ कार), तिनका रोमहरूबाट उष्णिक्, छालाबाट गायत्री, मासुबाट त्रिष्टुप्, अस्थिबाट जगती, मज्जाबाट पंक्ति र प्राणबाट बृहती नामक छन्दको उत्पत्ति भयो । यसै गरी 'क' देखि 'म' सम्म स्पर्श ( कादयो मावसानाः स्पर्शाः ) संज्ञक अक्षर ब्रह्माको जीवबाट र 'अ, आ' आदि स्वरका अक्षर तिनको शरीरबाट उत्पन्न भए ॥४४-४६॥ तिनका इन्द्रियहरूबाट 'शषह' यी ऊष्म संज्ञक अक्षर उत्पन्न भए । तिनको बलबाट 'य र ल व' यी अन्तःस्थ संज्ञक अक्षर उत्पन्न भए । ती प्रजापतिको विहारबाट निषाद, ऋषभ, गान्धारादि सात (संगीतात्मक) स्वर उत्पन्न भए ॥४७॥ हे तात ! यो मैले तिमीलाई ती व्यक्त र अव्यक्त ब्रह्माको शब्दमूर्तिको क्रम बुझाएँ । ती ब्रह्माजीलाई वैखरी रूपबाट व्यक्त र प्रणवरूपबाट अव्यक्त तथा सर्वशक्तिमान् परब्रह्मका बोधक

बसिरहन्छ ॥४८॥ हे विदुर ! कालान्तरमा ती ब्रह्माले पूर्वोक्त नीहारात्मक शरीर त्यागेर अर्को शरीर धारण गरे र फेरि सृष्टिकार्य गर्न विचार गर्न लागे। पहिले उनले जुन महाशक्तिवान् मरीचि, वसिष्ठ आदि ऋषिहरूको सृष्टि गरेका थिए, तिनले सृष्टिको विस्तार गर्न सकेनन् ॥४९॥ तब ब्रह्माजीले विचार गरे—यद्यपि म नित्य सृष्टि-विस्तारको चेष्टा गर्दैरहन्छु, तैपनि त्यसको सन्तोषजनक विस्तार हुँदैन ॥५०॥ यो प्रजा जुन बढिरहेको छैन, दैवले बाधा गरिरहेको छ कि भन्ने ठान्दछु। दैवको विषयमा ती यस प्रकार विचार गरिरहेका थिए कि त्यसै बखत ब्रह्माजीको शरीर दुइ भागमा विभक्त भयो र ती दुवै भागबाट यौटा स्त्री र अर्को पुरुष-यिनको जोडी उत्पन्न भयो ॥५१-५२॥ त्यसमा पुरुष चाहिं स्वायम्भुव मनु र स्त्री तिनकी रानी शतरूपा भइन् ॥५३॥ तिनकै मैथुन धर्मद्वारा प्रजा बढ्न लागे। स्वायम्भुव मनुले शतरूपाबाट पाँच सन्तान उत्पन्न गरे ॥५४॥ तिनमा दुइ पुत्र र तीन छोरीहरू थिए। तिनको नाम—प्रियव्रत, उत्तानपाद एवं आकूति, देवहूति र प्रसूति थियो ॥५५॥ स्वायम्भुव मनुले आकूतिको रुचि प्रजापति, देवहूतिको कर्दम प्रजापति र प्रसूतिको

तद्दृष्ट्वा भूयश्चिन्तयामास कौरव ॥ अहो अद्भुतमेतन्मे व्यापृतस्यापि नित्यदा ॥ ५० ॥ न ह्येधन्ते प्रजा नूनं दैवमत्र विघातकम् ॥ एवं युक्तकृ-
तस्तस्य दैवं चावेक्षतस्तदा ॥ ५१ ॥ कस्य रूपमभूद्द्वेधा यत्कायमभिचक्षते ॥ ताभ्यां रूपविभागाभ्यां मिथुनं समपद्यत ॥ ५२ ॥ यस्तु तत्र पुमा-
न्सोऽभून्मनुः स्वायम्भुवः स्वराट् ॥ स्त्री याऽऽसीच्छतरूपाख्या महिष्यस्य महात्मनः ॥ ५३ ॥ तदा मिथुनधर्मेण प्रजा ह्येधाम्बभूविरे ॥ स चापि
शतरूपायां पञ्चापत्यान्यजीजनत् ॥ ५४ ॥ प्रियव्रतोत्तानपादौ तिस्रः कन्याश्च भारत ॥ आकूतिर्देवहूतिश्च प्रसूतिरिति सत्तम ॥ ५५ ॥ आकूतिं
रुचये प्रादात्कर्दमाय तु मध्यमाम् ॥ दक्षायादात्प्रसूतिं च यत आपूरितं जगत् ॥ ५६ ॥ इति श्रीमद्भागवते तृतीयस्कन्धे द्वादशोऽध्यायः ॥ १२ ॥
श्रीशुक उवाच ॥ निशम्य वाचं वदतो मुनेः पुण्यतमां नृप ॥ भूयः पप्रच्छ कौरव्यो वासुदेवकथादृतः ॥ १ ॥ विदुर उवाच ॥ स वै स्वायम्भुवः
सम्राट् प्रियपुत्रः स्वयम्भुवः ॥ प्रतिलभ्य प्रियां पत्नीं किं चकार ततो मुने ॥ २ ॥ चरितं तस्य राजर्षेरादिराजस्य सत्तम ॥ ब्रूहि मे श्रद्दधानाय
विष्वक्सेनाश्रयो ह्यसौ ॥३॥ श्रुतस्य पुंसां सुचिरश्रमस्य नन्वञ्जसा सूरिभिरीडितोऽर्थः ॥ यत्तद्गुणानुश्रवणं मुकुन्दपादारविन्दं हृदयेषु येषाम् ॥ ४ ॥

दक्ष प्रजापतिसित विवाह गरिदिए। उनैले उत्पन्न गरेका सन्तानहरूबाट सारा संसार भरिएको छ ॥५६॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ'कृत नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥१२॥ ( वराह अवतारको वर्णन )—श्रीशुकदेव भन्नुहुन्छ—हे राजन् ! महर्षि मैत्रेयको मुखबाट यो परम पवित्र कथा सुनेर भगवान् श्रीकृष्णका कथाप्रेमी विदुरले सोधे—॥१॥ हे महामुनि मैत्रेय ! ब्रह्माका प्रिय-पुत्र र सम्राट् स्वायम्भुव मनुले आफ्नी पत्नी शतरूपालाई पाएपछि के-के गरे ? ॥२॥ हजुर मलाई सर्वप्रथम ती राजर्षि र भगवद्-भक्त राजा स्वायम्भुव मनुको चरित्र सुनाउनु हवस्, किनकि मेरो उनमा ठूलो श्रद्धा छ ॥३॥ धेरै दिनसम्म परिश्रम गरेर विद्यार्जन गर्ने विद्वानहरूको विद्याको सार्थकता यसैमा छ कि ती भगवद्भक्तहरूको पवित्र कथाहरू भन्नुहवस् र सुनौं। यसैबाट संसारको कल्याण हुनेछ र फेरि ठूला-ठूला कवि पनि त उनैको मन्दनी गर्दछन्। शुकदेव भन्नुहुन्छ—विनीत र नारायणका चरणको उपधान ( आश्रय तकिया ) स्वरूप भगवद्भक्त विदुरका कुरा सुनेर मैत्रेय मुनि गद्गद् भए। भगवान्को कथाप्रति तिनको

स्नेह उम्लेर आयो र शरीर रोमांचित भयो । त्यस्तै विह्वल स्थितिमा मैत्रेय भन्दछन्—॥४॥५॥ स्वायम्भुव मनु र शतरूपाको जन्म भइसकेपछि मनुले हात जोरेर ब्रह्मासित भने—॥६॥
तपाईं नै समस्त प्राणिहरूका जन्मदाता र वृत्ति प्रदान गर्ने पिता हुनुहुन्छ । तैपनि यो आफ्नै इच्छा गर्दछु कि म कसरी तपाईंका प्रजाको सेवा गर्न सक्छु ॥ ७ ॥ तपाईंलाई
प्रणाम छ । मलाई यो भन्नुहवस् कि आफ्नो शक्ति अनुसार म तिनको के उपकार गरूँ, जसले संसारमा मलाई यश प्राप्त होस् र परलोकमा सद्गति पाऊँ ॥ ८ ॥ ब्रह्माजी
भन्दछन्—हे पुत्र ! तिम्रो कल्याण होस् । म तिमीसित यस निम्ति प्रसन्न छु कि तिमीले निष्कपट भावले आज्ञा माग्यौ र स्वयं आफूलाई मेरो हातमा सुम्पिदियौ ॥९॥ हे वीर !
सन्तानको एकमात्र कर्तव्य यो हो कि त्यो नम्रता र दत्तचित्त भई आफ्ना गुरुजनको आज्ञा पालन गरून् ॥१०॥ अब तिमी यी शतरूपाबाट आफू झैं गुणवान् सन्तान उत्पन्न गरेर

श्रीशुक उवाच ॥ इति ब्रुवाणं विदुरं विनीतं सहस्रशीर्ष्णश्चरणोपधानम् ॥ प्रहृष्टरोमा भगवत्कथायां प्रणीयमानो मुनिरभ्यचष्ट ॥ ५ ॥ मैत्रेय उवाच ॥
यदा स्वभार्यया साकं जातः स्वायम्भुवो मनुः ॥ प्राञ्जलिः प्रणतश्चेदं वेदगर्भमभाषत ॥ ६ ॥ त्वमेकः सर्वभूतानां जन्मकृद्वृत्तिदः पिता ॥ अथापि
नः प्रजानां ते शुश्रूषा केन वा भवेत् ॥७॥ तद्विधेहि नमस्तुभ्यं कर्मस्वीड्यात्मशक्तिषु ॥ यत्कृत्वेह यशो विष्वगमुत्र च भवेद्गतिः ॥ ८ ॥ ब्रह्मोवाच ॥
प्रीतस्तुभ्यमहं तात स्वस्ति स्ताद्वां क्षितीश्वर ॥ यन्निर्व्यलीकेन हृदा शाधि मेत्यात्मनार्पितम् ॥ ९ ॥ एतावत्यात्मजैर्वीर कार्या ह्यपचितिर्गुरौ ॥
शक्त्याऽप्रमत्तैर्गृह्येत सादरं गतमत्सरैः ॥१०॥ स त्वमस्यामपत्यानि सदृशान्यात्मनो गुणैः ॥ उत्पाद्य शास धर्मेण गां यज्ञैः पुरुषं यज ॥११॥
परं शुश्रूषणं मह्यं स्यात्प्रजारक्षया नृप ॥ भगवांस्ते प्रजाभर्तुर्हृषीकेशोऽनुतुष्यति ॥ १२ ॥ येषां न तुष्टो भगवान्यज्ञलिङ्गो जनार्दनः ॥ तेषां श्रमो
ह्यपार्थाय यदात्मा नादृतः स्वयम् ॥१३॥ मनुरुवाच ॥ आदेशेऽहं भगवतो वर्तेयमरिसूदन ॥ स्थानं त्विहानुजानीहि प्रजानां कर्म च प्रभो ॥१४॥
यदोकः सर्वसत्त्वानां मही मग्ना महाम्भसि ॥ अस्या उद्धरणे यत्नो देव देव्या विधीयताम् ॥१५॥ मैत्रेय उवाच ॥ परमेष्ठी त्वपां मध्ये तथासन्नाम-
वेक्ष्य गाम् ॥ कथमेनां समुन्नेष्य इति दध्यौ धिया चिरम् ॥१६॥ सृजतो मे क्षितिर्वार्भिः प्लाव्यमाना रसां गता ॥ अथात्र किमनुष्ठेयमस्माभिः

धैर्यपूर्वक पृथ्वीको शासन गर र यज्ञादि द्वारा भगवान्‌को आराधना गर्दैरह ॥११॥ प्रजाको रक्षा नै मेरो सर्वभन्दा ठूलो सेवा हुनेछ र तिम्रो यस कार्यले नारायण पनि प्रसन्न हुने छन्
॥१२॥ यज्ञ स्वरूप जनार्दन भगवान् जोसित अप्रसन्न हुन्छन्, तिनको कुनै काम पनि सम्पन्न हुँदैन । नारायणलाई अप्रसन्न राख्नु आफ्नो आत्माको नै तिरस्कार गर्नु हो ॥१३॥ अनि
मनुले भने–हे पाप-नाशक ! म हजुरको आज्ञा पालन गर्न तत्पर छु तर हजुर हाम्रो र हाम्रा प्रजाले बस्ने कुनै स्थान दिनुहवस् ॥१४॥ किन अहिले त सारा पृथ्वी जलमग्न छन् जहाँ कुनै
समयमा जगत्‌का सबै जीव बस्तथे । अब कृपा गरेर पृथ्वीको उद्धार हुने उपाय भन्नुहवस् ॥१५॥ मैत्रेय भन्दछन्—मनुका कुरा सुनेर ब्रह्माजी विचार गर्नलागे । उनले योगदृष्टिले हेर्दा त
वास्तवमा सम्पूर्ण पृथ्वीलाई जलमा निमग्न पाए । अब ती विचार थाले—म कुन उपायले यी पृथ्वीको उद्धार गरूँ ॥१६॥ ती फेरि विचार गर्नलागे—नारायणले हामीलाई सृष्टि गर्न

आज्ञा त दिए, तर मेरो सृष्टिकार्यभन्दा पहिले नै पृथ्वी जलमा डुबेकी छन् अब के गरूँ ? ॥१७॥ अन्तमा उनले निश्चय गरे—म जसको हृदयबाट प्रकट भएको हुँ, उनै नारायण नै इनै काटो फिक्ने छन् । हे विदुर ! ती यसरी विचार गरिरहेकै थिए—अकस्मात् तिनको नाकबाट यौटा सानू वराह शिशु (सूकर) निस्क्यो । त्यो बूढीऔंलो जति लामो थियो ॥१८॥ हे भारत ! यो यौटा ठूला अचम्म कुरा भयो—ब्रह्माजीले हेर्दाहेर्दै आकाशमा स्थित त्यो वराह-शिशु हात्तीजत्रो भयो ॥१९॥ अब मरीचि आदि ब्राह्मण, सनत्कुमार आदि र मनुका साथै विधाता ब्रह्मा त्यो शूकररूप देखेर विचार गर्नलागे—॥२०॥ वराहरूपमा यो कुन दिव्य प्राणी हाम्रा सामुन्ने उपस्थित छ । सबै भन्दा ठूलो आश्चर्यको कुरा त यो छ कि यो मेरो नासिकाबाट उत्पन्न भएको हो ॥२१॥ अब यो उत्पन्न भयो तब बूढीऔंला जत्रो थियो, तर हामीले देख्दादेख्दै ठूलो पर्वत जस्तै लामो र चक्लो भएको छ । मलाई छक्नको निम्ति यी उनै यज्ञपुरुष भगवान् नै यस रूपमा अवतरित भएका त होइनन् ? ॥२२॥ ब्रह्माजी आफ्ना छोराहरूसित यस प्रकारको तर्कना गरिरहेकै थिए—ती यज्ञपुरुष भगवान् यौटा पर्वत

सर्गयोजितः ॥ यस्याहं हृदयादासं स ईशो विदधातु मे ॥ १७ ॥ इत्यभिध्यायतो नासाविवरात्सहसाऽनघ ॥ वराहतोको निरगादङ्गुष्ठपरिमाणकः ॥१८॥ तस्याभिपश्यतः खस्थः क्षणेन किल भारत ॥ गजमात्रः प्रववृधे तदद्भुतमभून्महत् ॥ १९ ॥ मरीचिप्रमुखैर्विप्रैः कुमारैर्मनुना सह ॥ दृष्ट्वा तत्सौकरं रूपं तर्कयामास चित्रधा ॥ २० ॥ किमेतत्सौकरव्याजं सत्त्वं दिव्यमवस्थितम् ॥ अहो बताश्चर्यमिदं नासाया मे विनिःसृतम् ॥२१॥ दृष्टोऽङ्गुष्ठशिरोमात्रः क्षणाद्गण्डशिलासमः ॥ अपिस्विद्भगवानेष यज्ञो मे खेदयन्मनः ॥ २२ ॥ इति मीमांसतस्तस्य ब्रह्मणः सह सूनुभिः ॥ भगवान् यज्ञपुरुषो जगर्जागेन्द्रसन्निभः ॥ २३ ॥ ब्रह्माणं हर्षयामास हरिस्तांश्च द्विजोत्तमान् ॥ स्वगर्जितेन ककुभः प्रतिस्वनयता विभुः ॥ २४ ॥ निशम्य ते घर्घरितं स्वखेदक्षयिष्णु मायामयसूकरस्य ॥ जनस्तपःसत्यनिवासिनस्ते त्रिभिः पवित्रैर्मुनयोऽगृणन्स्म ॥ २५ ॥ तेषां सतां वेदवितानमूर्तिर्ब्रह्मावधार्यात्मगुणानुवादम् ॥ विनद्य भूयो विबुधोदयाय गजेन्द्रलीलो जलमाविवेश ॥ २६ ॥ उत्क्षिप्तवालः खचरः कठोरः सटा विधुन्वन्खररोमशत्वक् ॥ खुराहताभ्रः सितदंष्ट्र ईक्षाज्योतिर्बभासे भगवान्महीध्रः ॥ २७ ॥ घ्राणेन पृथ्व्याः पदवीं विजिघ्रन् क्रोडापदेशः स्वयमध्वराङ्गः ॥ कराल-

समान ठूलोकाय भएर गर्जन लागे ॥२३॥ ती नारायणको गर्जनले दिशाहरू प्रतिध्वनित भए—त्यसले ब्रह्माजी र मरीचि आदि निकै प्रसन्न भए ॥ २४ ॥ आफ्नो खेद निवारण गर्ने ती नारायणको त्यो मायामय वराह-वपुको भयङ्कर गर्जन सुनेर जन, तप र सत्यलोकका निवासी ऋग्यजु र सामवेदका मन्त्रहरूले तिनको स्तुति गर्न लागे ॥ २५ ॥ वेदहरूद्वारा स्तुति गरिएका भगवान् आफ्नो गुणानुवाद सुनेर एकपल्ट फेरि गर्जे । अनि देवगणको हितार्थ मत्त हात्ती झैं उफ्रँदै त्यस प्रलयकालीन जलराशिमा पस्न हिंडे ॥२६॥ पानीमा पस्दा तिनको पुच्छर माथितिर उचालिएको थियो । ती मानो आकाशमा उड्दै थिए । तिनको शरीरका रौं कठोर भएर र छाला खस्रो थियो । तिनका दुवै दाँत उज्ज्वल थिए र आफ्नो खुरले मानो ती आकाशमण्डलका बादलहरूलाई हेलाँ गर्दै थिए । तिनका आँखा ज्योतिर्मयका थिए । पृथ्वीको उद्धार गर्ने नारायण त्यो सूकर शरीरमा पनि राम्रो देखिइरहेका थिए ॥ २७ ॥ ती आफ्ना नाकले सुँघेर पृथ्वीको खोजी गर्दै थिए । शूकररूपधारी ती यज्ञपुरुष यद्यपि कठोर थिए र तिनको दृष्टि पनि विकराल देखिइरहेको

थिए । तैपनि तिनले स्तुति गर्नलागेका विप्रहरूलाई सौम्य दृष्टिले हेरे र जलमा हाम्फाले ॥२८॥ जुन बेला ती जलमा हाम्फाले त्यस बखत ज्ञात हुन्थ्यो–त्यस समुद्रको पेट फुटिसकेको छ । जल हल्लिएर जुन कोलाहल भयं, त्यसले ज्ञात हुन्थ्यो कि त्यो आफ्नो तरङ्गरूपी हात उचालेर कराइरहेको छ–'हे यज्ञेश्वर ! मेरो रक्षा गर–मलाई बचाऊ' ॥२९॥ त्यसै बेला वराह-भगवान आफ्ना खुरले समुद्रलाई चिर्दै अपार समुद्रमा गए र त्यहाँ उनले त्यस पृथ्वीलाई देखे, जसलाई सबै प्राणीहरूको आधार ठानेर योग निद्रमा शयन गर्ने बेलाया भगवान्‌ले आफ्नो उदरमा धारण गरेका थिए ॥ ३० ॥ अब उनले पृथ्वीलाई आफ्ना दुवै दाँतमा उचालेर रसातलबाट मास्तिर हिंडे । त्यस बखत पनि ती खुब राम्रा देखिइहेका थिए । त्यसै बखत तिनले क्रुद्धभावले हातमा गदा लिई हिरण्याक्ष दैत्यलाई आफूतिर आएको देखे ॥३१॥ त्यसलाई आफ्नो बाटोमा बाधा पार्न लागेको देखेर तिनलाई निकै रिस उठ्यो । अनि वराह भगवान्‌ले त्यो महाबली दैत्यलाई त्यस जलमानै यसरी स्याल-स्यालमै मारे,जस्तै सिंह हात्तीलाई मार्दछ । त्यसको शरीरबाट निस्केको रगतले भगवान्‌को

दंष्ट्रोऽप्यरालदृग्भ्यामुद्वीक्ष्य विप्रान्गृणतोऽविशत्कम् ॥ २८ ॥ स वज्रकूटाङ्गनिपातवेगविशीर्णकुक्षिः स्तनयन्नुदन्वान् ॥ उत्सृष्टदीर्घोर्मिभुजैरिवार्तश्चुक्रोश यज्ञेश्वर पाहि मेति ॥ २९ ॥ खुरैः क्षुरप्रैर्दरयंस्तदाप उत्पारपारं त्रिपते रसायाम् ॥ ददर्श गां तत्र सुषुप्सुरग्रे यां जीवधानीं स्वयमभ्यधत्त ॥ ३० ॥ स्वदंष्ट्रयोद्धृत्य महीं निमग्नां स उत्थितः संरुरुचे रसायाः ॥ तत्रापि दैत्यं गदयाऽऽपतन्तं सुनाभसन्दीपिततीव्रमन्युः ॥ ३१ ॥ जघान रुन्धानमसह्यविक्रमं स लीलयेभं मृगराडिवाम्भसि ॥ तद्रक्तपङ्काङ्कितगण्डतुण्डो यथा गजेन्द्रो जगतीं विभिन्दन् ॥ ३२ ॥ तमालनीलं सितदन्तकोट्या क्ष्मामुत्क्षिपन्तं गजलीलयाऽङ्ग ॥ प्रज्ञाय बद्धाञ्जलयोऽनुवाकैर्विरिञ्चिमुख्या उपतस्थुरीशम् ॥ ३३ ॥ ऋषय ऊचुः ॥ जितं जितं तेऽजित यज्ञभावन त्रयीं तनुं स्वां परिधुन्वते नमः ॥ यद्रोमगर्तेषु निलिल्युरध्वरास्तस्मै नमः कारणसूकराय ते ॥ ३४ ॥ रूपं तवैतन्ननु दुष्कृतात्मनां दुर्दर्शनं देव यदध्वरात्मकम् ॥ छन्दांसि यस्य त्वचि बर्हिरोमस्वाज्यं दृशि त्वङ्घ्रिषु चातुर्होत्रम् ॥ ३५ ॥ स्रुक्तुण्ड आसीत्स्रुव ईश नासयोरिडोदरे चमसाः कर्णरन्ध्रे ॥ प्राशित्रमास्ये ग्रसने ग्रहास्तु ते यच्चर्वणं ते भगवन्नग्निहोत्रम् ॥ ३६ ॥ दीक्षानुजन्मोपसदः शिरोधरं त्वं प्रायणीयोदयनीयदंष्ट्रः ॥

गण्डस्थल र मुख रातो भयो । त्यस बखत ती यस्तो देखिइरहेथे, जस्तै कुनै ठूलो हात्ती गेरूको भूमि खनेर ठिङ्ग उभिएको होस् ॥३२॥ हे अंग विदुर ! तमाल समान नील शरीर भएका ती वराह भगवान् आफ्ना सेता दाँतमा पृथ्वीलाई उचालेका देखिए । त्यस बखत उनलाई साक्षात् नारायण जानेर सबै ऋषिगण हात जोरेर वैदिक मन्त्रहरू सदृश वाक्यहरूले तिनको स्तुति गर्नलागे । ती सबै एकस्वरले कराए–हे अजित ! हजुरको जय होस् । हे वेदत्रयरूपधारिन् ! हजुरको जय होस् । हे यज्ञभावन ! हजुरको जय होस् । हजुरका लोम-छिद्रमा सबै यज्ञ मिसिएका छन् । पृथ्वीको उद्धारका लागि शूकररूप धारण गर्ने हे परम पुरुष ! हजुरलाई नमस्कार छ ॥३३-३४॥ हे देव ! हजुरको यो यज्ञमय स्वरूपलाई संसारका पामर प्राणी जान्न सक्तैनन् । हजुरको त्वचा छन्द हो, रोम कुश हुन्,आँखा घिउ र हजुरका चार चरण होताहरूका चार कर्म हुन् ॥३५॥ हजुरको मुख स्रुक् हो । हजुरका दुवै नाकका छिद्र स्रुवा हो । हजुरको उदर इडा ( यज्ञीय भक्षणपात्र ) छन् । हजुरका दुवै कान चमस र ग्रह (सोमपात्र) हुन् । मुख प्राशित्र ( ब्रह्मभागपात्र ) हो । हजुरको भोजन नै अग्निहोत्र हो ॥ ३६ ॥ हजुरको यो

अवतार लिनु नै दीक्षाकार्य हो, हजुरको ग्रीवा उपसद ( तीन थरिको इष्टि ) हो । हजुरका दुवै दाँत नै प्रायणीय ( दीक्षापछिको इष्टि ) र उदयनीय ( यज्ञ समाप्तिको इष्टि ) हुन् । हजुरको जिब्रो नै प्रवर्ग्य ( प्रत्येक उपसदको आदिमा गरिने महावीर नामक यज्ञ ) हो । हजुरको शिर नै सभ्य ( होमहीन अग्नि ) तथा आवसथ्य ( उपासना सम्बन्धी अग्नि ) र हजुरका पंच प्राण नै चिति ( इष्टिको चयन कर्म ) हुन् ॥३७॥ हे देव ! हजुरको वीर्य नै सोमरस हो । हजुरका बाल्य-युवा प्रभृति अवस्थाहरू नै प्रातः सवन आदि कर्म हुन् । हजुरका शरीरको त्वचा-मांसादि सात धातुहरू अग्निष्टोम, अत्यग्निष्टोम,उक्थ्य,षोडशी,वाजपेय, अतिरात्र र आप्तोर्याम नामका सात यज्ञसंस्थाहरू हुन् । हजुरका शरीरको सन्धिहरू नै द्वादशाह आदि अनेक यज्ञका समूह हुन् । हजुर स्वयं सर्वयज्ञमय हुनुहुन्छ । हजुरका शरीरको बन्धन नै इष्टिहरू हुन् ॥३८॥ हजुर नै मन्त्र,देवता, द्रव्य, क्रतु, साधारण यज्ञ तथा क्रियाहुन् वैराग्य, भक्ति र योगद्वारा चित्तको एकाग्रताबाट जुन ज्ञान प्राप्त हुन्छ, हजुर त्यसको साक्षात् स्वरूप हुनुहुन्छ । हजुर ज्ञान प्रदान गर्ने हुनुहुन्छ । हजुरलाई हाम्रो बारम्बार प्रणाम छ ॥३९॥ हजुरका दाँतको टुप्पामा स्थित पर्वतहरूले युक्त पृथ्वी यस्तो लाग्दछ, जस्तै—वनबाट निस्किएको कुनै मतवाला हात्तीका दाँतमा पात समेत कमलिनी राखिएको होस् ॥४०॥ हजुरका दाँत-

जिह्वा प्रवर्ग्यस्तव शीर्षकं क्रतोः सभ्यावसथ्यं चितयोऽसवो हि ते ॥ ३७ ॥ सोमस्तु रेतः सवनान्यवस्थितिः संस्थाविभेदास्तव देव धातवः ॥ सत्राणि सर्वाणि शरीरसन्धिस्त्वं सर्वयज्ञक्रतुरिष्टिबन्धनः ॥ ३८ ॥ नमो नमस्तेऽखिलमन्त्रदेवताद्रव्याय सर्वक्रतवे क्रियात्मने ॥ वैराग्यभक्त्यात्मजयाऽनुभावितज्ञानाय विद्यागुरवे नमो नमः ॥३९॥ दंष्ट्राग्रकोट्या भगवंस्त्वया धृता विराजते भूधर भूः सभूधरा ॥ यथा वनान्निःसरतो दता धृता मतङ्गजेन्द्रस्य सपत्रपद्मिनी ॥ ४० ॥ त्रयीमयं रूपमिदं च सौकरं भूमण्डलेनाथ दता धृतेन ते ॥ चकास्ति शृङ्गोढघनेन भूयसा कुलाचलेन्द्रस्य यथैव विभ्रमः ॥ ४१ ॥ संस्थापयैनां जगतां सतस्थुषां लोकाय पत्नीमसि मातरं पिता ॥ विधेम चास्यै नमसा सह त्वया यस्यां स्वतेजोऽग्निमिवारणावधाः ॥४२॥ कः श्रद्दधीतान्यतमस्तव प्रभो रसां गताया भुव उद्विबर्हणम् ॥ न विस्मयोऽसौ त्वयि विश्वविस्मये यो माययेदं ससृजेऽतिविस्मयम् ॥४३॥

मा विराजमान भूमण्डलले सुशोभित हजुरको यो वाराहरूप त्यस कुलाचल पर्वत सदृश देखिन्छ—जसमाथि मेघ-मण्डल बटारिइरहेका हुन् ॥४१॥ हे नाथ ! हजुर समस्त संसारका पिता हुनुहुन्छ र यी पृथ्वी हजुरकी पत्नी हुनाले सबै प्राणीकी आमा हुन् । जगत्‌मा जीवादिको निम्ति इनलाई स्थापित गर्नुहवस् । हामी हजुर र पृथ्वीमातालाई प्रणाम गर्दछौं । जसरी अरणीमा अग्निको स्थापना गरिन्छ, त्यसै गरी हजुरले यी पृथ्वीमा आफ्नो तेज स्थापित गरिदिनु भएको छ ॥४२॥ हे स्वामिन् ! हजुर बाहेक अरू को यस्तो थियो, जसले पाताल लोकबाट यी पृथ्वीको उद्धार गर्ने साहस गर्दथ्यो ? फेरि हजुरले यस्तो गर्नु कुनै आश्चर्यको कुरा छैन । किनकि हजुर स्वयं आश्चर्यमय हुनुहुन्छ । जसले आफ्नो मायाद्वारा यस विशाल विश्व उत्पन्न गरिदियो, त्यसको निम्ति पातालबाट पृथ्वी ल्याएर रक्षा गर्नु ठूलो कुरा होइन । जब हजुर आफ्नो यो वेदस्वरूपशरीर जुरुक्कपार्नुहुन्छ तब हजुरका रौंको टुप्पोबाट उदर

※ उदाहरण—(भगवान् सबैको रक्षा गर्दछन् ) थोरो शूद्र थिई । भगवान्‌मा त्यसको अचल श्रद्धा थियो । कुरा ... त्यो प्रभुलाई सम्झन्थी । ईश्वर जुन स्थितिमा त्यसलाई राख्दथे, ... । ... गर्दछन् त्यो ठीक नै गर्दछन्—यस्तो त्यसको दृढ विश्वास थियो शूद्राको छिमेकी बौद्ध नास्तिक थियो । त्यो शूद्रालाई जिस्क्याइरहन्थ्यो । बुढी बेलामा उठेर स्नान गर्दथी, मन्दिर जान्थी र परमात्माको नाम लिन्थी । ... अतिथि आयो भने यथाशक्ति त्यसको सेवा सत्कार गर्दथी । त्यो सधैंभरि स्नेह राख्दथी र भगवान्‌का भक्तहरूको चमत्कारी कुराहरू सुनाइरहन्थी । ती सबै कुराहरू ... ।

236

पानीका संसाना थोपा आएर हामीमाथि पर्दछ । थोपाहरूले हामी तथा जनलोक र तपोलोकका निवासी आफूलाई पवित्र मानिरहेका छौं ॥ ४४ ॥ हे नारायण ! जो हजुरका अपार लीलाहरूलाई जान्ने चेष्टा गर्दछ, त्यो महामूर्ख हो, किनकि हजुरको योगमायाका सत्व, रज र तम यी तीनै थरि गुणहरूद्वारा सारा संसार मोहान्धकारमा परिरहेछ । हजुर नै त्यसको कल्याण गर्नोस् ॥४५॥ मैत्रेय भन्दछन्—यस प्रकार ती ऋषिहरूको स्तुति सुन्दै वराह भगवान्ले आफ्ना खुरद्वारा थुमित जलमा पृथ्वीलाई राखिदिए ॥४६॥ विष्वक्सेन र प्रजापति वाराह भगवान्ले कौतुकवश ल्याइएकी भूमिलाई त्यसरी जलमाथि स्थापित गरेर अन्तर्धान हुनुभयो ॥४६॥ जो मानिस भगवान्मा बुद्धि लगाएर प्रेमपूर्वक नारायणको यस पवित्र गथालाई सुन्छ-सुनाउछ गर्छन् ती जनार्दन भगवान्का प्रिय बन्दछन् र ती प्राणी स्वयं आफूमा यौटा अलौकिक प्रकाशको साक्षात्कार गर्न थाल्दछन् ॥ ४८ ॥ सबै कामनाहरू

विधुन्वता देवमयं निजं वपुर्जनस्तपःसत्यनिवासिनो वयम् ॥ सटाशिखोद्भूतशिवाम्बुबिन्दुभिर्विमृज्यमाना भृशमीश पाविताः ॥ ४४ ॥ स वै बत भ्रष्टमतिस्तवैष ते यः कर्मणां पारमपारकर्मणः ॥ यद्योगमायागुणयोगमोहितं विश्वं समस्तं भगवन्विधेहि शम् ॥ ४५ ॥ मैत्रेय उवाच ॥ इत्युपस्थीयमानस्तैर्मुनिभिर्ब्रह्मवादिभिः ॥ सलिले स्वखुराक्रान्त उपाधत्तावितावनिम् ॥४६॥ स इत्थं भगवानुर्वीं विष्वक्सेनः प्रजापतिः ॥ रसाया लीलयोन्नीतामप्सु न्यस्य ययौ हरिः ॥ ४७ ॥ य एवमेतां हरिमेधसो हरेः कथां सुभद्रां कथनीयमायिनः ॥ शृण्वीत भक्त्या श्रवयेत वोशतीं जनार्दनोऽस्याशु हृदि प्रसीदति ॥४८॥ तस्मिन्प्रसन्ने सकलाशिषां प्रभोः किं दुर्लभं ताभिरलं लवात्मभिः ॥ अनन्यदृष्ट्या भजतां गुहाशयः स्वयं विधत्ते स्वगतिं परः पराम् ॥ ४९ ॥ को नाम लोके पुरुषार्थसारवित्पुरा कथानां भगवत्कथासुधाम् ॥ आपीय कर्णाञ्जलिभिर्भवापहामहो विरज्येत विना नरेतरम् ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे वाराहप्रादुर्भावानुवर्णने त्रयोदशोऽध्यायः ॥ १३ ॥ श्रीशुक उवाच ॥ निशम्य कौषार-

पूर्ण पार्न समर्थ ती नारायण प्रसन्न भएपछि प्राणीलाई केही पनि दुर्लभ रहन्न । अतः उनीसित आफ्ना तुच्छ इच्छाहरू पूर्ण गर्नका लागि प्रार्थना गर्दैनन् । जो व्यक्ति अनन्यभावले तिनको भजन गर्दछन्, तिनको अन्तरात्मामा बसेका भगवान् स्वयं ती व्यक्तिहरूलाई सबैभन्दा उत्तम गति प्रदान गर्दछन् । ( जो तुच्छ कामनाहरू भन्दा धेरै उच्च श्रेणीको वस्तु हुन्छ ) ॥४९॥ पशुबाहेक अरु कुन यस्तो जान्ने-बाठोमनुष्य होला, जो यो सर्वश्रेष्ठ र मुक्तिदायिनी कथालाई सुनेर पनि यो देखि विमुख हुन सक्नेछ ? ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायां त्रयोदशोऽध्यायः ॥ १३ ॥ ( दितिले गर्भ धारण गरेको वृत्तान्त ) शुकदेव भन्नुहुन्छ—महर्षि

आफ्नै घरको यौटा कोठामा दहरा सिकन गएकी त त्यो नास्तिकले बाहिरबाट सिकी लगाइदियो । बुढी धेरै कराई तर कोही पनि बोलेन । बुढी मनमनै विचार्न लागि—'भगवान्को जो इच्छा होला, त्यही हुनेछ ।' त्यहीं त्यहीं बसेर भगवान्को नाम स्मरण गर्नलागी त्यसरी एक्काईस दिनसम्म त्यहीं रही जब नास्तिकले बुढीको स्थिति जान्नको निमित्त ढोका खोल्यो, तब त्यसलाई आनन्दले माला घुमाइरहेकी देखेर त्यसलाई आश्चर्य भयो र आफ्नो भूलको निमित्त पछितो हुनलाग्यो । त्यसपछि त्यो नास्तिक पनि बुढीको शिष्य र ईश्वरभक्त बन्यो ।

मैत्रेयको मुखबाट वाराह भगवान्‌को सुन्दर गाथा सुनेर पनि विदुरलाई सन्तोष भएन । तिनले हात जोरेर फेरि सोधे—॥१॥ हे मुनिश्रेष्ठ ! मैंले सुनेको छु—तिनै यज्ञमूर्ति भगवान् वाराहले हिरण्याक्ष नामको दैत्यलाई मारे ॥ २ ॥ अब म यो जान्ने इच्छा गर्दछु कि पातालगत पृथ्वीको उद्धार गर्ने बेलामा त्यस दैत्यराजसित किन युद्ध मच्चियो ? ॥ ३ ॥ यति सुनेर मैत्रेय भन्दछन्—हे वीर ! तिमीले भगवान्‌को अवतारसित सम्बन्ध राख्ने धेरै राम्रो कथा सोध्यौ । यसले मनुष्यलाई मृत्युपाशबाट पनि छुटकारा ( मोक्ष ) मिल्न सक्छ ॥४॥ किनकि राजा उत्तानपादका छोरा ध्रुवले बाल्यकालमा नै नारद मुनिको मुखबाट सुनेको भगवत्-कथाको प्रतापले मृत्युको टाउकोमा खुट्टा राखेर ध्रुवलोक प्राप्त गरेका थिए ॥ ५ ॥ जुन कथा तिमी सोधिरहेका छौ, त्यही कुनै समय देवगणले ब्रह्माजीसित सोधेका थिए र ब्रह्माजीले तिनलाई जुन इतिहास भनेका थिए, त्यही म तिमीलाई भन्दछु ॥६॥ हे विदुर ! दक्षकी छोरी दितिले एकपल्ट साँझको बेलामा कामातुर आफ्ना पति र मरीचिका छोरा कश्यपसित सन्तानोत्पत्तिको निम्ति सम्भोग गर्ने प्रार्थना गरिन् ॥६॥ त्यस

विणोपवर्णितां हरेः कथां कारणशूकरात्मनः ॥ पुनः स पप्रच्छ तमुद्यताञ्जलिर्न चातितृप्तो विदुर धृतव्रतः ॥१॥ विदुर उवाच ॥ तेनैव तु मुनेश्रेष्ठ हरिणा यज्ञमूर्तिना ॥ आदिदैत्यो हिरण्याक्षो हत इत्यनुशुश्रुम ॥ २ ॥ तस्य चोद्धरतः क्षोणीं स्वदंष्ट्राग्रेण लीलया ॥ दैत्यराजस्य च ब्रह्मन्कस्माद्धेतोरभून्मृधः ॥३॥ मैत्रेय उवाच ॥ साधु वीर त्वया पृष्टमवतारकथां हरेः ॥ यत्त्वं पृच्छसि मर्त्यानां मृत्युपाशविशातनीम् ॥ ४ ॥ ययोत्तानपदः पुत्रो मुनिना गीतयाऽर्भकः ॥ मृत्योः कृत्वैव मूर्ध्न्यङ्घ्रिमारुरोह हरेः पदम् ॥ ५ ॥ अथात्रापीतिहासोऽयं श्रुतो मे वर्णितः पुरा ॥ ब्रह्मणा देवदेवेन देवानामनुपृच्छताम् ॥ ६ ॥ दितिर्दाक्षायणी क्षत्तर्मारीचं कश्यपं पतिम् ॥ अपत्यकामा चकमे सन्ध्यायां हृच्छयार्दिता ॥७॥ इष्ट्वाऽग्निजिह्वं पयसा पुरुषं यजुषां पतिम् ॥ निम्लोचत्यर्क आसीनमग्न्यागारे समाहितम् ॥ ८ ॥ दितिरुवाच ॥ एष मां त्वत्कृते विद्वन्काम आत्तशरासनः ॥ दुनोति दीनां विक्रम्य रम्भामिव मतङ्गजः ॥ ९ ॥ तद्भवान्दह्यमानानां सपत्नीनां समृद्धिभिः ॥ प्रजावतीनां भद्रं ते मय्यायुङ्क्तामनुग्रहम् ॥ १० ॥ भर्तर्याप्तोरुमानानां लोकानाविशते यशः ॥ पतिर्भवद्विधो यासां प्रजया ननु जायते ॥ ११ ॥ पुरा पिता नो भगवान्दक्षो दुहितृवत्सलः ॥ कं वृणीत वरं वत्सा इत्यपृच्छत नः पृथक् ॥१२॥ स विदित्वाऽऽत्मजानां नो भावं सन्तानभावनः ॥ त्रयोदशाददात्तासां यास्ते शीलमनुव्रताः ॥ १३ ॥

बखत महर्षि कश्यप हवन गरेर अग्निशालामा बसेका थिए । उता सूर्यनारायण अस्त भइरहेका थिए र ती मुनि समाधिस्थ भएर ईश्वरको ध्यानमा लीन थिए ॥ ८ ॥ त्यसै बेला दितिले भनिन्—'हे विद्वन् ! कुनै मत्तहात्तीले कदली वृक्ष हल्लाएझैं अहिले मलाई धनुर्धारी कामदेव हजुरसित सम्भोग गर्नको निम्ति व्याकुल पारिरहेको छ ॥९॥ म सौताको सन्तानरूपिणी समृद्धि देखेर मनमनै जलेकी म नारीलाई हजुर पुत्रदान दिने कृपा गर्नुहवस् ॥ १० ॥ हजुर जस्ता पतिद्वारा सन्तान प्राप्तिरूप यश प्राप्त गरेर स्त्रीहरू सधैं लोकहरूमा महनी गरिने योग्य मानिन्छन् ॥११॥ आजभन्दा धेरै दिन अघि मेरा दयालु पिता दक्ष—जो हामी सबै छोरीमा ठूलो स्नेह राख्दथे । उनले एकपल्ट हामी सबैलाई भिन्न-भिन्न डाकेर सोधेका थिए—तिमी कोसित विवाह गर्ने इच्छा गर्दछ्यौ ॥ १२ ॥ अन्यथा हाम्रो मनको विचार जानेर उनले हामी तेह्र बहिनीको बिहे हजुरसित यसै निम्ति गरेका थिए कि

जसले सन्तानको वृद्धिहोस् ! हामी सबैको शील-स्वभाव हजुरकै अनुकूल थियो । हे कंजलोचन ! अब मेरो कामना पूर्ण पारेरहजुर मेरोकल्याण गर्नुहवस् । हजुर जस्ता महान् पुरुषको शरणमा पुगेपछि कसैले पनि निराश हुनु पर्दैन ! मैत्रेय भन्दछन्–हे विदुर ! ती कामातुरा र दीन-हीन भएर प्रार्थना गर्ने दितिलाई सान्त्वना दिँदै महर्षि कश्यपले भने–॥१३-१५॥ हे भीरु ! तिमी नडराऊ । म अहिल्यै तिम्रो इच्छा पूर्ण गरिदिन्छु । जसद्वारा धर्म, अर्थ र काम तीनै थरिको सिद्धि प्राप्त हुन्छ, त्यस पत्नीको कुरा मान्दिन भन्ने कुरा कुन पतिले भन्न सक्छ ? ॥१६॥ गृहस्थ पुरुष स्त्रीको सहायताले ब्रह्मचर्य आश्रमीहरूलाई अन्नादिले सहायता दिएर यो दुःखपूर्ण संसार-सागरबाट उनीहरूलाई पारी गर्दछ, जसरी जहाज द्वारा मानिसहरू समुद्र पारी तर्दछन् ॥१७॥ हे मानिनि ! कल्याणेच्छुक व्यक्ति स्त्रीलाई पुरुषको अर्धाङ्गिनी भन्दछन् र त्यसै गरी गृहस्थीको सबै भारी काँधमा दिएर आफू निश्चिन्त हुन्छन् ॥१८॥ अन्यान्य आश्रमीहरू इन्द्रियरूपी बलियो शत्रुलाई जित्न समर्थ हुन्नन्, तर गृहस्थाश्रमी आफ्नो गृहिणीको सहयोगले ती इन्द्रियहरूलाई यसरी पराजित गरिदिन्छन्, जसरी किल्लाको अधिपति राजा

अथ मे कुरु कल्याणं कामं कञ्जविलोचन ॥ आर्तोपसर्पणं भूमन्नमोघं हि महीयसि ॥ १४ ॥ इति तां वीर मारीचः कृपणां बहुभाषिणीम् ॥ प्रत्याहानुनयन्वाचा प्रवृद्धानङ्गकश्मलाम् ॥ १५ ॥ एष तेऽहं विधास्यामि प्रियं भीरु यदिच्छसि ॥ तस्याः कामं न कः कुर्यात्सिद्धिस्त्रैवर्गिकी यतः ॥ १६ ॥ सर्वाश्रमानुपादाय स्वाश्रमेण कलत्रवान् ॥ व्यसनार्णवमत्येति जलयानैर्यथार्णवम् ॥ १७ ॥ यामाहुरात्मनो ह्यर्धं श्रेयस्कामस्य मानिनि ॥ यस्यां स्वधुरमध्यस्य पुमांश्चरति विज्वरः ॥ १८ ॥ यमाश्रित्येन्द्रियारातीन्दुर्जयानितराश्रमैः ॥ वयं जयेम हेलाभिर्दस्यून्दुर्गपतिर्यथा ॥ १९ ॥ न वयं प्रभवस्तां त्वामनुकर्तुं गृहेश्वरि ॥ अप्यायुषा वा कार्त्स्न्येन ये चान्ये गुणगृध्नवः ॥ २० ॥ अथापि काममेतं ते प्रजात्यै करवाण्यलम् ॥ यथा मां नातिवोचन्ति मुहूर्तं प्रतिपालय ॥ २१ ॥ एषा घोरतमा वेला घोराणां घोरदर्शना ॥ चरन्ति यस्यां भूतानि भूतेशानुचराणि ह ॥ २२ ॥ एतस्यां साध्वि सन्ध्यायां भगवान्भूतभावनः ॥ परीतो भूतपर्षद्भिर्वृषेणाटति भूतराट् ॥ २३ ॥ श्मशानचक्रानिलधूलिधूम्रविकीर्णविद्योतजटाकलापः ॥ भस्मावगुण्ठामलरुक्मदेहो देवस्त्रिभिः पश्यति देवरस्ते ॥ २४ ॥ न यस्य लोके स्वजनः परो वा नात्या-

चोर-डाकूहरूलाई चुटेर खेद्छ ॥१९॥ हे गृहेश्वरी ! (घरकी स्वामिनी ) जीवन भरि उद्योग गरि पनि म तिम्रो उपकारको बराबरी गर्न सक्दिन । म मात्र होइन, ठूला-ठूला गुणग्राही व्यक्ति पनि तिम्रो समानता गर्न सक्दैनन् ॥२०॥ अतः यद्यपि म तिम्रो इच्छा अहिल्यै पूर्ण गर्न सक्छु, तर यो समय उपयुक्त छैन । यस बखत त्यसतो गर्नाले मानिसहरू हाम्रो निन्दा गर्नेछन् । यस निम्ति तिमी एक मुहूर्त पर्ख ॥२१॥ यो निकै विकराल बेला छ । यस बखत घोर राक्षस डुलिरहेका देखिन्छन् यसै बखत रुद्र भगवान्का अनुचर पनि हुन्दछन् ॥२२॥ यसै सन्ध्या समयमा भूतगणका राजा भगवान् शिव आफ्ना गणहरू लिई नन्दीमा चढेर विचरण गर्दछन् ॥२३॥ श्मशान भूमिबाट उठेको र चक्रवात द्वारा उडाइएको धूलोले तिनको जटा मुछिएको रहन्छ र देहमा भस्म शोभित रहन्छ । स्वच्छ सुनजस्तै उनको शरीर छ । तीनै तिम्रा देवर हुन् । आफ्ना सूर्य,चन्द्र अग्निरूपी तीन नेत्रले हामी सबैलाई

हेरिरहेछन् ॥२४॥ संसारमा उनको न कुनै आफ्ना छन्, न बिराना। ती न कसैसित बर्ता स्नेह गर्दछन्, न द्वेष, अनेकानेक व्रतद्वारा हामीहरू उनको आराधना गरेर स्यस वैभवलाई प्राप्त गर्न खोज्दछौं–जसलाई उनले निर्माल्य मानेर पर फ्याँकिदिएका छन् ॥२५॥ संसारका विवेकशील पुरुष अविद्यारूपिणी ग्रन्थिलाई काट्नको निम्ति तिनको गुण गान गर्दछन्। यद्यपिती सर्वेश्वर र सज्जनहरूका गतिदायक छन्, तैपनि ती पिशाच गण जस्तै आफ्नो व्यवहार गर्दछन् ॥२६॥ जो अभागी ती आत्माराम शंकरका गूढ चरित्रलाई बुझ्न सक्तैनन्, ती त तिनको ठट्टा गर्दै कुकुरको भोजनस्वरूप यस देहलाई नै आत्मा मान्दछन् र विविध प्रकारका वस्त्र, माला र सुगन्धि तथा गहनाले सजाउँछन् ॥२७॥ ब्रह्मा आदि ठूला-ठूला देवता जसले बनाएका नियमहरू पालन गर्दछन्, जो यस जगत्‌का मूल कारण हुन् र माया जसको आज्ञामा रहने किंकरी हो, ती आफ्नो आचरण पिशाचहरू झैं निर्लज्ज राख्दछन्। अहो ! ती परमेश्वरको लीला अतर्क्य छ ॥२८॥ मैत्रेय भन्दछन्–हे विदुर ! यसरी कश्यपले धेरै बुझाए, तर कामदेवको वाणीले विह्वल दितिले एक पनि मानिनन्

दृतो नोत कश्चिद्विगर्ह्यः ॥ वयं व्रतैर्यच्चरणापविद्धामाशास्महेऽजां बत भुक्तभोगाम् ॥ २५ ॥ यस्यानवद्याचरितं मनीषिणो गृणन्त्यविद्यापटलं बिभित्सवः ॥ निरस्तसाम्यातिशयोऽपि यत्स्वयं पिशाचचर्यामचरद्‌गतिः सताम् ॥ २६ ॥ हसन्ति यस्याचरितं हि दुर्भगाः स्वात्मन्रतस्याविदुषः समीहितम् ॥ यैर्वस्त्रमाल्याभरणानुलेपनैः श्वभोजनं स्वात्मतयोपलालितम् ॥ २७ ॥ ब्रह्मादयो यत्कृतसेतुपाला यत्कारणं विश्वमिदं च माया ॥ आज्ञाकरी तस्य पिशाचचर्या अहो विभूम्नश्चरितं विडम्बनम् ॥ २८ ॥ मैत्रेय उवाच ॥ सैवं संविदिते भर्त्रा मन्मथोन्मथितेन्द्रिया ॥ जग्राह वासो ब्रह्मर्षेर्वृषलीव गतत्रपा ॥ २९ ॥ स विदित्वाऽथ भार्यायास्तं निर्बन्धं विकर्मणि ॥ नत्वा दिष्टाय रहसि तयाऽथोपविवेश ह ॥ ३० ॥ अथोपस्पृश्य सलिलं प्राणानायम्य वाग्यतः ॥ ध्यायञ्जजाप विरजं ब्रह्म ज्योतिः सनातनम् ॥ ३१ ॥ दितिस्तु व्रीडिता तेन कर्मावद्येन भारत ॥ उपसंगम्य विप्रर्षिमधोमुख्यभ्यभाषत ॥ ३२ ॥ दितिरुवाच ॥ मा मे गर्भमिमं ब्रह्मन्भूतानामृषभोऽवधीत् ॥ रुद्रः पतिर्हि भूतानां यस्याकरवमंहसम् ॥ ३३ ॥ नमो रुद्राय महते देवायोग्राय मीढुषे ॥ शिवाय न्यस्तदण्डाय धृतदण्डाय मन्यवे ॥ ३४ ॥ स नः प्रसीदतां भामो भगवानुर्वनुग्रहः ॥

र वेश्या झैं तिनले ती महर्षिको धोती समातिन् ॥२९॥ आफ्नी पत्नी दितिको असामयिक र कुत्सित कामको निम्ति त्यस्तो दुराग्रह देखेर कश्यपले भावीलाई नमस्कार गरे र एकान्तमा गई दितिसंग रमण गरे ॥३०॥ त्यसपछि उनले आचमन र प्राणायाम गरे र मौन भई नारायणको ध्यान गरेर गायत्री मन्त्रको जप गर्नलागे ॥३१॥ दिति पनि आफ्नो त्यो कर्ममा मान्है लज्जित भइन्। ती महर्षि कश्यपको नजीकै गइन् र टाउको तल न्युराई भन्न लागिन्— ॥३२॥ हे ब्रह्मन् ! अब हजुर यस्तो गर्नुहवस् कि रुद्र भगवान् मेरो यस गर्भको बध नगरुन् किनकि मैले ठूलो अपराध गरेको छु ॥ ३३ ॥ म ती रुद्र भगवान्लाई प्रणाम गर्दछु—जो सर्वश्रेष्ठ, उग्र, भक्तहरूको इच्छालाई पूर्ण गर्ने र दुष्टलाई दण्ड दिने एवं क्रोधका मूर्तिमान् रूप छन् ॥३४॥ हाम्री बहिनी सतीका पति र महान् दयालु ती शिवजी मप्रति प्रसन्न होउन्। स्त्रीहरूप्रति निर्दयी व्याधा पनि दया गर्दछन्।

भने ती सतीपति किन दया गर्दैनन् ! ॥ ३५ ॥ मैत्रेय भन्दछन्—त्यस बेला दिति संतानको कल्याण कामना गर्दै र आफ्नो * भूलमा पछितो गर्दै थर-थर कामिरहेकी थिइन् ।
जब महर्षिको सन्ध्याकालीन कृत्य सकियो, तब कश्यप भन्दछन् ॥ ३६ ॥ हे शुभे ! गर्भ धारणको बेला एक त तिम्रो मन अपवित्र थियो, दोस्रो त्यो सायंकाल थियो । अनि मेरो
आज्ञाको उल्लंघन र रुद्र आदि देवताको तिमीले अपमान गर्‍यौ ॥३७॥ यसै निम्ति हे अभागिनी ! तेरा जुन दुइ छोरा हुने छन्,ती दुवै अधम हुने छन् ती आफ्नो दुष्टताले तीनैलोक र
लोकपालहरूलाई बारम्बार रुने पार्ने छन् ॥३८॥ ती निरपराध र दीन-हीन प्राणीहरूलाई मार्नेछन् र अर्काको स्त्रीहरू बलपूर्वक हरण गर्नेछन् । यसले सर्व महात्मा तीमाथि कुपित
हुनेछन् ॥३९॥ यस्तो स्थितिमा समस्त-जगतका प्रभु र सर्व प्राणीहरूका पालक नारायण स्वयं अवतार लिनन् र ती दुवैलाई यसरी मार्नेछन्, जसरी इन्द्रले आफ्नो वज्रद्वारा पर्वतहरू

व्याधस्याप्यनुकम्प्यानां स्त्रीणां देवः सतीपतिः ॥ ३५ ॥ मैत्रेय उवाच ॥ स्वसर्गस्याशिषं लोक्यामाशासानां प्रवेपतीम् ॥ निवृत्तसन्ध्यानियमो
भार्यामाह प्रजापतिः ॥ ३६ ॥ कश्यप उवाच ॥ अप्रत्ययादात्मनस्ते दोषान्मौहूर्तिकादुत ॥ मन्निदेशातिचारेण देवानां चातिहेलनात् ॥ ३७ ॥
भविष्यतस्तवाभद्रावभद्रे जाठराधमौ ॥ लोकान्सपालांस्त्रींश्चण्डि मुहुराक्रन्दयिष्यतः ॥ ३८ ॥ प्राणिनां हन्यमानानां दीनानामकृतागसाम् ॥
स्त्रीणां निगृह्यमाणानां कोपितेषु महात्मसु ॥३९॥ तदा विश्वेश्वरः क्रुद्धो भगवाँल्लोकभावनः ॥ हनिष्यत्यवतीर्यासौ यथाऽद्रीन् शतपर्वधृक् ॥४०॥
दितिरुवाच ॥ वधं भगवता साक्षात्सुनाभोदारबाहुना ॥ आशासे पुत्रयोर्मह्यं मा क्रुद्धाद्ब्राह्मणाद्विभो ॥ ४१ ॥ न ब्रह्मदण्डदग्धस्य न भूतभय·
दस्य च ॥ नारकाश्चानुगृह्णन्ति यां यां योनिमसौ गतः ॥ ४२ ॥ कश्यप उवाच ॥ कृतशोकानुतापेन सद्यः प्रत्यवमर्शनात् ॥ भगवत्युरुमानाच्च
भवे मय्यपि चादरात् ॥४३॥ पुत्रस्यैव तु पुत्राणां भवितैकः सतां मतः ॥ गास्यन्ति यद्यशः शुद्धं भगवद्यशसा समम् ॥ ४४ ॥ योगैर्हेमेव

छिन्न-भिन्न पारिदिन्छन् ॥ ४० ॥ दिति बोलिन्—हे भगवान् ! यदि सुदर्शन चक्रधारी र लामा बाहु हुने साक्षात् नारायणका हातबाट तिनको वध हुन्छ भने ठीक छ, कुनै
क्रुद्ध ब्राह्मणको श्रापद्वारा तिनको मृत्यु नहोस् ॥ १ ॥ किनकि ब्राह्मणको श्रापले मरेको प्राणी जीवमात्रको भयको कारण बन्दछ । यसमाथि नारकीय जीव पनि दया गर्दैनन् । त्यो
जुनसुकै योनिमा गए पनि त्यहाँका व्यक्तिले तिरस्कार गर्दछन् ॥४२॥ कश्यप भन्दछन्—अपराध तिम्रो साह्रै ठूलो छ, तर एक त तिमीलाई आफ्नो भूल ज्ञातभयो र त्यससमाथि तिमीले
पश्चात्ताप पनि गरिसक्यौ फेरि भगवानको हातबाट वधको कुरा सुनेर पनि तिमीले अश्रद्धा देखाइनौ, तैंसो रुद्र भगवान् र मेरो सम्मान गरेकी छौ । यी कारणहरूले ॥४३॥
तिम्रो छोरो ( हिरण्यकशिपु ) को जुन छोरा हुनेछन्, तिनमा यौटा साह्रै सज्जन हुनेछ । मानिस भगवानको यशका साथै त्यसको पनि यश-गान गान छन् ॥४४॥ जस्तै–धमिलो सुन-

* उपदेश ( भूल-चूक )— भूल-चूक मनुष्य शरीरको धर्म हो । भगवान बाहेक कोही पनि आफूलाई मानिन सक्दैन । भूल चूकले नै मनुष्य बनदछ उसैबाट सिक्दछ, जो गल्तिले चुक्तैन, त्यो केहि जान्न सक्दैन । )
सोच्नै भर्नौं भने उन्नतिको शिखरमा पुग्नको निम्ति यो भन्दाखको काम दिन्छ । यस निम्ति मनुष्यको कर्तव्य हुन्छ भूल चूकबाट या अरु कुनै शक्तिले जुन हीनता आउँछ त्यसले कहिल्यै निराश नहोऔं । बरु दोब्बर
उत्साहले आफ्नो काममा लागिरहोस् । अँ, यति अवश्य छ कि बुद्धिमान मनुष्य त्यही भूलमा फेरि नगारिएर सावधान रहोस् । मनुष्य यति आफ्नो भविष्य स्वयं बिगार्दछ, त्यति अरूले बिगार्दैनन् । जे जति हामी स्वयं
सिक्दछौं, त्यसको प्रभाव अर्काको शिक्षा भन्दा बढी हुन्छ, त्यही पछि गएर सफलता बन्दछ ।

हाई हाई, कुती र कोरेर युद्ध पार्नेछन्, यदि यदी संसारका प्राणी निर्वरता आदि गुणहरूद्वारा आफूलाई सबाद तिम्रो पौत्रको अनुकर गर्नेछन् ॥४५॥ जसको कृपाले नारायणमय भएर यो [illegible] हुनेछ, ती [illegible] तिम्रो नातिको अनन्य दृष्टि (भगवद्भक्ति) बाट प्रसन्न हुनेछन् ॥४६॥ तिम्रो नाति असाधारण भक्त, महात्मा, प्रभावशाली र परम महान् हुनेछ। [illegible] भक्तिभावद्वारा आफ्नो हृदय शुद्ध पारेर नारायणमा मन लगाउनेछ र त्यसको सम्पूर्ण देहाभिमान नष्ट हुनेछ ॥४६॥ त्यो परम वैरागी हुनेछ। त्यसको बानी सान्है [illegible] त्यो अरूलाई सुखी देखेर प्रसन्न र दुःखी देखेर दुःखी हुनेछ। संसारमा त्यसको शत्रु रहने छैनन्। त्यो उसै गरी सबैको शोक हटाउने छ, जसरी ग्रीष्मऋतुको गर्मीको [illegible] ॥४८॥ यसै तिम्रो नाति भक्तहरूको इच्छानुसार अवतार लिने, कमलनयन तथा किरीट र कुण्डलले सुशोभित वदनारविन्द भएका, लक्ष्मी-युक्त भगवानलाई आफ्नो हृदयभित्र र बाहिर [illegible] विश्वमा देख्दै रहने छ ॥४९॥ मैत्रेय भन्दछन्–हे विदुर ! आफ्ना पतिको मुखबाट छोराहरूको भगवान्‌का हातबाट मरण र नाति भगवद्भक्त हुने कुरा सुनेर

दुर्वर्षं भागवतयालिन मत्सयः ॥ निर्वैरादिभिरात्मानं यच्छीलमनुवर्तितुम् ॥ ४५ ॥ यत्प्रसादादिदं विश्वं प्रसीदति यदात्मकम् ॥ स स्वदृग्भगवान्यस्य तोष्यतेऽनन्यया दृशा ॥ ४६ ॥ स वै महाभागवतो महात्मा महानुभावो महतां महिष्ठः ॥ प्रवृद्धभक्त्या ह्यनुभाविताशये निवेश्य वैकुण्ठमिमं विहास्यति ॥४७॥ अलम्पटः शीलधरो गुणाकरो हृष्टः परर्द्ध्या व्यथितो दुःखितेषु ॥ अभूतशत्रुर्जगतः शोकहर्ता नैदाघिकं तापमिवोडुराजः ॥४८॥ अन्तर्बहिश्चामलमब्जनेत्रं स्वपूरुषेच्छानुगृहीतरूपम् ॥ पौत्रस्तव श्रीललनाललामं द्रष्टा स्फुरत्कुण्डलमण्डिताननम् ॥ ४९ ॥ मैत्रेय उवाच ॥ श्रुत्वा भागवतं पौत्रममोदत दितिर्भृशम् ॥ पुत्रयोश्च वधं कृष्णाद्विदित्वाऽऽसीन्महामनाः ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे दितिकश्यपसंवादे चतुर्दशोऽध्यायः ॥ १४ ॥ मैत्रेय उवाच ॥ प्राजापत्यं तु तत्तेजः परतेजोहनं दितिः ॥ दधार वर्षाणि शतं शङ्कमाना सुरार्दनात् ॥ १ ॥ लोके तेन हतालोके लोकपाला हतौजसः ॥ न्यवेदयन्विश्वसृजे ध्वान्तव्यतिकरं दिशाम् ॥ २ ॥ देवा ऊचुः ॥ तम एतद्विभो वेत्थ संविग्ना यद्वयं भृशम् ॥ न ह्यव्यक्तं भगवतः कालेनास्पृष्टवर्त्मनः ॥ ३ ॥ देवदेव जगद्धातर्लोकनाथशिखामणे ॥ परेषामपरेषां त्वं भूतानामसि भाववित् ॥ ४ ॥ नमो विज्ञानवीर्याय माययेदमुपेयुषे ॥ गृहीतगुणभेदाय नमस्तेऽव्यक्तयोनये ॥ ५ ॥ यं त्वाऽनन्येन भावेन भावय-

दिति निकै प्रसन्न भइन् ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां चतुर्दशोऽध्यायः ॥१४॥ (जय-विजयलाई श्राप) मैत्रेय भन्दछन्–हे विदुर ! प्रजापति कश्यपको त्यो तेज (वीर्य) शत्रुनाशक थियो। यो सन्तान जन्मेर देवताहरूबाट कष्ट नपाऊन् भन्ने विचार गरेर दितिले सय वर्षसम्म आफ्नो गर्भमै राखिन् ॥१॥ त्यसले संसारलाई प्रकाश प्रदान गर्ने सूर्यनारायण र चन्द्रमाको प्रकाश नष्ट भयो। सबै लोकपालको तेज मन्द भयो। सबै दिशाहरूमा फैलिएको महान् अन्धकारलाई देखेर देवताहरू आत्तिए र तिनीहरूले ब्रह्माजीकहाँ गएर निवेदन गरे—॥२॥ हे विभो ! यस अन्धकारको रहस्य हजुर नै जान्न सक्नुहुन्छ हामीहरू त यसबाट आत्तिइरहेका छौं। हजुर नै यसको कारण जान्न सक्नु हुन्छ। किनकि हजुरले नजान्ने केही छैन ॥३॥ हे देवताहरूका पनि देवता ! हे जगत्‌का पालनकर्ता ! हे लोकपालहरूका शिरोमणि ! हजुर उच्च

र योग गर्ने प्राणिहरूको मनोगत भावहरू राम्ररी जान्नु हुन्छ ॥४॥ विज्ञान नै हजुरको बल छ । मायाले हजुरले ब्रह्माको रूप धारण गर्नुभएको छ । हजुर रजोगुणी हुनुहुन्छ । हजुरको उत्पत्तिको कारण कसैलाई पनि ज्ञान छैन, हामी हजुरलाई प्रणाम गर्दछौं । निष्कामभावले भक्तिद्वारा समस्त सदसदात्मक लोकहरू धारण गर्ने हजुरको आराधना गर्दछौं, ती प्राण र इन्द्रियहरूलाई जित्ने र हजुरको कृपा प्राप्त गर्ने व्यक्तिहरूको कहीं पनि पराजय हुँदैन ॥६-७॥ जसको वाणीमा सारा प्रजा यसरी बाँधिएका छन् जसरी डोरीमा गाई बाँधिन्छन् । संसारका सबै भागिदार हजुरलाई श्रेष्ठ मानेर पूजा गर्दछन् । हजुरलाई प्रणाम छ ॥८॥ हे भगवन् ! यस बेला अन्धकारले गर्दा दिन-रातको ज्ञान नहुनाले संसारका सबै कर्म लुप्त भएका छन् । अब हजुरले आफ्नो असाधारण कृपाले दीनजनको दुःख निवारण गरेर तिनको रक्षा गर्नुहवस् ॥९॥ हेर्नुहवस्, प्रजापति कश्यपद्वारा स्थापित दितिको गर्भ सबै दिशाहरूमा अन्धकार फिँजाएकैको छ, त्यो काठ पाएर आगो झैं बढ्दैछ ॥१०॥ मैत्रेय भन्दछन्—हे विदुर ! देवगणको कुरा सुनेर शब्दशास्त्रका ज्ञाता ती देवताहरूलाई सुन्दर वाणीले

न्यस्तात्मभावनम् ॥ आत्मनि प्रोतभुवनं परं सदसदात्मकम् ॥ ६ ॥ तेषां सुपक्वयोगानां जितश्वासेन्द्रियात्मनाम् ॥ लब्धयुष्मत्प्रसादानां न कुतश्चित्पराभवः ॥ ७ ॥ यस्य वाचा प्रजाः सर्वा गावस्तन्त्येव यन्त्रिताः ॥ हरन्ति बलिमायत्तास्तस्मै मुख्याय ते नमः ॥ ८ ॥ स त्वं विधत्स्व शं भूमंस्तमसा लुप्तकर्मणाम् ॥ अदभ्रदयया दृष्ट्या आपन्नानर्हसीक्षितुम् ॥ ९ ॥ एष देव दितेर्गर्भ ओजः काश्यपमर्पितम् ॥ दिशस्तिमिरयन्सर्वा वर्धतेऽग्निरिवैधसि ॥१०॥ मैत्रेय उवाच ॥ स प्रहस्य महाबाहो भगवान् शब्दगोचरः ॥ प्रत्याचष्टात्मभूर्देवान्प्रीणन् रुचिरया गिरा ॥११॥ ब्रह्मोवाच ॥ मानसा मे सुता युष्मत्पूर्वजाः सनकादयः ॥ चेरुर्विहायसा लोकाँल्लोकेषु, विगतस्पृहाः ॥ १२ ॥ त एकदा भगवतो वैकुण्ठस्यामलात्मनः ॥ ययुर्वैकुण्ठनिलयं सर्वलोकनमस्कृतम् ॥ १३ ॥ वसन्ति यत्र पुरुषाः सर्वे वैकुण्ठमूर्तयः ॥ तेऽनिमित्तनिमित्तेन धर्मेणाराधयन्हरिम् ॥ १४ ॥ यत्र चाद्यः पुमानास्ते भगवान् शब्दगोचरः ॥ सत्त्वं विष्टभ्य विरजं स्वानां नो मृडयन्वृषः ॥ १५ ॥ यत्र नैःश्रेयसं नाम वनं कामदुघैर्द्रुमैः ॥ सर्वर्तुश्रीभिर्विभ्राजत्कैवल्यमिव मूर्तिमत् ॥ १६ ॥ वैमानिकाः सललनाश्चरितानि यत्र गायन्ति लोकशमलक्षपणानि भर्तुः ॥ अन्तर्जलेऽनुविकसन्माधवीनां

भन्न थाले—॥११॥ हे देवता हो ! पहिले मैले तिम्रा पूर्वज सनकादि ऋषिहरूलाई आफ्नो मनबाट उत्पन्न गरेथें । ती कुनै कुराको इच्छा नराखेर केवल निस्पृह भावले स्वर्गबाट र सत्यलोकादि लोकहरूमा घुम्ने गर्थे ॥१२॥ एकपल्ट तिनीहरू विशुद्धात्मा नारायणको सबको पूज्य वैकुण्ठ पुगे ॥ १३ ॥ त्यहाँ बस्ने सबै जना नारायणकै समान राम्रा र [illegible] निष्काम भावले धर्मपूर्वक भगवान्‌को आराधना गर्दथे ॥१४॥ त्यहीं वैकुण्ठमा वेदान्तवेद्य, शुद्ध तमोगुणी र धर्मका मूर्तिमान् स्वरूप आदिपुरुष नारायण पनि हामी भक्तहरूलाई आनन्दित पार्दै बस्नुहुन्छ ॥१५॥ त्यहाँ वैकुण्ठमा निःश्रेयस नामको यौटा अत्यन्त मनोहर वन छ, जसमा सबैका अभिलाषा पूर्ण पार्ने वृक्ष छन् । तिनमा सबै ऋतुका फूल-फल [illegible] साक्षात् मोक्षधाम ज्ञात हुन्छ ॥१६॥ त्यहाँ अगणित विमानचारी देवता आफ्ना पत्नी सहित डुल्दै आउँथे र संसारका पाप-

हरू नष्ट पारिदिने नारायणको यश-गान गर्दछन् । त्यस समय ती नारायणको गुणगानमा यति धेरै मग्न हुन्छन् कि—जलमा विकसित मकरन्दपूर्ण वासन्ती लताको सुगन्धले चित्त चंचल हुँदा पनि ती त्यस सुगन्धित वायुको उपेक्षा गर्दै भगवान्को भजन नै गरिरहन्छन् ॥१७॥ जुन बेला त्यहाँका सुरभित पुष्पहरूमा डुल्ने भ्रमर भगवान्का गुण गाउन थाल्दछन् तब त्यहाँ कोइली, परेवा, सारस, चक्रवाक, हंस, सुगा, तित्रा र मयुर आदि अनेक पक्षीहरू एकछिनका लागि मानो मौन हुन्छन् । तात्पर्य के भने—त्यहाँका पक्षी पनि नारायणका गुणहरू सुनेर आनन्दित हुन्छन् ॥१८॥ मन्दार, कुन्द करवीर, चम्पा, चमेली, अड्हुल, जाई जुही, पुन्नाग, नागकेशर, बकुल, मौलसिरी, कमल र पारिजात आदि विविध प्रकारका पुष्प यद्यपि असाधारण सुगन्ध सम्पन्न हुन्छन्, तापनि ती सबै तुलसीको तपस्याको आदर यस निम्ति गर्दछन् कि भगवान्लाई त्यसको सुगन्ध विशेष प्रिय छ ॥१९॥ त्यहाँका जनमा भगवान्का चरणमा नमस्कार गर्नाले मात्र यति दृढ भक्ति जागृत भएर आउँछ कि वैदूर्य, मरकत र सुवर्ण निर्मित विमानमा बसी ठूला-ठूला नितम्ब हुने सुर-सुन्दरीहरूको हास-विलासको पनि तिनमा कुनै प्रभाव पर्दैन ।२०॥ जसको कृपा प्राप्त गर्नका निम्ति मानिस प्रयत्नशील रहन्छन्, लक्ष्मी नारायणको त्यस भव्य भवनमा आफ्ना पाउका नूपुर छम-छम पार्दै र लीला-कमल

गन्धेन खण्डितधियोऽप्यनिलं क्षिपन्तः ॥ १७ ॥ पारावतान्यभृतसारसचक्रवाकदात्यूहहंसशुकतित्तिरिबर्हिणां यः कोलाहलो विरमतेऽचिरमात्रमु-
च्चैर्भृङ्गाधिपे हरिकथामिव गायमाने ॥१८॥ मन्दारकुन्दकुरबोत्पलचम्पकार्णपुन्नागनागबकुलाम्बुजपारिजाताः ॥ गन्धेऽर्चिते तुलसिकाभरणेन तस्या
यस्मिंस्तपः सुमनसो बहु मानयन्ति ॥ १९ ॥ यत्संकुलं हरिपदानतिमात्रदृष्टैर्वैदूर्यमारकतहेममयैर्विमानैः ॥ येषां बृहत्कटितटाः स्मितशोभिमुख्यः
कृष्णात्मनां न रज आदधुरुत्स्मयाद्यैः ॥२० ॥ श्रीरूपिणी क्वणयती चरणारविन्दं लीलाम्बुजेन हरिसद्मनि मुक्तदोषा ॥ संलक्ष्यते स्फटिककुड्य
उपेतहेम्नि सम्मार्जतीव यदनुग्रहणेऽन्ययत्ना ॥ २१ ॥ वापीषु विद्रुमतटास्वमलामृताप्सु प्रेष्यान्विता निजवने तुलसीभिरीशम् ॥ अभ्यर्चती स्वल-
कमुन्नसमीक्ष्य वक्त्रमुच्छेषितं भगवतेत्यमताङ्ग यच्छ्रीः ॥ २२ ॥ यन्न व्रजन्त्यघभिदो रचनानुवादाच्छृण्वन्ति येऽन्यविषयाः कुकथा मतिघ्नीः ॥
यास्तु श्रुता हतभगैर्नृभिरात्तसारास्तांस्तान्क्षिपन्त्यशरणेषु तमःसु हन्त ॥ २३ ॥ येऽभ्यर्थितामपि च नो नृगतिं प्रपन्ना ज्ञानं च तत्त्वविषयं सह-

खेलाउँदै हुन्छिन् । त्यस बेला भित्ताहरूमा लगाएका स्फटिकमा तिनको छाया पर्नाले यस्तो ज्ञात हुन्छ कि मानौं लक्ष्मी कुचो लगाउँदै छन् ॥२१॥ हे अङ्ग ! ती लक्ष्मीजी आफ्ना सखीहरूसित त्यस तलाउको नगीच गएर तुलसी दलले नारायण भगवान्को पूजा गर्दछिन्, जसका सुकुविलाहरूमा मुगा र मोती जडेका छन् । पूजा गर्दागर्दै जलमा परेको प्रतिबिम्बमा आफ्नो सुन्दर केशपास र अग्लो नासिकायुक्त कमनीय मुख हेरेर ती विचार्न थाल्छिन् कि यदि भगवान् यदि यसलाई एकपल्ट सुसाउन् त यसको सौन्दर्य सफल हुनेछ ॥२२॥ ब्रह्माजी भन्दछन्—हे देवता हो जो जन संसारका यस्ता कुरामा अल्झिरहन्छन्—जसले तिनको बुद्धि भ्रष्ट हुन्छ ती जन नारायणका पापनाशक गुणहरू सुन्दैनन्—जसको परिणाम यो हुन्छ कि ती त्यो वैकुण्ठधाम नगएर सधैं अज्ञानान्धकारमा गाडिइरहन्छन् र अन्त्यमा नरकगामी हुन्छन् ॥ २३ ॥ जो जन त्यस मानव-योनिलाई—जसलाई हामी पनि चाहन्छौं—र अन्यान्य पनि सबै चाहन्छन्—जसमा तत्त्वज्ञान, सदाचार आदि गुण प्राप्त गर्न सुविस्ता रहन्छ—त्यो उत्तम योनि पाएर पनि जो अज्ञानवश अव्यक्त भगवान्लाई भज्दैनन्

तब मन्तुपर्दछ कि तिनीमाथि भगवान्‌का मायाको पर्दा परिराखेको छ । जसले ती भ्रममा परिरहन्छन् ॥२४॥ त्यस पवित्र धाममा न निकै व्यक्ति पुग्न पाउँछन्, जो भगवान्‌को भक्तिमा निमग्न भएर यम-नियमादि साधनबाट पनि अलग्ग हुन्छन् । जसका सद्गुणहरूको आदर हामीहरू पनि गर्दछौं । मामुलिरूपले परस्पर नारायणको गुण-गान गर्दै जसका नेत्र-बाट अश्रुधारा बग्न लाग्दछन् र सारा शरीर पुलकायमान भएर आउँछ ॥२५॥ हे देवगण ! ती सनकादि मुनि आफ्नो योगबलको शक्तिले त्यस धाममा पुगेर प्रसन्न भए । किनकि त्यो विश्व-पिताको पवित्र निवासस्थान थियो । सबै भुवनका जनहरू उनको वन्दना गरिरहेथे । अगणित देवताहरूका चित्र-विचित्र विमान आफ्ना-आफ्ना प्रभाको विस्तार गरिरहेथे ॥२६॥ त्यहाँ पुगेर नारायणको दर्शनको उत्कण्ठावश ती छ ढोकाहरूको तोस्ना हुने पनि दृष्टिपात नगरेर सोझै सातौं ढोकामा पुग्दथे । त्यहाँ तिनलाई पहरा दिइरहेका दुइ द्वारपाल भेटिए । ती द्वारपालका चार-चार भुजा थिए । ती दुवैको अवस्थामा समान थियो । दुवैले गदा लिएका थिए र बहुमूल्य किरीट, केयूर, कुण्डल आदिले तिनको स्वरूप मान्द्रै राम्रो

धर्ममत्र ॥ नाराधनं भगवतो वितरन्त्यमुष्य सम्मोहिता विततया बत मायया ते ॥ २४ ॥ यच्च व्रजन्त्यनिमिषामृषभानुवृत्त्या दूरे यमा ह्युपरि नः स्पृहणीयशीलाः ॥ भर्तुर्मिथः सुयशसः कथनानुरागवैक्लव्यबाष्पकलया पुलकीकृताङ्गाः ॥ २५ ॥ तद्विश्वगुर्वधिकृतं भुवनैकवन्द्यं दिव्यं विचित्र-विबुधाग्र्यविमानशोचिः ॥ आपुः परां मुदमपूर्वमुपेत्य योगमायाबलेन मुनयस्तदथो विकुण्ठम् ॥ २६ ॥ तस्मिन्नतीत्य मुनयः षडसज्जमानाः कक्षाः समानवयसावथ सप्तमायाम् ॥ देवावचक्षत गृहीतगदौ परार्घ्यकेयूरकुण्डलकिरीटविटङ्कवेषौ ॥ २७ ॥ मत्तद्विरेफवनमालिकया निवीतौ विन्यस्त-याऽसितचतुष्टयबाहुमध्ये ॥ वक्त्रं भ्रुवा कुटिलयाऽस्फुटनिर्गमाभ्यां रक्तेक्षणेन च मनाग्रभसं दधानौ ॥ २८ ॥ द्वार्येतयोर्निविविशुर्मिषतोरपृष्ट्वा पूर्वा यथा पुरटवज्रकपाटिकायाः ॥ सर्वत्र तेऽविषमया मुनयः स्वदृष्ट्या ये संचरन्त्यविहता विगताभिशङ्काः ॥ २९ ॥ तान्वीक्ष्य वातरशनांश्चतुरः कुमा-रान्वृद्धान्दशार्धवयसो विदितात्मतत्त्वान् ॥ वेत्रेण चास्खलयतामतदर्हणांस्तौ तेजो विहस्य भगवत्प्रतिकूलशीलौ ॥ ३० ॥ ताभ्यां मिषत्स्वनिमिषेषु निषिध्यमानाः स्वर्हत्तमा ह्यपि हरेः प्रतिहारपाभ्याम् ॥ ऊचुः सुहृत्तमदिदृक्षितभङ्ग ईषत्कामानुजेन सहसा त उपप्लुताक्षाः ॥३१॥ मुनय ऊचुः ॥

देखिइरहेथ्यो ॥२७॥ ती घाँटीदेखि खुट्टासम्म झुण्डिने गरेको वनमाला पहिरेका थिए, जसमा मत्त भमरगण डुलिरहेथे । श्याम बाहुको माझमा विराजमान तिनको सुन्दर मुख थियो । तिनका आँखीभौं र नासिका केही फर्काए झैं देखिन्थे र आँखा राता भएका थिए । त्यसले ती क्रुद्ध भएको लक्षण देखिइरहेको थियो ॥२८॥ ती मुनिगण पछिल्ला छ ढोकामा नसोधेर नै आएका थिए, त्यसै गरी सातौं ढोका भित्र पनि जानलागे । किनकि ती समस्त भूमण्डललाई समान दृष्टिले हेर्दथे । यसै निमित्त तिनलाई कहीं पनि रोक-छेक थिएन ॥२९॥ ती परम वृद्ध हुँदा पनि देख्दा पाँच वर्षका झैं ज्ञात हुने र आत्मज्ञानी सनकादिहरूलाई त्यसरी सरासर भित्र जान लागेका देखेर भगवान् भन्दा विरुद्ध स्वभाव भएका ती दुवै द्वारपालहरूले तिनको तेजको उपेक्षा गरेर र उपहास ( ठट्टा ) गर्दै आफ्नो बेतको लट्ठीले तिनलाई रोकिदिए ॥३०॥ परम पूजनीय ती ऋषिगण देवताहरूले हेर्दाहेर्दै ती द्वारपाल द्वारा रोकिए । त्यसले तिनका अतिशय प्रिय नारायणको दर्शनमा बाधा पर्यो । तब तिनलाई रिस उठ्यो र तिनका आँखा रातो-राता भए ॥३१॥ मुनिहरूले भने—हामीलाई छेक्ने तिमी को हौ ?

गर्दै भगवान्तिर हेरेर ती ऋषिगण गद्गद् भए । तिनको श्याम र विशाल वक्षस्थलमा लक्ष्मीजी विराजमान थिइन् । आफ्नो शोभाले ती सबै लोकका शिरोमणिस्वरूप आफ्नो वैकुण्ठ धामलाई सुशोभित पारिरहेका थिए ।।३९।। भगवान् आफ्ना स्थूल नितम्बमा झल्कने कन्धनी पहिरेका थिए । उनको घाँटीमा वनमाला थियो—त्यसको सुगन्धमा मुग्ध भएर भ्रमरगण गुञ्जार गरिरहेका थिए । तिनका बाहुमा सुन्दर गहना थिए । ती यौटा हात गरुड्को काँधमा राखेका थिए र अर्को हातमा लीला-कमल लिएर हल्लाइरहेका थिए ।।४०।। आफ्नो तेजले बिजुलीलाई पनि परै बस भन्ने लाग्थ्यो र मकराकृत कुण्डल कानमा थिए, त्यसले गालाको शोभा हेरिरहुँ जस्तो थियो । तिनको अग्लो र राम्रो नासिका थियो । तिनको शिरमा मणिजडित किरीट सुशोभित थियो । दुवै भुजाहरूको बीच घाँटीमा बहुमूल्य हार र वक्षस्थलमा कौस्तुभमणि विराजमान थियो ।। ४१ ।। उनको त्यो रमनीय कान्ति देखेर सनकादि मुनिहरूले विचार गरे—लक्ष्मीजी व्यर्थ नै आफ्नो शोभाको वर्णन गर्दछिन् । वास्तवमा नारायणको शोभाको सामुन्ने तिनको सौन्दर्य हराएको छ । ब्रह्माजी भन्दछन्—हे देवता हो !

श्रिया स्वश्चूडामणिं सुभगयन्तमिवात्मधिष्ण्यम् ॥ ३९ ॥ पीतांशुके पृथुनितम्बिनि विस्फुरन्त्या काञ्च्याऽलिभिर्विरुतया वनमालया च ॥ वल्गुप्र-
कोष्ठवलयं विनतासुतांसे विन्यस्तहस्तमितरेण धुनानमब्जम् ॥ ४० ॥ विद्युत्क्षिपन्मकरकुण्डलमण्डनार्ह गण्डस्थलोन्नसमुखं मणिमत्किरीटम् ॥
दोर्दण्डषण्डविवरे हरता परार्ध्यहारेण कन्धरगतेन च कौस्तुभेन ॥ ४१ ॥ अत्रोपसृष्टमिति चोत्स्मितमिन्दिरायाः स्वानां धिया विरचितं
बहुसौष्ठवाढ्यम् ॥ मह्यं भवस्य भवतां च भजन्तमङ्गं नेमुर्निरीक्ष्य न वितृप्तदृशो मुदा कैः ॥ ४२ ॥ तस्यारविन्दनयनस्य पदारविन्दकिञ्जल्कमि-
श्रतुलसीमकरन्दवायुः ॥ अन्तर्गतः स्वविवरेण चकार तेषां संक्षोभमक्षरजुषामपि चित्ततन्वोः ॥ ४३ ॥ ते वा अमुष्य वदनासितपद्मकोशमुद्वीक्ष्य
सुन्दरतराधरकुन्दहासम् ॥ लब्धाशिषः पुनरवेक्ष्य तदीयमङ्घ्रिद्वन्द्वं नखारुणमणिश्रयणं निदध्युः ॥ ४४ ॥ पुंसां गतिं मृगयतामिह योगमार्गै-
र्ध्यानास्पदं बहुमतं नयनाभिरामम् ॥ पौंस्नं वपुर्दर्शयानमनन्यसिद्धैरौत्पत्तिकैः समगृणन् युतमष्टभोगैः ॥ ४५ ॥ कुमारा ऊचुः ॥ योऽन्तर्हितो हृदि
गतोऽपि दुरात्मनां त्वं सोऽद्यैव नो नयनमूलमनन्तराद्धः ॥ यर्ह्येव कर्णविवरेण गुहां गतो नः पित्राऽनुवर्णितरहो भवदुद्भवेन ॥ ४६ ॥ तं त्वा

हामा शंकरकी र तिमीहरू जस्ता भक्तहरूको उपकारार्थ अवतार लिने ती नारायणलाई देखेर ती मुनिजन गद्गद् भए र आँखाद्वारा बारम्बार त्यो सौन्दर्य हेरेर पनि तृप्त हुँदैनथे ।।४२।। तिनका कमल समान नेत्र र चरणारविन्दको मकरन्द तथा तुलसीको सुगन्धले मिश्रित वायुलाई सुँघनाले ब्रह्मज्ञानी भएर पनि तिनको मनको मन र तन क्षुभित हुन गयो ।।४३।। तिनीहरू नारायणको श्याम-कमल सदृश र कुन्दपुष्प झैं मन्द हास्ययुक्त मुख देखेर सफल मनोरथ हुँदै राता नङ देदीप्यमान तिनका चरण देखेर ध्यान मग्न हुनगए ।।४४।। जो जन योगमार्गद्वारा तिनका तत्त्वको जिज्ञासामा लीन रहेर ध्यानरत रहने र यस बाटोलाई नै उनलाई प्राप्त गर्ने साँचो भन्दछन् ती नयनाभिराम तथा अणिमादि सिद्धिहरूको आस्पदरूप परमेश्वरलाई प्रत्यक्ष देखेर ती सनकादि मुनिजन तिनको स्तुति गर्नलागे ।।४५।। मुनिजन भन्दछन्—हे अनन्त ! यद्यपि हजुर जगत्का सबै जीवहरूमा विद्यमान रहनु हुन्छ, तापनि जसको अन्तरात्मा दूषित रहन्छ, तिनलाई हजुरको दर्शन प्राप्त हुँदैन । त्यसो त आजभन्दा धेरै वर्षअघि मेरा पिता ब्रह्माजीले मलाई हजुरका स्वरूपको उपदेश दिएका थिए र हामीले

आफ्नै कानले यो उपदेश सुनेर आफ्नो हृदयरूपी गुफामा हजुरको कमनीय स्वरूप राखिसकेका थियौं, तर हजुरको प्रत्यक्ष दर्शन त आज नै पाइयो ॥ ४६ ॥ हे भगवन् ! ठूला-ठूला योगाराम र ऋषि-मुनि दृढ भक्ति तथा योग आदि उपायहरूद्वारा आफ्नो हृदयमा नै जुन गूढ तत्त्व खोज्दछन् त्यो हजुर नै हुनुहुन्छ । हाम्रो विश्वास—हजुर तीमाथि कृपा गरेर तिनको हृदयमा स्थित भएर तिनलाई सन्तुष्ट पार्नुहुन्छ ॥४६॥ हे अङ्ग ! जो जन हजुरका चरणको शरण प्राप्त गरेर हजुरका कथामृत पान गरेर तृप्त भइसकेका छन्, हजुरका पुनीत यशको रस जान्नमा निपुण ती विवेकशील प्राणी त मुक्तिलाई पनि तुच्छ ठान्दछन् । अनि ती इन्द्रादि पदलाई पनि के मान्दथे ? ॥ ४८ ॥ हे नारायण ! आजभन्दा अघि हामीबाट कुनै पनि अपराध भएको थिएन, तर आज हजुरका भक्तलाई श्राप दिएर हामीले ठूलो अपराध गरिसक्यौं । अस्तु, यस महापापको कारण यदि हामीले बारम्बार नरकमा जन्म लिनु परे पनि कुनै चिन्ताको कुरा छैन, तर हाम्रो मन भ्रमरा जस्तै हजुरका चरण-कमलमा लीन रहोस् । हजुरको अनुकम्पाले हामी सदा हजुरका गुण-ज्ञान गर्दै तुलसी जस्तै हजुरका चरणको ध्यान गर्दै

विदाम भगवन्परमात्मतत्त्वं सत्त्वेन सम्प्रति रतिं रचयन्तमेषाम् ॥ तत्तेऽनुतापविदितैर्दृढभक्तियोगैरुद्ग्रन्थयो हृदि विदुर्मुनयो विरागाः ॥ ४७ ॥
नात्यन्तिकं विगणयन्त्यपि ते प्रसादं किन्त्वन्यदर्पितभयं भ्रुव उन्नयैस्ते ॥ येऽङ्ग त्वदङ्घ्रिशरणा भवतः कथायाः कीर्तन्यतीर्थयशसः कुशला रसज्ञाः
॥४८॥ कामं भवः स्ववृजिनैर्निरयेषु नः स्याच्चेतोऽलिवद्यदि नु ते पदयो रमेत ॥ वाचश्च नस्तुलसिवद्यदि तेऽङ्घ्रिशोभाः पूर्यंत ते गुणगणैर्यदि
कर्णरन्ध्रः ॥४९॥ प्रादुश्चकर्थ यदिदं पुरुहूतरूपं तेनेश निर्वृतिमवापुरलं दृशो नः ॥ तस्मा इदं भगवते नम इद्विधेम योऽनात्मनां दुरुदयो भगवा-
न्प्रतीतः ॥५०॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे जयविजययोः सनकादिशापो नाम पञ्चदशोऽध्यायः ॥ १५ ॥ ब्रह्मोवाच ॥ इति तद्गृ-
णतां तेषां मुनीनां योगधर्मिणाम् ॥ प्रतिनन्द्य जगादेदं विकुण्ठनिलयो विभुः ॥ १ ॥ श्रीभगवानुवाच ॥ एतौ तौ पार्षदौ मह्यं जयो विजय एव
च ॥ कदर्थीकृत्य मां यद्वो बह्वक्रान्तामतिक्रमम् ॥ २ ॥ यस्त्वेतयोर्धृतो दण्डो भवद्भिर्मामनुव्रतैः ॥ स एवानुमतोऽस्माभिर्मुनयो देवहेलनात् ॥ ३ ॥
तद्वः प्रसादयाम्यद्य ब्रह्म दैवं परं हि मे ॥ तद्धीत्यात्मकृतं मन्ये यत्स्वपुम्भिरसत्कृताः ॥ ४ ॥ यन्नामानि च गृह्णाति लोको भृत्ये कृतागसि ॥

॥४९॥ हे विपुल कीर्तिशाली नारायण ! हजुरले आफ्नो जुन यो स्वरूप प्रकट गर्नुभएको छ, त्यसको दर्शन गरेर हामी आफूलाई धन्य ठानिरहेछौं । पापीहरूलाई यस दिव्य स्वरूप को दर्शन प्राप्त हुन सक्तैन । हामी हजुरलाई नमस्कार गर्दछौं ॥ ५० ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां पञ्चदशोऽध्यायः ॥१५॥ ( जय-विजयको वैकुण्ठबाट पतन )—ब्रह्माजी भन्दछन्—ती भक्तियोगका योगीहरूको कुरा सुनेर वैकुण्ठ निवासी र सर्वव्यापक भगवान् आज्ञा हुन्छ—हे मुनिगण ! यी दुवै मेरा पार्षद जय-विजय हुन् । आज यी दुवैले ( गालीको चक्रमा परेर ) मेरो अलिकति पनि ख्याल नगरी हजुरसित जुन व्यवहार गरे त्यो सर्वथा अनुचित थियो ॥१-२॥ हजुर जस्ता नारायणका भक्तले इनको कार्यानुसार जो दण्ड दिनुभयो, म त्यसमा सहमत छु, किनकि हजुरहरूको यिनले अपमान गरेका थिए ॥ ३ ॥ म ब्राह्मणहरूलाई आफ्नो पूज्य मान्दछु र यसैले हजुरसित प्रार्थना गर्दछु । मेरा सेवकले हजुरहरूको तिरस्कार गरेका हुन्, यसै निम्ति म नै त्यस अपराधको उत्तरदायी हुँ ॥ ४ ॥ यदि कसैको सेवक कुनै अपराध

गर्दछ भने साधारणतया सोध्छिन्छ—यो कसको सेवक हो ? अन्त्यमा त्यसको स्वामी पनि लांछित हुन्छ । त्यो लांछना त्यसका स्वामीको कीर्तिलाई उसै प्रकार नष्ट पार्दछ, जसरी कुष्ठ रोग कायालाई नाश पारिदिन्छ ॥५०॥ म विकुण्ठ कहिन्छु—जसको अमृत सदृश मधुर यश सुनेर संसारका चाण्डालसम्म पारी तर्छन्, त्यो यश मैले हजुरहरू द्वारा नै प्राप्त गरेको हुँ । यसो स्थितिमा म तपाईंहरूको विपरीत आचरण गर्ने आफ्ना हात जस्ता ( प्रिय व्यक्ति ) लाई पनि काटिदिन्छु ॥६॥ मेरो विश्वास छ कि हजुरहरूको सेवाले नै मलाई यो बल प्राप्त भएको छ । मेरो पाउको धूलोले सम्पूर्ण जगत् पाप-मुक्त हुन्छ, पखालिन्छ । यद्यपि म त्यसको तर्फबाट विरक्त रहन्छु, तापनि ती लक्ष्मी मेरो पछि लागिरहन्छिन्, जसको एकपल्ट दर्शनको निमित्त ब्रह्मादि देवता विविध प्रकारका नियम पालन गर्दछन् ॥ ६ ॥ यज्ञमा यजमान द्वारा घिउमा मुछिएको चरु, पुरोडाश आदि हव्य अग्निमा हवन गर्नाले म त्यति तृप्त हुन्न,

सोऽसाधुवादस्तत्कीर्तिं हन्ति त्वचमिवामयः ॥ ५ ॥ यस्यामृतामलयशःश्रवणावगाहः सद्यः पुनाति जगदाश्वपचाद्विकुण्ठः ॥ सोऽहं भवद्भ्य उपलब्धसुतीर्थकीर्तिश्छिन्द्यां स्वबाहुमपि वः प्रतिकूलवृत्तिम् ॥ ६ ॥ यत्सेवया चरणपद्मपवित्ररेणुं सद्यः क्षताखिलमलं प्रतिलब्धशीलम् ॥ न श्रीर्विरक्तमपि मां विजहाति यस्याः प्रेक्षालवार्थ इतरे नियमान्वहन्ति ॥ ७ ॥ नाहं तथाऽद्मि यजमानहविर्विताने श्च्योतद्घृतप्लुतमदन्हुतभुङ्मुखेन ॥ यद्ब्राह्मणस्य मुखतश्चरतोऽनुघासं तुष्टस्य मय्यवहितैर्निजकर्मपाकैः ॥ ८ ॥ येषां बिभर्म्यहमखण्डविकुण्ठयोगमायाविभूतिरमलाङ्घ्रिरजः किरीटैः ॥ विप्रांस्तु को न विषहेत यदर्हणाम्भः सद्यः पुनाति सह चन्द्रललामलोकान् ॥ ९ ॥ ये मे तनूर्द्विजवरान्दुहतीर्मदीया भूतान्यलब्धशरणानि च भेदबुद्ध्या ॥ द्रक्ष्यन्त्यघक्षतदृशो ह्यहिमन्यवस्तान्गृध्रा रुषा मम कुषन्त्यधिदण्डनेतुः ॥ १० ॥ ये ब्राह्मणान्मयि धिया क्षिपतोऽर्चयन्तस्तुष्यद्धृदः स्मित-

जति निष्काम बुद्धिले र मैमा लागेका ब्राह्मणहरूलाई भोजन गराउनाले तृप्त हुन्छु (किनकि ब्राह्मण नै मेरो मुख हुन् ) ॥८॥ फेरि जसका पवित्र चरण-रज म आफ्नो शिरमा लगाउँछु, यस संसारमा यस्तो कुन प्राणी छ जो ती ब्राह्मणको अनादर गर्नेछ । म यद्यपि अखण्ड योगमायारूपिणी विभूतिलाई धारण गरिराखदछु, तापनि मेरो चरण-रज शिवजी तथा समस्त लोकलाई पवित्र पारिदिन्छ ॥९॥ जो व्यक्ति कामधेनु गाई तथा अमेरै देह झैं ब्राह्मण आफ्नो भेद-बुद्धिवश अपमान गर्दछन् भने म तिनको हृदयमा निवास गर्दिन ती पापान्ध प्राणिहरूको गृध्र समान यमदूत सर्प समान रिसाई आफ्ना चक्र जस्तै चुच्चाहरूले चिथोरेर खान्छन् ॥१०॥ जो कठोर भाषण गर्ने ब्राह्मणहरूलाई पनि मेरो स्वरूप ठानेर हाँसिदिन्छन् र तीभित

---

◌ दृष्टान्त ( सबै नारायणकै रूप हुन् )—कुनै बेला कोही गुरु आफ्ना शिष्यहरूलाई उपदेश दिइरहेका थिए—'सबै जीव नारायणका रूप हुन् ।' कोही शिष्य बोल्यो—'म हजुरका यस वाक्यको पालन गर्नेछु ।' त्यही दिन कुनै बाटोमा ' महावतको चिच्याइ ! सहसा त्यसका सामुन्ने हात्ती आयो हात्तीमाथि बसेको माहुतेले भन्यो— पर हट, छेउ लाग । शिष्यले विचार गर्‍यो—किन हट्ने ? म नारायण हुँ भने हात्ती पनि नारायण हो । नारायणलाई नारायणसित केको डर ? उसै बखत हात्ती नजीकै आइपुग्यो र उसलाई सूँडमा बेरेर पर फ्याँकिदियो । त्यस कारणले उसलाई निकै चोट लाग्यो । पछि त्यो उठ्यो र गुरुकहाँ गएर कुरा सुनाई भन्यो—'गुरुजी यदि सबै नारायण हुन्, तब हात्तीरूपी नारायणले मलाई किन फ्याँक्यो ?' गुरुले भने—'तिम्रो कुरा ठीक हो । परन्तु माहुतेरूपी नारायणले सावधान पारेर पनि तिमी सावधान भएनौ । यसै कारण तिमीले यो दुःख भोग्नु पर्‍यो ।

यस किसिमसित कुरा गर्दछन् जस्तै पिता-पुत्र वार्तालाप गर्दछन्, तब म तिनको वशीभूत हुन्छु ॥११॥ मेरा यी दुवै पार्षदहरूले मेरो अभिप्राय नबुझीकन अपराध गरिदिए र इनलाई
आफुले गरेको दुष्कर्मको दण्ड पनि पाइसके। अब यति कृपा अरु गरिदिनोस्—यी आफ्नो पापको फल भोगेर शीघ्र मकहाँ फर्कर आउन् ॥ १२ ॥ ब्रह्माजी भन्नुहुन्छ—ती ऋषिहरू
निकै रिसाएका थिए तापनि नारायणका ती पवित्र र मन्त्र समान कमनीय कुराहरू सुनेर शान्त भए ॥ १३ ॥ भगवान्‌को उक्ति सानै भए पनि त्यसमा गम्भीर अर्थ भरिएको
थियो। त्यो सुनेर राम्ररी विचार गरेर पनि यो बुझ्न सकिन्नथ्यो कि नारायणले त्यति कुरा भनेर ती दुवैको अभिनन्दन गरे वा तिनीहरूको निन्दा गरे ॥ १४ ॥ अन्त्यमा
त्यस उक्तिलाई स्तुति परक मानेर प्रसन्न ती ऋषि गद्‌गद् भए। त्यस बेला तिनलाई रोमांच भएर आयो र तिनको प्रभुत्व बुझेर ती भन्न लागे—॥ १५ ॥ हे भगवन्! हे देव!
समस्त संसारका स्वामी भएर पनि हजुरले जो यो कुरा भन्नु भयो—तपाईंले ठूलो कृपा गर्नुभयो यसको अर्थ हामीले बुझ्न सकेनौं ॥ १६ ॥ हे प्रभो! हजुर ब्राह्मण-भक्त हुनु-

तत्पुष्पोक्षितपदाब्जनखाः ॥ वाण्याऽनुरागकलयाऽऽत्मजवद्‌गृणन्तः सम्बोधयन्त्यहमिवाहमुपाहृतस्तैः ॥ ११ ॥ तन्मे स्वभर्तुरवसायमलक्षमाणौ युष्मद्व्य-
तिक्रमगतिं प्रतिपद्य सद्यः ॥ भूयो ममान्तिकमितां तदनुग्रहो मे यत्कल्पतामचिरतो भृतयोर्विवासः ॥ १२ ॥ ब्रह्मोवाच ॥ अथ तस्योशतीं देवीमृषि-
कुल्यां सरस्वतीम् ॥ नास्वाद्य मन्युदष्टानां तेषामात्माऽप्यतृप्यत ॥ १३ ॥ सतीं व्यादाय शृण्वन्तो लघ्वीं गुर्वर्थगह्वराम् ॥ विगाह्यागाधगम्भीरां न
विदुस्तच्चिकीर्षितम् ॥ १४ ॥ ते योगमाययाऽऽरब्धपारमेष्ठ्यमहोदयम् ॥ प्रोचुः प्रांजलयो विप्राः प्रहृष्टाः क्षुभितत्वचः ॥ १५ ॥ ऋषयः ऊचुः ॥ न
वयं भगवन्विद्मस्तव देव चिकीर्षितम् ॥ कृतो मेऽनुग्रहश्चेति यदध्यक्षः प्रभाषते ॥ १६ ॥ ब्रह्मण्यस्य परं दैवं ब्राह्मणाः किल ते प्रभो ॥ विप्राणां
देवदेवानां भगवानात्मदैवतम् ॥१७॥ त्वत्तः सनातनो धर्मो रक्ष्यते तनुभिस्तव ॥ धर्मस्य परमो गुह्यो निर्विकारो भवान्मतः ॥ १८ ॥ तरन्ति
ह्यञ्जसा मृत्युं निवृत्ता यदनुग्रहात् ॥ योगिनः स भवान्किंस्विदनुगृह्येत यत्परैः ॥ १९ ॥ यं वै विभूतिरुपयात्यनुवेलमन्यैरर्थार्थिभिः स्वशिरसा
धृतपादरेणुः ॥ धन्यार्पितांघ्रितुलसीनवदामधाम्नो लोकं मधुव्रतपतेरिव कामयाना ॥ २० ॥ यस्तां विविक्तचरितैरनुवर्तमानां नात्याद्रियत्परम-
भागवतप्रसङ्गः स त्वं द्विजानुपथपुण्यरजःपुनीतः श्रीवत्सलक्ष्म किमगा भगभाजनस्त्वम् ॥ २१ ॥ धर्मस्य ते भगवतस्त्रियुगस्त्रिभिः स्वैः पद्भि-

हुन्छ र ब्राह्मणलाई श्रेष्ठ देवता मान्नुहुन्छ, तर सत्य कुरा हो—हजुर देवताहरूका पनि देवता स्वरूप र ब्राह्मणहरूका भक्त तथा तिनको आत्मा हुनुहुन्छ ॥ १० ॥ हजुरद्वारा नै सना-
तनधर्मको उत्पत्ति हुन्छ र हजुरको अवतार-शरीरबाट नै तिनको रक्षा हुन्छ। धर्मको गुप्त र विकारशून्य तत्त्व हजुरलाई नै मानिन्छ ॥१८॥ जब कि विरक्त जन एकमात्र हजुरकै कृपा-
बाट नै यो भवसागर तरेर जान्छन्, तब हजुरलाई कसैको के आवश्यकता हुन सक्छ? ॥१९॥ ती लक्ष्मी जसको सेवामा प्रतिक्षण संलग्न रहन्छिन् जसको चरण-रजलाई संसारका
लोभी जीव ठूलो प्रेमले शिरमा लगाउँछन्। संसारका पुण्यात्मा प्राणी हजुरका चरणमा तुलसी दलको माला अर्पण गर्दछन्। यद्यपि लक्ष्मी सदा हजुरकै चाकरीमा लागिरहन्छिन्
॥२०॥ ती आफ्ना पवित्र परिचर्या द्वारा हजुरको अनुसरण गर्दै रहन्छिन्, तापनि हजुर तिनको विशेष ख्याल नगरेर आफ्ना भक्तमाथि नै दयालु रहनु हुन्छ, यद्यपि हजुर

सबै सन्तहिहरूका स्वामी हुनुहुन्छ, तैपनि हजुर आफूलाई ब्राह्मणहरूको कृपाले नै महत्त्वशाली मान्नुहुन्छ। यो केवल जगत्‌लाई शिक्षा दिने ढंग हो ॥२१॥ हे नारायण ! हजुर ब्राह्मण र देवताहरूको उपकार गर्नको निम्ति आफूबाट रजोगुण र तमोगुण तथा आफ्नी सत्त्वगुणमयी मूर्तिबाट अवतार लिई यस चराचर विश्वको उपकार गर्नुहुन्छ। हे दीनानाथ ! धर्मनै हजुरको वास्तविक रूप हो। तप, शौच र दया यी तीन स्पष्ट धर्मका चरण हुन् ॥२२॥ यदि हजुर सबै कुलमा उत्तम ब्राह्मणकुलको रक्षा र तिनको सत्कार नगरिदिने भए हजुरद्वारा प्रचलित गरिएको जगत्‌को कल्याण गर्ने वैदिक मर्यादा नै लुप्त हुन्थ्यो र संसारका साधारण जन देवता र ब्राह्मणको आदर गर्न थिएनन् किनकि संसार त गतानुगतिको छ। जस्तो ठूला गर्दछन् त्यसै गरी साना पनि गर्दछन् ॥२३॥हजुरलाई त्यो ( वेदमार्गको नाश ) अभीष्ट छैन। जुन बेला संसारमा यस्ता दुष्टहरूको प्रबलता भएर आउँछ र ती दुष्ट हजुरका पुरातन धर्म-मार्गमा प्रहार गर्दछन् तब हजुर आफ्नी सत्त्वमयी मूर्तिबाट अवतार धारण गरेर तिनको नाश गरिदिनु हुन्छ। यस्तो स्थितिमा हजुरले ब्राह्मणलाई प्रणाम गर्नु उचित नै हो। धर्मको रक्षाका निम्ति तिनलाई प्रणाम गर्नाले हजुरको प्रताप घट्तैन। यो हजुरको यौटा लीला हो ॥ २४ ॥ हे स्वामिन् ! हे नाथ ! हजुरका यी दुवै सेवकहरूलाई

श्चराचरमिदं द्विजदेवतार्थम् ॥ नूनं भृतं तदभिघाति रजस्तमश्च सत्त्वेन नो वरदया तनुवा निरस्य ॥ २२ ॥ न त्वं द्विजोत्तमकुलं यदिहात्मगोपं-
गोप्ता वृषः स्वर्हणेन ससूनृतेन ॥ तर्ह्येव नंक्ष्यति शिवस्तव देव पन्था लोकोऽग्रहीष्यदृषभस्य हि तत्प्रमाणम् ॥ २३ ॥ तत्तेऽनभीष्टमिव सत्त्वनिधेर्वि-
धित्सोः क्षेमं जनाय निजशक्तिभिरुद्धृतारेः ॥ नैतावता त्र्यधिपतेर्बत विश्वभर्तुस्तेजः क्षतं त्ववनतस्य स ते विनोदः ॥ २४ ॥ यं वाऽनयोर्दममधीश
भगवान्विधत्ते वृत्तिं नु वा तदनुमन्महि निर्व्यलीकम् ॥ अस्मासु वा य उचितो ध्रियतां स दण्डो येऽनागसौ वयमयुङ्क्ष्महि किल्बिषेण ॥२५॥
श्रीभगवानुवाच ॥ एतौ सुरेतरगतिं प्रतिपद्य सद्यः संरम्भसम्भृतसमाध्यनुबद्धयोगौ ॥ भूयः सकाशमुपयास्यत आशु यो वः शापो मयैव विहितस्त
दवेत विप्राः ॥ २६ ॥ ब्रह्मोवाच ॥ अथ ते मुनयो दृष्ट्वा नयनानन्दभाजनम् ॥ विकुण्ठं तदधिष्ठानं वैकुण्ठं च स्वयंप्रभम् ॥ २७ ॥ भगवन्तं
परिक्रम्य प्रणिपत्यानुमान्य च ॥ प्रतिजग्मुः प्रमुदिताः शंसन्तो वैष्णवीं श्रियम् ॥ २८ ॥ भगवाननुगावाह यातं मा भैष्टमस्तु शम् ॥ ब्रह्मतेजः

हामीले जो दण्ड दियौं, हजुर त्यसको समर्थन गर्नोस् वा यी दुवैको अझ पदोन्नति गरिदिनोस्, हामीलाई आपत्ति छैन। यदि हजुर यो आफलाई अपराध मान्नुहुन्छ भने इच्छा लागे-को दण्ड हामीलाई दिनोस्, त्यो हामी स्वीकार गर्दछौं ॥२५॥ सनकादिको कुरा सुनेर सान्त्वना दिँदै भगवान् भन्नुहुन्छ—तपाईं नआत्तिनोस्, यी दुवै सेवक ( जय-विजय ) राक्षसी योनिमा जन्म लिन्छन् र आफ्नो कर्मको फल भोगेर चाँडै नै यहाँ फर्केर आउँछन्। यी त्यस योनिमा गएर मसित प्रबल वैरभावको व्यवहार गर्नछन्। शत्रुताको आवेशमा पनि यी बराबर मेरो स्मरण गरिरहनन्। हे विप्र हो ! यिनलाई जो श्राप दिनुभयो, त्यो मेरो इच्छानुकूल नै जान्नुहवस् ॥२६॥ ब्रह्माजी भन्दछन्—त्यसपछि ती मुनिहरूले नारायणको त्यो नयनाभिराम र तेजस्वी रूप तथा तिनको दिव्य वैकुण्ठलोक देखेर उनको परिक्रमा गरी भगवान्‌लाई प्रणाम गरेर अनुमति मागे। त्यसपछि नारायण भगवानका गुन-गान गर्दै सन-कादि त्यहाँबाट प्रस्थान गरे ॥२७-२८॥ ऋषिहरू गइसकेपछि नारायणले आफ्ना दुवै सेवकलाई डाकेर भन्नुभयो—आत्तिनु पर्दैन, तिम्रो कल्याण होस्। यद्यपि म तिनको त्यो

आपस्वरूप ब्राह्मणलाई नष्ट गर्न पनि सक्छु। तर म त्यसो गर्न चाहन्न किनकि त्यस श्रापसित म सहमत छु ॥२९॥ यस आपको शंका त तिमीहरूलाई उसै वखत मिलिसकेको थियो, जब म योगनिद्रामा लीन रहेको वेला लक्ष्मीजी भित्र आइरहेकी थिइन् र तिमी दुवैले तिनलाई छेकेका थियौ ॥३०॥ राक्षसी योनिमा प्राप्त भएर क्रोधयोगद्वारा छोड्नै तिमी यो ब्रह्मश्रापको अवधि अघाम पनि छौ र फेरि मकहाँ फर्कर आउने छौ ॥३१॥ यसरी आफ्ना द्वारपाललाई सम्झाइ-बुझाइ नारायण विमानपुञ्जले विभूषित र सर्वोत्कृष्ट शोभायुक्त आफ्नो भवनमा जानुभयो ॥३२॥ त्यसपछि ती द्वारपाल ब्रह्मश्रापले गर्दा नारायणको लोकबाट भ्रष्ट भए, तत्काल तिनको सौन्दर्य नष्ट भयो र सारा गर्व खर्व भएर गयो ॥ ३३ ॥ ब्रह्माजी भन्दछन्—हे पुत्र हो ( देवता हो ! ) जुन वेला नारायणका ती दुवै सेवक वैकुण्ठबाट झर्न लागे, त्यसवेला विमानमा बसेका देवताहरूमा हाहाकार मच्चियो ॥३४॥ तिनै दुइ (जय-विजय) भगवान्का प्रधान सेवक यस वखत कश्यपको तेजोमय वीर्यद्वारा दितिको गर्भमा छन् ॥३५॥ तिनै दुवै दैत्यको तेजबाट तिमीहरूको तेज थियो र यही नारायणको इच्छा छ। यसमा कुनै

समर्थोऽपि हन्तुं नेच्छे मतं तु मे ॥ २९ ॥ एतत्पुरैव निर्दिष्टं रमया क्रुद्धया यदा ॥ पुराऽपवारिता द्वारि विशन्ती मय्युपारते ॥ ३० ॥ मयि संरम्भयोगेन निस्तीर्य ब्रह्महेलनम् ॥ प्रत्येष्यतं निकाशं मे कालेनाल्पीयसा पुनः ॥ ३१ ॥ द्वाःस्थावादिश्य भगवान्विमानश्रेणिभूषणम् ॥ सर्वातिशयया लक्ष्म्या जुष्टं स्वं धिष्ण्यमाविशत् ॥ ३२ ॥ तौ तु गीर्वाणऋषभौ दुस्तराद्धरिलोकतः ॥ हतश्रियौ ब्रह्मशापादभूतां विगतस्मयौ ॥ ३३ ॥ तदा विकुण्ठधिषणात्तयोर्निपतमानयोः ॥ हाहाकारो महानासीद्विमानाग्र्येषु पुत्रकाः ॥ ३४ ॥ तावेव ह्यधुना प्राप्तौ पार्षदप्रवरौ हरेः ॥ दितेर्जठरनिर्विष्टं काश्यपं तेज उल्बणम् ॥ ३५ ॥ तयोरसुरयोरद्य तेजसा यमयोर्हि वः ॥ आक्षिप्तं तेज एतर्हि भगवांस्तत्रास्मद्विधित्सति ॥ ३६॥ विश्वस्य यः स्थितिलयोद्भवहेतुराद्यो योगेश्वरैरपि दुरत्यययोगमायः ॥ क्षेमं विधास्यति स नो भगवांस्त्र्यधीशस्तत्रास्मदीयविमृशेन कियानिहार्थः ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे षोडशोऽध्यायः ॥ १६ ॥ मैत्रेय उवाच ॥ निशम्यात्मभुवा गीतं कारणं शंकयोज्झिताः ॥ ततः सर्वे न्यवर्तन्त त्रिदिवाय दिवौकसः ॥ १ ॥ दितिस्तु भर्तुरादेशादपत्यपरिशंकिनी ॥ पूर्णे वर्षशते साध्वी पुत्रौ प्रसुषुवे यमौ ॥ २ ॥ उत्पाता बहव·

पनि आधा-पर्दा हुन सक्तैन ॥ ३६ ॥ जुन भगवान् विश्वको उत्पत्ति, पालन र संहार गर्दछन्, जो जागतिक जीवहरूका आदिपुरुष हुन्, योगीजन पनि जसको अनुल्लङ्घनीय मायालाई जित्न सक्तैनन् तिनै त्रिलोकीनाथ नारायण हाम्रो कल्याण गरून्। यस विषयमा हामीले विशेष तर्क-वितर्क गर्नाले कुनै पनि लाभ छैन ॥३७॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं· गौरीशंकर 'वशिष्ठ' कृत नेपाली भाषा-टीकायां षोडशोऽध्यायः ॥ १६ ॥ ( हिरण्याक्ष र हिरण्यकशिपुको जन्म र तिनको दिग्विजय ) महर्षि मैत्रेय भन्दछन्—हे विदुर ! देवताहरूले जब ब्रह्माजीका कुरा सुने तब तिनको शंका निवारण भयो र तिनीहरू त्यहाँबाट आफ्नू स्वर्गलोक फर्के ॥ १ ॥ उता दितिले आफ्ना पति कश्यपको मुखबाट जब भावी पुत्रहरूको प्रकृति सुनिन् तब ती आत्तिइन्। अन्त्यमा जब सय वर्ष पूरा भयो तब ती साध्वीको गर्भबाट एकैपल्ट दुइ पुत्र उत्पन्न भए ॥ २ ॥ तिनको उत्पत्तिको वेलामा

आकाश, पृथ्वी र स्वर्गमा संसारलाई व्याकुल पार्न थरि-थरिका उत्पात भए ॥३॥ पहाडसमेत पृथ्वी काँप्नलागिन्, दशै दिशाहरूमा आगोका ज्वाला उठ्नलागेका देखिनथाले । उल्का-पातको साथसाथै वज्र पर्न थाल्यो र आकाशमा धूमकेतु उदायो॥४॥ स्वाँ-स्वाँको घनघोर ध्वनि निकाल्दै, शरीरलाई पोल्दै आँधी-बेहरी चक्रवातझैं बेसरी चल्न लाग्यो । धूलोले भरिएको त्यस्तै वायु चलेर ठूला-ठूला वृक्षलाई धराशायी पार्न लागे ॥५॥ चारैतिरबाट बादलले ढाक्यो । बिजुली चम्कन लाग्यो, सूर्य-चन्द्र आदि ग्रह देखिन छाडे र यति घोर अन्धकार व्याप्त भयो कि केही पनि देखिन छाड्यो ॥ ६ ॥ समुद्र क्षुब्ध भएर अग्ला-अग्ला तरंग उफार्न थाल्यो र त्यसमा बस्ने मगर-मत्स्य आदि जीव क्षुभित हुनथाले । कुवा, तलाउ र नदीहरूमा बाढी आयो र कमलदल सुक्नलागे ॥ ७ ॥ सूर्य र चन्द्रलाई ग्रहण लाग्यो, तिनको चारैतिर मण्डलाकार देखिन लाग्यो । आकाशमा घनघोर गर्जन हुन

स्तत्र निपेतुर्जायमानयोः ॥ दिवि भुव्यन्तरिक्षे च लोकस्योरुभयावहाः ॥ ३ ॥ सहाचला भुवश्चेलुर्दिशः सर्वाः प्रजज्वलुः ॥ सोल्काश्चाशनयः पेतुः केतवश्चार्तिहेतवः ॥ ४ ॥ ववौ वायुः सुदुःस्पर्शः फूत्कारानीरयन्मुहुः ॥ उन्मूलयन्नगपतीन्वात्यानीको रजोध्वजः ॥ ५ ॥ उद्धसत्तडिदम्भोदघटया नष्टभागणे ॥ व्योम्नि प्रविष्टतमसा न स्म व्यादृश्यते पदम् ॥ ६ ॥ चुक्रोश विमना वार्धिरुदूर्मिः क्षुभितोदरः ॥ सोदपानाश्च सरितश्चुक्षुभुः शुष्कपंकजाः ॥ ७ ॥ मुहुः परिधयोऽभूवन्सराह्वोः शशिसूर्ययोः ॥ निर्घाता रथनिर्ह्रादा विवरेभ्यः प्रजज्ञिरे ॥ ८ ॥ अन्तर्ग्रामेषु मुखतो वमन्त्यो वह्निमुल्बणम् ॥ शृगालोलूकटङ्कारैः प्रणेदुरशिवं शिवाः ॥ ९ ॥ संगीतवद्रोदनवदुन्नमय्य शिरोधराम् ॥ व्यमुञ्चन्विविधा वाचो ग्रामसिंहास्ततस्ततः ॥ १० ॥ खराश्च कर्कशैः क्षत्तः खुरैर्घ्नन्तो धरातलम् ॥ खार्काररभसा मत्ताः पर्यधावन्वरूथशः ॥ ११ ॥ रुदन्तो रासभत्रस्ता नीडादुदपतन्खगाः ॥ घोषेऽरण्ये च पशवः शकृन्मूत्रमकुर्वत ॥ १२ ॥ गावोऽत्रसन्नसृग्दोहास्तोयदाः पूयवर्षिणः ॥ व्यरुदन्देवलिङ्गानि द्रुमाः पेतुर्वि-

लाग्यो र पर्वतका कन्दराहरूमा यस्तो कठोर ध्वनि सुनिन लाग्यो—जस्तो ध्वनि रथ हिँड्नाले सुनिन्छ ॥ ८ ॥ आफ्नो मुखबाट आगो उकेल्दै स्यालिनीहरू गाउँको माझमा आएर रुन लागे । स्याल र उलूकहरूको पनि ध्वनि सुनिन लाग्यो ॥९॥ *गाउँका कुकुर एकत्र भएर टाउको माथितिर उचाली-उचाली अनेक प्रकारले कराउन लागे ॥१०॥ हे विदुर ! समूहका समूह गदहा आफ्ना कर्कश खुरले माटो खन्न र एक विचित्र प्रकारको शब्दले कराउँदै यता-उता भाग्नलागे ॥ ११ ॥ ती गदहाहरूको कोलाहल सुनेर भयभीत पक्षी गण आफ्आफ्ना गुँड छाडेर रुँदै भाग्न लागे । आफ्नो स्थानमा बाँधिएका अथवा वनमा चर्न लागेका पशु डराई मल-मूत्र त्याग्न लागे ॥ १२ ॥ गाईहरू भयभीत भए र दूध दुहुँदा

* बीरा दृष्टान्त—बीरा कुकुर आफ्नो गाउँ छाडेर अर्को गाउँमा गयो । त्यहाँको बीरा कुकुर त्यो भन्दा बलियो थियो र त्यसले एक प्रहारमै पछार्‍यो । कुनै दयालु मानिसले दया गरेर छुटाइदिए । अब पहिलो कुकुर पुन्दर हुँकाएर वर्षौं-वर्षौं गर्दै आफ्नो चारैतिर फर्क्यो । बाटोमा त्यसलाई बीरा अर्को कुकुर भेटियो त्यो उसैको गाउँको साइ बन्धु थियो । यो आफ्नो बीरा गाइलाई संकटमा देखेर सहायता गर्न आएको थियो, तर त्यो स्वयं निर्बल थियो । अतएव लडाईंमा मात्र गलिएर त्यो पर्खाल आफ्नो साथीको विजय-कामना गर्दै थियो; तर चुटाइ खाएर फर्केको कुकुर साथीकोप्रति कृतज्ञता प्रकट गर्नको साटो त्यसलाई पछारेर थिच्यो र खतम्मै पारिदियो । यस्तो गरेर त्यसलाई त्यो सुख प्राप्त भयो मानौ त्यसले अघिल्लो शत्रुमा विजय पाएको होस् । त्यसपछि त्यो पुन्दर हल्लाउँदै र भुकेर विजय गर्न देखाउँदै आफ्नो गाउँमा गयो । संसारमा यस्ता मनुष्यको पनि कमी छैन, जो बलवान्सित पराजित भएर निर्बलमा आफ्नो शक्ति देखाउँछन् ।

2-57

तिनको थनबाट रगत निस्कन लाग्यो । मेघ पीपको वर्षा गर्नलागे । मन्दिरहरूमा स्थापित देवता रुनलागे र हावा नचलिकन नै वृक्ष उखेलिएर ढल्न लागे ॥१३॥ शनि र मङ्गल आदि
क्रूर ग्रह गुरु, बुध आदि सौम्य ग्रहहरूको अतिक्रमण गरेर तथा वक्री भई परस्पर नै लड्न लागे ॥१४॥ यी डरलाग्दा उत्पातहरू देखेर यिनको कारण केही बुझ्न नसक्ने प्रजागण
डराई यस्तो विचार गर्नलागे...अब प्रलय हुन देर लाग्दैन । केवल ब्रह्माजीका पुत्र सनकादि मुनिमात्र यी उत्पातदेखेरभयभीत भएनन्, किन भने ती यसको रहस्य राम्ररी जान्दथे ॥१५॥
उता फलाम जस्तै कठोर शरीर भएका ती दुवै दैत्य आफ्नो पुरुषार्थ प्रकट गर्दै पर्वतसमान बढ्नलागे ॥१६॥ अन्त्यमा ती यति ठूला भए—तिनको सुवर्णमय किरीटले आकाश छोयो ।
तिनको शरीर यति मोटो भयो कि सबै दिशाहरू भरिए झैं भान हुन लाग्यो । तिनले हिंड्दा पाइलैपिच्छे सम्पूर्ण पृथ्वी कम्पित भएर भैंचालो आए झैं हुन्थ्यो । तिनका भुजदण्डमा
सुनका गहना र कम्मरमा सुन र रत्नजडित ठल्कने करधनी देखिन्थ्यो, त्यसको तेजले सूर्य पनि पराजित जस्तै भइरहेका थिए ॥ १७ ॥ ती जम्ल्याहा छोरामध्ये जो पहिले उत्पन्न

नाऽनिलम् ॥ १३ ॥ ग्रहान्पुण्यतमानन्ये भगणाश्चापि दीपिताः ॥ अतिचेरुर्वक्रगत्या युयुधुश्च परस्परम् ॥ १४ ॥ दृष्ट्वाऽन्यांश्च महोत्पातानतत्-
त्वविदः प्रजाः ॥ ब्रह्मपुत्रानृते भीता मेनिरे विश्वसम्प्लवम् ॥ १५ ॥ तावादिदैत्यौ सहसा व्यज्यमानात्मपौरुषौ ॥ ववृधातेऽश्मसारेण कायेनाद्रि-
पती इव ॥ १६ ॥ दिविस्पृशौ हेमकिरीटकोटिभिर्निरुद्धकाष्ठौ स्फुरदङ्गदाभुजौ ॥ गां कम्पयन्तौ चरणैः पदे पदे कट्या सुकाञ्च्याऽर्कमतीत्य
तस्थतुः ॥ १७ ॥ प्रजापतिर्नाम तयोरकार्षीद्यः प्राक्स्वदेहाद्यमयोरजायत ॥ तं वै हिरण्यकशिपुं विदुः प्रजा यं तं हिरण्याक्षमसूत साऽग्रतः ॥१८॥
चक्रे हिरण्यकशिपुर्दोर्भ्यां ब्रह्मवरेण च ॥ वशे सपालाँल्लोकाँस्त्रीनकुतोमृत्युरुद्धतः ॥ १९ ॥ हिरण्याक्षोऽनुजस्तस्य प्रियः प्रीतिकृदन्वहम् ॥
गदापाणिर्दिवं यातो युयुत्सुर्मृगयन् रणम् ॥ २० ॥ तं वीक्ष्य दुःसहजवं रणत्काञ्चननूपुरम् ॥ वैजयन्त्या स्रजा जुष्टमंसन्यस्तमहागदम् ॥ २१ ॥
मनोवीर्यवरोत्सिक्तमसृण्यमकुतोभयम् ॥ भीता निलिल्यिरे देवास्तार्क्ष्यत्रस्ता इवाहयः ॥ २२ ॥ स वै तिरोहितान्दृष्ट्वा महसा स्वेन दैत्यराट् ॥
सेन्द्रान्देवगणान्क्षीबानपश्यन्व्यनदद्भृशम् ॥ २३ ॥ ततो निवृत्तः क्रीडिष्यन्गम्भीरं भीमनिःस्वनम् ॥ विजगाहे महासत्त्वो वार्धिं मत्त इव

भयो महर्षि कश्यपले त्यसको नाम हिरण्यकशिपु र दोस्रो पुत्रको हिरण्याक्ष नाम राखे ॥१८॥ हिरण्यकशिपुले आफ्नो बाहुबल र ब्रह्माको वरदानले तीनै लोक र लोकपति-
लाई आफ्नो अधीन पार्‍यो, किनकि त्यसलाई कसैले गरे पनि नमर्ने वरदान प्राप्त भएको थियो, त्यसैले उद्धत भइरहेको थियो ॥१९॥ त्यसको प्रिय भाइ हिरण्याक्ष सधैं दाजुलाई प्रसन्न
राख्दथ्यो । एक दिन हिरण्याक्ष हातमा गदा लिएर लड्ने इच्छाले युद्ध गर्ने प्रतिद्वन्द्वीलाई खोज्दै स्वर्गलोक पुग्यो ॥२०॥ हिंड्दा त्यसका खुट्टामा लगाएका रत्नमय नूपुर
बजिरहेका थिए, गलामा वैजयन्ती माला थियो र काँधमा ठूलो गदा विराजमान थियो । त्यो महाबलवान् दैत्यलाई—॥२१॥ जो असाधारण वीर, ब्रह्माको वरदानले बनेको
अभिमानी, निर्भय एवं उद्दण्ड थियो—त्यसलाई आएको देखेर सबै देवता डरले त्यसै गरी लुके, जसरी गरुडलाई देखेर सर्प लुक्दछन् ॥२२॥ आफ्नो तेजले देवताहरू लुकेका ठानेर
त्यसले यो बुझ्यो—सबै देवता कायर हुन् । अब त्यो चेतरी गर्जन गरेर देवताहरूलाई हाँक दिन लाग्यो ॥ २३॥ सामुन्ने कसैलाई नदेखेर त्यो बलवान् दैत्य स्वर्गलोकबाट फर्किगो

र मदमत्त हात्तीको समान मस्त भएर समुद्रमा हाम्फाल्यो । त्यसले समुद्रमा हाम्फालनाले वरुणदेवका सबै सैनिक अर्थात् माछा–कछुवा आदि जलजन्तु डराए । त्यस बखत डरले गर्दा तिनको बुद्धि नै नष्ट भयो । यद्यपि त्यस दैत्यले तिनलाई कुनै कष्ट दिएन, तापनि त्यसको तेजले नै व्याकुल भएर तीं भागे ॥२४-२५॥ त्यो महाबली राक्षस धेरै वर्षसम्म त्यही समुद्रमै हावाको वेगले उठिरहने अग्ला-अग्ला तरंगमा आफ्नो लोहमयी गदा पछार्दै डुलिरह्यो । हे तात ( विदुर ) ! त्यहाँबाट त्यो वरुणको विभावरी नगरीमा गयो ॥ २६ ॥ त्यहाँ दैत्यहरूको लोक पातालको पालन गर्ने र जल-जन्तुका अधिपति वरुणदेवसित भेट भयो । तिनलाई देखेर उपहास गर्दै उसले प्रणाम गऱ्यो र यौटा नीच मनुष्यको समान मुसु-मुसु हाँस्तै भन्न लाग्यो—हे अधिराज ! तिमी राजमहल त्यागेर युद्ध गर्नका लागि मैदानमा आऊ ।।२७।। हे वरुण ! तिमी लोकपाल, जलका स्वामी र वीरहरूको गर्व खर्व गर्नसक्ने असाधारण वीर हौ । तिमीले आफ्नो प्रचण्ड बाहुबलले सबै लोकका दैत्य र दानवहरूलाई जितेर राजसूय यज्ञ पनि गरिसकेका छौ ॥२८॥ यस्तो गर्वले भरिएका वचन सुनेर यद्यपि वरुणदेवलाई रिस

द्विपः ॥ २४ ॥ यस्मिन्प्रविष्टे वरुणस्य सैनिका यादोगणाः सधियः ससाध्वसाः ॥ अहन्यमाना अपि तस्य वर्चसा प्रधर्षिता दूरतरं प्रदुद्रुवुः ॥२५॥
स वर्षपूगानुदधौ महाबलश्चरन्महोर्मीञ्छ्वसनेरितान्मुहुः ॥ मौर्व्याऽभिजघ्ने गदया विभावरीमासेदिवांस्तात पुरीं प्रचेतसः ॥ २६ ॥ तत्रोपलभ्यासुर-
लोकपालकं यादोगणानामृषभं प्रचेतसम् ॥ स्मयन्प्रलब्धुं प्रणिपत्य नीचवज्जगाद मे देह्यधिराज संयुगम् ॥ २७ ॥ त्वं लोकपालोऽधिपतिर्बृहच्छ्रवा
वीर्यापहो दुर्मदवीरमानिनाम् ॥ विजित्य लोकेऽखिलदैत्यदानवान्यद्राजसूयेन पुराऽयजत्प्रभो ॥ २८ ॥ स एवमुत्सिक्तमदेन विद्विषा दृढं प्रलब्धो
भगवानपां पतिः ॥ रोषं समुत्थं शमयन्स्वया धिया व्यवोचदङ्गोपशमं गता वयम् ॥ २९ ॥ पश्यामि नान्यं पुरुषात्पुरातनाद्यः संयुगे त्वां रणमा-
र्गकोविदम् ॥ आराधयिष्यत्यसुरर्षभेहि तं मनस्विनो यं गृणते भवादृशाः ॥३०॥ तं वीरमारादभिपद्य विस्मितः शयिष्यसे वीरशये श्वभिर्वृतः ॥
यस्त्वद्विधानामसतां प्रशान्तये रूपाणि धत्ते सदनुग्रहेच्छया ॥ ३१ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे हिरण्याक्षदिग्विजये सप्तदशोऽ-
ध्यायः ॥ १७ ॥ मैत्रेय उवाच ॥ तदेवमाकर्ण्य जलेशभाषितं महामनास्तद्विगणय्य दुर्मदः ॥ हरेर्विदित्वा गतिमङ्ग नारदाद्रसातलं निर्विविशे

उठेको थियो, तापनि आफ्नो विवेक बुद्धिद्वारा रिसलाई थिचेर त्यस दैत्यसित उनले भने—'हे दैत्यराज ! अब त म लडाईं-झगडाबाट विमुख भइसकेको छु ॥ २९ ॥ ती पुराणपुरुष नारायण बाहेक म संसारमा अरू कुनै यस्तो वीर देख्दिन, जसले युद्ध-भूमिमा तिमीसित लडाईं गर्न सकोस् । हे असुरेन्द्र ! एकमात्र ती नारायण नै तिम्रो इच्छा पूर्ण गरेर तिमीलाई प्रसन्न पार्न सक्नेछन् । किनकि तिमीजस्ता ठूला-ठूला वीर पनि तिनको पुरुषार्थको प्रशंसा गर्दछन् ॥३०॥ यसनिम्ति तिमी सरासर तिनैकहाँ जाऊ । ती तिम्रो अभिमान चूर पारेर तिमीलाई संग्राम-भूमिमा सुताइदिने छन् । त्यस समय धेरै कुकुर चारैतिरबाट तिम्रो मृत शरीरलाई छोप्नेछन्, किनकि ती महाप्रभु सज्जनहरूमा कृपा गर्न बेला-बेलामा तिमी जस्ता उद्दण्ड वीरहरूको नाश गर्नका लागि नै अवतार लिने गर्दछन् ॥३१॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषा-टीकायां सप्तदशोऽध्यायः ॥ १ ॥ ( हिरण्याक्ष र वराह भगवान्को संग्राम )—मैत्रेय भन्दछन्—हे विदुर ! वरुणदेवका कुराहरू त्यो अभिमानी र महामनस्वी दैत्यले हाँसेर उडाइदियो । तिनको कुराले उसलाई कुनै किसिमको आ याहट भएन र नारद

मुखबाट नारायणको उपस्थितिको ठाउँको पत्ता लगाएर ठूलो वेगले रसातल लोकमा पुग्यो ॥१॥ त्यहाँ उसले आफ्नो दाँतको टुप्पामा पृथ्वी राखेर आउन लागेका वाराहरूपधारी नारायणलाई देख्यो। तिनलाई देखेर त्यस दैत्यले ठट्टा गर्दै भयो—'हेर, यो विचित्र वन-जन्तु पाइयो।' उस वेला ती नारायणका राता-राता आँखाको तेजले त्यसको तेज मन्द भइरहेको थियो ॥ २ ॥ एकै छिनपछि त्यो फेरि भन्न लाग्यो—'ए शूकररूप धारण गर्ने भएको देवाधम ! तँ यो पृथ्वीलाई यहीं छाडिदे। यसलाई त ब्रह्माजीले हामी पाताल-लोक-निवासीहरूलाई अर्पित गरेका हुन्। ए यज्ञ ! मेरो साम्नेबाट तँ यसलाई लिएर जान सक्तैनस्। अब तेरो कुशल छैन।३॥ हाम्रा शत्रु देवताहरूले हाम्रो नाश गर्नका लागि नै तँलाई पोले-पोसेको त होइन ? तँ आफ्नो मायाबल (कपट) ले दैत्यहरूलाई मार्न खोज्दछस् ? तँमा केवल मायाको बल छ। पुरुषार्थ त छँदैछैन भने पनि हुन्छ ! हे मूढ ! आज म तेरो वध गरेर आफ्ना सम्बन्धीहरूको शोक नाश पार्नेछु ॥ ४ ॥ यदि म आफ्नो गदाको प्रहारले तेरो मस्तक धूलो पार्न सकिन भने तेरो निम्ति पूजनको सामग्रीहरू एकत्र पार्ने यी देवता

त्वरान्वितः ॥ १ ॥ ददर्श तत्राभिजितं धराधरं प्रोन्नीयमानावनिमग्रदंष्ट्रया ॥ मुष्णन्तमक्ष्णा स्वरुचोऽरुणश्रिया जहास चाहो वनगोचरो मृगः
॥ २ ॥ आहैनमेह्यज्ञ महीं विमुञ्च नो रसौकसां विश्वसृजेयमर्पिता ॥ न स्वस्ति यास्यस्यनया ममेक्षतः सुराधमासादितशूकराकृते ॥ ३ ॥
त्वं नः सपत्नैरभवाय किं भृतो यो मायया हन्त्यसुरान्परोक्षजित् ॥ त्वां योगमायाबलमल्पपौरुषं संस्थाप्य मूढ प्रमृजे सुहृच्छुचः ॥ ४ ॥ त्वयि
संस्थिते गदया शीर्णशीर्षण्यस्मद्भुजच्युतया ये च तुभ्यम् ॥ बलिं हरन्त्यृषयो ये च देवाः स्वयं न सर्वे भविष्यन्त्यमूलाः ॥ ५ ॥ स तुद्यमानोऽरि-
दुरुक्ततोमरैर्दंष्ट्राग्रगां गामुपलक्ष्य भीताम् ॥ तोदं मृषन्निरगादम्बुमध्याद्ग्राहाहतः सुकरेणुर्यथेभः ॥ ६ ॥ तं निःसरन्तं सलिलादनुद्रुतो हिरण्यकेशो
द्विरदं यथा झषः ॥ करालदंष्ट्रोऽशनिनिःस्वनोऽब्रवीद्गतह्रियां किं त्वमतां विगर्हितम् ॥ ७ ॥ स गामुदस्तात्सलिलस्य गोचरे विन्यस्य तस्यामद-
धात्स्वसत्त्वम् ॥ अभिष्टुतो विश्वसृजा प्रसूनैरापूर्यमाणो विबुधैः पश्यतोऽरेः ॥ ८ ॥ परानुषक्तं तपनीयोपकल्पं महागदं काञ्चनचित्रदंशम् ॥ मर्माण्य-
भीक्ष्णं प्रतुदन्तं दुरुक्तैः प्रचण्डमन्युः प्रहसंस्तं बभाषे ॥ ९ ॥ श्रीभगवानुवाच ॥ सत्यं वयं भो वनगोचरा मृगा युष्मद्विधान्मृगये ग्रामसिंहान् ॥
न मृत्युपाशैः प्रतिमुक्तस्य वीरा विकत्थनं तव गृह्णन्त्यभद्र ॥ १० ॥ एते वयं न्यासहरा रसौकसां गतह्रियो गदयाद्रावितास्ते ॥ तिष्ठामहेऽथापि

र ऋषि कसरी निर्मूल हुनन्—तँ बाँचेसम्म त यिनको बल साहस बढेकै रहने छ ॥५॥ त्यो कटु वचन सुनेर भगवानलाई रिस उठ्यो र आफ्ना दाँतमा पृथ्वीलाई उचालेर नै जल भित्रबाट निस्केर आए ॥६॥ अब त्यस राक्षसले जलबाट निस्केर बाहिर जान लागेका शूकर भगवानको पछि लाग्यो र भन्न थाल्यो—'तिमी जस्ता निर्लज्ज शत्रुको अगाडिबाट भाग्नु बाहेक अरु के गर्न सक्तछन् ?' त्यसका ती कटु वचनहरू सुनेर भगवान्ले पृथ्वीलाई जलबाट बाहिर राखिदिए तब देवताहरूले तीमाथि पुष्प-वर्षा गरे र ब्रह्माजीले स्तुति गरे ॥७-८॥ अनि देवताहरूको भय निवारणका लागि भगवान्ले भन्नुभयो—॥ ९ ॥ तिम्रो कथन सत्य हो, हामीहरू जंगली हौं र जंगलमा बसेर तिमीजस्ता कुकुरलाई खोज्दै रहन्छौं। ए पापी ! तँ जस्ता दुष्टको बकवादमा वीर व्यक्ति ध्यान दिँदैनन ॥१०॥ तेरो गदाको प्रहारले हामी भाग्यौं। यसरी असमर्थ भएर पनि हामी तेरो साम्ने छौं। बलवान शत्रुसित शत्रुता किनेर

भागेर कहाँ जान सकछ ? ॥ ११ ॥ अतः अब तिमी मलाई मारेर आफ्ना सजातीहरूको शोकरूपी आँसु पुछ । जो आफूले गरेको प्रतिज्ञा पालन गर्दैन, त्यसलाई संसारले मूर्ख ठान्दछ । ॥१२॥ यसरी भगवानले धिक्कार दिएर ठट्ठा गरेपछि हिरण्याक्ष कुनै विषधर सर्प जस्तै रिसायो । बर्ता रिसले त्यसका सबै इन्द्रियहरू क्षुब्ध भए र बर्ता आवेशमा गाडिएर त्यसले भगवानलाई ताकेर गदा प्रहार गरिदियो ॥१३-१४॥ त्यसले भगवानको छाती ताकेर गदा छाडेको थियो, तर अलिकति बाङ्गिएर प्रभुले त्यसको प्रहार व्यर्थ पारिदिए । अब त्यो गदा घुमाएर यता-उता नाच्न लाग्यो र भगवान् रिसाएर त्यसमाथि झम्टे ॥१५-१६॥ उनले त्यसमाथि आफ्नो गदा प्रहार गरे, त्यो गदाको चोट दैत्यले गदाद्वारा नै छलिदियो । यस प्रकार धेरै समयसम्म ती दुवै परस्पर गदायुद्ध गरिरहे ॥ १७-१८ ॥ गदा-युद्धका अनेक बट्याइँ देखाएर ती एक अर्कोलाई हिर्काइरहेका थिए र दुवैका शरीरबाट रुधिरको धारा बग्न

कथञ्चिदाजौ स्थेयं क यामो बलिनोत्पाद्य वैरम् ॥ ११ ॥ त्वं पद्रथानां किल यूथपाधिपो घटस्व नोऽस्वस्तय आश्वनूहः ॥ संस्थाप्य चास्मान्प्रमृजाश्रु स्वकानां यः स्वां प्रतिज्ञां नातिपिपर्त्यसभ्यः ॥ १२ ॥ मैत्रेय उवाच ॥ सोऽधिक्षिप्तो भगवता प्रलब्धश्च रुषा भृशम् ॥ आजहारोल्बणं क्रोधं क्रीड्यमानोऽहिराडिव ॥ १३ ॥ सृजन्नमर्षितः श्वासान्मन्युप्रचलितेन्द्रियः ॥ आसाद्य तरसा दैत्यो गदयाऽभ्यहनद्धरिम् ॥ १४ ॥ भगवांस्तु गदावेगं विसृष्टं रिपुणोरसि ॥ अवञ्चयत्तिरश्चीनो योगारूढ इवान्तकम् ॥ १५ ॥ पुनर्गदां स्वामादाय भ्रामयन्तमभीक्ष्णशः ॥ अभ्यधावद्धरिः क्रुद्धः संरम्भाद्दष्टदच्छदम् ॥ १६ ॥ ततश्च गदयाऽऽरातिं दक्षिणस्यां भ्रुवि प्रभुः ॥ आजघ्ने स तु तां सौम्य गदया कोविदोऽहनत् ॥ १७ ॥ एवं गदाभ्यां गुर्वीभ्यां हर्यक्षो हरिरेव च ॥ जिगीषया सुसंरब्धावन्योन्यमभिजघ्नतुः ॥ १८ ॥ तयोः स्पृधोस्तिग्मगदाहताङ्गयोः क्षतास्रवघ्राणविवृद्धमन्य्वोः ॥ विचित्रमार्गांश्चरतोर्जिगीषया व्यभादिलायामिव शुष्मिणोर्मृधः ॥ १९ ॥ दैत्यस्य यज्ञावयवस्य माया गृहीतवाराहतनोर्महात्मनः ॥ कौरव्य मह्यां द्विषतोर्विमर्दनं दिदृक्षुरागादृषिभिर्वृतः स्वराट् ॥ २० ॥ आसन्नशौण्डीरमपेतसाध्वसं कृतप्रतीकारमहार्यविक्रमम् ॥ विलक्ष्य दैत्यं भगवान्सहस्रणी- र्जगाद नारायणमादिसूकरम् ॥ २१ ॥ ब्रह्मोवाच ॥ एष ते देव देवानामङ्घ्रिमूलमुपेयुषाम् ॥ विप्राणां सौरभेयीणां भूतानामप्यनागसाम् ॥ २२ ॥ आगस्कृद्भयकृद्दुष्कृदस्मद्राद्धवरोऽसुरः ॥ अन्वेषन्नप्रतिरथो लोकानटति कण्टकः ॥ २३ ॥ मैनं मायाविनं दृप्तं निरङ्कुशमसत्तमम् ॥ आक्रीड बालव- द्देव यथाऽऽशीविषमुत्थितम् ॥ २४ ॥ न यावदेष वर्धेत स्वां वेलां प्राप्य दारुणः ॥ स्वां देवमायामास्थाय तावज्जह्यघमच्युत ॥२५॥ एषा घोरतमा

लागेको थियो । पृथ्वीको निमित्त युद्ध गर्ने नारायण र हिरण्याक्षको त्यो डरलाग्दो संग्राम हेर्नका लागि अनेक ऋषिगण सहित ब्रह्माजी त्यहाँ पुगे । ब्रह्माले त्यो मदमत्त र असाधारण पराक्रमी दैत्यलाई देखेर भगवान्सित भने–हे देव ! यो दैत्य हजुरका शरणागत भक्तगण, देवताहरू र ब्राह्मणहरूको अपराधी हो । यो तिनलाई डर देखाई कुट्दछ । मैले यसलाई वर दिएको थिएँ, त्यसैले उद्धत भएर यो आफू समान कुनै बलवानलाई खोज्दै सबै लोकहरूमा डुलिरहन्छ ॥ १९-२३ ॥ यसनिम्ति हजुर यो अभिमानी, निरंकुश र मायावी तथा सर्प समान यस दानवसित केटा-केटी जस्तै हेलचक्राइँ नगर्नु हवस् । साँझको बेलामा यो अझ बलवान् नहुँदै,त्योभन्दा पहिले नै यसको वध गर्नुहवस् ॥२४-२५॥ हे सर्वात्मन् ! लोकहरू नष्ट

पारिदिने सन्ध्याकाल आउनुभन्दा पहिल्यै यसलाई मारेर देवताहरूलाई विजयश्री प्रदान गरिदिनुहवस् । अहिले अभिजित नामको योग छ । यस योगमा नै हजुर हामीहरूको कल्याण गर्नका लागि यसलाई मारेर हलाउनोस् ॥२६-२७॥ जय-विजयले श्राप पाउने बेला हजुरले जुन दया गर्नुभएको थियो, त्यसैले हजुर स्वयं मृत्यु बनेर यसको साथ पाल्नुभयो । अब यसलाई मारेर सबैलाई सुखः तुल्याउनोस् ॥२८॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धेऽष्टादशोऽध्यायः ॥१८॥ (वराह भगवान्‌द्वारा हिरण्याक्ष-वध)-मैत्रेयले भने-शूकर भगवान् ब्रह्माको निष्कपट वाक्य सुनेर मुलुक हाँसे र प्रेमातिर हेरेर तिनको प्रार्थना स्वीकार गरे । त्यसपछि सामुन्ने उपस्थित त्यस दैत्यको काँधमा भगवान्‌ले गदा प्रहार गरे ॥१-२॥ त्यसै बखत हिरण्याक्षले आफ्नो गदा प्रहार गरेर प्रभुको प्रहार व्यर्थ पारिदियो र भगवान्‌को बाहुबाट गदा उछिट्टिएर पर गयो । यो ठाँटा विचित्र घटना सहसा घट्यो । यद्यपि त्यस बेला भगवान्

सन्ध्या लोकच्छम्वट्करी प्रभो ॥ उपसर्पति सर्वात्मन् सुराणां जयमावह ॥ २६ ॥ अधुनैषोऽभिजिन्नाम योगो मौहूर्तिको ह्यगात् ॥ शिवाय नस्त्वं सुहृदामाशु निस्तर दुस्तरम् ॥ २७ ॥ दिष्ट्या त्वां विहितं मृत्युमयमासादितः स्वयम् ॥ विक्रम्यैनं मृधे हत्वा लोकानाधेहि शर्मणि ॥ २८ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे हिरण्याक्षवधेऽष्टादशोऽध्यायः ॥ १८ ॥ मैत्रेय उवाच ॥ अवधार्य विरिञ्चस्य निर्व्यलीकामृतं वचः ॥ प्रहस्य प्रेमगर्भेण तदपाङ्गेन सोऽग्रहीत् ॥ १ ॥ ततः सपत्नं मुखतश्चरन्तमकुतोभयम् ॥ जघानोत्पत्य गदया हनावसुरमक्षजः ॥ २ ॥ सा हता तेन गदया विहता भगवत्करात् ॥ विघूर्णिताऽपतद्रेजे तदद्भुतमिवाभवत् ॥ ३ ॥ स तदा लब्धतीर्थोऽपि न बबाधे निरायुधम् ॥ मानयन्स मृधे धर्मं विष्वक्सेनं प्रकोपयन् ॥ ४ ॥ गदायामपविद्धायां हाहाकारे विनिर्गते ॥ मानयामास तद्धर्मं सुनाभं चास्मरद्विभुः ॥ ५ ॥ तं व्यग्रचक्रं दितिपुत्राधमेन स्वपार्षदमुख्येन विषज्जमानम् ॥ चित्रा वाचोऽतद्विदां खेचराणां तत्रास्मासन्स्वस्ति तेऽमुं जहीति ॥ ६ ॥ स तं निशाम्यात्तरथाङ्गमग्रतो व्यवस्थितं पद्मपलाशलोचनम् ॥ विलोक्य चामर्षपरिप्लुतेन्द्रियो रुषा स्वदन्तच्छदमादशच्छ्वसन् ॥ ७ ॥ करालदंष्ट्रश्चक्षुर्भ्यां संचक्षाणो दहन्निव ॥ अभिप्लुत्य स्वगदया हतोऽसीत्याहनद्धरिम् ॥ ८ ॥ पदा सव्येन तां साधो भगवान् यज्ञसूकरः ॥ लीलया मिषतः शत्रोः प्राहरद्वाततरंहसम् ॥ ९ ॥ आह

निःशस्त्र थिए, त्यसले इच्छा गरेको भए भगवान्‌मा प्रहार गर्न सक्ने थियो, तर युद्ध-धर्मको रक्षा गर्दै त्यसले प्रहार गर्न सकेन ॥३-४॥ जब गदा फुस्केर खसाँकियो तब देवगणमा हाहाकार मच्चियो । तर भगवान्‌ले यस्तो अवसरमा पनि हिरण्याक्षको त्यो धार्मिक भावनाको सम्मान गर्दै सुदर्शनचक्रको स्मरण गर्नुभयो । भगवान्‌को महिमा जान्नमा असमर्थ देवता प्रभृति भन्नलागे–'हजुरको कल्याण होस्, हजुर त्यो दैत्यलाई मार्न समर्थ हुनुहुन्छ' ॥५-६॥ दैत्यले जब हातमा सुदर्शनचक्र लिएका भगवान्‌लाई उभिएका देख्यो, तब रिसले त्यसका सबै इन्द्रियहरू अधीर भए र त्यो लामो सास फेर्दै दाँतले ओंठ टोक्न लाग्यो । त्यसपछि राता-राता आँखाबाट आगो उकेल्दै–'अब तँ मर्दछस्' यस्तो भन्दै कठोर गदाले भगवान्‌माथि प्रहार गरिदियो ॥७॥८॥ तर भगवान्‌ले हेर्दाहेर्दै त्यो गदा बायाँ खुट्टाले थिचिदिए र अर्को गदा प्रहार गर्दै भने–हे दैत्य ! यदि तँ यस युद्धमा विजयको अभिलाषा राख्दछस् भने

आफ्नो शस्त्र उठा ।' भगवान्‌को वचन सुनेर त्यसले फेरि प्रभुमाथि गदा प्रहार गरिदियो र बेसरी गर्जन लाग्यो । तर वराह भगवान्‌ले त्यसको गदा हातबाट नै खोसिलिनु भयो ॥९-११॥ फेरि त्यसलाई फिर्ता दिनलागे । यसरी घेरैपल्ट प्रहार गरेर पनि त्यसले केही गर्न सकेन तब त्यसले आफ्नो पुरुषार्थको हीनता सम्झ्यो । तैपनि त्यसले भगवान्‌को हात बाट गदा फिर्ता लिएन । अनि त्यसले आगोको बिलुक्को सल्कने चौटा तीन शिखा भएको त्रिशूल उचालेर भगवान्‌माथि प्रहार गन्यो ॥१२-१३ ॥ तर भगवान्‌ले मास्तिर उचालिएको त्यो त्रिशूललाई आफ्नो सुदर्शन चक्रले काटिदिए । अब त्यस दैत्यले बर्ता रिसाई भगवान्‌को छातीमा मुड्कीले हिर्कायो र देख्दा-देख्दै अलप भयो । तर हे विदुर ! हिण्याक्षको मुष्टि प्रहारले भगवान् त्यसै गरी हल्लेनन्, जसरी हात्तीलाई फूलको मालाले हिर्काइयोस् र उसलाई थाहै नहोस् ॥१४-१६॥ अब त्यस दैत्यले मायापति माथि अनेक थरिका मायाहरूको

चायुधमाधत्स्व घटस्व त्वं जिगीषसि ॥ इत्युक्तः स तदा भूयस्ताडयन्व्यनदद्भृशम् ॥ १० ॥ तां स आपततीं वीक्ष्य भगवान्समवस्थितः ॥ जग्राह लीलया प्राप्तां गरुत्मानिव पन्नगीम् ॥११॥ स्वपौरुषे प्रतिहते हतमानो महासुरः ॥ नैच्छद्गदां दीयमानां हरिणा विगतप्रभः ॥१२॥ जग्राह त्रिशिखं शूलं ज्वलज्ज्वलनलोलुपम् ॥ यज्ञाय धृतरूपाय विप्रायाभिचरन्यथा ॥१३॥ तदोजसा दैत्यमहाभटार्पितं चकासदंतः ख उदीर्णदीधिति ॥ चक्रेण चिच्छेद निशाततेमिना हरिर्यथा तार्क्ष्यपतत्त्रमुज्झितम् ॥ १४ ॥ वृक्णे स्वशूले बहुधाऽरिणा हरेः प्रत्येत्य विस्तीर्णमुरो विभूतिमत् ॥ प्रवृद्धरोषः स कठोरमुष्टिना नदन्प्रहृत्यान्तरधीयतासुरः ॥१५॥ तेनेत्थमाहतः क्षत्तर्भगवानादिसूकरः ॥ नाकंपत मनाक् क्वापि स्रजा हत इव द्विपः ॥१६॥अथोरुधा सृजन्मायां योगमायेश्वरे हरौ ॥ यां विलोक्य प्रजास्त्रस्ता मेनिरेऽस्योपसंयमम् ॥१७॥ प्रववुर्वायवश्चण्डास्तमःपांसवमैरयन् ॥ दिग्भ्यो निपेतुर्ग्रावाण क्षेपणैः प्रहिता इव ॥१८ ॥ द्यौर्नष्टभगणाभ्रौघैः सविद्युत्स्तनयित्नुभिः ॥ वर्षद्भिः पूयकेशासृग्विण्मूत्रास्थीनि चासकृत् ॥ १९ ॥ गिरयः प्रत्यदृश्यंत नानायुधमुचोऽनघ ॥ दिग्वाससो यातुधान्यः शूलिन्यो मुक्तमूर्धजाः ॥ २० ॥ बहुभिर्यक्षरक्षोभिः पत्त्यश्वरथकुञ्जरैः ॥ आततायिभिरुत्सृष्टा हिंस्रा वाचोऽतिवैशसाः ॥२१॥ प्रादुष्कृतानां मायानामासुरीणां विनाशयन् ॥ सुदर्शनास्त्रं भगवान्प्रायुङ्क्त दयितं त्रिपात् ॥ २२ ॥ तदा दितेः समभवत्सहसा हृदि वेपथुः ॥ स्मरन्त्या भर्तुरादेशं स्तनाच्चासृक् प्रसुस्रुवे ॥२३॥ विनष्टासु स्वमायासु भूयश्चाव्रज्य केशवम् ॥ रुषोपगूहमानोऽमुं

प्रयोग आरम्भ गन्यो, जसलाई देखेर सबैले ठाने— अब प्रलय हुन्छ । ठूलो आँधी चल्नलाग्यो । धूलोले दिशाहरू ढाकिए र ढुङ्गाका ठूला-ठूला टुक्रा उठेर गिर्नलागे । आकाशमा डरलाग्दो कालो, नीलो घटा घेरिएर आयो । त्यसमा सबै नक्षत्र ढाकिए र त्यस घन-घटाबाट पीप, कपाल, रगत, विष्ठा र हाडहरूको वर्षा हुन लाग्यो ॥ १७-१९ ॥ ठूलठूला पहाड रणांगणमा अनेक थरिका शस्त्रास्त्र वर्षा गर्न लागे र कपाल फुकाएका नाङ्गा राक्षसीहरू हातमा त्रिशूल लिई यता-उता दगुरेका देखिन लागे । अगणित यक्ष-राक्षस 'मार, काट !' भन्दै जम्मा हुन लागे । भगवान्‌ले आफ्नो सुदर्शन चक्रद्वारा त्यो आसुरी माया नष्ट पारिदिए । त्यसै बखत दिति (हिरण्याक्षकी आमा) को हृदय धड्कन र स्तनहरूबाट रगत बग्न लाग्यो । तिनले आफ्ना पति कश्यपको कुरा स्मरण गरिन् । उता जब हिरण्याक्षले देख्यो—आफ्नो माया सुदर्शन चक्रले नष्ट पारिदियो, तब त्यो दाँत कस्टेर भगवान्‌तिर झम्ट्यो र उनको छातीमा

मुड्की बजायो । अवसर पाएर भगवान्ले पनि त्यसको कनपारोमाएक मुड्की बजारे । त्यो चोटले दैत्य लरखरिएर पर हुत्यो । उसका आँखा बाहिर निस्किए, हात-खुट्टा छुला भए, पाटो छुच्चियो र त्यसको प्राणरूपी पक्षी उडेर गयो । त्यस बेला यस्तो लागिरहेको थियो—जस्तै वायुको वेगले कुनै ठूलो पर्वत धराशायी भएको होस् ॥२०-२६॥ त्यो विकराल दाँत हुने र असाधारण तेजस्वी दैत्यलाई भूमिमा ढलेको देखेर ब्रह्मादि देवता एकत्र भए र आपसमा भन्न लागे—संसारमा यस्तो कुन भाग्यशाली छ, जसलाई यसरी भगवान्का हातबाट मुक्ति मिलोस् । ठूला-ठूला योगी दुर्गुणबाट [illegible] एकान्तमा बसेर योग समाधिद्वारा जसको ध्यान गर्दछन्, उनै कमललोचन नारायणको मुख हेर्दै यसले शरीर त्यागेको छ । वास्तवमा यी दुवै ( हिरण्याक्ष र हिरण्यकशिपु ) भगवान्का पार्षद हुन् श्रापको कारणले यी दुर्गतिमा प्राप्त भएका हुन् । केही जन्मपछि यी फेरि आफ्नो पूर्व अवस्थामा जान्छन् । यसपछि

ददर्शेऽवस्थितं बहिः ॥२४॥ तं मुष्टिभिर्विनिघ्नन्तं वज्रसारैरधोक्षजः ॥ करेण कर्णमूलेऽहन्यथा त्वाष्ट्रं मरुत्पतिः ॥ २५ ॥ स आहतो विश्व-
जिता ह्यवज्ञया परिभ्रमद्गात्र उदस्तलोचनः ॥ विशीर्णबाह्वङ्घ्रिशिरोरुहोऽपतद्यथा नगेन्द्रो लुलितो नभस्वता ॥ २६ ॥ क्षितौ शयानं तमकु-
ण्ठवर्चसं करालदंष्ट्रं परिदष्टदच्छदम् ॥ अजादयो वीक्ष्य शशंसुरागता अहो इमां को नु लभेत संस्थितिम् ॥ २७ ॥ यं योगिनो योगसमाधिना
रहो ध्यायन्ति लिङ्गादसतो मुमुक्षया ॥ तस्यैव दैत्यापसदः पदाहतो मुखं प्रपश्यंस्तनुमुत्ससर्ज ह ॥ २८ ॥ एतौ तौ पार्षदावस्य शापाद्याता-
वसद्गतिम् ॥ पुनः कतिपयैः स्थानं प्रपत्स्येते ह जन्मभिः ॥ २९ ॥ देवा ऊचुः ॥ नमो नमस्तेऽखिलयज्ञतन्तवे स्थितौ गृहीतामलसत्त्वमूर्तये ॥
दिष्ट्या हतोऽयं जगतामरुन्तुदस्त्वत्पादभक्त्या वयमीश निर्वृताः ॥ ३० ॥ मैत्रेय उवाच ॥ एवं हिरण्याक्षमसह्यविक्रमं स सादयित्वा हरिरादि-
शूकरः ॥ जगाम लोकं स्वमखण्डितोत्सवं समीडितः पुष्करविष्टरादिभिः ॥३१॥ मया यथानूक्तमवादि ते हरेः कृतावतारस्य सुमित्र चेष्टितम् ॥
यथा हिरण्याक्ष उदारविक्रमो महामृधे क्रीडनवन्निराकृतः ॥ ३२ ॥ सूत उवाच ॥ इति कौषारवाख्यातामाश्रुत्य भगवत्कथाम् ॥ क्षत्ताऽऽनन्दं परं लेभे
महाभागवतो द्विजः ॥३३॥ अन्येषां पुण्यश्लोकानामुद्दामयशसां सताम् ॥ उपश्रुत्य भवेन्मोदः श्रीवत्साङ्कस्य किं पुनः ॥ ३४ ॥ यो गजेन्द्रं
झषग्रस्तं ध्यायन्तं चरणाम्बुजम् ॥ क्रोशन्तीनां करेणूनां कृच्छ्रतोऽमोचयद्द्रुतम् ॥ ३५ ॥ तं सुखाराध्यमृजुभिरनन्यशरणैर्नृभिः ॥ कृतज्ञः को न

ती देवगण वराह भगवान्को स्तुति गर्दै भन्दछन्—'हे हरे ! हजुर नै सबै यज्ञका विस्तार स्वरूप हुनुहुन्छ । यसैनिम्ति हामी नमस्कार गर्दछौं । सबैको मर्म भेदन गर्ने भएको यो दैत्य हजुरको हातबाट मारियो । हजुरका चरणकमलको भक्तिले हामी अतिशय आनन्दित भयौं । अब सम्म जे अनि भयो, राम्रो भयो ।' मैत्रेय भन्दछन्—हे विदुर ! यसरी देवताहरूका स्तुति सुनेर तिनको सम्मान गर्दै वराह भगवान् अन्तर्धान भए । यो मैले तिमीलाई हिरण्याक्ष-वधको वृत्तान्त सुनाएँ ॥२७-३२॥ सूतजी भन्दछन्–हे शौनक ! मैत्रेयको मुखारविन्दबाट यो अनुपम चरित्र सुनेर भगवद्भक्त विदुर निकै आनन्दित भए । तिनलाई आनन्द किन हुँदैनथ्यो—जब कि साधारण भगवद्भक्तको गुण-गान सुन्नाले आत्मा गद्गद् हुन्छ भने—साक्षात् भगवान्का चरित्र सुन्नाले महान् आनन्द प्राप्त हुने गर्दछ । जुन भगवान्ले ग्राहको कराल मुखमा परेका गजको ध्यान गर्नासाथ मुक्त पारिदिएथे, सुखले आराध्य ती

आफ्ना माया ... हो ! हिरण्याक्ष वधको कथा जो भन्दछ, सुन्दछ वा मनन गर्दछ, त्यो ब्रह्मवधजनित पापबाट मुक्ति प्राप्त गर्दछ ॥ ३३-३७ ॥ यो भगवच्चरित्र परम पवित्र धन्यताको, यशदाता र सुखमा ... छ । जो व्यक्ति बराबर यसको श्रवण गर्दछन् ती अन्तकालमा भगवानको स्वरूपमा मिल्दछन् ॥ ३८ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीय स्कन्धे एकोनविंशोऽध्यायः ॥ १९ ॥ ( सृष्टिको विस्तार-क्रम वर्णन ) यति कथा सुनेर शौनकले सूतजीलाई सोधे—स्वायंभुव मनु जब यस पृथ्वीमा आए, तब तिनले कुन-कुन उपायले सृष्टि गरे । विदुरजी भगवान् श्रीकृष्णका अभिन्न मित्र थिए । उनै भगवान्को निम्ति उनले आफ्ना पापी भ्राता ( दुर्योधनादि ) लाई त्यागिदिएका थिए ॥१-२॥ द्वैपायन व्यासका छोरा हुनाले विदुर महिमामा व्यासकै समान थिए किनकि ती आफ्नु तन, मन,धन सर्वस्व भगवान्लाई सुम्पिसकेका थिए । यस प्रकार ती असाधारण

लीलेन दुरत्ययमसासुरेभिः ॥ ३६ ॥ यो वै हिरण्याक्षवधं महाद्भुतं विक्रीडितं कारणसूकरात्मनः ॥ शृणोति गायत्यनुमोदतेऽञ्जसा विमुच्यते ब्रह्मव
धादपि द्विजाः ॥ ३७ ॥ एतन्महापुण्यमलं पवित्रं धन्यं यशस्यं पदमायुराशिषाम् ॥ प्राणेन्द्रियाणां युधि शौर्यवर्द्धनं नारायणोऽन्ते गतिरङ्ग शृण्व-
ताम् ॥ ३८ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे हिरण्याक्षवधो नाम एकोनविंशोऽध्यायः ॥ १९ ॥ शौनक उवाच ॥ महीं प्रतिष्ठामध्यस्य
सौते स्वायम्भुवो मनुः ॥ कान्यन्वतिष्ठद्द्वाराणि मार्गायावरजन्मनाम् ॥ १ ॥ क्षत्ता महाभागवतः कृष्णस्यैकान्तिकः सुहृत् ॥ यस्तत्याजाग्रजं
कृष्णे सापत्यमघवानिति ॥ २ ॥ द्वैपायनादनवरो महित्वे तस्य देहजः ॥ सर्वात्मनाऽऽश्रितः कृष्णं तत्परांश्चाप्यनुव्रतः ॥ ३ ॥ किमन्वपृच्छन्मैत्रेयं
विरजास्तीर्थसेवया ॥ उपगम्य कुशावर्त आसीनं तत्त्ववित्तमम् ॥ ४ ॥ तयोः संवदतोः सूत प्रवृत्ता ह्यमलाः कथाः ॥ आपो गाङ्गा इवाघघ्नीर्हरेः
पादाम्बुजाश्रयाः ॥ ५ ॥ ता नः कीर्तय भद्रं ते कीर्तन्योदारकर्मणः ॥ रसज्ञः को नु तृप्येत हरिलीलामृतं पिबन् ॥ ६ ॥ एवमुग्रश्रवा पृष्ट ऋषि-
भिर्नैमिषायनैः ॥ भगवत्यर्पिताध्यात्मस्तानाह श्रूयतामिति ॥ ७ ॥ सूत उवाच ॥ हरेर्धृतक्रोडतनोः स्वमायया निशम्य गोरुद्धरणं रसातलात् ॥
लीलां हिरण्याक्षमवज्ञया हतं सञ्जातहर्षो मुनिमाह भारतः ॥ ८ ॥ विदुर उवाच ॥ प्रजापतिपतिः सृष्ट्वा प्रजासर्गे प्रजापतीन् ॥ किमारभत मे ब्रह्म-
न्प्रब्रूह्यव्यक्तमार्गवित् ॥ ९ ॥ ये मरीच्यादयो विप्रा यस्तु स्वायम्भुवो मनुः ॥ ते वै ब्रह्मण आदेशात्कथमेतदभावयन् ॥ १० ॥ सद्वितीयाः किमसृ-

भगवद्भक्त विदुरले त्यसपछि मैत्रेयसित कुन कथा सोधे ? ॥३-४॥ हे सूत ! ती दुवैको सत्संगमा यस्ता-यस्ता कथाहरू आए होलान्, जो मनुष्यका पाप गंगाजल झैं पखाली बगाए हुनन् । तसर्थ हामीलाई त्यही कथा सुनाउनोस् । संसारमा कुन यस्तो रसिक होला, जो भगवानका लीलामृत श्रवण गरेर तृप्त हुन सकोस् । शौनकादि मुनिहरूको त्यो प्रश्नहरू सुनेर सूतजीले आफ्नो अध्यात्म-शक्ति भगवानमा लगाएर भन्न लागे—सुन्नुहवस् ॥ ५-६ ॥ हे ऋषि हो ! वाराहरूप धारी नारायणको चरित्र सुनेर विदुरलाई आनन्द प्राप्त भयो । उनले फेरि मैत्रेयसित सोधे—हे महामुनि मैत्रेय ! ब्रह्माजीले मरीचि आदि प्रजापतिहरूको सृष्टि गरिसकेपछि के गरे ? ती मरीचि आदि ऋषि र महाराज स्वायम्भुव मनुले ब्रह्माजीको

आदेशानुसार जगत्‌को सृष्टि कसरी गरे ? तिनले अरूहरूसित साथै रहेर सृष्टि गरे कि एक्लै ? ती सबै मिलेर सृष्टिकार्य गर्दथे कि भिन्न-भिन्न रहेर ? ॥८-११॥ मैत्रेय भन्दछन्— जो तर्कना-शक्तिबाट पर छ, त्यस दैवद्वारा भगवान्‌बाट क्षुब्ध भएर प्रधान उत्पन्न भयो र त्यसबाट महत्तत्वको रचना भयो। महत्तत्वबाट सत्त्व, रज, तम गुणत्रयात्मक अहङ्कार जायमान भयो। त्यस अहंकारले पञ्चमहाभूतादि तत्त्वहरूको रचना गर्‍यो, तर ती सबै एक्लै रहेर सृष्टिकार्य सम्पन्न पार्न असमर्थ थिए। अतः ती सबै मिलेर यौटा स्वर्ण-अण्डको सृष्टि गरिदिए। त्यो अशुण्ड हजार वर्षसम्म पानीमा रह्यो र त्यसैमा भगवान् आएर बसे। एक हजार वर्षसम्म भगवान् त्यसैमा रहिरहे। त्यसपछि ती विराट् पुरुषको नाभिबाट कमल र कमलबाट ब्रह्माको उत्पत्ति भयो ॥१२-१६॥ ती ब्रह्माजीले भगवान्‌को अधीनतामा रहेर नाम-रूपादि क्रमले यस लोकको स्थिति निर्माण गरे। तिनले सबै भन्दा पहिले आफ्नै छायाले

जन्स्वतन्त्रा उत कर्मसु ॥ आहोस्वित्संहताः सर्व इदं स्म समकल्पयन् ॥ ११ ॥ मैत्रेय उवाच ॥ दैवेन दुर्वितर्क्येण परेणानिमिषेण च ॥ जात-
क्षोभाद्भगवतो महानासीद्गुणत्रयात् ॥ १२ ॥ रजःप्रधानान्महतस्त्रिलिङ्गो दैवचोदितात् ॥ जातः ससर्ज भूतादिर्वियदादीनि पञ्चशः ॥ १३ ॥
तानि चैकैकशः स्रष्टुमसमर्थानि भौतिकम् ॥ संहत्य दैवयोगेन हैममण्डमवासृजत् ॥ १४ ॥ सोऽशयिष्टाब्धिसलिले अण्डकोशो निरात्मकः ॥
साग्रं वै वर्षसाहस्रमन्ववात्सीत्तमीश्वरः ॥ १५ ॥ तस्य नाभेरभूत्पद्मं सहस्रार्कोरुदीधिति ॥ सर्वजीवनिकायौको यत्र स्वयमभूत्स्वराट् ॥ १६ ॥
सोऽनुविष्टो भगवता यः शेते सलिलाशये ॥ लोकसंस्थां यथापूर्वं निर्ममे संस्थया स्वया ॥ १७ ॥ ससर्ज च्छाययाऽविद्यां पञ्चपर्वाणमग्रतः ॥ तामिस्र-
मन्धतामिस्रं तमो मोहो महातमः ॥ १८ ॥ विससर्जात्मनः कायं नाभिनन्दंस्तमोमयम् ॥ जगृहुर्यक्षरक्षांसि रात्रिं क्षुत्तृट्समुद्भवाम् ॥ १९ ॥
क्षुत्तृड्भ्यामुपसृष्टास्ते तं जग्धुमभिदुद्रुवुः ॥ मा रक्षतैनं जक्षध्वमित्यूचुः क्षुत्तृडर्दिताः ॥ २० ॥ देवस्तानाह संविग्नो मा मां जक्षत रक्षत ॥ अहो

तामिस्र, अन्धतामिस्र, तम, मोह र महातम यी पाँच थरिका अविद्याहरूको सृष्टि गरे। पछि तिनलाई आफ्नो तमोमय देह मनपरेन। यसैनिम्ति उनले त्यो त्यागिदिए र उही शरीर रात्रिको रूपमा परिणत भयो। त्यसलाई यक्ष र राक्षसहरूले लिए। ती यक्ष-राक्षस भोक-प्यासले व्याकुल भएर ब्रह्मालाई नै खान दगुरे। किन्तु तिनमा परस्पर मतभेद थियो। केहीको सल्लाह थियो—इनलाई खानैपर्छ र केही भन्दथे—होइन, इनको रक्षा गरौं। यस्तो परिस्थितिमा ब्रह्माजीले भयभीत भई भने—हे यक्षहो, राक्षस हो, तिमीहरू सबै मेरा सन्तान हौ। अतएव मलाई नखाओ, बरु मेरो रक्षा गर। तिमीमध्ये जतिले मलाई 'अक्षध्वम् अर्थात् खानैपर्छ' त्यो सल्लाह दिए, ती यक्षहरू र जतिले 'मा रक्षत' अर्थात् इनको रक्षा नगरौं भन्ने सल्लाह दिएका छन्, ती राक्षस कहिनेछन् ॥१७-२० ॥ त्यसपछि ब्रह्माजीले आफ्नो प्रभावबाट देवताहरूको सृष्टि गरे। जब ब्रह्माजीले त्यस प्रभालाई पनि त्यागिदिए तब त्यो दीन भई र त्यसलाई

* दृष्टान्त– एउटा मानिसको खाटमा उडुस लाग्यो। त्यसले अनेक उपाय गर्‍यो तर निकाल्न सकेन। त्यो बिचरा साह्रै हैरान भयो। एउटा मित्रले त्यसलाई उपाय बतायो—यसो कमिला ल्याएर खाटमा राखिदिए तिनले उडुस सबै खाइदिन्छन्। त्यसले त्यस्तै गर्‍यो, तर परिणाम उल्टो भयो। पहिले उडुसको चाँट कम थियो, त्यो भन्दा धेरै बर्ता ती कमिलाले दुःख दिनलागे। सारांश यो निस्कदो कि आफ्नो घरमा कुनै कष्ट छ भने आफ्नै बुद्धिले भेटेसम्म त्यसको निवारणको उपाय गरोस्, तर त्यस निवारणको निमित्त अरूलाई आफ्नो घरमा कहिल्यै पस्न नदिनु। सम्भव छ, केही समयको निमित्त त्यसले दुःख टार्दिएओस् तर पछि त्यही व्यक्ति अनन्त कष्टको कारण बन्न सक्छ।

देवताहरूले स्वीकार गरे । त्यसपछि ब्रह्माले आफ्नो कम्मरको अग्रभाग तिघ्राबाट स्त्री-लम्पट असुरहरू लाई जन्म दिए । जब तीअसुरकामातुर भएतब ब्रह्मासित मैथुन गर्नदगुरे । पहिले त ब्रह्माजी हाँसे, तर पछि जब ती निर्लज्ज लखेटे तब ब्रह्मा भय र रिसले त्यहाँबाट भागे । ती सरासर्र वरदाता नारायणको कृपा प्राप्त गर्नका लागि तिनको शरणमा पुगे र दण्डवत् गरी स्तुति गर्न लागे–'हे परमात्मन् ! मैले हजुरको आज्ञानुसार प्रजाको सृष्टि गरें र अब त्यही प्रजा मैसित नै मैथुन गर्न खोजि रहेछन् ॥२१-२६॥ यस्तो स्थितिमा एकमात्र हजुर नै म दुःखीको दुःख निवारण गरेर ती दुष्टको दमन गर्न सक्नु हुन्छ ।'यति सुनेरनारायणलेआज्ञाभयो–'यस्तो छ भनेतिमी आफ्नोशरीरत्यागिदेऊ ।' त्यतिसुनेरउनलेआफ्नो देह त्यागिदिए ॥२७-२८॥ ब्रह्माजीको त्यो शरीर सायंकालीन सन्ध्यारूपिणी बाँटी सुन्दरी स्त्रीको रूपमापरिणतभयो । ती आकर्षक नेत्र,सुन्दरनासिका, राम्रा दाँत,पीनस्तनी रमन्द हाँसोले युक्त भए।ि

मे यक्षरक्षांसि प्रजा यूयं बभूविथ ॥२१॥ देवताः प्रभया या या दीव्यन्प्रमुखतोऽसृजत् ॥ ते अहार्षुर्देवयन्तोविसृष्टां तां प्रभामाहः ॥२२॥ देवोऽदेवा-
अघनतः सृजति स्मातिलोलुपान् ॥ त एनं लोलुपतया मैथुनायाभिपेदिरे ॥२३॥ ततो हसन्स भगवानसुरैर्नरपत्रपैः ॥ अन्वीयमानस्तरसा क्रुद्धो
भीतः परापतत् ॥ २४ ॥ स उपव्रज्य वरदं प्रपन्नार्तिहरं हरिम् ॥ अनुग्रहाय भक्तानामनुरूपात्मदर्शनम् ॥ २५ ॥ पाहि मां परमात्मंस्ते प्रेषणेनासृजं
प्रजाः ॥ ता इमा यभितुं पापा उपाक्रामन्ति मां प्रभो ॥२६॥ त्वमेकः किल लोकानां क्लिष्टानां क्लेशनाशनः ॥ त्वमेकः क्लेशदस्तेषामनासन्नपदां तव
॥२७॥ सोऽवधार्यास्य कार्पण्यं विविक्ताध्यात्मदर्शनः ॥ विमुंचात्मतनुं घोरामित्युक्तो विमुमोच ह ॥ २८ ॥ तां क्वणच्चरणांभोजां मदविह्वललोचनाम् ॥
काञ्चीकलापविलसद्दुकूलच्छन्नरोधसम् ॥ २९ ॥ अन्योन्यश्लेषयोत्तुङ्गां निरन्तरपयोधराम् ॥ सुनासां सुद्विजां स्निग्धहासलीलावलोकनाम् ॥ ३० ॥
गूहन्तीं व्रीडयाऽऽत्मानं नीलालकवरूथिनीम् ॥ उपलभ्यासुरा धर्म सर्वे संमुमुहुः स्त्रियम् ॥ ३१ ॥ अहो रूपमहो धैर्यमहो अस्या नवं वयः ॥
मध्ये कामयमानानामकामेव विसर्पति ॥ ३२ ॥ वितर्कयन्तो बहुधा तां सन्ध्यां प्रमदाकृतिम् ॥ अभिसम्भाव्य विश्रम्भात्पर्यपृच्छन्कुमेधसः ॥ ३३ ॥
काऽसि कस्यासि रम्भोरु को वार्थस्तेऽत्र भामिनि ॥ रूपद्रविणपण्येन दुर्भगान्नो विबाधसे ॥ ३४ ॥ या वा काचित्त्वमबले दिष्ट्या संदर्शनं तव ॥
उत्सुनोषीक्षमाणानां कन्दुकक्रीडया मनः ॥ ६५ ॥ नैकत्र ते जयति शालिनि पादपद्मं घ्नन्त्या मुहुः करतलेन पतत्पतङ्गम् ॥ मध्यं विषीदति बृह-
त्स्तनभारभीतं शान्तेव दृष्टिरमला सुशिखासमूहः ॥३६॥ इति सायन्तनीं सन्ध्यामसुराः प्रमदायतीम् ॥ प्रलोभयन्तीं जगृहुर्मत्वा मूढधियः स्त्रियम्

सन्ध्या सुन्दरीले नूपुरको झंकार गर्दै हिंडेकी देखेर ती सबै असुर परस्पर भन्नलागे–अहो ! यसको कस्तो मनोहर स्वरूप छ । यसमा कतिधैर्य छ । यसमायौवन कसरी उम्लिरहेको छ ! यस प्रकार धेरै थरिका तर्कनाहरू गरेर ती दुर्बुद्धि असुर ती सुन्दरीको नजीक गए र सोध्नलागे–॥२९-३०॥ हकदलीको खाँबो समान तिघ्रा भएकी सुन्दरी ! तिमी कोही वर कसकी छोरी हौ ? तिमी यहाँ किन डुलिरहेकी छौ ? तिम्रो रूप देखेर हामी विकल भइरहेछौं ॥३४॥ अस्तु, यी सबै प्रश्न व्यर्थ छन् । तिमी जो भए पनि, हाम्रो भाग्यले तिम्रो दर्शन पाइयो । तिमीले आफ्नो असाधारण सौन्दर्यले हाम्रो मनलाई भकुण्डो लुलाइ सक्यौ र तिमी त्यैसित खेलिरहेकी छौं । हे सुन्दरी ! तिम्रा खुट्टा एक स्थानमा अडिंदैनन् । यसरी कन्दुक-क्रीडा

गरिरहनाले तिम्रो पातलो कम्मरलाई कष्ट भइरहेको होला।" यसरी ती मूर्ख असुरहरूले ती सन्ध्याकालीन सन्ध्यालाई स्त्री ठानेर ठूलो आग्रहले स्वीकार गरे ॥३५-३७॥ कुनै बेला ब्रह्माले मनोहर भावले हाँसेर आफ्नो कान्तिबाट गन्धर्व र अप्सराहरूको सृष्टि गरे। अनि ब्रह्माजीले आफ्नो त्यो देदीप्यमान देह पनि त्यागिदिए। त्यो देह चन्द्रमाको जून्झैं टल्किरहेथ्यो। त्यसलाई विश्वावसु गन्धर्वले ग्रहण गरे ॥३८-३९॥ त्यसपछि ब्रह्माजीले आफ्नो अल्छीबाट नाङ्गा र कपाल फुकाएका भूत-पिशाचहरू सृष्टि गरे। तिनलाई नाङ्गा र कपाल फुकाएका देखेर ब्रह्माजीले आँखा चिम्ले र आफ्नो जृम्भण-शरीर त्यागिदिए, त्यसलाई भूत-पिशाचले ग्रहण गरे। ब्रह्माजीको त्यस शरीरबाट निद्रा र इन्द्रियहरूको ज्ञान उत्पन्न भयो ॥४०-४१॥ एक पल्ट ब्रह्माजीले आफूलाई बलियो ठानेर अदृश्य-रूपले पितृहरू र साध्यगणको सृष्टि गरे। त्यसपछि उनले त्यस शरीरको त्याग गरे,

॥ ३७ ॥ महत्य भगवम्भीरं जिघ्रन्त्यात्मानमात्मना ॥ कान्त्या ससर्ज भगवान्गन्धर्वाप्सरसां गणान् ॥ ३८ ॥ विससर्ज तनुं तां वै ज्योत्स्नां
कान्तिमतीं प्रियाम् ॥ त एव चाददुः प्रीत्या विश्वावसुपुरोगमाः ॥ ३९ ॥ सृष्ट्वा भूतपिशाचांश्च भगवानात्मतन्द्रिणा ॥ दिग्वाससो मुक्तकेशान्वीक्ष्य
चामीलयद्दृशौ ॥ ४० ॥ जगृहुस्तद्विसृष्टां तां जृम्भणाख्यां तनुं प्रभो ॥ निद्रामिन्द्रियविक्लेदो यया भूतेषु दृश्यते ॥ येनोच्छिष्टान्धर्षयन्ति तमुन्मादं
प्रचक्षते ॥४१॥ ऊर्जस्वन्तं मन्यमान आत्मानं भगवानजः ॥ साध्यान्गणान्पितृगणान्परोक्षेणासृजत्प्रभुः ॥४२॥ त आत्मसर्गं तं कायं पितरः प्रतिपे-
दिरे ॥ साध्येभ्यश्च पितृभ्यश्च कवयो यद्वितन्वते ॥ ४३ ॥ सिद्धान्विद्याधरांश्चैव तिरोधानेन सोऽसृजत् ॥ तेभ्योऽददात्तमात्मानमन्तर्धानाख्यमद्भुतम्
॥४४॥ स किन्नरान्किम्पुरुषान्प्रत्यात्म्येनासृजत्प्रभुः ॥ मानयन्नात्मनात्मानमात्माभासं विलोकयन् ॥४५॥ ते तु तज्जगृहू रूपं त्यक्तं यत्परमेष्ठिना ॥
मिथुनीभूय गायन्तस्तमेवोषसि कर्मभिः ॥४६॥ देहेन वै भोगवता शयानो बहुचिन्तया ॥ सर्गेऽनुपचिते क्रोधादुत्ससर्ज ह तद्वपुः ॥४७॥ येऽहीय-
न्तामुतः केशा अहयस्तेऽङ्ग जज्ञिरे ॥ सर्पाः प्रसर्पतः क्रूरा नागा भोगोरुकंधराः ॥ ४८ ॥ स आत्मानं मन्यमानः कृतकृत्यमिवात्मभूः ॥ तदा
मनून्ससर्जांते मनसा लोकभावनान् ॥४९॥ तेभ्यः सोऽस्सृजत्स्वीयं पुरं पुरुषमात्मवान् ॥ तान्दृष्ट्वा ये पुरा सृष्टाः प्रशशंसुः प्रजापतिम् ॥५०॥ अहो
एतज्जगत्स्रष्टः सुकृतं तव ते कृतम् ॥ प्रतिष्ठिताः क्रिया यस्मिन्साकमन्नमदामहे ॥५१॥ तपसा विद्यया युक्तो योगेन सुसमाधिना ॥ ऋषीनृषिर्हृषीकेशः

त्यो पितृहरू र साध्यगणले ग्रहण गरे। यसै कारण कर्मकाण्डी व्यक्ति साध्य र पितृहरूलाई हव्य-कव्य प्रदान गर्दछन् ॥४२-४३॥ त्यसपछि ब्रह्माजीले आफ्नो अन्तर्धान-शक्तिले सिद्ध र विद्याधरहरूको सृष्टि गरे। तिनीहरूले पनि ब्रह्माजीले त्यागेको शरीर अंगीकार गरे। केही कालपछि ब्रह्माले आफ्नो छायाबाट किम्पुरुषहरूको सृष्टि गरे। तिनले पनि ब्रह्माले त्यागेको शरीर स्वीकार गरे। ती किन्नर र किम्पुरुष एकैसाथ प्रातःकालको बेला ब्रह्माजीको गुणगाउँछन् ॥४४-४६॥ एकपल्ट ब्रह्मा चिन्तामा गडिएर सुतिरहेका थिए। अकस्मात् उनलाई रिस उठ्यो र त्यही क्रोधमा उनले आफ्नो शरीर त्यागिदिए ॥४७॥ त्यस देहबाट उनले जुन जीवको सृष्टि गरे तिनमा अहि, सर्प र नाग नामले विख्यात भए। एकपल्ट ब्रह्माजीले आफूलाई कृतकृत्य ठानेर मनबाट मनुहरूको सृष्टि गरे। तिनले मनुहरूलाई आफ्नो पौरुष शरीर प्रदान गरिदिए। अनि ब्रह्माजीद्वारा उत्पन्न ती

गन्धर्व आदि उनको प्रशंसा गर्नलागे । तिनले भने—'हे ब्रह्मन् ! यस जगत्को सृष्टि गरेर हजुरले राम्रो गर्नुभयो । मनुको यस सृष्टिमा अग्निहोत्र आदि सबै क्रिया राम्रो काइदाले चलिरहेछन । यसनिम्ति हामीहरू देवतासित बसेर अन्न खाइरहेछौं ।' केही कालपछि ब्रह्माले आफ्नो योग र समाधिबाट सृष्टि गरे । तिनलाई यथाक्रम उनले समाधि, योग, तप, ज्ञान वैराग्ययुक्त आफ्नो देहको एकेक भाग दिए ॥४८-५३॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषा टीकायां विंशोध्याय ॥ २० ॥ (महर्षि कर्दमको तपस्या र तिनलाई भगवानद्वारा वरदान )—विदुरजी भन्दछन्—हे भगवन्—अब हजुर मलाई स्वायम्भुव मनुको परम माननीय वंशको कथा सुनाउनोस् । जस्ता मैथुन-धर्म अर्थात् स्त्री-पुरुष-संयोग द्वारा प्रजाको वृद्धि भएको थियो ॥१॥ हे ब्रह्मन् ! एकपल्ट हजुरले भन्नु भएको थियो—स्वायम्भुव मनुका छोरा प्रियव्रत र उत्तानपादले सातै द्वीपकी पृथ्वीको धर्मपूर्वक पालन गरेर तिनकी देवहूती नामकी छोरी कर्दम प्रजापतिकी स्त्री बनिन ॥२-३॥ यमादि योगलक्षणले युक्त देवहूतीबाट कर्दमले कति सन्तान उत्पन्न गरे ! तिनको यो पवित्र चरित्र म सुन्न

ससर्जाभिमताः प्रजाः ॥५२॥ तेभ्यश्चैकैकशः स्वस्य देहस्यांशमदादजः ॥ यत्तत्समाधियोगर्द्धितपोविद्याविरक्तिमत् ॥५३॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे विंशतितमोऽध्यायः ॥२०॥ विदुर उवाच ॥ स्वायम्भुवस्य च मनोर्वंशः परमसम्मतः ॥ कथ्यतां भगवन्यत्र मैथुनेनैधिरे प्रजाः ॥१॥ प्रियव्रतोत्तानपादौ सुतौ स्वायम्भुवस्य वै ॥ यथाधर्मं जुगुपतुः सप्तद्वीपवतीं महीम् ॥ २ ॥ तस्य वै दुहिता ब्रह्मन्देवहूतीति विश्रुता ॥ पत्नी प्रजापतेरुक्ता कर्दमस्य त्वयाऽनघ ॥३॥ तस्यां स वै महायोगी युक्तायां योगलक्षणैः ॥ ससर्ज कतिधा वीर्यं तन्मे शुश्रूषवे वद ॥४॥ रुचिर्यो भगवान्ब्रह्मन्दक्षो वा ब्रह्मणः सुतः ॥ यथा ससर्ज भूतानि लब्ध्वा भार्यां च मानवीम् ॥ ५ ॥ मैत्रेय उवाच ॥ प्रजाः सृजेति भगवान्कर्दमो ब्रह्मणोदितः ॥ सरस्वत्यां तपस्तेपे सहस्राणां समा दश ॥ ६ ॥ ततः समाधियुक्तेन क्रियायोगेन कर्दमः ॥ सम्प्रपेदे हरिं भक्त्या प्रपन्नवरदाशिषम् ॥७॥ तावत्प्रसन्नो भगवान्पुष्कराक्षः कृते युगे ॥ दर्शयामास तं क्षत्तः शाब्दं ब्रह्म दधद्वपुः ॥ ८ ॥ स तं विरजमर्काभं सितपद्मोत्पलस्रजम् ॥ स्निग्धनीलालकव्रातवक्त्राब्जं विरजोऽम्बरम् ॥ ९ ॥ किरीटिनं कुण्डलिनं शंखचक्रगदाधरम् ॥ श्वेतोत्पलक्रीडनकं मनःस्पर्शस्मितेक्षणम् ॥ १० ॥ विन्यस्तचरणाम्भो-

पाऊँ । मेरो यो सुन्ने प्रबल इच्छा छ ॥ ४ ॥ त्यस्तै प्रजापति रुचि र ब्रह्माजीका छोरा दक्षले पनि मनुका कन्याहरूको पाणिग्रहण गरेर तीबाट कस्ता सन्तानहरू उत्पन्न गरे ? ॥५॥ मैत्रेय भन्दछन्—हे विदुर ! 'तिमी प्रजाको उत्पत्ति गर' ब्रह्माजीको यस्तो आज्ञा पाएर कर्दमजीले सरस्वती नदीको तटमा दस हजार वर्षसम्म निकै कठोर तपस्या गरे ॥६॥ ती कर्दमजी समाधि सहित कर्मयोगद्वारा शरणागत-वरदायक श्रीहरिको अतिशय भक्तिपूर्वक आराधना गर्नलागे ॥ ७ ॥ हे विदुर ! सत्ययुगको आरम्भमा तिनको तपस्याले प्रसन्न भगवान् कमल-नयन विष्णुले आफ्नो वेद-प्रतिपादित शब्द-ब्रह्म-स्वरूपबाट मूर्तिमान रूपमा प्रकट भएर तिनलाई दर्शन दिए ॥ ८ ॥ भगवान्को त्यो स्वरूप सूर्य जस्तै निर्मल तथा तेजोमय थियो । तिनको घाँटीमा सेतो कमल तथा कुमुदको माला थियो । तिनको मुखकमल चिल्लो र कालो अलकले शोभित भइरहेको थियो ॥ तिनको कटिमा विमल वस्त्र थियो । शिरमा किरीट, कुण्डल इ हातमा शंख, चक्र, गदा आदि आयुध थिए । ती आफ्नो यौटा हातमा क्रीडाको निम्ति श्वेत कमल लिएका थिए । तिनको मधुर हास्यले भरिएको हेराइ-चित्त

चोरेर लगि रहेथ्यो तिनका चरण-कमल गरुडका काँधमा थिए। वक्षस्थलमा लक्ष्मी र घाँटीमा कौस्तुभमणि थियो। भगवान्‌को त्यो भव्य मूर्तिको दर्शन गरेर कर्दमजीलाई अपार हर्ष भयो र उनले आफूलाई पूर्णकाम ठानेर भगवानलाई साष्टाङ्ग प्रणाम गरे। त्यसपछि प्रसन्न चित्तले अतिशय प्रेमपूर्वक हात जोरेर मधुर वाणीमा यस प्रकार स्तुति गर्नलागे— ॥ ९-१२ ॥ कर्दमले भने—हे स्तु य प्रभो ! ठूला-ठूला योगी अनेक योनिमा जन्म लिएर अगको दर्शन पाउने कामना गर्दछन् तिनै आखिल सत्त्वसमूह स्वरूप हजुरको दर्शन गरेर आज मलाई नेत्रको फल प्राप्त भयो ॥१३॥ जसको बुद्धि हजुरको मायामा भ्रान्त हुन्छ, ती नै अलिकति विषय-सुखको निम्ति संसार-सागरको निम्ति डुङ्गा समान हजुरका चरण-कमलको आराधना गर्दछन्। हे ईश ! तिनलाई विषय-सुख नै दिनुहुन्छ, जुन नरकमा पनि उपलब्ध हुन सक्तछन् ॥ १४ ॥ हे प्रभो ! उनै कामी पुरुष झैं म

जनेमदेशे गरुत्मतः ॥ दृष्ट्वा खेऽवस्थितं वक्षः श्रियं कौस्तुभकन्धरम् ॥ ११ ॥ जातहर्षोऽपतन्मूर्ध्ना क्षितौ लब्धमनोरथः ॥ गीर्भिस्त्वभ्यगृणा-त्प्रीतिस्वभावात्मा कृताञ्जलिः ॥१२॥ ऋषिरुवाच ॥ जुष्टं बताद्याखिलसत्त्वराशेः सांसिध्यमक्ष्णोस्तव दर्शनान्नः ॥ यद्दर्शनं जन्मभिरीड्य सद्भि-राशासते योगिनो रूढयोगाः ॥ १३ ॥ ये मायया ते हतमेधसस्त्वत्पादारविन्दं भवसिन्धुपोतम् ॥ उपासते कामलवाय तेषां रासीश कामान्निरयेऽपि ये स्युः ॥ १४ ॥ तथा स चाहं परिवोढुकामः समानशीलां गृहमेधधेनुम् ॥ उपेयिवान्मूलमशेषमूलं दुराशयः कामदुघांघ्रिपस्य ॥ १५ ॥ प्रजा पतेस्ते वचसाऽधीश तन्त्या लोकः किलायं कामहतोऽनुबद्धः ॥ अहं च लोकानुगतो वहामि बलिं च शुक्लानिमिषाय तुभ्यम् ॥ १६ ॥ लोकांश्च लोकानुगतान्पशूंश्च हित्वा श्रितास्ते चरणातपत्रम् ॥ परस्परं त्वद्गुणवादसीधुपीयूषनिर्यापितदेहधर्माः ॥ १७ ॥ न तेऽजराक्षभ्रमिरायुरेषां त्रयोदशारं

दुरात्मा पनि आफ्नो अनुरूप स्वभाव युक्त धर्म, अर्थ र काम प्राप्त गराउने स्त्री पाउने इच्छाले कल्पवृक्ष समान सबै कामना पूर्ण पार्ने हजुरका चरणको शरणमा प्राप्त भएको छु ॥१५॥ हे ईश्वर ! जस्तै नाना थरिका अधीन यो लोक प्रजापतिको वचनरूपी डोरीले बाँधिएको छ, त्यस्तै हे धर्ममूर्त ! म पनि त्यसैको अनुसरण गर्दै कालरूपी बलि हजुरलाई अर्पण गर्दछु ॥१६॥ हे प्रभो ! हजुरका भक्त विषयासक्त जन, तथा पशु झैं अनुसरण गर्न म जस्ता कर्मजडलाई कहिल्यै पनि नगनी हजुरका चरणरूपी छत्रको त्रितापनाशिनी छायामा ❀शुद्ध हृदयले

* दृष्टान्त (मायाले भ्रान्त मन)—दुई भाई थिए। कान्छो भाइ व्यवहार-कुशल चाल्ने र लौकिक व्यवहारमा निपुण थियो। जेठो दाजु केही नजान्ने मुलो, आस्तिक र न्यायप्रिय थियो। कान्छाले कपट र अन्यायबाट धेरै धन कमाउँथ्यो र तीर्थयात्रा गर्ने विचार गर्‍यो। जेठो न्यायले परिश्रम गरेर कमाएको खाँदै थियो। यसले स्वोलित तीर्थयात्रा गर्ने मति पनि थिएन। अब कान्छो भाई यात्रामा जान लाग्यो तब तीतो तुम्बी दिएर भन्यो— यसलाई सबै तीर्थमा स्नान गराइदिनु र फर्कँदा जल भरेर ल्याउनु। कान्छो भाई हिंड्यो। त्यो अनेक तीर्थमा गयो। जहाँ पुग्यो पनि पहिले तुम्बीलाई स्नान गरायो। अन्तमा गङ्गाजल भरेर घर फर्क्यो। दुवै भाईको भेट भयो। जेठोले भन्यो—'तिमो यो तुम्बीको जल पिएर हेर—मीठो भयो कि भएन।' कान्छो भाइले जल पियो, तर त्यसमा तीतो स्वादको तस्तै थियो। अनि जेठाले भन्यो—'तीर्थयात्रा गरेर पनि मायामा भ्रान्त तिम्रो मनको मैलो पखालिएन भने तुम्बी जस्तै 'तिम्रो पनि सम्पूर्ण तीर्थयात्रा व्यर्थ भयो।'

❀ उदाहरण (पवित्र मनले रामको नाम लेऊ)—चोखा पापी मनुष्यलाई कुनै दिन आफ्नो पापको निम्ति पछुतो भयो। त्यसलाई कसैले भन्यो—तिमी कबीरदास कहाँ जाऊ। ती तिम्रो मनलाई शान्ति प्रदान गर्नेछन्।'

हजुरका गुण-गानरूपी पवित्र र मधुर अमृत पान भोक-प्यास आदि देह-धर्मलाई शान्त पार्दछन् ॥१७॥ हे प्रभो ! साक्षात् धर्म जसको धुरो छ, अधिकमाससमेत तेह्र महीना जसका घर अड्याउने काठ छन्, तीन सय साठीदिन जसका जोर्नी छन्, छ ऋतु जसमा अनन्त क्षण पलहरू पातका समान धारा छन् तीन चातुर्मास जसका आधारचक्र छन्, त्यो चराचर जगत्को आयु छेदन गरेर डुल्ने अत्यन्त वेगवान् संवत्सरको आयुक्षीण पार्न सक्तैन ॥ १८ ॥ हे भगवन् ! जसै माकुरो स्वयं जाल बुन्दछ, त्यसको रक्षा गर्दछ र अन्त्यमा स्वयं त्यो निल्दछ, त्यस्तै हजुर एक्लै जगत् रचना गर्नका निम्ति आफ्नो योगमायालाई स्वीकार गरेर त्यसबाट अभिव्यक्त आफ्ना सत्त्वादि शक्तिहरू स्वयं जगत्को रचना, पालन र संहार गर्न गर्दछन् ॥१९॥ हे अधीश्वर ! हजुर हामी भक्तहरूलाई जुन पंचभूतहरूको कार्य विषय-सुख दिन्छन्, ती मायिक हुन् । अतः हजुरलाई इष्ट छैनन्, तैपनि हजुरको कृपाले ती हामीलाई प्राप्त हुन्,

त्रिशतं षष्टिपर्व ॥ षण्नेम्यनन्तच्छदि यत्त्रिणाभि करालस्रोतो जगदाच्छिद्य धावत् ॥ १८ ॥ एकः स्वयं संजगतः सिसृक्षयाद्वितीययाऽऽत्मन्नधियोग-
मायया ॥ सृजस्यदः पासि पुनर्ग्रसिष्यसे यथोर्णनाभिर्भगवन्स्वशक्तिभिः ॥ १९ ॥ नैतद्बताधीश पदं तवेप्सितं यन्मायया नस्तनुषे भूतसूक्ष्मम् ॥
अनुग्रहायास्त्वपि यर्हि मायया लसत्तुलस्या तनुवा विलक्षितः ॥ २० ॥ तं त्वाऽनुभूत्योपरतक्रियार्थं स्वमायया वर्तितलोकतन्त्रम् ॥ नमाम्यभीक्ष्णं
नमनीयपादसरोजमल्पीयसि कामवर्षम् ॥ २१ ॥ ऋषिरुवाच ॥ इत्यव्यलीकं प्रणुतोऽब्जनाभस्तमाबभाषे वचसाऽमृतेन ॥ सुपर्णपक्षोपरि रोचमानः
प्रेमस्मितोद्वीक्षणविभ्रमद्भ्रूः ॥२२॥ श्रीभगवानुवाच ॥ विदित्वा तव चैत्यं मे पुरैव समयोजि तत् ॥ यदर्थमात्मनियमैस्त्वयैवाहं समर्चितः ॥२३॥

जसले हामी देव, ऋषि र पितृऋणबाट उक्त हुनसकौं किनकि हजुरले यस वेला हामीलाई आफ्नो तुलसी-मालामण्डित मायामयी सगुण मूर्तिको दर्शन दिनुभयो, अतः हामीलाई भोग र मोक्ष दुवै अपेक्षित छन् ॥२०॥ हे नाथ ! जो स्वयं सबै क्रियाहरूबाट रहित रहेर पनि आफ्नो मायाद्वारा सारा जगत्को व्यवहार चलाउँछन् र अल्पि ति उपासना गर्नमाथि पनि सबै कामनाहरूको वर्षा गरिरहनु हुन्छ । ती हजुरका नमनीय चरण-कमलमा म पुनः नमस्कार गर्दछु ॥ २१ ॥ मैत्रेय ऋषि भन्दछन्—यसरी कर्दमजीले निष्कपट भावले स्तुति गरेपछि जसका भृकुटी मन्द-हास्यपूर्ण हेराइले चंचल भइरहेका थिए, ती गरुडको काँधमा विराजमान भगवान् तिनका प्रति अमृतमयी वाणीमा बोले ॥ २२ ॥ श्रीभगवान्ले भन्नुभयो—जसका

---

राती यह अरवाक पुगे तँ स्वां मनुष्य पनि तत्काल कबीरका पुग्या । कबीर घरमा थिएनन्, यसै निम्ति तिनको पत्नीले दृढतापूर्वक तीन पल्ट भगवान्‌को नाम लिन भनिन् । पापीले सत्यभावले त्यसै भन्यो । त्यसले उसको मन आफ्नो भयो र त्यो चाँडै कुष्ठरोग बाट मुक्त भयो । त्यसै बेला कबीरदास पनि आइपुगे । त्यस्ता प्रेमी मनुष्यलाई देखेर ती तिर्के प्रसन्न भए । पत्नीले त्यस भक्तको सबै स्थिति सुनाइन् । कबीरले भिन्न स्वरमा पत्नीलाई भने—केवल एकपल्ट प्रभुको नाम लिएर नै सबै कुरा सिद्ध हुन्छ । अनि तिमीले तीन पल्ट रामको नाम लिन किन भन्यौ ? तिमीलाई ईश्वरमा विश्वास छैन भन्ने कुरा यसैबाट ज्ञात हुन्छ । पत्नीले भनी—"तीन पल्ट नाम लिनको आशय त तिनका पापको आधिक, दैविक, मानसिक सब प्रक्षालित होऊन् ।" कबीरदास आफ्नी पत्नीको उत्तम दृष्टि देखेर प्रसन्न भए ।

निम्ति तिमीले सबै नियमको पालन गर्दै मेरो उपासना गरेकाछौ,अतः तिम्रो हृदयको भाव बुझेर अघि नै त्यसको निम्ति प्रबन्ध गरिराखेको छु॥२३॥हे प्रजापते! मेरो आराधना कहिल्यै निष्फल हुँदैन, तैपनि जसको चित्त सधैं ममानै लीन रहन्छ, ती विचित्र महात्माहरुले गरेका उपासनाको त अझ बर्ता महत्व हुन्छ ॥ २४ ॥ प्रजापति ब्रह्माका पुत्र साक्षात् स्वायम्भुव मनु—जसको सुयश सर्वत्र विख्यात छ, यस बखत सार्वभौम सम्राट् छन् । ब्रह्मावर्तमा बसे पनि सात समुद्र पर्यन्त फैलिएकी सबै पृथ्वीमा शासन गरिरहेका छन् ॥२५॥ हे विप्र ! धर्मात्मा स्वायम्भुवमनु आफ्नी महारानी शतरूपा सहित पर्सी तिमीलाई हेर्न यहाँ आउने छन् ।२६।हे प्रभो ! तिनै आफ्नी श्यामलोचना, नवयौवना, शील र सद्गुणसम्पन्न कन्यालाई जो आफ्नो अनुरुप वरको खोजीमा छन्, तिनको योग्य पनि ठानेर हजुरलाई अर्पण गर्नेछन् ॥२७॥ विगत दस हजार वर्षदेखि तिम्रो अन्तःकरण एकाग्र छ । अतः हे राजन् ! ती राजकन्या तिमीलाई वरण गरेर तिम्रो समुचित सेवा गर्नेछन् ॥२८॥ ती तिम्रो वीर्य आफ्नो गर्भमा धारण गरेर नौ कन्या उत्पन्न गर्नेछन् । त्यसपछि तिम्रा ती कन्याहरूमा मरीचि

न वै जातु मृषैव स्यात्प्रजाध्यक्ष मदर्हणम् ॥ भवद्विधेष्वतितरां मयि संगृभितात्मनाम् ॥ २४ ॥ प्रजापतिसुतः सम्राण्मनुर्विख्यातमङ्गलः ॥ ब्रह्मावर्तं योऽधिवसन् शास्ति सप्तार्णवां महीम् ॥ २५ ॥ स चेह विप्र राजर्षिर्महिष्या शतरूपया ॥ आयास्यति दिदृक्षुस्त्वां परश्वो धर्मकोविदः ॥२६॥ आत्मजामसितापांगीं वयःशीलगुणान्विताम् ॥ मृगयन्तीं पतिं दास्यत्यनुरूपाय ते प्रभो ॥ २७ ॥ समाहितं ते हृदयं यत्रेमान्परिवत्सरान् ॥ सा त्वां ब्रह्मन्नृपवधूः काममाशु भजिष्यति ॥२८॥ या त आत्मभृतं वीर्यं नवधा प्रसविष्यति ॥ वीर्ये त्वदीये ऋषय आधास्यन्त्यञ्जसाऽऽत्मनः ॥२९॥ त्वं च सम्यगनुष्ठाय निदेशं त उशत्तमः ॥ मयि तीर्थीकृताशेषक्रियार्थो मां प्रपत्स्यसे ॥ ३० ॥ कृत्वा दयां च जीवेषु दत्त्वा चाभयमात्मवान् ॥ मय्यात्मानं सह जगद्द्रक्ष्यस्यात्मनि चापि माम् ॥ ३१ ॥ सहाहं स्वांशकलया त्वद्वीर्येण महामुने ॥ तव क्षेत्रे देवहूत्यां प्रणेष्ये तत्त्वसंहिताम् ॥३२॥ मैत्रेय उवाच ॥ एवं तमनुभाष्याथ भगवान्प्रत्यगक्षजः ॥ जगाम बिन्दुसरसः सरस्वत्यां परिश्रितात् ॥ ३३ ॥ निरीक्षतस्तस्य यथाशेषसिद्धेश्वराभिष्टुतसिद्धमार्गः ॥ आकर्णयन्पत्ररथेन्द्रपक्षैरुच्चारितं स्तोममुदीर्णसाम ॥ ३४ ॥ अथ सम्प्रस्थिते शुक्ले कर्दमो भगवानृषिः ॥ आस्ते

आदि ऋषिगण आफ्नो वीर्य आधान गर्नेछन् ॥२९॥ तिमी पनि मेरी वेदरूपिणी आज्ञा राम्ररी पालन गर्नाले शुद्धचित्त भएर, सबै कर्मका फल मलाई अर्पण गरेर मलाई नै प्राप्त हुनेछ ॥३०॥ सबै जीवमा दया गर्दै सबैलाई अभयदान दिई र ज्ञान सम्पन्न भई तिमी आफूलाई र सम्पूर्ण जगत् ममा तथा म आफूमै स्थित देख्नेछौ ॥३१॥ हे महामुने ! म पनि आफ्नो अंशस्वरूप कलाले तिम्रो वीर्यद्वारा देवहूतिको गर्भबाट अवतार लिएर सांख्यशास्त्र रचना गर्नेछु ॥३२॥ मैत्रेय भन्दछन्—हे विदुर ! यस प्रकार कर्दमजीसित भनेर तथा इन्द्रियहरूको अन्तर्मुख भएपछि प्रकट हुने श्रीहरि सरस्वती नदीको त्यस विन्दुसर तीर्थबाट आफ्नो लोकमा फर्किए ॥ ३३ ॥ जसको सिद्ध अर्थात् वैकुण्ठमार्गको जप-तपादि साधनहरू द्वारा सिद्ध योगीजन प्रशंसा गर्दछन्, ती श्रीहरि कर्दमजीले हेर्दा-हेर्दै गरुडका पखेटाबाट उच्चारित एवं स्पष्ट सुनिने सामगान र त्यसको आधारस्वरूपा ऋचाहरूलाई

सुन्दै आफ्नो लोकमा गए ॥३४॥ ती शुद्धस्वरूप भगवान् गएपछि कर्दम ऋषि भगवान्ले आज्ञा भएको समयको प्रतीक्षा गर्दै बिन्दुसरोवरमा नै बस्न लागे ॥३५॥ हे धनुर्धर श्रेष्ठ विदुर ! उता मनुजी आफ्नी राजमहिषीसित सुवर्ण जडित रथमा आरूढ भई तथा त्यसमा आफ्नी कन्यालाई पनि चढालेर डुल्दै भगवान्ले आज्ञा भएकै दिन, त्यही परम शान्ति-मूर्ति कर्दमजीको आश्रममा पुगे ॥ ३६-३७ ॥ आफ्ना शरणागत भक्त कर्दम ऋषिप्रति अतिशय दयार्द्र भएर भगवानका नेत्रबाट जहाँ अश्रु-बिन्दु गिरेको थियो, त्यहाँ सरस्वती नदीले घेरिएको, स्वास्थ्यप्रद एवं अमृत समान मीठो जलले भरिएको हुनाले महर्षिगणले सेवित बिन्दुसर नामक पवित्र तीर्थ विद्यमान थियो ॥३८-३९॥ त्यो राम्रा वृक्ष र सुन्दर लताहरूले ढाकिएको थियो र त्यहाँ विविध प्रकारका बोली बोल्ने राम्रा पक्षिहरू निवास गर्दथे। त्यो सबै ऋतुका फल र पुष्परूपी सम्पत्तिले सम्पन्न वनले अलंकृत थियो ॥४०॥ त्यो तीर्थ अनेक थरिका पक्षिगणले सेवित, मत्त भ्रमरगणले गुञ्जायमान, उन्मत्त मयूररूपी नटहरूको नाचले सुशोभित एवं कोइलीको कुहू-कुहू

स बिंदुसरसि तं कालं प्रतिपालयन् ॥ ३५ ॥ मनुः स्यन्दनमास्थाय शातकौम्भपरिच्छदम् ॥ आरोप्य स्वां दुहितरं सभार्यः पर्यटन्महीम् ॥ ३६ ॥ तस्मिन्सुधन्वन्नहनि भगवान्यत्समादिशत् ॥ उपायादाश्रमपदं मुनेः शांतिव्रतस्य यत् ॥ ३७ ॥ यस्मिन्भगवतो नेत्रान्न्यपतन्नश्रुबिंदवः ॥ कृपया सम्परीतस्य प्रपन्नेऽर्पितया भृशम् ॥ ३८ ॥ तद्वै बिंदुसरो नाम सरस्वत्या परिप्लुतम् ॥ पुण्यं शिवामृतजलं महर्षिगणसेवितम् ॥ ३९ ॥ पुण्यद्रुमलताजालैः कूजत्पुण्यमृगद्विजैः ॥ सर्वर्तुफलपुष्पाढ्यं वनराजिश्रियान्वितम् ॥ ४० ॥ मत्तद्विजगणैर्घुष्टं मत्तभ्रमरविभ्रमम् ॥ मत्तबर्हिनटाटोपमाह्वयन्मत्तकोकिलम् ॥ ४१ ॥ कदम्बचम्पकाशोककरञ्जबकुलासनैः ॥ कुन्दमन्दारकुटजैश्चूतपोतैरलंकृतम् ॥ ४२ ॥ कारण्डवैः प्लवैर्हंसैः कुररैर्जलकुक्कुटैः ॥ सारसैश्चक्रवाकैश्च चकोरैर्वल्गु कूजितम् ॥४३॥ तथैव हरिणैः क्रोडैः श्वाविद्गवयकुञ्जरैः ॥ गोपुच्छैर्हरिभिर्मर्कैर्नकुलैर्नाभिभिर्वृतम् ॥४४॥ प्रविश्य तत्तीर्थवरमादिराजः सहात्मजः ॥ ददर्श मुनिमासीनं तस्मिन्हुतहुताशनम् ॥ ४५ ॥ विद्योतमानं वपुषा तपस्युग्रयुजा चिरम् ॥ नातिक्षामं भगवतः स्निग्धापाङ्गावलोकनात् ॥ तद्व्याहृतामृतकलापीयूषश्रवणेन च ॥ ४६ ॥ प्रांशुं पद्मपलाशाक्षं जटिलं चीरवाससम् ॥ उपसंश्रित्य मलिनं

ध्वनिले कूजित भइरहेको थियो॥४१॥ कदम्ब,चम्पक,करंज, बकुल,सुमन, कुन्द,मन्दार एवं आँपका वृक्षले त्यो सरोवर शोभायमान थियो॥४२॥ त्यहाँ कारण्डव र बतक आदि जलचारी पक्षी हंस कुररी, जल कुक्कुट, सारस, चक्रवाक तथा चकोर आदि पक्षी अनेक थरिका मनोहर बोली बोलिरहेका थिए॥४३॥हरिण, सुँगुर, नीलगाई, हात्ती, लंगूर, सिंह, बानर, भालु र नकुल एवं कस्तूरी मृग आदि वन्य पशुहरूले त्यो आश्रम व्याप्त थियो ॥४४॥ संसारका सर्वप्रथम राजा मनु आफ्नी छोरीसहित त्यस पवित्र तीर्थमा पुगेर अग्निहोत्रबाट निवृत्त भएर विराजमान कर्दम मुनिलाई देखे ॥४५॥ ती चिरकालसम्म उग्र तप गर्नाले परम तेजस्वी शरीरले शोभायमान भइरहेका थिए र भगवानका प्रेमपूर्ण स्वरूपको दर्शन एवं उनीद्वारा उच्चरित वर्णामृतरूपी मधुर वचन सुन्नाले उतो दुर्बल देखिन्नथे ॥४६॥ उनको शरीर अग्लो थियो, कमलदल झैं नेत्र विशाल थिए सुन्दर थिए, उनका शिरमा जटाको पोको सुशोभित

थियो र तिनले कमरमा चिथ्रा लगाएका थियो । देख्दा ती वस्त्रा मलीन देखिएको जस्तै सान नलाएको मूल्यवान् मणि मलीन देखिन्छ ॥४७॥ महाराज स्वायम्भुव मनुलाई उनले आफ्नो आश्रममा आएर प्रणाम गर्नलागेका देखेर राजर्षि आशिर्वाद दिइसकेपछि तिनको यथोचित सामग्रीले सत्कार गरे ॥४८॥ अनि जब राजा मनु तिनको पूजा पाएर स्वस्थचित्त भई आसन-मा बसे, तब कर्दम मुनिले भगवानको आज्ञा स्मरण गरेर तिनलाई मधुर वाणीले प्रसन्न पार्दै भने–॥४९॥ हे देव ! हजुर भगवान्‌का साक्षात् पालन शक्ति हुनुहुन्छ । पृथ्वीतलमा यस प्रकार विचरण गर्नु सज्जनहरूको रक्षा र दुष्टगणको संहारार्थ नै हुन्छ ।।५०।। जुन भिन्न-भिन्न कामको निम्ति सूर्य, चन्द्र, अग्नि, इन्द्र, वायु, यम, धर्म तथा वरुण आदिको रूप धारण गर्दछन्, ती विष्णुस्वरूप हजुरलाई मेरो नमस्कार छ ॥५१॥ यदि हजुर जयदायक एवं मणिगणविमण्डित रथमा चढेर आफ्नो प्रचण्ड धनुषको टङ्कार गर्दै र त्यस रथका चक्काको घर-घर ध्वनिले दुष्टहरूलाई थर्काउँदै आफ्ना सेनाका चरणहरूले दल-मल पार्दै, भूमण्डललाई थर्काउँदै आफ्ना असंख्य सेनाहरू सहित पृथ्वीतलमा सूर्य झैं जडुल्ने हो भने

यथार्हणमसंस्कृतम् ॥ ४७ ॥ अथोटजमुपायातं नृदेवं प्रणतं पुरः ॥ सपर्यया पर्यगृह्णात्प्रतिनन्द्यानुरूपया ॥ ४८ ॥ गृहीतार्हणमासीनं संयतं
प्रीणयन्मुनिः ॥ स्मरन्भगवदादेशमित्याह श्लक्ष्णया गिरा ॥ ४९ ॥ नूनं चंक्रमणं देव सतां संरक्षणाय ते ॥ वधाय चासतां यस्त्वं हरेः शक्तिर्हि
पालिनी ॥ ५० ॥ योऽर्केन्द्वग्नीन्द्रवायूनां यमधर्मप्रचेतसाम् ॥ रूपाणि स्थान आधत्से तस्मै शुक्लाय ते नमः ॥ ५१ ॥ न यदा रथमास्थाय जैत्रं
मणिगणार्पितम् ॥ विस्फूर्जच्चण्डकोदण्डो रथेन त्रासयन्नधान् ॥ ५२ ॥ स्वसैन्यचरणक्षुण्णं वेपयन्मण्डलं भुवः ॥ विकर्षन्बृहतीं सेनां पर्यट-
स्यंशुमानिव ॥ ५३ ॥ तदैव सेतवः सर्वे वर्णाश्रमनिबन्धनाः ॥ भगवद्रचिता राजन्भिद्येरन्बत दस्युभिः ॥ ५४ ॥ अधर्मश्च समेधेत लोलुपै-
र्व्यङ्कुशैर्नृभिः ॥ शयाने त्वयि लोकोऽयं दस्युग्रस्तो विनङ्क्षयति ॥ ५५ ॥ अथापि पृच्छे त्वां वीर यदर्थं त्वमिहागतः ॥ तद्वयं निर्व्यली-
केन प्रतिपद्यामहे हृदा ॥ ५६ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे एकविंशतितमोऽध्यायः ॥ २१ ॥ मैत्रेय उवाच ॥ एवमा-
विष्कृताशेषगुणकर्मोदयो मुनिम् ॥ सव्रीड इव तं सम्राडुपारतमुवाच ह ॥ १ ॥ मनुरुवाच ॥ ब्रह्माऽसृजत्स्वमुखतो युष्मानात्मपरीप्सया ॥
छन्दोमयस्तपोविद्यायोगयुक्तानलम्पटान् ॥ २ ॥ तत्त्राणायासृजच्चास्मान्दोःसहस्रात्सहस्रपात् ॥ हृदयं तस्य हि ब्रह्म क्षत्रमङ्गं प्रचक्षते ॥ ३ ॥

भगवानले बनाएको वर्णाश्रम धर्मको मर्यादालाई दस्युगण नष्ट-भ्रष्ट पार्ने थिए ॥५२-५४॥ विषय-लोलुप एवं निरंकुश जीव सर्वत्र अधर्म फैलाउँथे । यदि हजुर मौन भएर सुतिदिए भने यो संसार दुराचारीहरूको अधीनमा परेर नष्ट हुने थियो ॥५५॥ हे वीर ! हजुर कुन कार्यविशेषले यहाँ पाल्नुभएको हो, यो जान्न खोजिरहेको छु । हजुरको आज्ञालाई म निष्कपट-भावले मान्नेछु ॥५६॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषाटीकायामेकविंशतितमोऽध्यायः ॥२१॥ ( देवहूति र कर्दम प्रजापतिको विवाह समारोह ) श्रीमैत्रेयजी भन्नुहुन्छ–हे विदुर ! आफ्ना सबै गुण तथा कर्महरूको श्रेष्ठताको वर्णन सुनेर महाराज मनुले केही संकोच मान्दै कर्दम मुनिसित भने–॥१॥ मनु भन्नलागे—हे मुने ! भगवान् ब्रह्माजीले आफ्नो सुरक्षाको निम्ति तप, विद्या एवं योगले युक्त र विषयहरूमा अनासक्त ब्राह्मणहरूलाई आफ्नो मुखबाट उत्पन्न गरेका हुन् ॥२॥ फेरि ती सहस्रपाद भगवानले

सर्वको रक्षा गर्नका लागि आफ्ना सहस्र बाहुहरूबाट हामी क्षत्रियलाई उत्पन्न गरेका हो । यसैले ब्राह्मण उनको हृदय र क्षत्रिय शरीर कहिन्छन् ॥३॥ यसरी यी दुई शरीरबाट सम्बन्ध रहनाले आफ्नो आफ्नो तथा यी दुईले अर्काको रक्षा गर्ने ती ब्राह्मण र क्षत्रियहरूका रक्षक श्रीहरि नै हुन् । ती पूर्णतः कार्य-कारणस्वरूप भएर पनि निर्विकार छन् ॥४॥ आज हजुरको दर्शन पाएर नै मेरा सबै शंकाय निवृत्त भए । किनभने हजुरले स्वयं प्रजापालक राजाहरूका धर्मको निकै प्रेमपूर्वक वर्णन गरेको छ ॥ ६ ॥ अजितेन्द्रिय पुरुषलाई हजुरको दर्शन रहन्छ र व्यर्थ तिनको आयुष्य बितेर जान्छ । मेरो सौभाग्य हो, जो हजुरको दर्शन पाएँ । म हजुरका चरणको पवित्र धूलो आफ्नो शिरमा लगाएँ, यही मेरो सौभाग्य हो ॥६॥ मेरै

अतो ह्यन्योन्यमात्मानं ब्रह्म क्षत्रं च रक्षतः ॥ रक्षति स्माव्ययो देवः स यः सदसदात्मकः ॥ ४ ॥ तव संदर्शनादेव छिन्ना मे सर्वसंशयाः ॥ यत्स्वयं भगवान्प्रीत्या धर्ममाह रिरक्षिषोः ॥ ५ ॥ दिष्ट्या मे भगवान् दृष्टो दुर्दर्शो योऽकृतात्मनाम् ॥ दिष्ट्या पादरजः स्पृष्टं शीर्ष्णा मे भवतः शिवम् ॥ ६ ॥ दिष्ट्या त्वयाऽनुशिष्टोऽहं कृतश्चानुग्रहो महान् ॥ अपावृतैः कर्णरन्ध्रैर्जुष्टा दिष्ट्योशतीर्गिरः ॥ ७ ॥ स भवान्दुहितृस्नेहपरिक्लिष्टात्मनो मम ॥ श्रोतुमर्हसि दीनस्य श्रावितं कृपया मुने ॥ ८ ॥ प्रियव्रतोत्तानपदोः स्वसेयं दुहिता मम ॥ अन्विच्छति पतिं युक्तं वयःशीलगुणादिभिः ॥९॥ यदा तु भवतःशीलश्रुतरूपवयोगुणान् ॥ अशृणोन्नारदादेषा त्वय्यासीत्कृतनिश्चया ॥१०॥ तत्प्रतीच्छ द्विजाग्र्येमां श्रद्धयोपहृतां मया ॥ सर्वात्मनाऽनुरूपां ते गृहमेधिषु कर्मसु ॥११॥ उद्यतस्य हि कामस्य प्रतिवादो न शस्यते ॥ अपि निर्मुक्तसङ्गस्य कामरक्तस्य किं पुनः ॥ १२ ॥

भाग्यले हजुरले मलाई राजधर्मको शिक्षा दिएर ठूलो कृपा गर्नुभयो र प्रारब्ध उदय हुनाले नै मैले हजुरका पवित्र वाणी कान उघारेर हृदयङ्गम गर्न पाएँ ॥७॥ हे ऋषिराज ! जसको चित्त पुत्रहरूको स्नेहवश चिन्ता ग्रस्त भइरहेछ यस्तो म दीनको प्रार्थना हजुर कृपापूर्वक सुन्नुहवस् ॥८॥ प्रियव्रत त उत्तानपादकी बहिनी त मेरी पुत्री अवस्था र शील तथा गुण आदिमा आफू समान पतिकी इच्छुक छ ॥९॥ नारदजीको मुखबाट यसले जबदेखि हजुरको शील, विद्या, रूप, अवस्था र गुणको वर्णन सुनेकी छ, त्यसै बेलादेखि यसले हजुरलाई नै आफ्नो पति तुल्याउने अठोट गरेकी छ ॥१०॥ हे द्विजवर्य ! श्रद्धापूर्वक समर्पण गरिएकी मेरी कन्या हजुर स्वीकार गर्नोस् । यो सबै गृहस्थोचित काममा योग्य छ ॥ ११ ॥ स्वयं आएर जो

○ उदाहरण ( आयु बितेर गइरहेछ )— थोरै रेडसित काठी जहाज गए । ती सबै जहाजमा सामान भरेर त्यो समुद्री व्यापारमा हिँड्यो ती जहाज तुफानमा ( आँधी ) परेँ गए र एक-एक गरेर डुब्न लागे । तब रबस कुराको सेठमाथि कुनै पनि प्रभाव परेन ( त्यो हर्षित भएर लाग्यो—'साहीबाट केही जहाज पनि बाँचे भने त मेरो कमाएर नै पर्कने छु' यस प्रकार सोचापछि अर्को गरेर त्यस रेडका कागतको जहाज डुबिसके । अब खाली सेठ पछितोमा पर्यो र आफ्नो सम्पत्तिको पेरै अंश धर्मको काममा खर्च गरिदिने निश्चय गर्यो त्यसले प्रभुसित प्रार्थना गर्यो । शेष रहेको जहाजमा रामा नाविक नियुक्त गर्यो र ठूलो सावधानीले जहाज हिँडाउने चेतावनी दियो । यस्तो गर्नाले त्यो जहाज सकुशल आफ्नो गन्तव्य स्थानमा पुग्यो । यसै प्रकार दुनियामा पेरै वर्ष बितिसकेर पनि मनुष्य ठान्दछ— अहिले धेरै वर्ष बाँकी छ । थोरै भएपछि हरि-भजन गरौंला तर संसार-सिन्धुको ताण्डा गर्दा सबै वर्षपानीमा बगिसकेछन् । यस्तो बेलामा जुन मनुष्य साक्षात् भगवान्‌लाई कर्णधार प्रभु-दयालु बनाउछ भने त्यो पनि त्यही सेठ जस्तै संसार-सागरलाई तरेर इच्छित स्थानमा पुग्न सक्छ ।

उपस्थित हुँदाँस्, त्यसको अनादर गर्नु कुनै विरक्त पुरुषको निम्ति पनि योग्य छैन भने विषयासक्त पुरुषको त कुरै छैन ॥१२॥ जो प्राणी स्वयं उपस्थित भोगको एकपल्ट अनादर गरेर फेरि कुनै लोभी पुरुषसित त्यही कुराको याचना गर्दछ भने त्यसको फैलिएको सुयश नष्ट भएर जान्छ र अर्काको तिरस्कारले मान-भंग पनि हुन्छ ॥१३॥ हे विद्वन् ! मैले जनहरूसित सुनेको छु—हजुर विवाह गर्न तयार हुनुहुन्छ । अतः गृहस्थाश्रम स्वीकार नगरुञ्जेल ब्रह्मचर्य व्रतको पालन गर्ने हजुर मेरी कन्या स्वीका गर्नुहवस्, म हजुरलाई अर्पण गरिरहेको छु ॥१४॥ कर्दम ऋषिले भने—ठीक हो, म पनि त विवाहको इच्छुक छु । हजुरले पनि अहिलेसम्म यस कन्याको अन्य वरकालागि वरदान गर्नु भएको छैन । अतः हामी दुवैको यो समुचित विवाह संस्कार हुन्छ ॥१५॥ हे राजन् ! वेदोक्त विधि अनुसार हजुर जो मलाई कन्यादान दिन चाहनु हुन्छ, त्यो हजुरको संकल्प पूर्ण होस् । आफ्नो कान्तिले लक्ष्मीलाई पनि लज्जित पार्ने हजुरकी कन्याको कुन पुरुष आदर नगर्ला ? ॥१६॥ आफ्नू महलको अटालीमा खेल्दा नूपुरहरूको झंकार गर्दै तथा कन्दुक-क्रीडाले गर्दा चपल-नयना तिनी

य उद्यतमनादृत्य कीनाशमभियाचते ॥ क्षीयते तद्यशः स्फीतं मानश्चावज्ञया हतः ॥ १३ ॥ अहं त्वाऽशृणवं विद्वन्विवाहार्थं समुद्यतम् ॥ अतस्तवमुपकुर्वाणः प्रत्तां प्रतिगृहाण मे ॥१४॥ ऋषिरुवाच ॥ बाढमुद्वोढुकामोऽहमप्रत्ता च तवात्मजा ॥ आवयोरनुरूपोऽसावाद्यो वैवाहिको विधिः ॥१५॥ कामः स भूयान्नरदेव तेऽस्याः पुत्र्याः समाम्नायविधौ प्रतीतः ॥ क एव ते तनयां नाद्रियेत स्वयैव कान्त्या क्षिपतीमिव श्रियम् ॥ १६ ॥ यां हर्म्यपृष्ठे क्वणदङ्घ्रिशोभां विक्रीडतीं कन्दुकविह्वलाक्षीम् ॥ विश्वावसुर्न्यपतत्स्वाद्विमानाद्विलोक्य सम्मोहविमूढचेताः ॥ १७ ॥ तां प्रार्थयन्तीं ललनाललामसेवितश्रीचरणैरदृष्टाम् ॥ वत्सां मनोरुच्चपदः स्वसारं को नानुमन्येत बुधोऽभियाताम् ॥ १८ ॥ अतो भजिष्ये समयेन साध्वीं यावत्तेजो बिभृयादात्मनो मे ॥ अतो धर्मान्पारमहंस्यमुख्यान् शुक्लप्रोक्तान्बहु मन्येऽविहिंस्रान् ॥ १९ ॥ यतोऽभवद्विश्वमिदं विचित्रं संस्थास्यते यत्र च वाऽवतिष्ठते ॥ प्रजापतीनां पतिरेष मह्यं परं प्रमाणं भगवाननन्तः ॥ २० ॥ मैत्रेय उवाच ॥ उग्रधन्वन्नियदेवाबभाष आसीच्च तूष्णीमरविन्दनाभम् ॥ धियोपगृह्णन्स्मितशोभितेन मुखेन चेतो लुलुभे देवहूत्याः ॥२१॥ सोऽनुज्ञात्वा व्यवसितं महिष्या दुहितुः स्फुटम् ॥ तस्मै गुणगणाढ्याय

जुन कन्यालाई देखेर विश्वावसु गन्धर्व मुग्ध भएर आफ्नो विमानबाट लडेका थिए, ती रमण रत्नको स्वयं आएर प्रार्थना गरेपछि पनि कुन यस्तो बुद्धिमान् पुरुष होला, जो मान्ने छैन । यी कन्या साक्षात् स्वायम्भुव मनुकी प्रिय पुत्री र राजा उत्तानपादकी प्रिय भगिनी हुन् । जसले लक्ष्मीजीका चरणको उपासना गरेका छैन, त्यसलाई यिनको दर्शन मिल्न सक्तैन ॥१७-१८॥ अतएव यी साध्वी जबसम्म गर्भ धारण गर्न छैनन्, त्यस समयसम्म म यिनको साथमा रहने छु । त्यसपछि संन्यास लिएर विष्णुले आज्ञा भएको ज्ञान प्राप्तिका मुख्य कारण स्वरूप शम-दम आदि अहिंस धर्माचरणलाई नै ठूलो मान्नेछु ॥१९॥ जसको द्वारा यस विचित्र जगत्को उत्पत्ति भएको छ र अन्त्यमा जहाँ यो लीन भएर जान्छ तथा जसको गरमा यो स्थित छ, ती प्रजापतिहरूका प्रभु श्रीअनन्त नै मलाई सबभन्दा बढी मान्य छन् ॥२०॥ मैत्रेयजी भन्दछन्—हे विदुर ! यति भनेर कर्दम ऋषि मौन भए र भगवान्को चिन्तन गर्नलागे । त्यस बखत तिनको मुखमा यस्तो अलौकिक हाँसो—जसलाई देखेर देवहूति खुशी भइन् ॥२१॥ रानी शतरूपा र राजकुमारी देवहूतिको त्यस अभिप्राय बुझेर महाराजा

मनुले प्रसन्नतापूर्वक कर्दम ऋषिलाई आफ्नी छोरी सुम्पिदिए ॥२२॥ रानी शतरूपाले प्रसन्नतापूर्वक वस्त्र-गहना र गृहस्थीका वस्तुहरू छोरी ज्वाइँलाई दाइजोमा दिए ॥२३॥ योग्य वरलाई कन्यादान दिनाले राजा सर्वथा निश्चिन्त भए । कन्याको विरहले व्याकुल राजा मनुले देवहूतिलाई हृदयमा टाँसे र 'छोरी, छोरी !' भन्दै यति आँसु बगाए जसले तिनको मस्तक भिज्यो ॥२४-२५॥ तब कर्दम ऋषिसित अनुमति मागेर आफ्नी रानी र मित्रहरू सहित महाराज मनु सरस्वती नदीको तटमा विद्यमान शान्त र शिष्ट मुनिहरूका आश्रमहरू हेर्दै आफ्नो राजधानीतिर प्रस्थान गरे ॥२६-२७॥ महाराज मनुको आगमनको खबरले प्रसन्न प्रजाले ब्रह्मावर्तको सीमासम्म आएर स्तुति गरी बाजा-गाजा सहित तिनको स्वागत गरे ॥२८॥ त्यहीं नै धन-जनले सम्पन्न बर्हिष्मती नगरी बनेको थियो । त्यहाँ शरीर झट्कार्नाले वराह भगवानका देहबाट जति रौं झरेका थिए, तीनै कुश र काश भए । उनका द्वारा ऋषिहरूले राक्षस-

ददौ तुल्यां प्रहर्षितः ॥२२॥ शतरूपा महाराज्ञी पारिबर्हान्महाधनान् ॥ दम्पत्योः पर्यदात्प्रीत्या भूषावासःपरिच्छदान् ॥ २३ ॥ प्रत्तां दुहितरं सम्राट्
सदृक्षाय गतव्यथः ॥ उपगुह्य च बाहुभ्यामौत्कण्ठ्योन्मथिताशयः॥२४॥अशक्नुवंस्तद्विरहं मुञ्चन्बाष्पकलां मुहुः ॥ आसिञ्चदम्ब वत्सेति नेत्रोदैर्दुहितुः
शिखाः ॥२५॥ आमंत्र्य स मुनिवरमनुज्ञातः सहानुगः ॥ प्रतस्थे रथमारुह्य सभार्यः स्वपुरं नृपः ॥२६॥ उभयोर्ऋषिकुल्यायाः सरस्वत्याः सुरो-
धसोः ॥ ऋषीणामुपशान्तानां पश्यन्नाश्रमसम्पदः ॥२७॥ तमायान्तमभिप्रेत्य ब्रह्मावर्तात्प्रजाः पतिम् ॥ गीतसंस्तुतिवादित्रैः प्रत्युदीयुः प्रहर्षिताः
॥२८॥ बर्हिष्मती नाम पुरी सर्वसम्पत्समन्विता ॥ न्यपतन्यत्र रोमाणि यज्ञस्याङ्गं विधुन्वतः ॥ २९ ॥ कुशाः काशास्त एवासन् शश्वद्धरितवर्चसः ॥
ऋषयो यैः पराभाव्य यज्ञघ्नान्यज्ञमीजिरे ॥३०॥ कुशकाशमयं बर्हिरास्तीर्य भगवान्मनुः ॥ अयजद्यज्ञपुरुषं लब्धा स्थानं यतो भुवम् ॥ ३१ ॥
बर्हिष्मतीं नाम विभुर्यां निर्विश्य समावसत् ॥ तस्यां प्रविष्टो भवनं तापत्रयविनाशनम् ॥ ३२ ॥ सभार्यः सप्रजः कामान्बुभुजेऽन्याविरोधतः ॥
संगीयमानसत्कीर्तिः सस्त्रीभिः सुरगायकैः ॥ प्रत्यूषेष्वनुबद्धेन हृदा शृण्वन्हरेः कथा ॥ ३३ ॥ निष्णातं योगमायासु मुनिं स्वायम्भुवं मनुम् ॥ यदा
भ्रंशयितुं भोगा न शेकुर्भगवत्परम् ॥३४॥ अयातयामास्तस्यासन् यामाः स्वांतरयापनाः ॥ शृण्वतो ध्यायतो विष्णोः कुर्वतो ब्रुवतः कथा ॥३५॥

लाई जितेर विष्णु भगवानको प्रीत्यर्थ यज्ञ गरेका थिए ॥२९-३०॥ वराहरूपधारी भगवानका कृपाले पृथ्वी प्राप्त भएपछि मनु महाराजले पनि कुश र काशको बर्हि (आउन) बिछाएर यज्ञद्वारा विष्णु भगवानलाई प्रसन्न पारेथे ( त्यसै कारण त्यो नगरी बर्हिष्मती नामले प्रसिद्ध भयो । ॥३१॥ महाराज मनु आफ्नी नगरी गएर पहिले जस्तै त्रितापनाशक महलमा सुख-पूर्वक बस्ने र आफ्नी पत्नी तथा सन्तानसित धर्माचरण गर्दै सुखमय जीवन बिताउन लागे ॥३२॥ यद्यपि त्यहाँ दिनहुँ बिहानै अप्सरागण समेत गन्धर्व आएर राजाको गुण-गान गर्न गर्थे, तैपनि महाराज मनु मन लगाएर सदा भगवानको नै कथा सुनिरहन्थे ॥३३॥ तिनलाई सबै सुख-साधन प्राप्त थिए तर ती यति संयमी थिए कि संसारमै रहे पनि त्योसित भिन्न थिए ॥३४॥ ती समय व्यर्थ गुमाउँदैनथे र सदा भगवानको चिन्तन गर्दै उनका दिव्य कथाहरू सुनिरहन्थे । यसरी गर्दागर्दै एकहत्तर युग कैयौं एकहत्तर बितिसके । जाग्रत-स्वप्न र सुषुप्ति

जाग्रत सुप्त र सुषुप्ति अवस्था हरुलाई उनले जितिसकेका थिए ॥३५-३६॥ जसले भगवान्को शरण लिन्छ त्यसलाई शारीरिक रोग, मानसिक चिन्ता, वज्रपात आदि उपद्रव, शीतोष्ण आदि द्वन्द्व र शत्रु चोर भयले दुःख दिन्नन् ॥३७॥ लोक-हितचिन्तक मनु महाराजले ऋषिहरुले सोधेपछि सबै वर्ण र आश्रमहरूको कल्याणार्थ अनेक धर्मको निरूपण गरे ॥३८॥ यहाँ सम्म आदि राजा मनुको महत्वपूर्ण चरित्रको वर्णन भयो । अब तिनकी छोरी देवहूतिका सन्तानको वर्णन सुन्नोस् ॥३९॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषा टीकायां द्वाविंशोऽध्यायः ॥२२॥ (प्रजापति कर्दम र देवहूतिको केलि) मैत्रेय भन्दछन्––माता-पिता फर्केपछि पतिको अभिप्राय जान्नमा कुशल देवहूति कर्दम ऋषिको सेवा चाकरी उसै गरी प्रेमपूर्वक गर्न लागिन्, जसरी पार्वतीले शङ्करको गरेकी थिइन् ॥१॥ नम्र व्यवहार, पवित्रता, एकचित्तता र मधुर वाणीले देवहूति पतिको सेवा गर्दथिन् ॥२॥ तिमले

स एवं स्वान्तरं निन्ये युगानामेकसप्ततिम् ॥ वासुदेवप्रसङ्गेन परिभूतगतित्रयः ॥ ३६ ॥ शारीरा मानसा दिव्या वैयासे ये च मानुषाः ॥ भौतिकाश्च कथं क्लेशा बाधन्ते हरिसंश्रयम् ॥३७॥ यः पृष्टो मुनिभिः प्राह धर्मान्नानाविधाञ्छुभान् ॥ नृणां वर्णाश्रमाणां च सर्वभूतहितः सदा ॥ ३८ ॥ एतत्त आदिराजस्य मनोश्चरितमद्भुतम् ॥ वर्णितं वर्णनीयस्य तदपत्योदयं शृणु ॥ ३९ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे द्वाविंशतितमोऽध्यायः ॥२२॥ मैत्रेय उवाच ॥ पितृभ्यां प्रस्थिते साध्वी पतिमिङ्गितकोविदा ॥ नित्यं पर्यचरत्प्रीत्या भवानीव भवं प्रभुम् ॥ १ ॥ विश्रम्भेणात्मशौचेन गौरवेण दमेन च ॥ शुश्रूषया सौहृदेन वाचा मधुरया च भोः ॥२॥ विसृज्य कामं दम्भं च द्वेषं च लोभमघं मदम् ॥ अप्रमत्तोद्यता नित्यं तेजीयांसमतोषयत् ॥३॥ स वै देवर्षिवर्यस्तां मानवीं समनुव्रताम् ॥ दैवाद्गरीयसः पत्युराशासानां महाशिषः ॥ ४ ॥ कालेन भूयसा क्षामां कर्शितां व्रतचर्यया ॥ प्रेमगद्गदया वाचा पीडितः कृपयाऽब्रवीत् ॥५॥ कर्दम उवाच ॥ तुष्टोऽहमद्य तव मानवि मानदायाः शुश्रूषया परमया परया च भक्त्या ॥ यो देहिनामयमतीव सुहृत्स्वदेहो नावेक्षितः समुचितः क्षपितुं मदर्थे ॥ ६ ॥ ये मे स्वधर्मनिरतस्य तपःसमाधिविद्यात्मयोगविजिता भगवत्प्रसादाः ॥ तानेव ते मदनुसेवनयाऽवरुद्धान् दृष्टिं प्रपश्य वितराम्यभयानशोकान् ॥ ७ ॥ अन्ये पुनर्भगवतो भ्रुव उद्विजृम्भविभ्रंशितार्थरचनाः

मनोविकार, कपट, द्वेष, लोभ, पाप र मदबाट जोगिएर ठूलो सावधानी र एकाग्रताले सेवा गरेर कर्दम ऋषिलाई सन्तुष्ट पारिन् ॥३॥ देवर्षि कर्दम यस्ता प्रतापी थिए कि ती कर्मको रेखालाई पनि मेट्न सक्थे । तीबाट देवहूतिलाई अनेक सुख पाउने आशा थियो ॥४॥ धेरै समय बितिसकेपछि महामुनि कर्दमले एक दिन देवहूतिलाई सेवा-टहल र व्रतचर्या गरिरहनाले बर्ता दुर्बल भएकी देखेर तथा प्रसन्न भएर गद्गद वाणीमा भने––॥५॥ कर्दमजी भन्दछन्––हे प्रिये ! तिमीले श्रद्धा-भक्तिपूर्वक मेरो सेवा गरेकी छौ । प्राणीलाई आफ्नो देहको ठूलो ममत्व रहन्छ तर तिमीले मेरो चाकरी गर्दा-गर्दा आफ्नो शरीर पनि क्षीण तुल्यायौ । अतः म तिमीदेखि प्रसन्न छु ॥६॥ जप-तप, समाधि, उपासना र योग तथा एकाग्रता को साधन गरेर भगवान्को कृपाले मैले जुन विभूतिहरू प्राप्त गरेको छु, तीसम्म तिमी पुगेकी छैनौ, तर तिम्रो सेवाले सन्तुष्ट भएर म तिमीलाई ती विभूतिहरू देखाइदिन्छु

अवस्था न शोक छ न भय ॥७॥ सांसारिक भोग त भगवान्‌का भृकुटि-भङ्गले नै नष्ट हुन्छन् तर तिमीले आफ्नो पतिव्रता-धर्मको प्रभावले सिद्धि पाएर त्यो वैभव प्राप्त गरिसकेकी छौ, जुन ठूला-ठूला राजालाई पनि दुर्लभ छ, तिमी त्यो भोग ॥८॥ आफ्ना पति कर्दम ऋषिलाई सम्पूर्ण योगमाया र उपासना-विधिमा कुशल देखेर देवहूतिका सारा चिन्ताहरू हराएर गए । तिनले बाङ्गो नेत्रले हेरेर मुसुक्क हाँस्तै प्रीति र नम्र वाणीमा उत्तर दिइन् ॥९॥ देवहूतिले भनिन्–हे स्वामी ! हजुर योग र मायामा सिद्धि प्राप्त गरिसक्नु भएको छ । अतः हजुर सबै भोग दिन सक्नुहुन्छ । हजुरले सन्तानोत्पत्ति नभएसम्म गृहस्थाश्रममा बस्ने जुन प्रतिज्ञा गर्नुभएको थियो, त्यसको पूर्ति हुनुपर्दछ । उत्तम पतिद्वारा सन्तान प्राप्ति नै स्त्रीको निम्ति सबैभन्दा ठूलो लाभ छ । रतिको इच्छाले म कृश र दीन भएकी छु । हजुर मलाई कामशास्त्रानुसार उत्तम शिक्षा दिनोस् र फुकुवा, स्नान, खान-पानको सामग्री तथा उपयुक्त भवनको पनि प्रबन्ध गरिदिनोस्, जसमा म हजुरसित सहवास गर्न योग्य हुनसकूँ ॥१०-११॥ मैत्रेयजी भन्दछन्–हे विदुर ! आफ्नी प्रियतमा देवहूतिको इच्छा पूर्ण

किमुरुक्रमस्य ॥ सिद्धाऽसि भुङ्क्ष्व विभवान्निजधर्मदोहान्दिव्यान्नरैर्दुरधिगान्नृपविक्रियाभिः ॥ ८ ॥ एवं ब्रुवाणमबलाऽखिलयोगमायाविद्याविचक्षण-
मवेक्ष्य गताधिरासीत् ॥ सम्प्रश्रयप्रणयविह्वलया गिरेषद्व्रीडावलोकविलसद्धसिताननाऽऽह ॥ ९ ॥ देवहूतिरुवाच ॥ राद्धं बत द्विजवृषैतदमोघयोग-
मायाधिपे त्वयि विभो यदवैमि भर्तः ॥ यस्तेऽभ्यधायि समयः सकृदङ्गसङ्गो भूयाद्गरीयसि गुणप्रसवः सतीनाम् ॥ १० ॥ तत्रेतिकृत्यमुपशिक्ष
यथोपदेशं येनैष मे कर्शितोऽतिरिरंसयाऽऽत्मा ॥ सिद्ध्येत ते कृतमनोभवधर्षिताया दीनस्तदीश भवनं सदृशं विचक्ष्व ॥ ११ ॥ मैत्रेय उवाच ॥
प्रियायाः प्रियमन्विच्छन्कर्दमो योगमास्थितः ॥ विमानं कामगं क्षत्तस्तर्ह्येवाविरचीकरत् ॥ १२ ॥ सर्वकामदुघं दिव्यं सर्वरत्नसमन्वितम् ॥
सर्वर्द्ध्युपचयोदर्कं मणिस्तम्भैरुपस्कृतम् ॥ १३ ॥ दिव्योपकरणोपेतं सर्वकालसुखावहम् ॥ पट्टिकाभिः पताकाभिर्विचित्राभिरलंकृतम् ॥ १४ ॥
स्रग्भिर्विचित्रमाल्याभिर्मञ्जुशिञ्जत्षडङ्घ्रिभिः ॥ दुकूलक्षौमकौशेयैर्नानावस्त्रैर्विराजितम् ॥ १५ ॥ उपर्युपरि विन्यस्तनिलयेषु पृथक्पृथक् ॥ क्षिप्तैः
कशिपुभिः कान्तं पर्यङ्कव्यजनासनैः ॥ १६ ॥ तत्र तत्र विनिक्षिप्तनानाशिल्पोपशोभितम् ॥ महामरकतस्थल्या जुष्टं विद्रुमवेदिभिः ॥ १७ ॥
द्वाःसु विद्रुमदेहल्या भातं वज्रकपाटवत् ॥ शिखरेष्विन्द्रनीलेषु हेमकुम्भैरधिश्रितम् ॥ १८ ॥ चक्षुष्मत्पद्मरागाग्र्यैर्वज्रभित्तिषु निर्मितैः ॥ जुष्टं

गर्नका लागि महर्षि कर्दमले योगबल द्वारा त्यसै बखत यौटा इच्छागामी विमान बनाइदिए ॥१२॥ त्यसमा मणिहरूका खाँबा र सबै रत्नहरू विद्यमान थिए । त्यस विमानमा कुनै वस्तुको अभाव थिएन । प्रत्येक ऋतुको अनुकूल सामग्रीको त्यसमा प्रबन्ध थियो । त्यसमा ध्वजा-पताकाहरू हल्लिरहेका थिए ॥१३-१४॥ विमानमा रङ्गविरङ्गी मालाहरू ठाउँ-ठाउँमा झुण्डाइएका थिए, तिनमा भमराहरू गुञ्जार गर्दै थिए । त्यसमा बहुमूल्य बिछौना बिछाइएका थिए तथा विचित्र चँदुवा टाँगिएका थिए ॥१५॥ त्यो विमान कैयौं तलाको थियो र प्रत्येक तला उत्तम पलंग, बिछौना र पंखा आदिले सजिल थियो ॥१६॥ तस्वीर आदिले त्यसको सजावट गरिएको थियो । त्यसमा नीलमको भूमि थियो र बस्नको निम्ति मूगाका चौतारा थिए । दैला-ठेला पनि मूगाकै थिए । ढोकाहरूमा पच्चीकारी गरिएको र त्यसको नीलमणिनिर्मित शिखरमा सुनका कलश राखिएका थिए ॥१७-१८॥ त्यसका भित्ताहरूमा हीरा,

पन्ना, पुष्पराज आदि बहुमूल्य मणिहरूको जडान गरिएको थियो र स्वर्ण-तोरणले सुसज्जित अनेक वितान लागेका थिए ॥१९॥ जहाँ-तहाँ उत्तम हंस तथा परेवा बनेका थिए, तिनलाई साँच्चैका ठानेर साँच्चैका हंस र परेवा तिनको नजीकै बसेर बोल्न लाग्दथे ॥२०॥ त्यस विमानमा उपयुक्त स्थलमा विश्रामागार, विहार-भूमि, शयन-मन्दिर, आँगन र खुला मैदान बनेका थिए। त्यस अद्भुत रचनालाई देखेर विमानका निर्माता कर्दम ऋषि पनि छक्क परे ॥२१॥ त्यस्तो राम्रो विमानलाई पनि मलिन र कृश शरीर हुनाले देवहूति उदासीन झैं हेरिरहेकी थिइन्। अनि सबैका मनको कुरा जान्ने भएका कर्दम ऋषिले भने–हे भीरु! विष्णु भगवान्‌ले बनाएको यस बिन्दुसारमा स्नान गरेर तिमी विमानमा बस। यस तीर्थमा स्नान गर्नाले सबै मनोरथ पूर्ण हुन्छन् ॥२२-२३॥ कमलनयनी देवहूतिको सारी मैलो थियो, कपाल टाँसिनाले रौं अल्झेका थिए, शरीरमा मैलो जमेको थियो र

विचित्रवैतानैर्महार्हैर्हेमतोरणैः ॥ १९ ॥ हंसपारावतव्रातैस्तत्र तत्र निकूजितम् ॥ कृत्रिमान्मन्यमानैः स्वानधिरुह्याधिरुह्य च ॥ २० ॥ विहार-
स्थानविश्रामसंवेशप्राङ्गणाजिरैः ॥ यथोपजोषं रचितैर्विस्मापनमिवात्मनः ॥ २१ ॥ ईदृग्गृहं तत्पश्यन्ती नातिप्रीतेन चेतसा ॥ सर्वभूताशयाभिज्ञः
प्रावोचत्कर्दमः स्वयम् ॥ २२ ॥ निमज्ज्यास्मिन्ह्रदे भीरु विमानमिदमारुह ॥ इदं शुक्लकृतं तीर्थमाशिषां यापकं नृणाम् ॥ २३ ॥ सा तद्भर्तुः
समादाय वचः कुवलयेक्षणा ॥ सरजं बिभ्रती वासो वेणीभूतांश्च मूर्धजान् ॥ २४ ॥ अङ्गं च मलपंकेन संछन्नं शबलस्तनम् ॥ आविवेश सर-
स्वत्याः सरः शिवजलाशयम् ॥ २५ ॥ साऽन्तः सरसि वेश्मस्थाः शतानि दश कन्यकाः ॥ सर्वाः किशोरवयसो ददर्शोत्पलगन्धयः ॥ २६ ॥ तां
दृष्ट्वा सहसोत्थाय प्रोचुः प्राञ्जलयः स्त्रियः ॥ वयं कर्मकरीस्तुभ्यं शाधि नः करवाम किम् ॥ २७ ॥ स्नानेन तां महार्हेण स्नापयित्वा मनस्विनीम् ॥
दुकूले निर्मले नूत्ने ददुरस्यै च मानदः ॥ २८ ॥ भूषणानि परार्ध्यानि वरीयांसि द्युमन्ति च ॥ अन्नं सर्वगुणोपेतं पानं चैवामृतासवम् ॥ २९ ॥
अथादर्शे स्वमात्मानं स्रग्विणं विरजाम्बरम् ॥ विरजं कृतस्वस्त्ययनं कन्याभिर्बहुमानितम् ॥ ३० ॥ स्नातं कृतशिरःस्नानं सर्वाभरणभूषितम् ॥
निष्कग्रीवं वलयिनं कूजत्काञ्चननूपुरम् ॥ ३१ ॥ श्रोण्योरध्यस्तया काञ्च्या काञ्चन्या बहुरत्नया ॥ हारेण च महार्हेण रुचकेन च भूषितम् ॥ ३२ ॥

पयोधर शोभाहीन भएका थिए। पतिको आज्ञा मानेर सरस्वती-वर्ती त्यस सरोवरमा डुबुल्की लगाउनासाथ पानी भित्र बस्ता एक हजार तरुणीलाई देवहूतिले देखिन्, जसको शरीरबाट कमलको झैं सुगन्ध निस्किरहेको थियो र ती विमानमा बसेका थिए। ती सबै देवहूतिलाई देख्नासाथ हड्बडाएर जुरुक्क उठे र हात जोरेर भन्नलागे–हामी हजुरका दासी हौं। हामीलाई के गर्न हो, आज्ञा दिनोस्? ती तरुणीहरूले ठुकुरा, मालिश गरेपछि देवहूतिलाई स्नान गराई नवीन वस्त्र र आभूषण लगाउन दिए। षड्रस भोजन गराएर स्वादिष्ट अमृत पान गराए ॥२४-२९॥ देवहूतिले ऐना हेरिन र आफू देखिन् कि उनी सफा धोती, माला लगाएकी छन्, दासीहरू आदरपूर्वक मंगलाचार गरिरहेछन् ती सुन र रत्न-जडित हार पहिरेकी, हातमा चुरा, पाउमा सुनका पाउजेब र कम्मरमा रत्न जडित करधनी छ ॥३०-३१॥ तिनको निधारमा कुमकुम र देहमा अङ्गराग लगाएको छ। सुन्दर दाँत

राम्रा आँखीभौं, प्रेमपूर्ण दृष्टि, ठूला-ठूला आँखा र कालो कपालले तिनको मुख राम्रो देखिन्थ्यो ॥३२-३३॥ अनि तिनले प्राणनाथ कर्दम ऋषिको स्मरण गर्नासाथ नै दास-दासीहरू सहित आफूलाई उनको नगीचै पाइन् ॥३४॥ पतिको त्यो योगशक्ति देखेर ती सशङ्क भइन् । कर्दम ऋषिले देखे—देवहूति मङ्गल स्नान गरेर राम्रा-राम्रा लुगा लगाएपछि नयाँ बेउली जस्तै देखिइरहेकी थिइन् । तिनले चोलो लगाएकी छन् र हजारौं विद्याधरी परिचर्यामा उभिएका छन् । तिनलाई देखेर ऋषिले प्रेमवश भई विमानमा चढाले ॥३५-३७॥ असाधारण महिमामयी विद्याधरीहरूद्वारा सेवित प्रतापी कर्दम ऋषि विमानमा आफ्नी पत्नीसहित आकाशमा नक्षत्रका माझ चन्द्रमा झैं शोभित भए ॥३८॥ सिद्धहरूका आदरणीय कर्दम ऋषि ती स्त्रीहरूका साथ त्यस विमानमा चढेर सुमेरु पर्वतका कन्दरामा निकै दिनसम्म विहार गर्दै रहे । त्यहाँ शीतल मन्द-सुगन्ध पवन

सुदता सुभ्रुवा श्लक्ष्णस्निग्धापाङ्गेन चक्षुषा ॥ पद्मकोशस्पृधा नीलैरलकैश्च लसन्मुखम् ॥ ३३ ॥ यदा सस्मार ऋषभमृषीणां दयितं पतिम् ॥
तत्र चास्ते सह स्त्रीभिर्यत्रास्ते स प्रजापतिः ॥ ३४ ॥ भर्तुः पुरस्तादात्मानं स्त्रीसहस्रवृतं तदा ॥ निशाम्य तद्योगगतिं संशयं प्रत्यपद्यत ॥ ३५ ॥
स तां कृतमलस्नानां विभ्राजन्तीमपूर्ववत् ॥ आत्मनो बिभ्रतीं रूपं संवीतरुचिरस्तनीम् ॥३६॥ विद्याधरीसहस्रेण सेव्यमानां सुवाससम् ॥ जातभावो
विमानं तदारोहयदमित्रहन् ॥ ३७ ॥ तस्मिन्नलुप्तमहिमा प्रिययाऽनुरक्तो विद्याधरीभिरुपचीर्णवपुर्विमाने ॥ बभ्राज उत्कचकुमुद्गणवानपीच्यस्तारा-
भिरावृत इवोडुपतिर्नभःस्थः ॥३८॥ तेनाष्टलोकपविहारकुलाचलेन्द्रद्रोणीस्वनङ्गसखमारुतसौभगासु ॥ सिद्धैर्नुतो द्युधुनिपातशिवस्वनासु रेमे चिरं
धनदवल्ललनावरूथी ॥३९॥ वैश्रम्भके सुरसने नन्दने पुष्पभद्रके ॥ मानसे चैत्ररथ्ये च स रेमे रामया रतः ॥४०॥ भ्राजिष्णुना विमानेन कामगेन
महीयसी ॥ वैमानिकानत्यशेत चरँल्लोकान्यथानिलः ॥४१॥ किं दुरापादनं तेषां पुंसामुद्दामचेतसाम् ॥ यैराश्रितस्तीर्थपदश्चरणो व्यसनात्ययः ॥४२॥
प्रेक्षयित्वा भुवो गोलं पत्न्यै यावान्स्वसंस्थया ॥ बह्वाश्चर्यं महायोगी स्वाश्रमाय न्यवर्तत ॥ ४३ ॥ विभज्य नवधाऽऽत्मानं मानवीं सुरतोत्सुकाम् ॥
रामां निरमयन्रेमे वर्षपूगान्मुहूर्तवत् ॥ ४४ ॥ तस्मिन्विमान उत्कृष्टां शय्यां रतिकरीं श्रिता ॥ न चाबुध्यत तं कालं पत्याऽपीच्येन संगता ॥४५॥

चलिरहेथ्यो र गङ्गाको प्रपातको मनोहर ध्वनि सुनिन्थ्यो । इन्द्रादि लोकपालहरूको विहारस्थल त्यहाँ पर्वतमा बनेका थिए । कर्दम ऋषिले आफ्नी भार्यासहित देवताको उद्यान, वैश्रम्भक, सुरसन, नन्दन, पुष्पभद्र, चैत्ररथ तथा मानसरोवरमा विहार गरे ॥३९-४०॥ कर्दम ऋषिको त्यो देदीप्यमान विमान इच्छाचारी र ठूलो मूल्यवान थियो । त्यस द्रुतगामी विमानमा चढेर कर्दम मुनि सबै विमानवासीहरूमा अगाडि गएर इच्छानुसार डुल्दथे ॥ ४१ ॥ जसले भगवान्‌का पवित्र चरणको आश्रय लिइसकेको छ, तिनका सबै संकट काटिन्छन र तिनको निम्ति केही पनि दुर्लभ रहन्न । यसरी नद-नदी र पर्वत आदिले आश्चर्यपूर्ण समस्त भूमण्डल आफ्नी पत्नीलाई देखाएर कर्दम ऋषि फेरि आश्रममा फर्कर आए॥४२-४३॥ नौ सन्तान उत्पन्न गर्ने इच्छा भएका कर्दम रतिको निम्ति उत्सुक देवहूतिसित वर्षौं विहार गर्दैरहे, तर तिनलाई त्यति वर्षा समय एक मुहूर्तजस्तै लाग्यो ॥४४॥

त्यस उत्तम विमानमा पनि रानी भन्या विछाएको थियो कि त्यसमा र मण गर्नाले देवहूतिलाई कति समय बित्यो भन्ने ज्ञान हुनसकेन ॥४५॥ योगद्वारा अभीष्ट सामग्री उत्पन्न गर्नमा समर्थ र कामकेलि-निरत दम्पतिले यसरी रमण गर्दागर्दै सय वर्षको समय एक क्षण समान बितेर गयो ॥४६॥ देवहूतिको अनेक सन्तान विषयक इच्छा जानेर आत्मज्ञानी र योगशक्ति सम्पन्न कर्दमले आफ्नो वीर्य नौ भागमा विभक्त गरेर गर्भाधान गरे ॥४७॥ अतः देवहूतिका गर्भबाट सर्वाङ्ग सुन्दरी नौ कन्या उत्पन्न भए। तिनको देहबाट रातो कमलको जस्तै सुगन्ध निस्किरहेको थियो। विवाह समयको प्रतिज्ञानुसार कर्दम ऋषिलाई गृहस्थी त्याग्न तयार देखेर देवहूति दुःखी भइन्। तर तिनले आँसुको वेग रोकेर हृदयको वेदना प्रकट हुन दिइनन्। औँला टाउको गरेर सुहाउँदो पहेंलोले माटो कोट्याउँदै, मुसुक्क हाँसेर मधुर वचन बोलिन् ॥४८-५०॥ देवहूतिले भनिन्–हे भगवन्! हजुरले प्रतिज्ञा पूर्ण गर्नुभयो, अब शरणागतको रक्षाको पनि प्रबन्ध गरिदिनोस् ॥५१॥ हजुर वनवासी भएपछि यी छोरीहरूको विवाहको भारी मेरै टाउकोमा पर्नछ। त्यस

एवं योगानुभावेन दम्पत्यो रममाणयोः ॥ शतं व्यतीयुः शरदः कामलालसयोर्मनाक् ॥४६॥ तस्यामाधत्त रेतस्तां भावयन्नात्मनाऽऽत्मवित् ॥ नवधा
विधाय रूपं स्वं सर्वसंकल्पविद्विभुः ॥ ४७ ॥ अतः सा सुषुवे सद्यो देवहूतिः स्त्रियः प्रजाः ॥ सर्वास्ताश्चारुसर्वाङ्ग्यो लोहितोत्पलगन्धयः ॥ ४८ ॥
पतिं सा प्रव्रजिष्यन्तं तदालक्ष्योशती सती ॥ स्मयमाना विक्लवेन हृदयेन विदूयता ॥ ४९ ॥ लिखन्त्यधोमुखी भूमिं पदा नखमणिश्रिया ॥ उवाच
ललितां वाचं निरुध्याश्रुकलां शनैः ॥५०॥ देवहूतिरुवाच ॥ सर्वं तद्भगवान्मह्यमुपोवाह प्रतिश्रुतम् ॥ अथापि मे प्रपन्नाया अभयं दातुमर्हसि ॥५१॥
ब्रह्मन्दुहितृभिस्तुभ्यं विमृग्याः पतयः समाः ॥ कश्चित्स्यान्मे विशोकाय त्वयि प्रव्रजिते वनम् ॥५२॥ एतावताऽलं कालेन व्यतिक्रान्तेन मे प्रभो ॥
इन्द्रियार्थप्रसङ्गेन परित्यक्तपरात्मनः ॥ ५३ ॥ इन्द्रियार्थेषु सजन्त्याः प्रसङ्गस्त्वयि मे कृतः ॥ अजानन्त्या परं भावं तदाऽप्यस्त्वभयाय मे ॥ ५४ ॥
सङ्गो यः संसृतेर्हेतुरसत्सु विहितोऽधिया ॥ स एव साधुषु कृतो निःसङ्गत्वाय कल्पते ॥ ५५ ॥ नेह यत्कर्म धर्माय न विरागाय कल्पते ॥ न
तीर्थपदसेवायै जीवन्नपि मृतो हि सः ॥ ५६ ॥ साऽहं भगवतो नूनं वञ्चिता मायया दृढम् ॥ यत्त्वां विमुक्तिदं प्राप्य न मुमुक्षेय बन्धनात् ॥ ५७ ॥
इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेयोपाख्याने त्रयोविंशोऽध्यायः ॥ २३ ॥ मैत्रेय उवाच ॥ निर्वेदवादिनीमेवं मनोर्दुहितरं मुनिः ॥

दशामा अर्थात् छोरीहरू आफ्आफ्ना घर गइसकेपछि मलाई सान्त्वना दिने त कोही चाहिन्छ ॥५२॥ मेरो आजसम्मको समय विषय-सुख भोगमै बितेर गयो। मैले भगवान्‌को भजन पनि गर्न पाइन ॥५३॥ हजुरको महत्व नबुझ्नाले म हजुरसित क्रीडा गरिरहें। जे हुने कुरा त भइसक्यो तर अब यस्तो उपाय गर्नुहोस्–जसले गर्दा मेरो सहजै उद्धार हुन सकोस् ॥५४॥ अविवेकले गर्दा अज्ञानी हरूसित गरिएको सम्पर्क बन्धनको कारण बन्दछ, यदि त्यही सम्पर्क सज्जनहरूसित गरिन्छ भने त्यही मोक्षको कारण बन्न जान्छ ॥५५॥ संसारमा आएर जसले न धर्म गर्‍यो, न कर्म गर्‍यो, न वैराग्यको अवलम्बन गर्‍यो, न भगवान्‌को आराधना नै गर्‍यो, त्यो जीउँदै भएर पनि मृतक हो ॥५६॥ म यस्ती नै हुँ। भगवान्‌की मायाले मलाई राम्रै ठगिन्, त्यसैले त म हजुरजस्ता आत्मज्ञानी पति प्राप्त गरेर पनि मुक्ति पाउने उद्योग गरिन ॥५७॥ इति श्रीमद्भागवते महापुराणे तृतीय-

इति श्री नेपाली भाषाटीकायां त्रयोविंशोऽध्यायः ॥२३॥ ( कपिलको जन्म र कर्दमको वनवास ) मैत्रेय भन्दछन्—हे विदुर ! देवहूतिको वैराग्यपूर्ण वचन सुनेर भगवान्‌को कथन स्मरण गरेर कर्दम ऋषिले देवहूतिसित भने—॥१॥ हे राजकुमारी ! तिमी कुनै कुराको चिन्ता नगर । तिम्रो कल्याण हुनेछ । तिमी इन्द्रिय वशमा पारेर स्वधर्म पालन, तप तथा दान द्वारा श्रद्धापूर्वक भगवानलाई भज ॥२-३॥ यस्तो गरेमा ती स्वयं तिम्रो गर्भबाट जन्म लिएर मेरो यश बढाउनन् र तिमीलाई तत्त्वज्ञानको उपदेश दिई कृतकृत्य पार्नन् । मैत्रेयजी भन्दछन्—हे विदुर ! प्रजापति कर्दमको उपदेश सुनेर देवहूति भक्ति-भावले भगवान्‌को भजनमा लागिन् ॥४-५॥ यसरी निकै समय बितेपछि प्रजापति कर्दमको वीर्य र देवहूतिको गर्भद्वारा मधुसूदन भगवान् त्यसै गरी प्रकट भए, जसरी घोटिएका समिधाबाट आगो निस्कन्छ ॥ ६ ॥ त्यस समय देवता बाजा रजाउँदै आकाशबाट पुष्पवृष्टि गर्नलागे, गन्धर्व गान गर्नलागे

दयालुः शालिनीमाह शुक्लाभिव्याहृतं स्मरन् ॥ १ ॥ ऋषिरुवाच ॥ मा खिदो राजपुत्रीत्थमात्मानं प्रत्यनिन्दिते ॥ भगवांस्तेऽक्षरो गर्भमदूरात्सम्प्र-
पत्स्यते ॥२॥ धृतव्रताऽसि भद्रं ते दमेन नियमेन च ॥ तपोद्रविणदानैश्च श्रद्धया चेश्वरं भज ॥३॥ स त्वयाऽऽराधितः शुक्लो वितन्वन्मामकं यशः ॥
छेत्ता ते हृदयग्रन्थिमौदर्यो ब्रह्मभावनः ॥४॥ मैत्रेय उवाच ॥ देवहूत्यपि सन्देशं गौरवेण प्रजापतेः ॥ सम्यक्श्रद्धाय पुरुषं कूटस्थमभजद्गुरुम् ॥ ५ ॥
तस्यां बहुतिथे काले भगवान्मधुसूदनः ॥ कार्दमं वीर्यमापन्नो जज्ञेऽग्निरिव दारुणि ॥ ६ ॥ अवादयंस्तदा व्योम्नि वादित्राणि घनाघनाः ॥ गायन्ति
तं स्म गन्धर्वा नृत्यन्त्यप्सरसो मुदा ॥७॥ पेतुः सुमनसो दिव्याः खेचरैरपवर्जिताः ॥ प्रसेदुश्च दिशः सर्वा अम्भांसि च मनांसि च ॥ ८ ॥ तत्कर्दमा-
श्रमपदं सरस्वत्या परिश्रितम् ॥ स्वयम्भूः साकमृषिभिर्मरीच्यादिभिरभ्ययात् ॥ ९ ॥ भगवन्तं परं ब्रह्म सत्त्वेनांशेन शत्रुहन् ॥ तत्त्वसंख्यानविज्ञप्त्यै
जातं विद्वानजः स्वराट् ॥१०॥ सभाजयन्विशुद्धेन चेतसा तच्चिकीर्षितम् ॥ प्रहृष्यमाणैरसुभिः कर्दमं चेदमभ्यधात् ॥ ११ ॥ ब्रह्मोवाच ॥ त्वया मेऽ-
पचितिस्तात कल्पिता निर्व्यलीकतः ॥ यन्मे सञ्जगृहे वाक्यं भवान्मानद मानयन् ॥ १२ ॥ एतावत्येव शुश्रूषा कार्या पितरि पुत्रकैः ॥ बाढमित्य-
नुमन्येत गौरवेण गुरोर्वचः ॥ १३ ॥ इमा दुहितरः सभ्य तव वत्स सुमध्यमाः ॥ सर्गमेतं प्रभावैः स्वैर्बृंहयिष्यन्त्यनेकधा ॥१४॥ अतस्त्वमृषिमुख्ये-
भ्यो यथाशीलं यथारुचि ॥ आत्मजाः परिदेह्यद्य विस्तृणीहि यशो भुवि ॥१५॥ वेदाहमाद्यं पुरुषमवतीर्णं स्वमायया ॥ भूतानां शेवधिं देहं बिभ्राणं

र अप्सराहरू नाच्न लागे ॥७॥ दिशा निर्मल भए । जल स्वच्छ भयो, सबैका चित्त प्रफुल्लित भए ॥८॥ अनि कर्दम ऋषिको सरस्वती आश्रममा मरीचि प्रभृति ऋषिहरू संगै ब्रह्माजी आए ॥९॥ हे विदुर ! संसारलाई तत्त्वज्ञानको उपदेश दिनका लागि कर्दम ऋषिकहाँ भगवान्‌ले अवतार लिए भन्ने जानेर भगवान्‌को इच्छाको हृदयले अनुमोदन गर्दै प्रेमले गद्‌गद् भएर ब्रह्माजी कर्दम ऋषिसित भन्नुहुन्छ ॥१०-११॥ उनले भने—बाबु ! मेरो आज्ञा पालन गरेर तिमीले मेरो सम्मान गरेका छौ ॥१२॥ पुत्रले पिताको आज्ञा पालन गर्नमा तर्क गर्नु अनुचित हो, तिनको ठूलो सेवा यही नै हो ॥१३॥ बाबु ! तिम्रा यी सुन्दरी कन्याहरू अनेक प्रकारले सृष्टि वृद्धि गर्नेछन् ॥१४॥ अतः अब तिमी तिनको विवाह शील-स्वभावमा अनुरूप यी मरीचि प्रभृति ऋषिहरूसित गरिदेऊ । यसले संसारमा तिम्रो यश फैलिन्छ, सबैका मनोरथ पूर्ण गर्नेको निमित्त तिमीकहाँ स्वयं भगवान्‌ले कपिलरूपमा अवतार लिनुभयो

॥ १५ ॥ १६ ॥ अनि देवहूतिसित भने—हे देवहूति ! तिम्रो गर्भबाट पुत्ररूपमा स्वयं भगवान् अवतीर्ण भए। ती ज्ञान-विज्ञानको उपदेश दिएर मुमुक्षुलाई कर्म-बन्धनबाट मुक्त गर्नेछन् र तिम्रो हृदय-पट खोलिदिनेछन्। तिम्रो पुत्र सिद्धहरूका शिरोमणि र तत्त्वज्ञानी ( सांख्याचार्य ) को सम्मान पाई कपिल नामले प्रसिद्ध हुनेछन्। यस्ता पुत्रका आमा हुनाले तिम्रो ठूलो नाम हुनेछ। मैत्रेय भन्दछन्—कर्दम र देवहूतिलाई यसरी आश्वासन दिएर ब्रह्माजी, नारद र सनकादि कुमारसहित हंसमा चढी सत्यलोक गए र विवाहको निम्ति मरीचि आदि प्रमुख ऋषि त्यहीं बसे ॥ १७-२० ॥ अनि प्रजापति कर्दमले ब्रह्माजीको आज्ञानुसार मरीचि प्रभृति ऋषिहरूका साथ आफ्नी छोरीहरूको जेठी-कान्छी आदि सबै बहिनीहरूको यथाक्रम वेदको विधिले विवाह गरिदिए ॥ २१ ॥ उनले महर्षि मरीचिसित कलाको, अत्रिसित अनसूयाको, अंगिरासित श्रद्धाको, पुलस्त्यसित

कपिलं मुने ॥ १६ ॥ ज्ञानविज्ञानयोगेन कर्मणामुद्धरन् जटाः ॥ हिरण्यकेशः पद्माक्षः पद्ममुद्रापदाम्बुजः ॥ १७ ॥ एष मानवि ते गर्भं प्रविष्टः कैटभार्दनः ॥ अविद्यासंशयग्रन्थिं छित्त्वा गां विचरिष्यति ॥१८॥ अयं सिद्धगणाधीशः सांख्याचार्यैः सुसम्मतः ॥ लोके कपिल इत्याख्यां गन्ता ते कीर्तिवर्धनः ॥ १६ ॥ मैत्रेय उवाच ॥ तावाश्वास्य जगत्स्रष्टा कुमारैः सह नारदः ॥ हंसो हंसेन यानेन त्रिधाम परमं ययौ ॥ २० ॥ गते शतधृतौ क्षत्तः कर्दमस्तेन चोदितः ॥ यथोदितं स्वदुहितॄः प्रादाद्विश्वसृजां ततः ॥ २१ ॥ मरीचये कलां प्रादादनसूयामथात्रये ॥ श्रद्धामङ्गिरसेऽय- च्छत्पुलस्त्याय हविर्भुवम् ॥२२॥ पुलहाय गतिं युक्तां क्रतवे च क्रियां सतीम् ॥ ख्यातिं च भृगवेऽयच्छद्वसिष्ठायाप्यरुन्धतीम् ॥ २३ ॥ अथर्व- णेऽददाच्छान्तिं यया यज्ञो वितन्यते ॥ विप्रर्षभान्कृतोद्वाहान्सदारान्समलालयत् ॥ २४ ॥ ततस्ते ऋषयः क्षत्तः कृतदारा निमन्त्र्य तम् ॥ प्राति- ष्ठन्नन्दिमापन्नाः स्वं स्वमाश्रममण्डलम् ॥२५॥ स चावतीर्णं त्रियुगमाज्ञाय विबुधर्षभम् ॥ विविक्त उपसङ्गम्य प्रणम्य समभाषत ॥ २६ ॥ अहो पापच्यमानानां निरये स्वैरमङ्गलैः ॥ कालेन भूयसा नूनं प्रसीदन्तीह देवताः ॥२७॥ बहुजन्मविपक्वेन सम्यग्योगसमाधिना ॥ द्रष्टुं यतन्ते यतयः शून्यागारेषु यत्पदम् ॥२८॥ स एव भगवानद्य हेलनं न गणय्य नः ॥ गृहेषु जातो ग्राम्याणां यः स्वानां पक्षपोषणः ॥ २६ ॥ स्वीयं वाक्यमृतं कर्तुमवतीर्णोऽसि मे गृहे ॥ चिकीर्षुर्भगवान् ज्ञानं भक्तानां मानवर्द्धनः ॥३०॥ तान्येव तेऽभिरूपाणि रूपाणि भगवँस्तव ॥ यानि यानि च रोचन्ते

हविर्भूको, पुलहसित गतिको, क्रतुसित क्रियाको, भृगुसित ख्यातिको, वसिष्ठसित अरुन्धतीको र अथर्वसित शान्तिको विवाह गरिदिए। इनै शान्तिको सहायताले यज्ञको पूर्ति हुन्छ। पछि ती विवाहित ऋषिहरूलाई दाइजो दिएर प्रजापति कर्दमले सम्मानित गरे ॥ २२-२४ ॥ अब ती ऋषि सासू-ससुरासित बिदा मागेर आफ्ना-आफ्ना आश्रममा गए ॥२५॥ मेरो घरमा भगवान्ले अवतार लिए—यो जानेर कर्दम प्रजापतिले एकान्तमा गएर तिनलाई प्रणाम गरेर भने ॥ २६ ॥ संसारमा आफ्ना कर्मको फल भोग गर्ने प्राणीहरू प्रति धेरै बेरमा देवताहरूको कृपा हुन्छ ॥२७॥ योगी जन एकान्तमा बसेर अनेक जन्मान्तरको साधनापछि भक्तियोग द्वारा चित्त एकाग्र पारेर जसको दर्शन पाउनको निम्ति यत्न गर्दछन्, उनै भक्तवत्सल भगवान् हजुर आज हाम्रो त्रुटिहरूमा ध्यानै नदिई हामी जस्ता साधारण व्यक्तिका घरमा आफ्नो प्रतिज्ञा पूर्ण पार्न र भक्तहरूको सम्मान बढाएर विवेक-

प्रधान सांख्यशास्त्रको प्रचारगर्नका निम्ति अवतीर्ण भएका हुन ॥२८-३०॥ हे भगवन् ! यद्यपि हजुर निर्गुण हुनुहुन्छ, तथापि भक्तगणलाई हजुरको जुन चतुर्भुज आदि रूपप्रिय छन्, ती हजुर धारण गर्नुहुन्छ ॥३१॥ तत्त्वज्ञान प्राप्तिका लागि ठूला-ठूला ज्ञानी-ध्यानी हजुरका चरणको वन्दना गर्दछन् । ऐश्वर्य, वैराग्य, यश, तत्त्वज्ञान, श्रम र लक्ष्मी, यी षड्विध-ऐश्वर्यले हजुर पूर्ण हुनुहुन्छ, म हजुरका शरणमा छु ।।३२॥ हजुर नै परमात्मा, प्रकृति, पुरुष ( मायाका अधिष्ठाता ) महतत्त्व, काल, त्रिविध अहङ्कार लोक र लोकपाल हुनुहुन्छ । सारा प्रपञ्च हजुरका चेतना शक्तिको खेल हो । हजुर स्वाधीन शक्तिमा र सर्वज्ञ हुनुहुन्छ, म हजुरको शरणमा छु ।।३३।। म तहाँ हजुर अवतीर्ण भइदिनाले म तीनै ऋणका ऋणबाट मुक्त भएँ र मेरा मनोरथ पूर्ण भए । म अब संन्यास लिएर हृदयमा हजुरको ध्यान गर्दै संसारका प्रपंचबाट जोगिंदै शान्तभावले डुलें—यही बल मलाई दिनुहवस् ॥ ३४ ॥ भगवानले

स्वजना नामरूपिणः ॥ ३१ ॥ त्वां सूरिभिस्तत्त्वबुभुत्सयाऽद्धा सदाभिवादार्हणपादपीठम् ॥ ऐश्वर्यवैराग्ययशोऽवबोधवीर्यश्रिया पूर्णमहं प्रपद्ये ॥३२॥ परं प्रधानं पुरुषं महान्तं कालं कविं त्रिवृतं लोकपालम् ॥ आत्मानुभूत्याऽनुगतप्रपञ्चं स्वच्छन्दशक्तिं कपिलं प्रपद्ये ॥ ३३ ॥ आस्माभिपृच्छेऽद्य पतिं प्रजानां त्वयाऽवतीर्णर्ण उताप्तकामः ॥ परिव्रजत्पदवीमास्थितोऽहं चरिष्ये त्वां हृदि युञ्जन्विशोकः ॥ ३४ ॥ श्रीभगवानुवाच ॥ मया प्रोक्तं हि लोकस्य प्रमाणं सत्यलौकिके ॥ अथाजनि मया तुभ्यं यदवोचमृतं मुने ॥ ३५ ॥ एतन्मे जन्म लोकेऽस्मिन्मुमुक्षूणां दुराशयात् ॥ प्रसंख्यानाय तत्त्वानां सम्मतायात्मदर्शने ॥३६॥ एष आत्मपथोऽव्यक्तो नष्टः कालेन भूयसा ॥ तं प्रवर्तयितुं देहमिमं विद्धि मया धृतम् ॥३७॥ गच्छ कामं मया पृष्टो मयि संन्यस्तकर्मणा ॥ जित्वा सुदुर्जयं मृत्युममृतत्वाय मां भज ॥ ३८ ॥ मामात्मानं स्वयंज्योतिः सर्वभूतगुहाशयम् ॥ आत्मन्येवात्मना वीक्ष्य विशोकोऽभयमृच्छति ॥३९॥ मात्रे चाध्यात्मिकीं विद्यां शमनीं सर्वकर्मणाम् ॥ वितरिष्ये यथा चासौ भयं चातितरिष्यति ॥४०॥ मैत्रेय उवाच ॥ एवं समुदितस्तेन कपिलेन प्रजापतिः ॥ दक्षिणीकृत्य तं प्रीतो वनमेव जगाम ह ॥४१॥ व्रतं स आस्थितो मौनमात्मैकशरणो मुनिः ॥ निःसङ्गो व्यचरत्क्षोणीमनग्निरनिकेतनः ॥४२॥ मनो ब्रह्मणि युञ्जानो यत्तत्सदसतः परम् ॥ गुणावभासे विगुण एकभक्त्याऽनुभाविते ॥४३॥ निरहंकृतिर्निर्ममश्च निर्द्वन्द्वः समदृक् स्वदृक् ॥ प्रत्यक्प्रशान्तधीर्धीरः प्रशान्तोर्मिरिवोदधिः ॥ ४४ ॥ वासुदेवे भगवति सर्वज्ञे प्रत्य-

भन्नुभयो—तिम्रो गर्भमा अवतार लिनाले मेरो प्रतिज्ञा पूर्ण भयो । मेरो वचन अन्यथा हुन सक्तैन ।।३५। मेरो यो जन्म मुमुक्षुहरूलाई प्रकृति आदि तत्त्वको उपदेश दिनका लागि भएको हो । यो अध्यात्म ज्ञानको बाटो कालक्रमले लुप्त झैं भएको थियो । त्यही मार्ग प्रवर्तित गर्नको निम्ति मेरो अवतार भएको हो ।।३६-३७।। अब तिमी जान सक्तछौ—दुर्जय मृत्युलाई निष्काम कर्मद्वारा जितेर मुक्ति प्राप्त गर्नको निम्ति मेरो भजन गर ।।३८।। म स्वयं प्रकाश, अन्तर्यामी र सर्वव्यापक छु । आफ्नो आत्मामै एकाग्र मनले मेरो भजन गर्दा-गर्दै तिमी सांसारिक क्लेशहरूबाट छुटेर परमपद प्राप्त गर्नेछौ ।।३९।। माता देवहूतिलाई पनि म आत्मज्ञानको उपदेश दिनेछु [illegible] संचित, प्रारब्ध र क्रियमाण कर्महरूको वासना नष्ट भएर तिनलाई मुक्ति प्राप्त हुनेछ ।।४०।। मैत्रेयजी भन्दछन्—कपिलदेवजीले यसरी भनेपछि महर्षि कर्दमले [illegible] वनमा प्रस्थान गरे ॥४१॥ ती सबै वस्तु त्यागेर

भावनामा धारण गरी विचरण गर्न लागे। ब्रह्ममा मन लगाइदिनाले तिनको अहङ्कार गयो। ती निर्द्वन्द्व र समदर्शी भए आत्मज्ञानको प्राप्ति हुनाले समुद्र जस्तै गम्भीर र शान्तभए ॥४२-४३-४४॥ यस प्रकार भगवान्‌मा मनलाई निश्चल पारिदिनाले तिनका सारा बन्धन काटिए र ती आफूलाई सबैमा र सबैलाई भगवान्‌मा तथा भगवान्‌लाई आफ्नो आत्मामा देख्न लागे ॥४५-४६॥ समदर्शी महर्षिको राग द्वेष आदि द्वन्द्वबाट मुक्त हृदयमा भगवद्भक्तिको उद्रेक हुनाले उनलाई मुक्ति प्राप्त भयो ॥४६॥ इति श्रीमद्भागवते तृतीयस्कन्धे नेपाली भाषा टीकायां चतुर्विंशोऽध्यायः ॥२४॥ (कपिलदेवले माता देवहूतिसित भक्तिका लक्षणहरूको वर्णन) शौनकजीले भने—हे सूतजी! अजन्मा भएर पनि आत्मतत्त्वको उपदेश दिनका लागि भगवानले सांख्यशास्त्रका प्रवर्तक कपिलको रूपमा अवतार लिएका थिए ॥१॥ ती योगीश्रेष्ठ कपिलदेवको गुणगान सुनेर मलाई तृप्ति भएन। उनले आफ्नो मायाद्वारा जो लीला गरेका हुन्

गात्मनि ॥ परेण भक्तिभावेन लब्धात्मा मुक्तबन्धनः ॥ ४५ ॥ आत्मानं सर्वभूतेषु भगवन्तमवस्थितम् ॥ अपश्यत्सर्वभूतानि भगवत्यपि चात्मनि ॥ ४६ ॥ इच्छाद्वेषविहीनेन सर्वत्र समचेतसा ॥ भगवद्भक्तियुक्तेन प्राप्ता भागवती गतिः ॥ ४७ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेये चतुर्विंशतितमोऽध्यायः ॥२४॥ शौनक उवाच ॥ कपिलस्तत्त्वसंख्याता भगवानात्ममायया ॥ जातः स्वयमजः साक्षादात्मप्रज्ञप्तये नृणाम् ॥१॥ न ह्यस्य वर्ष्मणः पुंसां वरिम्णः सर्वयोगिनाम् ॥ विश्रुतौ श्रुतदेवस्य भूरि तृप्यन्ति मेऽसवः ॥ २ ॥ यद्यद्विधत्ते भगवान्स्वच्छन्दात्माऽऽत्ममायया ॥ तानि मे श्रद्दधानस्य कीर्तन्यान्यनुकीर्तय ॥३॥ सूत उवाच ॥ द्वैपायनसखस्त्वेवं मैत्रेयो भगवांस्तथा ॥ प्राहेदं विदुरं प्रीत आन्वीक्षिक्यां प्रचोदितः ॥४॥ मैत्रेय उवाच ॥ पितरि प्रस्थितेऽरण्यं मातुः प्रियचिकीर्षया ॥ तस्मिन्बिन्दुसरेऽवात्सीद्भगवान्कपिलः किल ॥ ५ ॥ तमासीनमकर्माणं तत्त्वमार्गाग्रदर्शनम् ॥ स्वसुतं देवहूत्याह धातुः संस्मरती वचः ॥ ६ ॥ देवहूतिरुवाच ॥ निर्विण्णा नितरां भूमन्नसदिन्द्रियतर्पणात् ॥ येन सम्भाव्यमानेन प्रपन्नाऽन्धं तमः प्रभो ॥ ७ ॥ तस्य त्वं तमसोऽन्धस्य दुष्पारस्याद्य पारगम् ॥ सच्चक्षुर्जन्मनामन्ते लब्धं मे त्वदनुग्रहात् ॥ ८ ॥ य आद्यो भगवान्पुंसामीश्वरो वै भवान्किल ॥ लोकस्य तमसाऽन्धस्य चक्षुः सूर्य इवोदितः ॥ ९ ॥ अथ मे देव सम्मोहमपाक्रष्टुं त्वमर्हसि ॥ योऽवग्रहोऽहंममेतीत्येतस्मिन्योजितस्त्वया ॥ १० ॥ तं त्वा गताऽहं शरणं शरण्यं स्वभृत्यसंसारतरोः कुठारम् ॥ जिज्ञासयाऽहं प्रकृतेः

तिनको वर्णन गर्नुहवस् ॥२-३॥ सूतजी भन्दछन्—विदुरले आत्मविद्या विषयक प्रश्न गरेपछि व्यासका मित्र मैत्रेयजीले भने—प्रजापति कर्दम वनमा गएपछि कपिलदेव आफ्नी माताको कल्याण निम्ति त्यहीं बिन्दुसरमा निवास गर्नलागे ॥४-५॥ ब्रह्माका वचन स्मरण गरेर देवहूतिले तत्त्वमार्गका पारदर्शी र निष्क्रिय आफ्ना पुत्रसित भनिन्—सांसारिक विषय भोगहरूबाट अघाइसकें। यी विषय भोगको कारणले नै म भवसागरमा डुबेकी छु। अनेक जन्मपछि दुस्तर सागरलाई तर्नको निम्ति तिमी मलाई भेटियौ। तिमी आदिपुरुष साक्षात् भगवान हौ। अज्ञानान्धकारमा परेका मानिसलाई बाटो देखाउन सूर्य झैं तिम्रो जन्म भएको छ। प्राणिहरूलाई तिमी नै मोह-मायामा जकडाउँछौ ॥६-१०॥ अब मेरो अज्ञान हटाऊ। म तिमी

शरणमा छु। तिमी शरणागत रक्षक भक्तजनको जन्म-मरणरूपी वृक्षको जरो काट्ने बञ्चरो हौ। मलाई प्रकृति र पुरुषको मर्म बुझाऊ। धर्मका ज्ञाताहरूमा श्रेष्ठ, तिमीलाई नमस्कार छ। मैत्रेयजी भन्दछन्—माता देवहूतिको मुक्तिविषयक प्रश्न सुनेर तत्त्वज्ञानीहरूलाई मोक्ष दिने कपिलदेवले हाँसेर भने—हे माता! मेरो विचारमा त आध्यात्मिक योगनै प्राणिहरूलाई मुक्ति दिने उत्तम बाटो हो ॥११-१२॥ त्यस योगले सुख-दुःख आदिका धृत्तिहरू सर्वथा नष्ट हुन्छन्। मैले यस योगको साङ्गोपाङ्ग उपदेश ऋषिहरूलाई पहिले नै दिइसकेको छु, तापनि तिमीले सोधेकी हुनाले त्यसको फेरि वर्णन गर्दछु। वस्तुतः मन नै बन्धन र मोक्षको कारण हो। शब्दादि विषयमा मन अल्झनाले बन्धनमा गाडिइरहन्छ। जब त्यही मन भगवान्मा लाग्दछ तब मुक्ति प्राप्त हुन्छ ॥१३-१५॥ मोहबाट उत्पन्न काम, क्रोध, लोभ आदि मल नरहेपछि जब मन शुद्ध हुन्छ, तब सुख-दुःख आदि मनका वृत्तिहरू स्वयं हट्दछन्

पुरुषस्य नमामि सद्धर्मविदां वरिष्ठम् ॥११॥ मैत्रेय उवाच ॥ इति स्वमातुर्निरवद्यमीप्सितं निशम्य पुंसामपवर्गवर्धनम् ॥ धियाऽभिनन्द्यात्मवतां सतां गतिर्बभाष ईषत्स्मितशोभिताननः ॥ १२ ॥ श्रीभगवानुवाच ॥ योग आध्यात्मिकः पुंसां मतो निःश्रेयसाय मे ॥ अत्यन्तोपरतिर्यत्र दुःखस्य च सुखस्य च ॥ १३ ॥ तमिमं ते प्रवक्ष्यामि यमवोचं पुराऽनघे ॥ ऋषीणां श्रोतुकामानां योगं सर्वाङ्गनैपुणम् ॥ १४ ॥ चेतः खल्वस्य बन्धाय मुक्तये चात्मनो मतम् ॥ गुणेषु सक्तं बन्धाय रतं वा पुंसि मुक्तये ॥ १५ ॥ अहंममाभिमानोत्थैः कामलोभादिभिर्मलैः ॥ वीतं यदा मनः शुद्धमदुःखमसुखं समम् ॥ १६ ॥ तदा पुरुष आत्मानं केवलं प्रकृतेः परम् ॥ निरन्तरं स्वयंज्योतिरणिमानमखंडितम् ॥ १७ ॥ ज्ञानवैराग्ययुक्तेन भक्तियुक्तेन चात्मना ॥ परिपश्यत्युदासीनं प्रकृतिं च हतौजसम् ॥ १८ ॥ न युज्यमानया भक्त्या भगवत्यखिलात्मनि ॥ सदृशोऽस्ति शिवः पन्था योगिनां ब्रह्मसिद्धये ॥ १९ ॥ प्रसङ्गमजरं पाशमात्मनः कवयो विदुः ॥ स एव साधुषु कृतो मोक्षद्वारमपावृत्तम् ॥ २० ॥ तितिक्षवः कारुणिकाः सुहृदः सर्वदे-

र साम्यावस्था प्राप्त हुन्छ ॥ १६ ॥ त्यस बेला चित्त ज्ञान, वैराग्य र भक्ति-युक्त भएपछि साधकलाई शुद्ध स्वरूप, अप्राकृतिक, भेदरहित, स्वयं प्रकाश, परम सूक्ष्म, अखण्ड र उदासीन आत्माको दर्शन मिल्दछ र प्रकृतिको क्षीणताको पनि ज्ञान भएर आउँछ ॥१७-१८॥ भगवद्भक्ति बाहेक मुक्ति पाउने कुनै अर्को कल्याणप्रद बाटो छैन। ज्ञानी जनले विषयमा आसक्तिलाई * आत्माको प्रबल बन्धन मानेको छ तर उही आसक्ति यदि सन्तानको सत्सङ्गमा परिणत भयो भने मोक्ष सुलभ हुन्छ॥१९-२०॥ साधु (सज्जन) तीनै हुन् जो जाडो-गर्मी,

* दृष्टान्त—(आत्मत्याग) एक पल्ट वृत्रासुरको प्रतापले इन्द्र स्वर्गभ्रष्ट भए। त्यस बेलादेखि सबै देवता वृत्रासुरको अत्याचारले दुःखी रहन लागे। त्यस दैत्यले कठोर तप गरेर ब्रह्माजीसित वरदान पाएको थियो, जसले पत्थर आदि पुनै धातु, काठ वा पञ्चद्वारा त्यसको वध हुन सक्तैनथ्यो। अनि देवगुरु बृहस्पतिको उपदेशबाट इन्द्र उमतपी दधीचि मुनिको शरणमा गए र उनीसित आफ्नो हाड दिने प्रार्थना गरे। एक पल्ट तिनै इन्द्रले मुनिको तपस्यामा विघ्न पारेर शत्रु जस्तो व्यवहार गरेका थिए। तर उन्नत विचारका व्यक्ति त्यस्तो मौकामा निजी शत्रुतालाई सम्झन्नन्। सबै देवताहरूको कल्याण गर्ने उद्देश्यले आत्मत्यागी दधीचि मुनिले प्रसन्नता साथ प्राण त्यागेर आफ्नो हाड अस्त्र बनाउनको निमित्त इन्द्रलाई दान गरेर दिए। त्यही हाडको वज्र बनाए र वृत्रासुरको वध गरे। यस प्रकार तिमले हाडको बाटाबाट देवताहरूको रक्षा गरे। धन्य थिए ती महर्षि दधीचि!

२९।

सुख-दुःखादि द्वन्द्वहरू सहन्छन्, जो परमदयालु र लोकहितचिन्तक छन् तथा जो राग-द्वेषबाट टाढा र शान्तस्वभावका छन्, जो अनन्यभावले मेरो भक्ति गर्दछन् । मेरो निम्ति जो सबै त्यागिदिन्छन् । भाई-बन्धुको मोह तिनको साधनामा विघ्न पार्नसक्तैन । जो मेरो कथा भन्दै सुन्दैरहन्छन् । जो सज्जनहरूलाई त्रिविधतापले दुःख दिंदैनन् ॥२१-२३॥ तिनमा वासनाको लेश पनि रहन्न । हे माता ! तिनै सज्जनको संगति गर्नुपर्दछ । तिमको सम्पर्कमा रहनाले सबै विकार नष्ट हुन्छन् ॥२४॥ तिनको संगति गरे मेरो कर्ण-सुखद पराक्रम गाथाहरु सुन पाइन्छन् । सत्संगले क्रमशः भगवान्मा श्रद्धा, अनि प्रीति र त्यसपछि भक्ति उत्पन्न हुन्छ । मेरो रचनाको चिन्तन गर्दा गर्दै प्राणि भक्ति गर्न लाग्दछ, तब त्यसलाई ऐहिक र पारलौकिक सुखहरूबाट वैराग्य हुन्छ । त्यसपछि त्यो योगयुक्त भएर साधनाद्वारा चित्तवृत्तिहरू संयत पार्दछ । शब्द आदि प्राकृतिक गुणहरूबाट भिन्न रहेर

हिनाम् ॥ अजातशत्रवः शान्ताः साधवः साधुभूषणाः ॥ २१ ॥ मय्यनन्येन भावेन भक्तिं कुर्वंति ये दृढाम् ॥ मत्कृते त्यक्तकर्माणस्त्यक्तस्वजनबान्धवाः ॥ २२ ॥ मदाश्रयाः कथाः मृष्टाः शृण्वन्ति कथयन्ति च ॥ तपन्ति विविधाँस्तापानेतान्मद्‌गतचेतसः ॥ २३ ॥ त एते साधवः साध्वि सर्वसङ्गविवर्जिताः ॥ संगस्तेष्वथ ते प्रार्थ्यः संगदोषहता हि ते ॥ २४ ॥ सतां प्रसंगान्मम वीर्यसंविदो भवन्ति हृत्कर्णरसायनाः कथाः ॥ तज्जोषणादाश्वपवर्गवर्त्मनि श्रद्धा रतिर्भक्तिरनुक्रमिष्यति ॥ २५ ॥ भक्त्या पुमाञ्जातविराग ऐन्द्रियाद्‌दृष्टश्रुतान्मद्रचनानुचिन्तया ॥ चित्तस्य यत्तो ग्रहणे योगयुक्तो यतिष्यते ऋजुभिर्योगमार्गैः ॥ २६ ॥ असेवयाऽयं प्रकृतेर्गुणानां ज्ञानेन वैराग्यविजृम्भितेन ॥ योगेन मय्यर्पितया च भक्त्या मां प्रत्यगात्मानमिहावरुन्धे ॥ २७ ॥ देवहूतिरुवाच ॥ काचित्त्वय्युचिता भक्तिः कीदृशी मम गोचरा ॥ यया पदं ते निर्वाणमंजसाऽन्वाश्रया अहम् ॥ २८ ॥ यो योगो भगवद्वाणो निर्वाणत्मंस्त्वयोदितः ॥ कीदृशः कति चाङ्गानि यतस्तत्त्वावबोधनम् ॥ २९ ॥ तदेतन्मे विजानीहि यथाऽहं मन्दधीर्हरे ॥ सुखं बुद्ध्येय दुर्बोधं योषा भवदनुग्रहात् ॥ ३० ॥ मैत्रेय उवाच ॥ विदित्वाऽर्थं कपिलो मातुरित्थं जातस्नेहो यत्र तन्वाऽभिजातः ॥ तत्त्वाम्नायं यत्प्रवदन्ति सांख्यं प्रोवाच वै भक्तिवितानयोगम् ॥ ३१ ॥ श्रीभगवानुवाच ॥ देवानां गुणलिंगानामानुश्रविककर्मणाम् ॥ सत्त्व एवैकमनसो वृत्तिः स्वाभाविकी तु या ॥३२॥ अनिमित्ता भगवती भक्तिः सिद्धेर्गरीयसी ॥ जरयत्याशु या कोशं निगीर्णमनलो यथा ॥३३॥

ज्ञान-वैराग्ययुक्त योगबाट र मेरो भक्तिद्वारा साधक यही देहले मलाई प्राप्त गर्दछ । देवहूतिले भनिन्—तिम्रो मोक्षात्मक स्वरूपको प्राप्ति कस्तो भक्तिले हुन सक्छ र म (स्त्रीजाति) कुन भक्तिकी अधिकारिणी हुँ ? ॥२५-२८॥ हे मोक्षस्वरूप ! भगवत्प्राप्ति गराउने तत्त्वज्ञानोपयोगी जुन योगको वर्णन गर्न्यौ, त्यसको विधि भन ; त्यसका कति अंग छन् ॥२९॥ मलाई यस्तो उपदेश देऊ—असले मजस्तो मन्दबुद्धि स्त्री पनि तिम्रो कृपाले त्यो दुर्बोध्य योगको सुख बुझ्न सकूँ ॥ ३० ॥ मैत्रेयजी भन्दछन्—आमाका यस्ता वचन सुनेर कपिलदेव प्रसन्न भए । उनले प्रकृति आदि तत्त्वहरूको निरूपण गर्ने सांख्यशास्त्र, विस्तृत भक्ति र योगको उपदेश यसरी दिए ॥३१॥ कपिलजी भन्दछन् शुद्ध तत्त्वमय भगवान्मा इन्द्रियहरूको निष्काम प्रवृत्तिलाई नै भक्ति भन्दछन्, यस्तो भक्ति मुक्ति भन्दा पनि श्रेष्ठ हुन्छ । जठराग्नि जस प्रकार खाएको अन्न पचाउछ, त्यस्तै गर्न भक्ति

लिङ्गदेहलाई नष्ट परिदिन्छ ( लिङ्ग देह नष्ट नभई मुक्ति प्राप्त हुँदैन ) ॥३२-३३॥ मेरा कंहा अनन्य भक्त त भक्तिको साम्मुन्ने मुक्तिलाई पनि आदर दिँदैनन् । ती सबै एकत्र भएर ठूलो श्रद्धासहित मेरो गुण-गान गर्दछन् ॥३४॥ हे माता ! यस्तै भक्तगणलाई मेरो प्रसन्न वदन, अरुण नयन र वरदायक दिव्य रूपहरूको दर्शन मिल्दछ र ती स्वरूपहरूका साथ ती सादर कुरा-कानी गर्दछन् ॥३५॥ मेरा राम्रा अंग, लीला, हास-विलास, कृपा-कटाक्ष र सूक्तिहरूले भक्तजन गद्‌गद् भएर तन्मय हुन्छन् । यद्यपि तिनलाई कुनै वस्तुको इच्छा रहन्न तथापि मेरो निष्काम भक्ति तिनलाई मुक्त पारिदिन्छ ॥३६॥ यद्यपि तिनलाई अणिमादि आठ थरिका सिद्धिहरू र सत्यलोक आदिको भोग-सम्पत्ति अभीष्ट हुँदैन, किनकि यस्ता जन अविद्याको प्रपञ्चबाट पारि तरिसक्छन्, तथापि ती मेरो निष्काम भक्तिको प्रभावले उल्लिखित ऐश्वर्य र भोग-सम्पत्तिको उपयोग वैकुण्ठमा गर्दछन् ॥ ३७ ॥ जो व्यक्ति मलाई हृदयबाटै चाहन्छन् र मलै आत्मा, सन्तान, सखा, मित्र, गुरु र अनुकूल भाग्य ठान्दछन्, ती अनन्य भक्तगणमा कालचक्रको प्रभाव पर्दैन ॥३८॥ जो मेरा अनन्य भक्त

नैकात्मतां मे स्पृहयन्ति केचिन्मत्पादसेवाभिरता मदीहाः ॥ येऽन्योन्यतो भागवताः प्रसज्ज्य सभाजयन्ते मम पौरुषाणि ॥ ३४ ॥ पश्यन्ति ते मे रुचिराण्यम्ब सन्तः प्रसन्नवक्त्रारुणलोचनानि ॥ रूपाणि दिव्यानि वरप्रदानि साकं वाचं स्पृहणीयां वदन्ति ॥ ३५ ॥ तैर्दर्शनीयावयवैरुदारविलासहासेक्षितवामसूक्तैः ॥ हृतात्मनो हृतप्राणांश्च भक्तिरनिच्छतो मे गतिमण्वीं प्रयुङ्क्ते ॥ ३६ ॥ अथो विभूतिं मम मायाविनस्तामैश्वर्यमष्टाङ्गमनुप्रवृत्तम् ॥ श्रियं भागवतीं वा स्पृहयन्ति भद्रां परस्य मे तेऽश्नुवते तु लोके ॥३७॥ न कर्हिचिन्मत्पराः शान्तरूपे नङ्क्ष्यन्ति नो मेऽनिमिषो लेढि हेतिः ॥ येषामहं प्रिय आत्मा सुतश्च सखा गुरुः सुहृदो दैवमिष्टम् ॥ ३८ ॥ इमं लोकं तथैवामुमात्मानमुभयायिनम् ॥ आत्मानमनु ये चेह ये रायः पशवो गृहाः ॥३९॥ विसृज्य सर्वानन्यांश्च मामेव विश्वतोमुखम् ॥ भजन्त्यनन्यया भक्त्या तान्मृत्योरतिपारये ॥ ४० ॥ नान्यत्र मद्भगवतः प्रधानपुरुषेश्वरात् ॥ आत्मनः सर्वभूतानां भयं तीव्रं निवर्तते ॥ ४१ ॥ मद्भयाद्वाति वातोऽयं सूर्यस्तपति मद्भयात् ॥ वर्षतीन्द्रो दहत्यग्निर्मृत्युश्चरति मद्भयात् ॥४२॥ ज्ञानवैराग्ययुक्तेन भक्तियोगेन योगिनः ॥ क्षेमाय पादमूलं मे प्रविशन्त्यकुतोभयम् ॥ ४३ ॥ एतावानेव लोकेऽस्मिन्पुंसां निःश्रेयसोदयः ॥ तीव्रेण भक्तियोगेन मनो मय्यर्पितं स्थिरम् ॥ ४४ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेयोपाख्याने पञ्च-

इहलोक, परलोक र स्त्री-पुत्र, घर-द्वार तथा अन्य सांसारिक वस्तुहरूको परित्याग गरेर म सर्वव्यापकलाई भज्दछन्, तिनलाई म भवसागरबाट पारी तारिदिन्छु ॥३९-४०॥ प्रकृति-पुरुषका अधिपति, समस्त प्राणीका अन्तरात्मा एवं षडैश्वर्य युक्त म ईश्वर बाहेक अरु कसैको सहायताबाट मृत्युरूपी महाभयबाट मुक्ति पाउनु असम्भव छ ॥४१॥ मेरो नै भयले हावा चल्दछ, सूर्य, तापदछन, मेघ बर्सन्छ र आगो बल्दछ । मेरो नै डरले मृत्यु आफ्नो काम गर्दछ । प्रकृति र पुरुषको नियन्तामा म नै हुँ । प्राणिहरूको तीव्र भयलाई म बाहेक अरु कसैले टार्न सक्दैन ॥४२॥ योगीजन आफ्नो कल्याणका लागि वैराग्य र भक्तियोगको मद्दतले मेरो शरणमा आएर निर्भय हुन्छन् ॥४३॥ प्रबल भक्तियोगद्वारा ममा मन लगाइदिनु नै संसारमा मोक्ष प्राप्तिको सर्वोत्तम साधन छ ॥४४॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषा-टीकायां पंचविंशोऽध्यायः ॥२५॥ ( सांख्य शास्त्रोक्त रीतिले

पदार्थहरूको उत्पत्ति) कपिदेवले भने–हे माता ! अब म प्रकृति आदि तत्त्वहरूको लक्षण भन्दछु । तिनलाई जान्नाले जीवात्मा मायाका बन्धनबाट मुक्त हुन्छ ॥१॥ अहङ्कारलाई नष्ट पार्न र जीवात्माको मोक्ष प्राप्तिका लागि म आत्मज्ञानको वर्णन गर्दछु ॥२॥ यो विश्व जुन पुरुषबाट प्रकट हुन्छ, त्यो अनादि आत्मा ( परमात्मा ), चेतनामय, निर्गुण र प्रकृतिबाट पर छ ॥ ३ ॥ सूक्ष्म, दैवी, त्रिगुणात्मिका तथा स्वतः प्राप्त मायालाई त्यस व्यापक पुरुषले जीवरूप भएर स्वेच्छाले ग्रहण गरेको छ ॥ ४ ॥ प्रकृति रचित विविध पदार्थहरू देखेर जीवात्मा भ्रममा पाडिन्छ । कर्म त प्राकृतिक गुणका खेल हुन्, तर यो जीवात्मा भ्रमवश आफूलाई नै तिनको कर्ता मान्दछ । यद्यपि पुरुष ( जीवात्मा ) स्वाधीन, सुखात्मक, अकर्ता र द्रष्टा मात्र हो । तथापि कर्तृत्वको अभिमान गरेर यो जन्म-मरणको प्रवाहमा पर्दछ ॥५॥६॥ शरीर, इन्द्रिय र तिनका अधिष्ठाता देवताहरूको

विंशतितमोऽध्यायः ॥ २५ ॥ श्रीभगवानुवाच ॥ अथ ते संप्रवक्ष्यामि तत्त्वानां लक्षणं पृथक् ॥ यद्विदित्वा विमुच्येत पुरुषः प्राकृतैर्गुणैः ॥ १ ॥ ज्ञानं निःश्रेयसार्थाय पुरुषस्यात्मदर्शनम् ॥ यदाहुर्वर्णये तत्ते हृदयग्रन्थिभेदनम् ॥ २ ॥ अनादिरात्मा पुरुषो निर्गुणः प्रकृतेः परः ॥ प्रत्यग्धामा स्वयंज्योतिर्विश्वं येन समन्वितम् ॥ ३ ॥ स एष प्रकृतिं सूक्ष्मां दैवीं गुणमयीं विभुः ॥ यदृच्छयैवोपगतामभ्यपद्यत लीलया ॥ ४ ॥ गुणैर्विचित्राः सृजतीं सरूपाः प्रकृतिं प्रजाः ॥ विलोक्य मुमुहे सद्यः स इह ज्ञानगूहया ॥ ५ ॥ एवं पराभिध्यायेन कर्तृत्वं प्रकृतेः पुमान् ॥ कर्मसु क्रियमाणेषु गुणैरात्मनि मन्यते ॥ ६ ॥ तदस्य संसृतिर्बन्धः पारतन्त्र्यं च तत्कृतम् ॥ भवत्यकर्तुरीशस्य साक्षिणो निर्वृतात्मनः ॥ ७ ॥ कार्यकारणकर्तृत्वे कारणं प्रकृतिं विदुः ॥ भोक्तृत्वे सुखदुःखानां पुरुषं प्रकृतेः परम् ॥८॥ देवहूतिरुवाच ॥ प्रकृतेः पुरुषस्यापि लक्षणं पुरुषोत्तम ॥ ब्रूहि कारणयोरस्य सदसच्च यदात्मकम् ॥ ९ ॥ श्रीभगवानुवाच ॥ यत्तत्त्रिगुणमव्यक्तं नित्यं सदसदात्मकम् ॥ प्रधानं प्रकृतिं प्राहुरविशेषं विशेषवत् ॥१०॥ पञ्चभिः पञ्चभिर्ब्रह्म चतुर्भिर्दशभिस्तथा ॥ एतच्चतुर्विंशतिकं गुणं प्राधानिकं विदुः ॥११॥ महाभूतानि पञ्चैव भूरापोऽग्निर्मरुन्नभः ॥ तन्मात्राणि च तावन्ति गन्धादीनि मतानि मे ॥ १२ ॥ इन्द्रियाणि दश श्रोत्रं त्वग्दृग्रसननासिकाः ॥ वाक्करौ चरणौ मेढ्रं पायुर्दशम उच्यते ॥ १३ ॥ मनो बुद्धिरहङ्कारश्चित्तमित्यन्तरात्मकम् ॥ चतुर्धा लक्ष्यते भेदो वृत्त्या लक्षणरूपया ॥ १४ ॥ एतावानेव संख्यातो ब्रह्मणः सगुणस्य ह ॥ सन्निवेशो मया प्रोक्तो

कार्य, कारण, कर्तृत्व प्रकृति नै हो । सुख-दुःखको अनुभव उपाधियुक्त पुरुषलाई नै हुन्छ ॥७॥८॥ देवहूतिले भनिन्–हे पुरुषोत्तम ! प्रकृति र पुरुष जुन स्थूल-सूक्ष्म (सदसदात्मक) जगत्‌का कारण (जनक) छन्, ती दुवैका लक्षण भन ॥९॥ कपिलदेवले उत्तर दिए–प्रकृति वा प्रधान तत्त्व त्रिगुणात्मक, अव्यक्त र कार्य-कारणात्मक छ । त्यो विशेष धर्मबाट रहित भएर पनि ती धर्महरूको आधार मानिन्छ । श्रोत्र, त्वक्, चक्षु, जिह्वा, नासिका, वाणी, हात, पाउ, उपस्थ, पायु यी दस इन्द्रिय तथा मन, बुद्धि, अहङ्कार र चित्त यी चारै अन्तरिन्द्रियहरूको परिचय यिनका कार्यहरूबाट नै हुन्छ । पृथ्वी, जल, तेज, वायु र आकाश यी पञ्चमहाभूत हुन् । गन्ध, रस, रूप, स्पर्श र शब्द यी पंचतन्मात्राहरू हुन् । यी सबै मिलेर चौबीस तत्त्व भए । यी चौबीसै तत्त्व प्रकृतिका कार्य हुन् । यी तत्त्वलाई ( प्राकृतिक ) कार्यात्मक ब्रह्म पनि भन्दछन् ॥१०-१४॥ काल पच्चीसौं तत्त्व हो । प्रकृतिको एक अवस्थालाई

नै काल भन्दछन् ॥ १५ ॥ कोही जन पुरुष ( ईश्वर ) को पराक्रमलाई नै काल मान्दछन् । कालका दुइ भेद हुन्छन्—पहिलो 'संहारक' र अर्को 'उत्पादक' अविवेकी जीवात्मालाई जसबाट भय रहन्छ त्यो संहारक काल हो र जसद्वारा प्रकृतिलाई क्रियाशक्ति प्राप्त हुन्छ, त्यो उत्पादक काल हो । यसरी भगवान् आफ्नो मायाद्वारा पुरुषरूपबाट प्राणिहरूको भित्र र बाहिर कालरूपबाट विद्यमान रहन्छन् ॥१६-१८॥ उपाधिरहित पुरुषले जीवादिको प्राक्तन कर्मानुसार क्रियाशक्ति र प्रकृतिमा चैतन्यरूप गर्भ स्थापित गरिदिए, तब त्यसले प्रकाशमय महत्तत्त्व उत्पन्न भयो ॥१९॥ त्यस महत्तत्त्वले तेजबाट प्रलयकालीन अन्धकारलाई हटाएर आफूमा सूक्ष्मरूपले स्थित विश्व ( अहङ्कारादि प्रपञ्च ) प्रकट गरिदियो । त्यो महत्तत्त्व सत्त्वगुण प्रधान, स्वच्छ, राग-द्वेषरहित र भगवत्प्राप्तिको साधन हो । त्यसको अधिभूत रूपमा महत्तत्त्व, अध्यात्मरूपमा चित्त र उपासनारूपमा वासुदेव भन्दछन् ॥२०॥२१॥ जस्तै जल स्वभावतः निर्मल र मधुर हुन्छ, किन्तु पृथ्वीसित संयोग भएपछि त्यसमा विकार उत्पन्न हुन्छन्, त्यस्तै नै चित्त स्वभावतः एकै प्रकारको रहन्छ । तैपनि भिन्न-भिन्न समयमा

यः कालः पञ्चविंशकः ॥ १५ ॥ प्रभावः पौरुषं प्राहुः कालमेके यतो भयम् ॥ अहङ्कारविमूढस्य कर्तुः प्रकृतिमायुषः ॥ १६ ॥ प्रकृतेर्गुणसाम्यस्य निर्विशेषस्य मानवि ॥ चेष्टा यतः स भगवान्काल इत्युपलक्षितः ॥ १७ ॥ अतः पुरुषरूपेण कालरूपेण यो बहिः ॥ सम्भवेत्येष सत्त्वानां भगवानात्ममायया ॥ १८ ॥ दैवात्क्षुभितधर्मिण्यां स्वयां योनौ परः पुमान् ॥ आधत्त वीर्यं साऽसूत महत्तत्त्वं हिरण्मयम् ॥ १९ ॥ विश्वमात्मगतं व्यञ्जन्कूटस्थो जगदङ्कुरः ॥ स्वतेजसाऽपिबत्तीव्रमात्मप्रस्वापनं तमः ॥ २० ॥ यत्तत्सत्त्वगुणं स्वच्छं शान्तं भगवतः पदम् ॥ यदाहुर्वासुदेवाख्यं चित्तं तन्महदात्मकम् ॥ २१ ॥ स्वच्छत्वमविकारित्वं शान्तत्वमिति चेतसः ॥ वृत्तिभिर्लक्षणं प्रोक्तं यथाऽपां प्रकृतिः परा ॥ २२ ॥ महत्तत्त्वाद्विकुर्वाणाद्भगवद्वीर्यसम्भवात् ॥ क्रियाशक्तिरहङ्कारस्त्रिविधः समपद्यत ॥ २३ ॥ वैकारिकस्तैजसश्च तामसश्च यतो भवः ॥ मनसश्चेन्द्रियाणां च भूतानां महतामपि ॥ २४ ॥ सहस्रशिरसं साक्षाद्यमनन्तं प्रचक्षते ॥ सङ्कर्षणाख्यं पुरुषं भूतेन्द्रियमनोमयम् ॥ २५ ॥ कर्तृत्वं करणत्वं च कार्यत्वं चेति लक्षणम् ॥ शान्तघोरविमूढत्वमिति वा स्यादहंकृतेः ॥ २६ ॥ वैकारिकाद्विकुर्वाणान्मनस्तत्त्वमजायत ॥ यत्सङ्कल्पविकल्पाभ्यां वर्तते कामसम्भवः ॥ २७ ॥ यद्विदुर्ह्यनिरुद्धाख्यं हृषीकाणामधीश्वरम् ॥ शारदेन्दीवरश्यामं संराध्यं योगिभिः शनैः ॥ २८ ॥

त्यसका वृत्ति भिन्न-भिन्न हुन्छन् । यसैनिम्ति चित्त कहिले निर्मल ( भगवत्स्वरूप ग्रहण गर्न योग्य ), कहिले विकार ( लय र विक्षेप ) रहित र कहिले शान्त ( राग द्वेष आदिबाट रहित ) रहन्छ ॥ २२ ॥ महत्तत्त्वमा विकार भएपछि सात्त्विक, राजस र तामस भेदले तीन थरिका क्रियाशक्तिमय अहङ्कार उत्पन्न भयो ॥ २३ ॥ यस त्रिविध अहङ्कारबाट मन तथा पञ्चमहाभूत र इन्द्रियहरूको उत्पत्ति भयो ॥२४॥ भूत, इन्द्रिय र मनको प्रवर्तक अहङ्कारलाई नै संकर्षण र अनन्त भन्दछन् ॥ २५ ॥ देवतारूपले कर्तृत्व, इन्द्रियरूपले कारणत्व र भूतरूपले कार्यत्व अहङ्कारको लक्षण हो अथवा सत्त्व, रज र तमोगुणको सम्बन्धबाट अहङ्कारमा यथाक्रम शान्ति डरलाग्दो र मूढता आउँछ ॥ २६ ॥ सात्त्विक अहङ्कारको विकारयुक्त भएपछि मनरूपी तत्त्व उत्पन्न भयो । यसको काम सङ्कल्प गर्नु हो । सङ्कल्प द्वारा इच्छाहरू उत्पन्न हुन्छन् ॥ २७ ॥ मनलाई अनिरुद्ध पनि भन्दछन् । यो इन्द्रियहरूको अधिपति हो )

दो नीलकमल समान श्यामवर्णको छ । यसीजन वस्तलाई निकै कहले यसमा पानसक्छन् ॥२८॥ राजस अहङ्कारमा विकृति भएपछि बुद्धितत्त्वको उत्पत्ति भयो । तत्त्व पदार्थहरूको विशेषरूपले ज्ञान गराउने र इन्द्रियहरूको सहायक हो । सन्देह, मिथ्या ज्ञान, निश्चयस्मृति र निद्रा यी बुद्धिका नै भिन्न-भिन्न कार्य हुन् ॥ २९॥३० ॥ यस राजस अहङ्कारबाट नै इन्द्रियहरू उत्पन्न भए । क्रियाशक्ति प्राणको अधीन रहन्छ र प्राण राजस अहङ्कारको कार्य हो ॥३१॥ विकारयुक्त तामस अहङ्कारबाट आकाश उत्पन्न भयो । शब्द त्यसको गुण हो र त्यसलाई ग्रहण गर्ने इन्द्रियको नाम श्रोत्र हो ॥३२॥ यो शब्दको अर्थ बुझाउँछ र वक्तालाई ज्ञान गराउँछ । शब्दको स्वरूप अत्यन्त सूक्ष्म हुन्छ ॥ ३३ ॥ प्राणिहरूलाई स्थान दिनु, पदार्थको भित्र-बाहिर व्याप्त रहनु, प्राण, इन्द्रिय र मनलाई आश्रय दिनु आकाशको कार्य हो ॥३४॥ आकाश तत्त्वमा विकार भएपछि वायुको उत्पत्ति हुन्छ । स्पर्श उसको गुण हो र त्वगिन्द्रिय त्यसलाई ग्रहण गर्दछ । कोमलता, कठोरता र सर्दी-गर्मी आदिको ज्ञान स्पर्शले नै हुन्छ ॥ ३५ ॥ वृक्ष आदिलाई हल्लाउने, घाँस आदिलाई उखेलेर एकत्र पारिदिनु,

तैजसात्तु विकुर्वाणाद्बुद्धितत्त्वमभूत्सति ॥ द्रव्यस्फुरणविज्ञानमिन्द्रियाणामनुग्रहः ॥ २९ ॥ संशयोऽथ विपर्यासो निश्चयः स्मृतिरेव च ॥ स्वाप इत्युच्यते बुद्धेर्लक्षणं वृत्तितः पृथक् ॥ ३० ॥ तैजसानीन्द्रियाण्येव क्रियाज्ञानविभागशः ॥ प्राणस्य हि क्रियाशक्तिर्बुद्धेर्विज्ञानशक्तिता ॥३१॥ तामसाच्च विकुर्वाणाद्भगवद्वीर्यचोदितात् ॥ शब्दमात्रमभूत्तस्मान्नभः श्रोत्रं तु शब्दगम् ॥३२॥ अर्थाश्रयत्वं शब्दस्य द्रष्टुर्लिङ्गत्वमेव च ॥ तन्मात्रत्वं च नभसो लक्षणं कवयो विदुः ॥ ३३ ॥ भूतानां छिद्रदातृत्वं बहिरन्तरमेव च ॥ प्राणेन्द्रियात्मधिष्ण्यत्वं नभसो वृत्तिलक्षणम् ॥ ३४ ॥ नभसः शब्दतन्मात्रात्कालगत्या विकुर्वतः ॥ स्पर्शोऽभवत्ततो वायुस्त्वक् स्पर्शस्य च संग्रहः ॥ ३५ ॥ मृदुत्वं कठिनत्वं च शैत्यमुष्णत्वमेव च ॥ एतत्स्पर्शस्य स्पर्शत्वं तन्मात्रत्वं नभस्वतः ॥ ३६ ॥ चालनं व्यूहनं प्राप्तिर्नेतृत्वं द्रव्यशब्दयोः सर्वेन्द्रियाणामात्मत्वं वायोः कर्माभिलक्षणम् ॥ ३७ ॥ वायोश्च स्पर्शतन्मात्राद्रूपं दैवेरितादभूत् ॥ समुत्थितं ततस्तेजश्चक्षू रूपोपलम्भनम् ॥ ३८ ॥ द्रव्याकृतित्वं गुणता व्यक्तिसंस्थात्वमेव च ॥ तेजस्त्वं तेजसः साध्वि रूपमात्रस्य वृत्तयः ॥३९॥ द्योतनं पाचनं पानमदनं हिममर्दनम् ॥ तैजसो वृत्तयस्त्वेताः शोषणं क्षुत्तृडेव च ॥ ४० ॥ रूपमात्राद्विकुर्वाणात्तेजसो दैवचोदितात् ॥ रसमात्रमभूत्तस्मादम्भो जिह्वारसग्रहः ॥ ४१ ॥ कषायो मधुरस्तिक्तः कट्वम्ल इति नैकधा ॥ भौति-

गन्धयुक्त वस्तुलाई घ्राणेन्द्रियसम्म पुऱ्याउनु, चीसो र तातो पदार्थ त्वगिन्द्रियकहाँ र शब्दलाई श्रोत्रेन्द्रियसम्म पुऱ्याउनु र सबै इन्द्रियहरूलाई संचालित गर्न वायुको नै कार्य हो ॥३६॥३७॥ हे माता ! वायुतत्त्वमा विकार भएपछि तेज ( अग्नि ) को उत्पत्ति भयो । रूप त्यसको गुण हो, जसलाई चक्षु इन्द्रिय ग्रहण गर्दछ ॥३८॥ पदार्थहरूको आकारको बोध गराउनु, तिनको आश्रित भएर रहनु र वस्तुहरूमा तद्रूप प्रतीत हुनु तेजको लक्षण हो । ( यदि रूप वस्तुको आकार धारण गर्दैन भने त्यो देखिनै सक्तैन ! यसैनिम्ति वस्तुहरूमा रूपको तदाकारता मानिन्छ । ) प्रकाश दिनु, अन्न पकाउनु, शीतबाट रक्षा गर्नु, पदार्थहरूलाई सुकाउनु र भोक-प्यास उत्पन्न गर्नु तेजका कार्य हुन् । तेज तत्त्वमा विकार उत्पन्न भएपछि जलतत्त्व उत्पन्न हुन्छ । रस उसको गुण हो त्यसलाई रसनेन्द्रिय ग्रहण गर्दछ ॥३९-४१॥ हुनत रस यौटै छ तर भिन्न-भिन्न भौतिक पदार्थका संसर्गबाट टर्रो, तीतो, मीठो-पीरो र

अमिलो आदि अनेक प्रकारको हुइजान्छ । भिजाउनु, पिण्डाकार बनाउनु, तृप्त पार्नु, जीवनी शक्तिको संचार गर्नु, प्यास मार्नु, वस्तुलाई कोमल तुल्याउनु तातो हटाउनु र कूप, तलाउ आदिको जल खर्च भइरहेर पनि बारम्बार भरिदिनु, यी जलका कार्य हुन् ॥ ४२-४३ ॥ जलतत्त्व विकृत भएपछि त्यसबाट पृथ्वीतत्त्व उत्पन्न भयो, उसको गुण गन्ध हो । त्यसलाई घ्राणेन्द्रिय ग्रहण गर्दछन् ॥४४॥ गन्ध एउटै रहेको भए पनि पदार्थहरूको सम्पर्कले सुगन्धित, दुर्गन्धित, उग्र ( लसुन-प्याजको गन्ध ), मसीनो ( कमलको गन्ध ) र अमिलो भाव लिएको हुन्छ । प्रतिमा आदि द्वारा भगवान्‌को साकारताको निरूपण गर्नु, अरूको मद्दत नलिईकन स्थित रहनु, जललाई धारण गर्नु, आकाशको भिन्नता प्रकट गर्नु र प्राणिहरू तथा तिनका पुंसत्व आदि गुण प्रकाशित पार्नु पृथ्वीका वृत्तिहरू हुन् ॥ ४५-४६ ॥ जुन इन्द्रियले शब्द ग्रहण गरिन्छ त्यसको नाम श्रोत्र ( कान ) हो । स्पर्श गुणलाई ग्रहण गर्ने त्वगिन्द्रिय छ । जुन इन्द्रियबाट रूप ग्रहण गरिन्छ, त्यसलाई 'चक्षु इन्द्रिय' भन्दछन् । रस-गुणलाई ग्रहण गर्ने रसनेन्द्रिय ( जिह्वा ) र गन्ध गुण ग्रहण गर्ने 'घ्राणेन्द्रिय' हो

कार्नां विकारेण रस एको विभिद्यते ॥ ४२ ॥ क्लेदनं पिण्डनं तृप्तिः प्राणनाप्यायनोन्दनम् ॥ तापापनोदो भूयस्त्वमम्भसो वृत्तयस्त्विमाः ॥ ४३ ॥ रसमात्राद्विकुर्वाणादम्भसो दैवचोदितात् ॥ गन्धमात्रमभूत्तस्मात्पृथ्वी घ्राणस्तु गन्धगः ॥ ४४ ॥ करम्भपूतिसौरभ्यशान्तोग्राम्लादिभिः पृथक् ॥ द्रव्यावयववैषम्याद्गन्ध एको विभिद्यते ॥ ४५ ॥ भावनं ब्रह्मणः स्थानं धारणं सद्विशेषणम् ॥ सर्वसत्त्वगुणोद्भेदः पृथिवीवृत्तिलक्षणम् ॥ ४६ ॥ नभोगुणविशेषोऽर्थो यस्य तच्छ्रोत्रमुच्यते ॥ वायोर्गुणविशेषोऽर्थो यस्य तत्स्पर्शनं विदुः ॥ ४७ ॥ तेजोगुणविशेषोऽर्थो यस्य तच्चक्षुरुच्यते ॥ अम्भोगुणविशेषोऽर्थो यस्य तद्रसनं विदुः ॥ भूमेर्गुणविशेषोऽर्थो यस्य स घ्राण उच्यते ॥ ४८ ॥ परस्य दृश्यते धर्मो ह्यपस्मिन्त्यसमन्वयात् ॥ अतो विशेषो भावानां भूमावेवोपलक्ष्यते ॥ ४९ ॥ एतान्यसंहत्य यदा महादादीनि सप्त वै ॥ कालकर्मगुणोपेतो जगदादिरुपाविशत् ॥ ५० ॥ ततस्तेनानुविद्धेभ्यो युक्तेभ्योऽण्डमचेतनम् ॥ उत्थितं पुरुषो यस्मादुदतिष्ठदसौ विराट् ॥ ५१ ॥ एतदण्डं विशेषाख्यं क्रमवृद्धैर्दशोत्तरैः ॥ तोयादिभिः परिवृतं प्रधानेनावृतैर्बहिः ॥ यत्र लोकवितानोऽयं रूपं भगवतो हरेः ॥ ५२ ॥ हिरण्मयादण्डकोशादुत्थाय सलिलेशयात् ॥ तमाविश्य महादेवो बहुधा

॥ ४७-४८ ॥ कार्य र कारणको पारस्परिक सम्बन्ध भएपछि कारण गुण कार्यमा आउँछन् । त्यसैको यो परिणाम हो—पृथ्वीमा गन्धगुणको अतिरिक्त आफ्नो कारणतत्त्व ( जल, तेज, वायु आकाशका गुण, रस, रूप, स्पर्श र शब्द ) का गुण पनि पाइन्छन् ॥ ४९ ॥ महत् अहङ्कार र पञ्चमहाभूत यी सातै तत्त्व जुन बेला भिन्न-भिन्न थिए त्यसै बेला ईश्वरले काल, कर्म र गुणले युक्त भएर तत्त्वहरूमा यस निम्ति प्रवेश गरे कि ती सातै तत्त्व भिन्न-भिन्न हुनाले नै सृष्टि-रचना हुन सकेको थिएन ॥ ५० ॥ ईश्वरसित संयुक्त भएपछि तिनमा जब क्षोभ भयो, तब ती संयुक्त तत्त्वबाट यौटा अचेतन अण्ड उत्पन्न भयो । त्यस अण्डबाट विराट पुरुषको उत्पत्ति भयो ॥ ५१ ॥ त्यही अण्ड 'विशेष' कहियो । त्यही भगवान्‌को रूप हो र त्यसैबाट विश्वको विस्तार भएको छ । त्यो अण्ड उत्तरोत्तर दस दोबर जल आदिले घेरिएको छ र ती सबैको चारैतिर प्रकृतितत्त्वको आवरण छ ॥५२॥

प्रबल शक्तिशाली भगवान्ले जलमा स्थित त्यो तेजोमय अण्डमा प्रविष्ट भएर त्यसमा अनेक साना-ठूला अनेक प्वाल पारिदिए ॥५३॥ सबभन्दा पहिले विराट् पुरुषस्वरूप (अण्डमा) मुख उत्पन्न भयो मुखका अधिष्ठाता अग्निसित वागिन्द्रिय उत्पन्न भए। फेरि नाकको प्वाल भयो र तिनमा प्राणवायु सहित घ्राणेन्द्रियले प्रवेश गरे ॥ ५४ ॥ त्यसपछि नेत्र-गोलक प्रकट भए। तिनमा आफ्ना अधिष्ठाता सूर्यसहित चक्षुइन्द्रियले प्रवेश गरे। तब कर्णगोलक उत्पन्न भए, तिनमा आफ्नी अधिष्ठात्री दिशाहरूसहित श्रोत्रेन्द्रियले प्रवेश गरे ॥ ५५ ॥ फेरि रौंसमेत त्वगिन्द्रिय र दाह्री जुँगा, कपाल ... भए। त्यसपछि उसको अधिष्ठात्री (अन्नादिकी देवी) औषधिहरू र शिश्नइन्द्रिय प्रकट भए ॥ ५६ ॥ आफ्नो अधिष्ठाता जलसित वीर्यले त्यसमा प्रवेश गर्‍यो। अनि गुदा उत्पन्न भयो र त्यसमा आफ्नो अधिष्ठाता मृत्यु सहित अपानवायुले प्रवेश गर्‍यो ॥५७॥ अनि हात उत्पन्न भएर आफ्नो अधिष्ठात्री नदीसित जलले त्यसमा प्रवेश गर्‍यो। अनि चरण उत्पन्न भए, आफ्ना अधिष्ठाता विष्णु सहित तिनमा गति प्रविष्ट भयो ॥ ५८ ॥ अनि नाडीहरू उत्पन्न भए, आफ्नी अधिष्ठात्री नदीसित

निर्बिभेद स्वम् ॥ ५३ ॥ निरभिद्यतास्य प्रथमं मुखं वाणी ततोऽभवत् ॥ वाण्या वह्निरथो नासे प्राणोऽनो घ्राण एतयोः ॥ ५४ ॥ घ्राणाद्वायुरभिद्येतामक्षिणी चक्षुरेतयोः ॥ तस्मात्सूर्यो व्यभिद्येतां कर्णौ श्रोत्रं ततो दिशः ॥ ५५ ॥ निर्बिभेद विराजस्त्वग्रोमश्मश्र्वादयस्ततः ॥ तत ओषधयश्चासन् शिश्नं निर्बिभिदे ततः ॥ ५६ ॥ रेतस्तस्मादाप आसन्निरभिद्यत वै गुदम् ॥ गुदादपानोऽपानाच्च मृत्युर्लोकभयङ्करः ॥ ५७ ॥ हस्तौ च निरभिद्येतां बलं ताभ्यां ततः स्वराट् ॥ पादौ च निरभिद्येतां गतिस्ताभ्यां ततो हरिः ॥ ५८ ॥ नाड्योऽस्य निरभिद्यन्त ताभ्यो लोहितमाभृतम् ॥ नद्यस्ततः समभवन्नुदरं निरभिद्यत ॥ ५९ ॥ क्षुत्पिपासे ततः स्यातां समुद्रस्त्वेतयोरभूत् ॥ अथास्य हृदयं भिन्नं हृदयान्मन उत्थितम् ॥ ६० ॥ मनसश्चन्द्रमा जातो बुद्धिर्बुद्धेर्गिरां पतिः ॥ अहङ्कारस्ततो रुद्रश्चित्तं चैत्यस्ततोऽभवत् ॥ ६१ ॥ एते ह्यभ्युत्थिता देवा नैवास्योत्थापनेऽशकन् ॥ पुनराविविशुः खानि तमुत्थापयितुं क्रमात् ॥ ६२ ॥ वह्निर्वाचा मुखं भेजे नोदतिष्ठत्तदा विराट् ॥ घ्राणेन नासिके वायुर्नोदतिष्ठत्तदा विराट् ॥ ६३ ॥ अक्षिणी चक्षुषाऽऽदित्यो नोदतिष्ठत्तदा विराट् ॥ श्रोत्रेण कर्णौ च दिशो नोदतिष्ठत्तदा विराट् ॥ ६४ ॥ त्वचं रोमभिरोषध्यो नोदतिष्ठत्तदा विराट् ॥ रेतसा शिश्नमापस्तु नोदतिष्ठत्तदा विराट् ॥ ६५ ॥ गुदं मृत्युरपानेन नोदतिष्ठत्तदा विराट् ॥

इनमा रक्तले प्रवेश गर्‍यो तब उदर प्रकट भयो, आफ्ना अधिष्ठाता समुद्रसहित भोक-प्यास प्रविष्ट भई। फेरि हृदय उत्पन्न भयो, त्यसमा मन, बुद्धि, चित्त, अहङ्कार आफआफ्ना अधिष्ठाता चन्द्रमा, ब्रह्मा, रुद्र र क्षेत्रज्ञ सहित प्रविष्ट भए ॥५९-६१॥ यी सबै अधिष्ठाता देवता सम्मिलित रूपबाट प्रयत्न गरेर पनि जब विराट् पुरुषलाई उठाउन सकेनन् (कार्यक्षम पार्न सकेनन्) तब उनलाई उठाउनको निम्ति पूर्वोक्त देवता इन्द्रिय समेत यथाक्रम आफआफ्ना छिद्रमा फेरि प्रविष्ट भए ॥६२-६३॥ मुखमा वागिन्द्रिय (वाणी) सित अग्निले प्रवेश गर्दा पनि विराट् पुरुष उठेनन्, तब वायु देवता घ्राणेन्द्रियसित नाकमा प्रविष्ट भए। तैपनि विराट्पुरुष नउठेपछि चक्षुइन्द्रियसित सूर्य नेत्र-गोलकमा प्रविष्ट भए। त्यति भएर पनि जब विराट् पुरुष उठेनन्, तब क्रमशः दिशाहरूसित श्रोत्रेन्द्रियले कर्ण-गोलकमा, रौंपश्चित तथा रोमादिले त्वक्मा, वीर्यसित जलले शिश्नइन्द्रियमा र अपान वायुसित मृत्युले गुदामा

प्रवेश गरे, तैपनि जब विराट् पुरुष उठेनन्, तब बलसित इन्द्रले हातमा, गतिसित विष्णुले चरणमा, रक्तसित नदीहरूले नाडीहरूमा र भोक-प्याससित समुद्रले पेटमा प्रवेश गरे तैपनि विराट् पुरुष उठेनन् । अनि हृदयमा मनसहित चन्द्रमा, बुद्धिसहित ब्रह्मा र अहङ्कार सहित रुद्र प्रविष्ट भएर पनि विराट् पुरुष उठेनन् । तर हृदयमा चित्तसहित क्षेत्रज्ञ प्रविष्ट हुनासाथ जलबाट विराट् पुरुष उठेर ठिङ्ग उभियो ॥६४-७०॥ जसरी प्राण, इन्द्रिय, मन र बुद्धि सुतेका प्राणीलाई क्षेत्रज्ञको सहायता विना उठाउन समर्थ हुँदैनन्, त्यसै गरी अग्नि प्रभृति देवता पनि क्षेत्रज्ञ विना विराट् पुरुषलाई उठाउन सकेनन् ॥७१॥ अतः श्रवण-कीर्तन आदिको रूपमा भक्ति, वैराग्य, ज्ञान र अष्टांग योगको सहायताले एकाग्र पारिएको बुद्धि द्वारा प्रकृति र पुरुषको भिन्नताको विचार गरेर शरीरमै क्षेत्रज्ञको चिन्तन गरोस् ॥७२॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे षड्विंशोऽध्यायः ॥२६॥ ( पुरुष र प्रकृतिको विवेक द्वारा मोक्ष प्राप्तिको रीति-निरूपण ) कपिलदेवले भने–हे माता ! जसरी जलमा प्रतिबिम्बित सूर्यमा

हस्ताविन्द्रो बलेनैव नोदतिष्ठत्तदा विराट् ॥ ६६ ॥ विष्णुर्गत्यैव चरणौ नोदतिष्ठत्तदा विराट् ॥ नाडीर्नद्यो लोहितेन नोदतिष्ठत्तदा विराट् ॥ ६७ ॥ क्षुत्तृड्भ्यामुदरं सिंधुर्नोदतिष्ठत्तदा विराट् ॥ हृदयं मनसा चन्द्रो नोदतिष्ठत्तदा विराट् ॥ ६८ ॥ बुद्ध्या ब्रह्माऽपि हृदय नोदतिष्ठत्तदा विराट् ॥ रुद्रोऽभिमत्या हृदयं नोदतिष्ठत्तदा विराट् ॥ ६९ ॥ चित्तेन हृदयं चैत्यः क्षेत्रज्ञः प्राविशद्यदा ॥ विराट् तदैव पुरुषः सलिलादुदतिष्ठत ॥ ७० ॥ यथा प्रसुप्तं पुरुषं प्राणेन्द्रियमनोधियः ॥ प्रभवन्ति विना येन नोत्थापयितुमोजसा ॥ ७१ ॥ तमस्मिन्प्रत्यगात्मानं धिया योगप्रवृत्तया ॥ भक्त्या विरक्त्या ज्ञानेन विविच्यात्मनि चिन्तयेत् ॥७२॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेये तत्त्वसमाम्नाये षट्विंशतितमोऽध्यायः ॥२६॥ श्रीभगवानुवाच ॥ प्रकृतिस्थोऽपि पुरुषो नाज्यते प्राकृतैर्गुणैः ॥ अविकारादकर्तृत्वान्निर्गुणत्वाज्जलार्कवत् ॥ १ ॥ स एष यर्हि प्रकृतेर्गुणेष्वभिविषज्जते ॥ अहंक्रियाविमूढात्मा कर्ताऽस्मीत्यभिमन्यते ॥२॥ तेन संसारपदवीमवशोऽभ्येत्य निर्वृतः ॥ प्रासङ्गिकैः कर्मदोषैः सदसन्मिश्रयोनिषु ॥ ३ ॥ अर्थे ह्यविद्यमानेऽपि संसृतिर्न निवर्तते ॥ ध्यायतो विषयानस्य स्वप्नेऽनर्थागमो यथा ॥ ४ ॥ अत एव शनैश्चित्तं प्रसक्तमसतां पथि ॥ भक्तियोगेन तीव्रेण विरक्त्या च नयेद्वशम् ॥ ५ ॥ यमादिभिर्योगपथैरभ्यसन् श्रद्धयान्वितः ॥ मयि भावेन सत्येन मत्कथाश्रवणेन च ॥ ६ ॥ सर्वभूतसमत्वेन

जलका विकार ( हिलो आदि ) को प्रभाव देखिन्छ, तर वास्तविक सूर्यमा तिनको केही प्रभाव पर्दैन त्यसैगरी विकार कर्तृत्व आदि गुणले हीन हुनाले पुरुष प्रकृतिका गुणमा सम्बद्ध भएर पनि वास्तवमा ती गुण ( सुख-दुःखादि ) फलमा अलिप्त तथा अनासक्त नै रहन्छ ॥१॥ प्रकृतिका गुणको संगत भएपछि त्यही पुरुष अहङ्कारवश आफ्नो कर्तृत्वको अभिमान गर्न थाल्दछ ॥२॥ यसै कारण त्यो विवश भएर प्रकृतिजन्य कर्मदोषहरू द्वारा उत्तम, मध्यम, अधम, देव, मनुष्य तथा तिर्यक् योनिमा जन्म लिन्छ ॥३॥ जसरी स्वप्नका घटनाहरू सारहीन हुन्छन् तर तिनलाई देख्ने व्यक्ति ती घटनाहरूद्वारा सुख-दुःखको अनुमान गरिलिने गर्दछ, त्यस्तै सांसारिक पदार्थ असार छन् तापनि पुरुष अविवेकवश

तनिमा अल्झेर संसार-चक्रमा डुलिरहन्छ ॥४॥ अतः प्रबल भक्तियोग र *वैराग्य द्वारा चित्तलाई बिस्तार-बिस्तार विषयबाट हटाओस् ॥५॥ श्रद्धापूर्वक यम-नियमादिको अभ्यास गरोस्, मेरो ( परमेश्वरको ) निष्कपट भक्ति गरोस् र मेरा गुणको निरन्तर श्रवण-मनन-कीर्तन गर्दै रहोस् ॥६॥ जीवमात्रलाई समान दृष्टिले हेरोस् शत्रुता त्यागोस् आसक्तिबाट जोगिई ब्रह्मचर्य र मौनव्रत पालन गरोस् ईश्वरार्पण बुद्धिले कर्म गर्दैरहोस् ॥७॥ पाएको जतिमै सन्तुष्ट रहोस्, परिमित आहार गरेर मननको बानी पारोस् । एकान्तमा बसोस्, चित्तमा अशान्ति आउन नदेओस् । लोकहित चिन्तक, दयालु र धैर्यवान् बनोस् ॥ ८ ॥ पुत्र-कलत्र र देहमा पनि ममत्व नबढाओस् ॥ ९ ॥ प्रकृति र पुरुषको वास्तविक ज्ञान प्राप्त गरोस्, जसले बुद्धिका जाग्रत, स्वप्न, सुषुप्ति अवस्थाहरू पर जाऊन् र भेद-बुद्धि पनि नरहोस् । यस्तो भएपछि त्यसै गरी आत्मदर्शन हुन्छ, जसरी आँखाले सूर्य देखिन्छन् ॥१०॥ आत्मदर्शन हुनासाथ उपाधिरहित अहङ्कारमा तद्रूप झैं प्रतीत हुने मायाका अधिष्ठान, विश्वप्रपंचका प्रकाशक एवं कार्य-कारणले भिन्नेका ब्रह्मको प्राप्ति हुन्छ ।

निर्वेरेणाप्रसङ्गतः ॥ ब्रह्मचर्येण मौनेन स्वधर्मेण बलीयसा ॥ ७ ॥ यदृच्छयोपलब्धेन संतुष्टो मितभुङ्मुनिः ॥ विविक्तशरणः शान्तो मैत्रः करुण आत्मवान् ॥८॥ सानुबन्धे च देहेऽस्मिन्नकुर्वन्नसदाग्रहम् ॥ ज्ञानेन दृष्टतत्त्वेन प्रकृतेः पुरुषस्य च ॥ ९ ॥ निवृत्तबुद्ध्यवस्थानो दूरीभूतान्यदर्शनः ॥ उपलभ्यात्मनाऽऽत्मानं चक्षुषेवार्कमात्मदृक् ॥ १० ॥ मुक्तलिङ्गं सदाभासमसति प्रतिपद्यते ॥ सतो बन्धुमसच्चक्षुः सर्वानुस्यूतमद्वयम् ॥ ११ ॥ यथा जलस्थ आभासः स्थलस्थेनावदृश्यते ॥ स्वाभासेन तथा सूर्यो जलस्थेन दिवि स्थितः ॥ १२ ॥ एवं त्रिवृदहङ्कारो भूतेन्द्रियमनोमयैः ॥ स्वाभासैर्लक्षितोऽनेन सदाभासेन सत्यदृक् ॥ १३ ॥ भूतसूक्ष्मेन्द्रियमनोबुद्ध्यादिष्विह निद्रया ॥ लीनेष्वसति यस्तत्र विनिद्रो निरहंक्रियः ॥१४॥ मन्यमानस्तदात्मानमनष्टो नष्टवन्मृषा ॥ नष्टेऽहङ्करणे द्रष्टा नष्टवित्त इवातुरः ॥ १५ ॥ एवं प्रत्यवमृश्यासावात्मानं प्रतिपद्यते ॥ साहङ्कारस्य द्रव्यस्य

जस्तै पानीभित्र परेको सूर्यको छाया भीत्ता आदिमा प्रतिफलित देख्दा हेर्नेलाई वास्तविक सूर्यको ज्ञान हुन्छ, त्यस्तै नै आत्मा-प्रति बिम्बरूप देह इन्द्रिय र मनमा प्रतिबिम्बित अहङ्कार लक्षित हुन्छ र त्यस त्रिगुणमय अहङ्कारबाट परमार्थस्वरूप आत्माको ज्ञान प्राप्त हुन्छ । सूक्ष्म पञ्चभूत, इन्द्रिय, मन, बुद्धि र अहङ्कारको निद्रामा लीन भएपछि जो जागृत र निरहंकार बनि रहन्छ, त्यही आत्मा हो ॥११-१४॥ सुषुप्ति अवस्थामा नै विशुद्ध आत्माको दर्शन हुन्छ, किनकि सुषुप्ति अवस्थामा नष्ट त अहङ्कार नै हुन्छ, परन्तु पुरुष अविवेकवश त्यसै गरी आफू नष्ट भए झैं ठान्न थाल्दछ, जस्तै—कोही व्यक्ति धन-नाश भएपछि आफूलाई नष्ट मान्न थालिहाल्दछ । यस्तो विचार गरेर ज्ञानी पुरुष

* दृष्टान्त—( नयाँ विरागी )—बंगालमा परमहंस रामकृष्णको संगतिद्वारा धेरै युवकको मनमा वैराग्य उत्पन्न भयो । अतः त्यसले आफ्नो सम्पूर्ण सम्पत्ति गरीबहरूमा बाँडिदियो र एक हजार रुपियाँ परमहंसलाई अर्पण गर्न खोज्यो, तर घर-परकाले परमहंस कसैको भेट स्वीकार गर्दैनन् भने । त्यसले एक, दुइ, तीन, चार गर्दै हजारसम्म गनेर सबै रुपियाँ नदीको धारामा फ्याँकिदियो । फिर्ता आएर परमहंसकहाँ आएर त्यसले यो सारा हाल सुनायो । त्यो सुनेर परमहंस भन्दछन्—'तुम डाँडैमा पुग्नुपर्ने हो, त्यहाँ पुग्नको निम्ति [illegible] एक हजार पाइला उचाल्नु पर्‍यो । यसले आत हुन्छ—अझ तिम्रो धनसम्बन्धी मोह हराएको छैन । धर्म कार्यमा यदि यसै गरी पाइला राख्दै गयो भने आफ्नो लक्ष्यसम्म पुग्न सक्ने छैनौ । [illegible] अवस्थामा पुगे धनीको पक्षमा बसेर [illegible] गर्ने आफ्नो इच्छा पूर्ण पार, अनि आऊ ।'

अहङ्कारयुक्त कार्य-कारणका प्रकाशक र अधिष्ठान स्वरूप आत्मालाई प्राप्त गर्दछ ॥१५॥१६॥ देवहूतिले भनिन्–हे प्रभो ! जसरी पृथ्वीबाट गन्ध, जल र रस अलग-अलग पार्न सकिन्न, त्यसै गरी प्रकृति र पुरुषलाई पनि पृथक्-पृथक् पार्न सकिन्न, किनकि यी दुवै नित्य र अन्योन्याश्रित छन् ॥ १७ ॥ जब पुरुष निष्क्रिय छ र कर्म-बन्धन त्यसलाई प्रकृतिका गुणहरूबाट प्राप्त छ, तब ती गुण छँदाछँदै पुरुष कसरी मुक्त हुन सक्तछ ? कहीं कहीं यस्तो पनि ज्ञात हुन्छ–विवेक भएपछि आवागमनको यस संसारमा बाटो नष्टप्राय भइसकेको छ, तर प्रकृतिका गुण नष्ट नहुनाले त्यसको आवागमन रहिरहन्छ ॥१८-२०॥ कपिलदेवले भने–हे माता ! शुद्ध चित्त र निष्काम एमेका कुरा सुन्नाले उत्पन्न भक्ति, तत्त्वज्ञान, वैराग्य र समाधि द्वारा विस्तार विस्तार पुरुष र प्रकृतिको सम्बन्ध यसै गरी छुटतछ, जसरी अरणि उत्पन्न गर्ने काष्ठ अग्नि उत्पन्न गरेर स्वयं पनि त्यसमा

योऽवस्थानमनुग्रहः ॥ १६ ॥ देवहूतिरुवाच ॥ पुरुषं प्रकृतिर्ब्रह्मन्न विमुञ्चति कर्हिचित् ॥ अन्योन्यापाश्रयत्वाच्च नित्यत्वादनयोः प्रभो ॥ १७ ॥ यथा गन्धस्य भूमेश्च न भावो व्यतिरेकतः ॥ अपां रसस्य च यथा तथा बुद्धेः परस्य च ॥ १८ ॥ अकर्तुः कर्मबन्धोऽयं पुरुषस्य यदाश्रयः ॥ गुणेषु सत्सु प्रकृतेः कैवल्यं तेष्वतः कथम् ॥ १९ ॥ क्वचित्तत्त्वावमर्शेन निवृत्तं भयमुल्बणम् ॥ अनिवृत्तनिमित्तत्वात्पुनः प्रत्यवतिष्ठते ॥ २० ॥ श्रीभगवानुवाच ॥ अनिमित्तनिमित्तेन स्वधर्मेणामलात्मना ॥ तीव्रया मयि भक्त्या च श्रुतसम्भृतया चिरम् ॥ २१ ॥ ज्ञानेन दृष्टतत्त्वेन वैराग्येण बलीयसा ॥ तपोयुक्तेन योगेन तीव्रेणात्मसमाधिना ॥ २२ ॥ प्रकृतिः पुरुषस्येह दह्यमाना त्वहर्निशम् ॥ तिरोभवित्री शनकैरग्नेर्योनिरिवारणिः ॥ २३ ॥ भुक्तभोगा परित्यक्ता दृष्टदोषा च नित्यशः ॥ नेश्वरस्याशुभं धत्ते स्वे महिम्नि स्थितस्य च ॥ २४ ॥ यथा ह्यप्रतिबुद्धस्य प्रस्वापो बह्वनर्थभृत् ॥ स एव प्रतिबुद्धस्य न वै मोहाय कल्पते ॥ २५ ॥ एवं विदिततत्त्वस्य प्रकृतिर्मयि मानसम् ॥ युञ्जतो नापकुरुत आत्मारामस्य कर्हिचित् ॥ २६ ॥ यदैवमध्यात्मरतः कालेन बहुजन्मना ॥ सर्वत्र जातवैराग्य आब्रह्मभुवनान्मुनिः ॥ २७ ॥ मद्भक्तः प्रतिबुद्धार्थो मत्प्रसादेन भूयसा ॥ निःश्रेयसं स्वसंस्थानं कैवल्याख्यं मदाश्रयम् ॥ २८ ॥ प्राप्नोतीहाञ्जसा धीरः स्वदृशा छिन्नसंशयः ॥ यद्गत्वा न निवर्तेत योगी लिंगाद्विनिर्गमे ॥ २९ ॥ यदा न योगोपचितासु चेतो मायासु सिद्धस्य विषज्जतेऽङ्ग ॥ अनन्यहेतुष्वथ मे गतिः स्यादात्यन्तिकी यत्र न

भस्म हुन्छ ॥२१॥ त्यसरी योगसाधन गर्नाले प्रकृतिका दोषको ज्ञान भएपछि जब त्यसित सम्बन्ध विच्छेद गरिन्छ, तब प्रकृति आत्मानन्दमा प्राप्त भइसकेका सिद्ध पुरुषको केही हानि गर्न सक्तिन ॥२२॥२३॥ सपना देख्ने व्यक्तिलाई नै सपनाका घटनाले चिन्तित पार्दछन्, जागा हुने माथि त्यसको कुनै प्रभाव पर्दैन, त्यसै गरी विवेकी पुरुष जब ममा आफ्नो चित्त लगाइदिन्छ, तब आत्मानन्दमा मग्न रहनाले त्यसमाथि प्रकृतिको प्रभाव पर्दैन ॥२४॥२६॥ जन्म जन्मान्तरबाट अभ्यास गर्दा-गर्दा जब साधकलाई सबै पदार्थ र ब्रह्मलोक आदिबाट पनि वैराग्य हुन्छ र आत्मज्ञान द्वारा त्यसका संशय नष्ट हुन्छन्, तब मेरो भक्त भएपछि मेरै कृपाले त्यसलाई विवेकबुद्धि मिल्दछ र त्यस स्थितिमा त्यसलाई मेरो आश्रयस्थल ( परमधाम वा कैवल्य पद ) सहजै मिल्दछ। यस प्रकार लिङ्ग शरीरको नाश भएपछि योगीले फेरि संसारमा आउनु पर्दैन ॥२७॥२९॥ सिद्ध पुरुषको साधना

सदा गर्दा अणिमादि सिद्धिहरू प्राप्त हुन्छन् । ती सिद्धिहरूद्वारा सिद्ध पुरुष आफ्नो मार्गबाट विचलित हुन्छ । यदि त्यो यी सिद्धिहरूको मोहमा कुनै प्रकारले अल्झेन भने यस्तो उत्तम गति पाउन सक्छ, जहाँ जन्म-मृत्यु पुग्नै सक्तैन ॥३०॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषाटीकायां सप्तविंशोऽध्यायः ॥ २७ ॥ यसरी अष्टाङ्ग योग र उपाधि योगले मुक्त स्वरूपको वर्णन गरेर कपिलदेव भन्नुहुन्छ—हे माता ! योगका दुइ भेद हुन्छन्—सबीज र निर्बीज । जुन साधनाले मन शुद्ध भएर आत्मस्वरूपमा लाग्न सक्छ, त्यो निर्बीज योग हो र विशुद्ध मनले भगवान्को ध्यान गर्नु सबीज योग हो । अब म सबीज योगको लक्षण भन्दछु—जुन विधि अवलम्बन गर्नाले विशुद्ध मन भगवान्-तिर प्रवृत्त हुन्छ ॥ १ ॥ जसको अवलम्बन गरेर दृढतापूर्वक निष्काम भावबाट वर्ण र आश्रमहरूका धर्मको आचरण र निषिद्ध कर्मको, परित्याग हुन्छ, यथालाभ-सन्तोषवृत्ति प्राप्त हुन्छ, आत्मज्ञानीप्रति श्रद्धा-भक्ति उत्पन्न हुन्छ र सकाम धर्म, अर्थ, कामबाट निवृत्ति हुन्छ एवं मोक्षमा मन लाग्दछ, त्यही सबीज योग हो । जुन बाटोमा हिंडेर विशुद्ध तथा परिमित भोजन ( पेटका चार भागमा दुइको पूर्ति अन्नले र तेस्रो भागको पूर्ति जलले गरेर चौथोलाई हावा आउन-जानको निमित्त रित्तो राख्नु नै परिमित आहार हो । ) गर्न र

मृत्युह्रासः ॥ ३० ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेयोपाख्याने सप्तविंशतितमोऽध्यायः ॥ २७ ॥ श्रीभगवानुवाच ॥ योगस्य लक्षणं वक्ष्ये सबीजस्य नृपात्मजे ॥ मनो येनैव विधिना प्रसन्नं याति सत्पथम् ॥ १ ॥ स्वधर्माचरणं शक्त्या विधर्माच्च निवर्तनम् ॥ दैवाल्लब्धेन सन्तोष आत्मविच्चरणार्चनम् ॥ २ ॥ ग्राम्य धर्मनिवृत्तिश्च मोक्षधर्मरतिस्तथा ॥ मितमेध्यादनं शश्वद्विविक्तक्षेमसेवनम् ॥ ३ ॥ अहिंसा सत्यमस्तेयं यावदर्थपरिग्रहः ॥ ब्रह्मचर्यं तपः शौचं स्वाध्यायः पुरुषार्चनम् ॥ ४ ॥ मौनं सदाऽऽसनजयः स्थैर्यं प्राणजयः शनैः ॥ प्रत्याहारश्चेन्द्रियाणां विषयान्मनसा हृदि ॥ ५ ॥ स्वधिष्ण्यानामेकदेशे मनसा प्राणधारणम् ॥ वैकुण्ठलीलाभिध्यानं समाधानं तथाऽऽत्मनः ॥ ६ ॥ एतैरन्यैश्च पथिभिर्मनो दुष्टमसत्पथम् ॥ बुद्ध्या युञ्जीत शनकैर्जितप्राणो ह्यतन्द्रितः ॥ ७ ॥ शुचौ देशे प्रतिष्ठाप्य विजितासन आसनम् ॥ तस्मिन्स्वस्ति समासीन ऋजुकायः समभ्यसेत् ॥ ८ ॥ प्राणस्य शोधयेन्मार्गं पूरकुम्भकरेचकैः ॥ प्रतिकूलेन वा चित्त यथा स्थिरमचञ्चलम् ॥ ९ ॥ मनोऽचिरात्स्याद्विरजं

सदा बाधारहित एकान्त स्थानमा बस्ने प्रवृत्ति हुन्छ, त्यही सबीज योग हो ॥२॥३॥ जसले अहिंसा, सत्य र अस्तेयको पालन गर्न र आवश्यकता ( शरीर निर्वाह मात्र ) भन्दा बढी सामग्री नराख्ने प्रवृत्ति हुन्छ । अष्टाङ्ग ब्रह्मचर्य, कृच्छ्रचान्द्रायण आदि तप ( कायिक, वाचिक, मानसिक ), पवित्रता, वेदपाठ, भगवान्को पूजन गर्न र आवश्यकता भन्दा बढी नबोल्ने ( मौन ) को रुचि हुन्छ, आसनको साधना द्वारा शरीरलाई स्थिर राख्ने, बिस्तार बिस्तार प्राणवायुलाई वशमा पार्न ( प्राणायाम ) र विषयतिरबाट इन्द्रिय गमन मन फर्काएर मूलाधार आदि षट्चक्रमध्ये कुनै ठाँउमा मन र प्राण स्थिर राख्ने प्रवृत्ति हुन्छ, यही सबीज योग हो । भगवान्‌का लीलाको चिन्तन गर्न र भगवान्मा एकाग्र हुने काम जुन हो, त्यही सबीज योग हो ॥४-६॥ इनै उपाय र अन्य व्रत आदिका आचरण द्वारा मनलाई बिस्तार-बिस्तार विषय वासनाबाट हटाएर बुद्धिको सहायताले परमेश्वरतिर लगाउनु ॥७॥ पवित्र स्थानमा आसन बिछाएर त्यसमाथि यसरी सोझो भएर बसोस् कि जसले अप्ठेरो नहोस् । अनि प्राणायामको अभ्यास गरोस् ॥ ८ ॥ पूरक ( नाकको एक प्वालबाट हावा

तान्नु ), कुम्भक ( तानेको सास रोकिराख्नु ) र रेचक ( रोकेको सास बिस्तार-बिस्तार बाहिर फाल्नु ) द्वारा अनुलोम-विलोम विधिले प्राणायाम गरेर मनलाई यस्तो शान्त पारिदेओस् कि त्यसको चञ्चलता हराओस् ॥ ९ ॥ प्राणायाम सिद्ध भइसकेपछि योगीको मन त्यसै गरी शीघ्र निर्मल हुन्छ, जसरी वायुको वेगले बल्दो आगोमा तताएपछि फलाम ( धातु ) को मैलो हराएर जान्छ ॥ १० ॥ प्राणायाम द्वारा वात-पित्त-कफ आदि शारीरिक दोषहरू नष्ट पारोस्, धारणा ( वायुसित मनलाई स्थानविशेषमा स्थित पार्ने ) द्वारा पापहरू भस्म पारोस् र प्रत्याहार ( विषयतर्फबाट इन्द्रियहरू फर्काउनु ) द्वारा विषय वासनालाई हटाई ध्यान द्वारा राग द्वेष आदिलाई नष्ट पारोस् ॥ ११ ॥ यसरी जब मन शुद्ध र स्थिर भएपछि नाकको टुप्पामा दृष्टि गडाई भगवान्‌को यस्तो मूर्तिको ध्यान गरोस् ॥ १२ ॥ उसको मुखमा मन्द-हास्य छ, आँखामा लालिमा छ, शरीरको रंग कलस्यौंलो छ र ती

जितश्वासस्य योगिनः ॥ वाय्वग्निभ्यां यथा लोहं ध्मातं त्यजति वै मलम् ॥ १० ॥ प्राणायामैर्दहेद्दोषान्धारणाभिश्च किल्बिषान् ॥ प्रत्याहारेण संसर्गान्ध्यानेनानीश्वरान्गुणान् ॥ ११ ॥ यदा मनः स्वं विरजं योगेन सुसमाहितम् ॥ काष्ठां भगवतो ध्यायेत्स्वनासाग्रावलोकनः ॥ १२ ॥ प्रसन्नवदनाम्भोजं पद्मगर्भारुणेक्षणम् ॥ नीलोत्पलदलश्यामं शङ्खचक्रगदाधरम् ॥ १३ ॥ लसत्पङ्कजकिञ्जल्कपीतकौशेयवाससम् ॥ श्रीवत्सवक्षसं भ्राजत्कौस्तुभामुक्तकन्धरम् ॥ १४ ॥ मत्तद्विरेफकलया परीतं वनमालया ॥ परार्ध्यहारवलयकिरीटाङ्गदनूपुरम् ॥ १५ ॥ काञ्चीगुणोल्लसच्छ्रोणिं हृदयाम्भोजविष्टरम् ॥ दर्शनीयतमं शान्तं मनोनयनवर्धनम् ॥ १६ ॥ अपीच्यदर्शनं शश्वत्सर्वलोकनमस्कृतम् ॥ सन्तं वयसि कैशोरे भृत्यानुग्रहकातरम् ॥ १७ ॥ कीर्तन्यतीर्थयशसं पुण्यश्लोकयशस्करम् ॥ ध्यायेद्देवं समग्राङ्गं यावन्न च्यवते मनः ॥ १८ ॥ स्थितं व्रजन्तमासीनं शयानं वा गुहाशयम् ॥ प्रेक्षणीयेहितं ध्यायेच्छुद्धभावेन तेजसा ॥ १९ ॥ तस्मिँल्लब्धपदं चित्तं सर्वावयवसंस्थितम् ॥ विलक्ष्यैकत्र संयुज्यादङ्गे भगवतो मुनिः ॥ २० ॥ सञ्चिन्तयेद्भगवतश्चरणारविन्दं वज्राङ्कुशध्वजसरोरुहलाञ्छनाढ्यम् ॥ उत्तुङ्गरक्तविलसन्नखचक्रवालज्योत्स्नाभिराहतमहद्धृदयान्धकारम् ॥ २१ ॥ यच्छौचनिःसृतसरित्प्रवरोदकेन तीर्थेन मूर्ध्न्यधिकृतेन शिवः शिवोऽभूत् ॥ ध्यातुर्मनःशमलशैलनिसृष्टवज्रं ध्यायेच्चिरं भगवतश्चरणार-

शङ्ख चक्र, गदा, पद्म धारण गरेका, पीताम्बर पहिरेका छन् । तिनको हृदयमा-श्रीवत्सचिह्न शोभित छ र कौस्तुभ मणि घाँटीको शोभा बढाइरहेको छ ॥ १३-१४ ॥ ती यस्तो वनमाला पहिरेका छन् जसमा भ्रमर गुञ्जायमान गरिरहेछन् । ती बहुमूल्य हार, किरीट, कुण्डल, नुपुर पहिरेका छन् । कमरमा करधनी छ । यस्ता भगवान् भक्तका हृदयमा विराजमान छन्, प्रभुको रूप दर्शनीय र शान्तिमय छ, त्यो मन र नयनलाई तृप्ति दिन्छ । भक्तगणमा उनको कृपा रहिरहन्छ । सारा विश्व उनको वन्दना गर्दछ । उनको तरुण अवस्था छ । ती भक्तगणको हितचिन्तन गरिरहन्छन् ॥ १५-१७॥ तिनका गुण कीर्तनीय छन् । नल-युधिष्ठिर प्रभृति पनि उनैका कृपाले यशस्वी भएका थिए । जबसम्म मन हट्दैन तबसम्म यस्ता सर्वाङ्गसुन्दर मूर्तिको ध्यान गर्दैरहोस् ।१८॥ उसको जस्तो भावना छ, त्यसै अनुसार भगवान्‌को उभिएको, हिँडे-डुलेको, हेरेको तथा बसे-पल्टेको र विविध लीलाहरू गरेको ध्यान गरोस्

॥ १९ ॥ भगवान्‌को सर्वाङ्ग सुन्दर मूर्तिको ध्यान गरिसकेपछि तिनका एकेक अङ्गको ध्यान गरोस् । ( भनाइ हो—* भागवतोक्त रीतिले प्रभुको सर्वाङ्ग पूर्ण स्वरूपको ध्यानको दृढताका निम्ति तिनका एकेक अङ्गको ध्यान गर्नु आवश्यक छ ) ॥ २० ॥ पहिले भगवान्‌का ती चरणको ध्यान गर्नु—जसमा वज्र, अंकुश, ध्वज र कमल को चिन्ह बनेको छ । तिनका राता-राता नङहरूको आभा भक्तका हृदयमा पर्दा त्यहाँको घनान्धकार नष्ट हुन्छ ॥२१॥ ती चरण-कमल पखालेको जलले गङ्गाजी निस्किन्, जसलाई मस्तकमा धारण गर्नाले शिवजी लाई शिवत्व प्राप्त भएथ्यो । भगवान्‌का चरण-कमलको ध्यान गर्नाले ठूला-ठूला पापका पहाड धूलो हुन्छन् ॥ २२ ॥ फेरि भगवान्‌का ती पिँडुलाहरूको ध्यान गरोस्, जसलाई प्रजापति ब्रह्माकी माता र देवतागणकी वन्दनीया लक्ष्मीजी आफ्नो जाँघमा राखेर मिच्ने गर्दछिन् ॥ २३ ॥ त्यसपछि भगवान्‌का ती बलिष्ट तिघ्राहरूको ध्यान गरोस् जो गरुडका

विन्दम् ॥ २२ ॥ जानुद्वयं जलजलोचनया जनन्या लक्ष्म्याऽखिलस्य सुरवन्दितया विधातुः ॥ ऊर्वोर्निधाय करपल्लवरोचिषा यत्संलालितं हृदि विभोरभवस्य कुर्यात् ॥ २३ ॥ ऊरू सुपर्णभुजयोरधिशोभमानावोजोनिधी अतसिकाकुसुमावभासौ ॥ व्यालम्बिपीततरवाससि वर्तमानकाञ्चीकलापपरिरम्भिनितम्बबिम्बम् ॥ २४ ॥ नाभिह्रदं भुवनकोशगुहोदरस्थं यत्रात्मयोनिधिषणाखिललोकपद्मम् ॥ व्यूढं हरिन्मणिवृषस्तनयोरमुष्य ध्यायेद्द्वयं विशदहारमयूखगौरम् ॥ २५ ॥ वक्षोऽधिवासमृषभस्य महाविभूतेः पुंसां मनोनयननिर्वृतिमादधानम् ॥ कण्ठं च कौस्तुभमणेरधिभूषणार्थं कुर्यान्मनस्यखिललोकनमस्कृतस्य ॥ २६ ॥ बाहूंश्च मन्दरगिरेः परिवर्तनेन निर्णिक्तबाहुवलयानधिलोकपालान् ॥ सञ्चिन्तयेद्दशशत-

सवारी गर्दा प्रधान सहायक हुन् । फेरि कटि प्रदेशको ध्यान गर्नु जसमा करधनी र पीताम्बर सुशोभित छन् ॥२४॥ अब त्यो नाभिकाको ध्यान गरोस् जसमा सारा ब्रह्माण्ड स्थित छ र जुन ब्रह्माजीको उत्पत्ति स्थान तथा सर्वलोकरूपी कमलको उत्पत्ति भएको छ । फेरि भगवान्‌का छातीको ध्यान गर्नु, जसमा हारका उज्ज्वल किरण टल्किरहेछन् । त्यसपछि वक्षस्थलको ध्यान गरोस्, जहाँ लक्ष्मीजी निवास छ र जुन भक्तगणका नेत्रको निम्ति आनन्दप्रद छ । फेरि घाँटीको ध्यान गरोस जुन कौस्तुभ मणिलाई पनि शोभा दिइरहेको छ ॥ ॥२५-२६॥अब भगवान्‌का चारै बाहुको ध्यान गरोस्—जसमा पहिरेका कंकण समुद्र मन्थनमा मन्दराचलको घर्षणले टल्कने भएका, सबै लोकपाल तिनै बाहुको भरमा निर्भय र ती तेजमय

* श्रीमद्भागवतको महत्त्व—यौटा ब्राह्मणले धेरै दिन काशीमा बसेर वेद-वेदान्त पढेर अनेक धर्मग्रन्थ र श्रीमद्भागवत कण्ठस्थ पारे । 'विद्यावतां भागवते परीक्षा ।' [भागवत कुनै सामान्य र नक्कली ग्रन्थ होइन । यो ज्ञान, भक्ति र वैराग्यले पूर्ण महान् ग्रन्थ हो । ती ब्राह्मण यौटा राजाकहाँ गएर भने—'महाराज ! हजुरको इच्छा भए म भागवतको प्रसाद पाठ गरौं र हजुर सुन्नुहवस् । ... गरी । राजाले भने—'अझ भागवतको अध्ययन गरेर आउनोस् ।' ब्राह्मणलाई रिस उठ्यो र भुतभुताउँदै हिंड्यो—'अब मैले के पढ्न बाँकी छ ? मैले सम्पूर्ण भागवत कण्ठस्थ पारिसकें । भागवतको ... अर्थ गर्नु मेरो निम्ति सहजै छ । राजा कति मूर्ख रहेछ ।' त्यसपछि तिनले फेरि भागवतको अवलोकन गरे र राजाकहाँ गए । राजाले फेरि पहिले जस्तै उत्तर दिए । अब ब्राह्मण राजामाथि अत्यन्त ... बसेर फेरि भागवत पढ्न लागे त्यसमा एक स्थानमा आयो—के लगाउनको निम्ति बाटोमा कालिएका चिथडा टुक्रा पाइन्नन् ? के खानको निम्ति वृक्षले फल दिन छाडे ? र विद्वानहरू मदान्ध राजाको ... यो श्लोक पढ्दा-पढ्दै ब्राह्मणका आँखाबाट आँसु बग्न लाग्यो र त्यसपछि ती कुनै राजा वा धनीकहाँ गएनन् ।

चक्रको ध्यान गरोस् जसमा हजार दाँत छन् । त्यसपछि उनका उज्ज्वल शङ्खको ध्यान गरोस् ॥ २७ ॥ अनि भगवान्का गदाको स्मरण गरोस् जो शत्रुदलको संहार गरेर तिनका रक्तमा डुबिरहन्छ । अब भगवान्को वनमालाको ध्यान गरोस्, जसमा भ्रमर गुञ्जार गर्दछन् । अनि निर्मल कौस्तुभमणिको ध्यान गरोस् ॥२८॥ अनि भक्तको निम्ति अवतार धारण गर्ने प्रभुका मुखारविन्दको ध्यान गरोस् । मकराकृत कुण्डल हल्लनाले तिनका कपोलमा सुन्दर आभा परिरहन्छ, उनको नाक झन् राम्रो छ ॥२९॥ बटारिएका अलक मुखको वरिपरि छरिएका छन् र आँखीभौं सुन्दर छ । भगवान्का नेत्र कमलसमान सुन्दर र माछाका झैं ठूल-ठूला छन् र कपाल भ्रमरलाई लज्जित पार्ने छन् । अब भक्तको हित गर्न भगवान्का मन्दहास्ययुक्त रूपको ध्यान गरोस् । त्यो तीनै पापलाई हटाउने छ । फेरि उनको मुस्कुराहट सम्झोस । त्यो मन्द हाँसो संसारका शोकाश्रुहरूलाई सोसिलिन्छ । अब प्रभुका आँखीभौंको ध्यान गरोस् । भगवान्ले त्यो मुनिजनको रक्षा गर्न र कामदेवलाई मोहित पार्न आफ्नी मायाले बनाएको हो ॥ ३०-३२ ॥ फेरि भगवान्का

तारमसह्यतेजः शङ्खं च तत्करसरोरुहराजहंसम् ॥ २७ ॥ कौमोदकीं भगवतो दयितां स्मरेत दिग्धामरातिभटशोणितकर्दमेन ॥ मालां मधुव्रतवरूथगिरोपघुष्टां चैत्यस्य तत्त्वममलं मणिमस्य कण्ठे ॥ २८ ॥ भृत्यानुकम्पितधियेह गृहीतमूर्तेः संचिन्तयेद्भगवतो वदनारविंदम् ॥ यद्विस्फुरन्मकरकुण्डलवल्गितेन विद्योतितामलकपोलमुदारनासम् ॥ २९ ॥ यच्छ्रीनिकेतमलिभिः परिसेव्यमानं भूत्या स्वया कुटिलकुन्तलवृन्दजुष्टम् ॥ मीनद्वयाश्रयमधिक्षिपदब्जनेत्रं ध्यायेन्मनोमयमतन्द्रित उल्लसद्भ्रु ॥ ३० ॥ तस्यावलोकमधिकं कृपयातिघोरतापत्रयोपशमनाय निसृष्टमक्ष्णोः ॥ स्निग्धस्मितानुगुणितं विपुलप्रसादं ध्यायेच्चिरं विपुलभावनया गुहायाम् ॥ ३१ ॥ हासं हरेरवनताखिललोकतीव्रशोकाश्रुसागरविशोषणमत्युदारम् ॥ सम्मोहनाय रचितं निजमाययाऽस्य भ्रूमंडलं मुनिकृते मकरध्वजस्य ॥ ३२ ॥ ध्यानायनं प्रहसितं बहुलाधरोष्ठभासारुणायिततनुद्विजकुन्दपंक्ति ॥ ध्यायेत्स्वदेहकुहरेऽवसितस्य विष्णोर्भक्त्याऽऽर्द्रयार्पितमना न पृथग्दिदृक्षेत् ॥ ३३ ॥ एवं हरौ भगवति प्रतिलब्धभावो भक्त्या द्रवद्धृदय उत्पुलकः प्रमोदात् ॥ औत्कण्ठ्यबाष्पकलया मुहुरर्द्यमानस्तच्चापि चित्तबडिशं शनकैर्वियुङ्क्ते ॥ ३४ ॥ मुक्ताश्रयं यर्हि निर्विषयं विरक्तं निर्वाणमृच्छति मनः सहसा यथाऽर्चिः ॥ आत्मानमत्र पुरुषोऽव्यवधानमेकमन्वीक्षते प्रतिनिवृत्तगुणप्रवाहः ॥ ३५ ॥ सोऽप्येतया चरमया मनसो निवृत्त्या

हाँसोको ध्यान गरोस् । हाँसो कुन्द समान दाँतमा तल्लो ओंठको आभा पर्नाले ती राता-राता देखिन्छन् । त्यस हाँसोतिर भक्तको मन प्रसन्न नगरे पनि आकृष्ट हुन्छ । हृदयाकाशमा स्थित भगवान्को तन्मय भएर ध्यान गरोस्—जसमा चित्तले चंचलता छाडिदिओस् ॥३३॥ यस्तो गर्नाले भगवान्मा एकत्व हुन जान्छ र भक्तिले गर्दा भक्तको हृदय पग्लन थाल्दछ । हर्षले त्यसलाई रोमाञ्च भएर आउँछ र भगवद्दर्शनको उत्सुकताले त्यसका आँखामा आनन्दाश्रु झरिन्छ । यसरी आनन्दले गद्गद भएपछि भक्त विस्तार-विस्तार तन्मय हुन्छ । अनि कल्पित मूर्तिबाट त्यसको चित्त हट्तछ । चित्त निर्विषय र निराधार भएपछि त्यो उसै गरी तन्मय हुन्छ—॥ ३४ ॥ जसरी तेल र बत्ती नभएपछि ज्योति आफ्नो मूल कारण ( महाज्योति ) मा एकाकार हुन्छ । त्यस स्थितिमा आदिको उपाधि नरहनाले त्यो अखण्ड आत्माको दर्शन हुन्छ जसमा ध्याता र ध्येयको अन्तर ( फरक ) रहन्न ।

त्यस स्थितिमा पुगेको साधक 'योगाभ्यासबाट उत्पन्न तथा अविद्यारहित मानसिक वृत्तिहरूलाई प्रकृति तर्फबाट हटेर आत्मसाक्षात्कार पारायण भएपछि मन अक्षनिष्ठ हुन्छ ॥३५-३६॥ विवेक उत्पन्न भएपछि साधक कर्तृत्व-भोक्तृत्व आदिको अभिमानको कर्ता तथा अविद्या-कल्पित अहङ्कारलाई नै आत्मा मान्न लाग्छ ॥३७॥ जसरी रक्सीको मातमा मातेको व्यक्तिलाई ज्ञान रहन्न कि मेरो लुगा खसिसक्यो वा लगाएकै छु । त्यसै गरी जीवनमुक्त साधक यो बिर्सन्छ कि उसको शरीर आसनमा छ कि उठेर अन्तै हिँडिसक्यो अथवा फकेर फेरि त्यहीं आइपुग्यो । यसरी अब त्यसलाई देहको सुद्धि-बुद्धि रहन्न, अनि दुःखको अनुभव नै कहाँ टिक्न सक्छ ? ॥ ३८ ॥ प्रारब्ध कर्मभोग भोग्नको निम्ति नै त्यो यस बखत देहलाई धारण गरिरहन्छ । समाधि सिद्ध भइसकेपछि योगीलाई आफ्नो शरीर वा गृहस्थीका प्रपञ्चमा महत्वबुद्धि रहन्न । उक्त वस्तुहरूलाई त्यो स्वप्नको सामग्री झैं निःसार ठान्न थाल्दछ । जस्तै—वित्त,पुत्र र मित्र आदिबाट व्यक्तिको सत्ता पृथक् रहन्छ, त्यस्तै नै देह आदिबाट आत्मालाई पृथक् ठानोस् ॥ ३९ ॥ देह आदिलाई आत्मा ठान्नु पनि ठूलो भूल हो ।

तस्मिन्महिम्न्यवसितः सुखदुःखबाह्ये ॥ हेतुत्वमप्यसति कर्तरि दुःखयोर्यत्स्वात्मन्विधत्त उपलब्धपरात्मकाष्ठः ॥ ३६ ॥ देहं च तं न चरमः
स्थितमुत्थितं वा सिद्धो विपश्यति यतोऽध्यगमत्स्वरूपम् ॥ ये दैवादुपेतमथ दैववशादपेतं वासो यथा परिकृतं मदिरामदान्धः ॥ ३७ ॥ देहोऽपि
दैववशगः खलु कर्म यावत्स्वारम्भकः प्रतिसमीक्षत एव सासुः ॥ तं सप्रपञ्चमधिरूढसमाधियोगः स्वाप्नं पुनर्न भजते प्रतिबुद्धवस्तु ॥ ३८ ॥
यथा पुत्राच्च वित्ताच्च पृथङ्मर्त्यः प्रतीयते ॥ अप्यात्मत्वेनाभिमताद्देहादेः पुरुषस्तथा ॥ ३९ ॥ यथोल्मुकाद्विस्फुलिंगाद्धूमाद्वापि स्वसम्भवात् ॥
अप्यात्मत्वेनाभिमताद्यथाऽग्निः पृथगुल्मुकात् ॥ ४० ॥ भूतेन्द्रियान्तःकरणात्प्रधानाज्जीवसंज्ञितात् ॥ आत्मा तथा पृथग्द्रष्टा भगवान्ब्रह्मसंज्ञितः ॥४१॥
सर्वभूतेषु चात्मानं सर्वभूतानि चात्मनि ॥ ईक्षेतानन्यभावेन भूतेष्विव तदात्मताम् ॥ ४२ ॥ स्वयोनिषु यथा ज्योतिरेकं नाना प्रतीयते ॥ योनीनां
गुणवैषम्यात्तथाऽऽत्मा प्रकृतौ स्थितः ॥ ४३ ॥ तस्मादिमां स्वां प्रकृतिं दैवीं सदसदात्मिकाम् ॥ दुर्विभाव्यां पराभाव्य स्वरूपेणावतिष्ठते ॥ ४४ ॥
इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेये साधनानुष्ठानं नामाष्टाविंशतितमोऽध्यायः ॥ २८ ॥ देवहूतिरुवाच ॥ लक्षणं महदादीनां

जसरी बल्दो काठबाट धूवाँ र फिलिङ्गो निस्कन्छ, परन्तु पोल्ने र प्रकाश दिने आगो पृथक् वस्तु हुन्छ । त्यसै गरी देह आदिबाट आत्मा अलग्ग रहन्छ । शरीर, इन्द्रिय तथा अन्तःकरणबाट आत्मा ( जीव ) पृथक् छ र प्रकृतिको प्रवर्तक ब्रह्म आत्माबाट पृथक् छ ॥ ४०-४१ ॥ यो आत्मा र परमाको भेद अवास्तविक हो । जसरी चतुर्विध संसारमा भिन्न प्राणी—स्वेदज, उद्भिज, अण्डज र जरायुजमा पृथ्वी आदि पञ्चतत्त्व व्याप्त रहन्छन्, त्यसै गरी प्राणिमात्रमा आफूलाई र आफूमा प्राणिमात्रलाई अभिन्नरूपले स्थित देखोस् ॥४२॥ जसरी दाउरा सानो-ठूलो पनि आगो समान देखिन्छ, त्यसै गरी आत्मा पनि देव-मनुष्य आदिसित सम्बन्ध भएर त्यस्तै नै प्रतीत हुन थाल्दछ ॥ ४३ ॥ यस निम्ति साधक बन्धनमा पार्ने भगवच्छक्तिस्वरूपा प्रकृतिलाई उनैको कृपाले आफ्नो वशमा पारेर ब्रह्ममय बन्दछ ॥ ४४ ॥ इति श्रीमद्भागवते तृतीयस्कन्धे 'वासिष्ठी' भाषाटीकायामष्टाविंशोऽध्यायः ॥२८॥ ( भक्तियोग, कालको शक्ति र संसारका भीषणताको वर्णन ) देवहूतिले भनिन्—हे भगवन् ! हजुर सांख्यशास्त्रको रीतिले प्रकृति, पुरुष र महत्तत्त्व आदिका यथार्थ लक्षण

बताइयो अब मलाई विस्तारपूर्वक भक्तियोगको उपदेश दिनुहवस् ॥१॥२॥ साथै जीवका विविध योनिहरूको वर्णन गर्नोस्—जसले गर्दा वैराग्य उत्पन्न होओस् । जसको भयले प्राणी सत्कर्ममा प्रवृत्त हुन्छन, जो ब्रह्मादि देवता माथि पनि शासन गर्दछन् र जो हजुरको स्वरूप छ, यो महाप्रतापी कालको पनि वर्णन सुनदछु । शरीर आदिमा ममत्वबुद्धि गर्न्न र प्रवृत्ति मार्गमा हिंड्दा-हिंड्दा थाक्ने अविवेकी जनहरूलाई तत्त्वज्ञानको उपदेश दिनका निम्ति नै हजुरको अवतार भएको हो । योगविद्याको विस्तारका लागि हजुर प्रकट हुनुहुन्छ ॥३-५॥ मैत्रेय भन्दछन्—हे विदुर ! माता देवहूतिका कुरा ध्यानपूर्वक सुनेर कपिलदेव दयाभावले प्रेरित भई प्रसन्न मनले बोले—हे माता ! फल र सङ्कल्पको भेदले भक्तियोगका अनेक शाखाहरू भइसकेका छन् ॥६॥७॥ जो क्रोधी व्यक्ति आत्मा र परमात्मामा भेदभाव राख्दै पाखण्ड, हिंसा र मात्सर्य ( डाह ) ले प्रेरित भएर मेरो ( भगवानको ) भक्ति गर्दछ, त्यो तामस भक्त कहिन्छ । त्यसका पनि तीन भेद हुन्छन्—अर्काको विनाश ( हिंसा ) को निम्ति भक्ति गर्ने व्यक्ति अधम, पाखण्डले प्रेरित भएर भक्ति गर्ने मध्यम र

प्रकृतेः पुरुषस्य च ॥ स्वरूपं लक्ष्यतेऽमीषां येन तत्पारमार्थिकम् ॥ १ ॥ यथा सांख्येषु कथितं यन्मूलं तत्प्रचक्षते ॥ भक्तियोगस्य मे मार्गं ब्रूहि विस्तरशः प्रभो ॥ २ ॥ विरागो येन पुरुषो भगवन्सर्वतो भवेत् ॥ आचक्ष्व जीवलोकस्य विविधा मम संसृतीः ॥ ३ ॥ कालस्येश्वररूपस्य परेषां च परस्य ते ॥ स्वरूपं बत कुर्वन्ति यद्धेतोः कुशलं जनाः ॥ ४ ॥ लोकस्य मिथ्याभिमतेरचक्षुषश्चिरं प्रसुप्तस्य तमस्यनाश्रये ॥ श्रान्तस्य कर्मस्वनुविद्धया धिया त्वमाविरासीः किल योगभास्करः ॥ ५ ॥ मैत्रेय उवाच ॥ इति मातुर्वचः श्लक्ष्णं प्रतिनन्द्य महामुनिः ॥ आबभाषे कुरुश्रेष्ठ प्रीतस्तां करुणार्दितः ॥ ६ ॥ श्रीभगवानुवाच ॥ भक्तियोगो बहुविधो मार्गैर्भामिनि भाव्यते ॥ स्वभावगुणमार्गेण पुंसां भावो विभिद्यते ॥ ७ ॥ अभिसंधाय यो हिंसां दम्भं मात्सर्यमेव वा ॥ संरम्भी भिन्नदृग्भावं मयि कुर्यात्स तामसः ॥ ८ ॥ विषयानभिसंधाय यश ऐश्वर्यमेव वा ॥ अर्चादावर्चयेद्यो मां पृथग्भावः स राजसः ॥९॥ कर्मनिर्हारमुद्दिश्य परस्मिन्वा तदर्पणम् ॥ यजेद्यष्टव्यमिति वा पृथग्भावः स सात्त्विकः ॥ १० ॥ मद्गुणश्रुतिमात्रेण मयि सर्वगुहाशये ॥ मनोगतिरविच्छिन्ना यथा गङ्गाम्भसोऽम्बुधौ ॥ ११ ॥ लक्षणं भक्तियोगस्य निर्गुणस्य ह्युदाहृतम् ॥ अहैतुक्यव्यवहिता या भक्तिः पुरुषोत्तमे ॥ १२ ॥ सालोक्यसार्ष्टिसामीप्यसारूप्यैकत्वमप्युत ॥ दीयमानं न गृह्णन्ति विना मत्सेवनं जनाः ॥१३॥ स एव

मात्सर्यले प्रेरित भएर भक्ति गर्ने व्यक्ति उत्तम तामस भक्त कहिन्छ ॥८॥ भेदबुद्धि राखेर विषय, यश र ऐश्वर्यको कामनाले मूर्ति द्वारा मेरो भक्ति गर्ने व्यक्ति राजस भक्त पनि तीन थरिका हुन्छन् । चन्दन, माला स्त्री आदि (विषय) को प्राप्तिका निम्ति भक्ति गर्ने व्यक्ति अधम, यशको प्राप्तिका लागि भक्ति गर्ने भक्त मध्यम र ऐश्वर्य पाउनको निम्ति भक्ति गर्ने प्राणी राजस भक्त कहिन्छ ॥९॥ भेदबुद्धि राखेर जो व्यक्ति पाप-क्षयको निम्ति ईश्वरप्रीत्यर्थ र वेदविधिको पूर्तिका निम्ति भक्ति गर्दछ, त्यो क्रमशः अधम, मध्यम र उत्तम श्रेणीको सात्त्विक भक्त कहिन्छ । ( उल्लिखित रीतिले नवधा भक्तिका नौ-नौ भेद गरेपछि एकासी भेद हुन्छन् ) ॥१०॥ निर्गुण भक्ति यस्तै किसिमको हुन्छ । सर्वान्तर्यामी भक्तवत्सलता आदि गुणहरू सुनेर निष्काम भावले लगातार गरिने भेद-बुद्धि रहित भक्ति नै निर्गुण भक्ति कहिन्छ ॥११॥१२॥ भक्त जन भक्तिको अतिरिक्त सालोक्य ( मेरो

लोकमा निवास ) सार्ष्टि ( मेरो ऐश्वर्यको बराबर ऐश्वर्यको उपभोग ) सामीप्य ( मेरो समीप निवास ), सारूप्य ( मेरै रूपको हुनु ) र सायुज्य ( ममा मिल्नु ) मुक्ति पनि सोऽर्पन, अनि ती भक्त कुनै वस्तुको इच्छा किन गर्दथे ? ॥ १३ ॥ आत्यन्तिक भक्तियोग त्यो हो, जसद्वारा साधक गुणत्रय ( सत्व, रज र तम ) देखि पर भएर ब्रह्मस्वरूप प्राप्त गर्दछ ॥१४॥ निष्काम भएर श्राद्ध आदि नित्य-नैमित्तिक कर्म गर्ने, अवैदिक हिंसाबाट जोगिएर रही पाञ्चरात्रको विधिले मेरो पूजन, चरण-स्पर्श र अभिवादन गर्ने तथा प्राणिमात्रमा मेरै अनुभूति गर्नाले साधकको चित्त ममा लाग्दछ । धैर्य राख्ने, वैराग्यको भावना गर्ने, बूढा-पाका र सत्पुरुषहरूको आदर-सत्कार गर्ने, दीन-दुःखीहरूमा दयादृष्टि राख्ने, आफू समान शील-स्वभाव हुनेसंग स्नेहभाव राख्ने र यम-नियम हरूको पालन गर्नाले साधकको चित्त ममा लाग्दछ । आत्मज्ञानको प्रतिपादक ग्रन्थहरूको अनुशीलन गर्ने, हरिनाम कीर्तन गर्ने, हृदयमा छल-कपटलाई आउनै नदिने, सत्पुरुषको संगतिमा रहने र देह आदिमा ममत्व बुद्धि नराख्नाले साधकको चित्त ममा लाग्दछ । उल्लिखित रीतिले आचरण गर्दा मे...

भक्तियोगस्य आत्यन्तिक उदाहृतः ॥ येनातिव्रज्य त्रिगुणं मद्भावायोपपद्यते ॥ १४ ॥ निषेवितेनानिमित्तेन स्वधर्मेण महीयसा ॥ क्रियायोगेन शस्तेन नातिहिंस्रेण नित्यशः ॥ ५ ॥ मद्धिष्ण्यदर्शनस्पर्शपूजास्तुत्यभिवादनैः ॥ भूतेषु मद्भावनया सत्त्वेनासङ्गमेन च ॥ १६ ॥ महतां बहुमानेन दीनानामनुकम्पया ॥ मैत्र्या चैवात्मतुल्येषु यमेन नियमेन च ॥ १७ ॥ आध्यात्मिकानुश्रवणान्नामसङ्कीर्तनाच्च मे ॥ आर्जवेनार्यसङ्गेन निरहंक्रियया तथा ॥ १८ ॥ मद्धर्मणो गुणैरेतैः परिसंशुद्ध आशयः ॥ पुरुषस्याञ्जसाऽभ्येति श्रुतमात्रगुणं हि माम् ॥ १९ ॥ यथा वातरथो घ्राणमावृङ्क्ते गन्ध आशयात् ॥ एवं योगरतं चेत आत्मानमविकारि यत् ॥ २० ॥ अहं सर्वेषु भूतेषु भूतात्माऽवस्थितः सदा ॥ तमवज्ञाय मां मर्त्यः कुरुतेऽर्चाविडम्बनम् ॥ २१ ॥ यो मां सर्वेषु भूतेषु सन्तमात्मानमीश्वरम् ॥ हित्वाऽर्चां भजते मौढ्याद्भस्मन्येव जुहोति सः ॥ २२ ॥ द्विषतः परकाये मां मानिनो भिन्नदर्शिनः ॥ भूतेषु बद्धवैरस्य न मनः शान्तिमृच्छति ॥२३॥ अहमुच्चावचैर्द्रव्यैः क्रिययोत्पन्नयाऽनघे ॥ नैव तुष्येऽर्चितोऽर्चायां भूतग्रामावमानिनः ॥ २४ ॥ अर्चादावर्चयेत्तावदीश्वरं मां स्वकर्मकृत् ॥ यावन्न वेद स्वहृदि सर्वभूतेष्ववस्थितम् ॥ २५ ॥ आत्मनश्च परस्यापि यः करोत्यन्तरोदरम् ॥ तस्य भिन्नदृशो मृत्युर्विदधे भयमुल्बणम् ॥ २६ ॥ अथ मां सर्वभूतेषु भूतात्मानं कृतालयम् ॥ अर्हयेद्दानमा-

साधकको चित्त शुद्ध हुन्छ ॥१५-१९॥ तब जसरी वायु गन्धलाई नाकको प्वालसम्म पुऱ्याउँछ, त्यसै गरी उपर्युक्त गुणहरूको आश्रय लिनाले चित्त भगवान्‌को नजीक पुग्न सक्तछ ॥२०॥ म प्राणिमात्रमा अन्तर्यामी रूपले स्थित छु । मेरो यस रूपको उपेक्षा गरेर जो मनुष्य केवल प्रतिमा को पूजन गर्दछन्, ती पाखण्डी हुन् ॥२१॥ प्राणिमात्रमा अन्तर्यामी रूपमा स्थित मेरो अवज्ञा गरेर मूर्खतावश मूर्तिको पूजामा लागिरहनु खरानीमा हवन गरे झैं हो ॥२२॥ जुन अविवेकी मनुष्य आत्मालाई एकदेशीय मानेर भेदबुद्धिको कारण अरूसँग द्वेष राख्दछ, त्यसलाई मनको शान्ति मिल्न सक्तैन ॥२३॥ हे माता ! जसको हृदय राग-द्वेषले कलुषित रहन्छ, त्यो यदि उत्तम सामग्री द्वारा मेरो पूजा गरोस् तापनि म त्यस माथि प्रसन्न हुन्न ॥२४॥ मनुष्य त्यस बेलासम्म नित्य-नैमित्तिक कर्म गर्दै रहोस् र मेरो मूर्तिको पूजा गर्दै रहोस्, जबसम्म त्यसलाई आफ्नो हृदयमा म सर्वान्तर्यामीको उपलब्धि हुँदैन

॥२५॥ भेदबुद्धि हुने अज्ञानीलाई म मृत्युरूप भएर आवागमनको चक्रमा पछारिदिन्छु ॥२६॥ अतः मलाई सर्वान्तर्यामी जानेर भदबुद्धि फालेर आदर-सत्कार द्वारा सज्जनहरूको, दानद्वारा साधारण व्यक्तिहरूको र मैत्री द्वारा समान व्यक्तिलाई सन्तुष्ट राख्नोस् । यही वास्तविक पूजा हो । जड ( ढुङ्गा ) आदिको अपेक्षा चेतन (वृक्षादि), चेतनको अपेक्षा साम फेर्ने (कीरा आदि ) र तिनको अपेक्षा विशेषरूपले स्पर्शको अनुभव गर्ने ( यमल आदि ) र तिनको अपेक्षा विशेषरूपले ज्ञानवान् र रसका अनुभवी ( माछा आदि ) जीव श्रेष्ठ छन् ॥२७-२८॥ तिनको अपेक्षा विशेषरूपले गन्धको अनुभव गर्ने ( भ्रमर आदि ), तिनको अपेक्षा विशेषरूपले शब्दको अनुभव गर्ने ( सर्प आदि ), तिनको अपेक्षा रूपको भेद जान्नमा बाठा (काक आदि ) र तिनको अपेक्षा तल-माथि दुवैतिर दाँत हुने जीव श्रेष्ठ हुन्छन् ॥२९॥ चरण रहित जीवहरूको अपेक्षा चरण हुने, तिनको अपेक्षा चारखुट्टे, चारखुट्टेको अपेक्षा दुइ खुट्टा हुने (मनुष्य) र मनुष्यहरूमा पनि चार वर्ण श्रेष्ठ छन् । तिनमा पनि ब्राह्मण श्रेष्ठ हुन् । ब्राह्मणमा पनि वेदपाठी तिनको अपेक्षा वेदको अर्थज्ञ र तिनको अपेक्षा संशय निवारण गर्न विप्र श्रेष्ठ हुन्छन् ॥३०-३१॥ ती भन्दा आफ्नो आश्रमोचित कर्तव्य पालन गर्ने व्यक्ति श्रेष्ठ हुन्छ । तीभन्दा निष्काम भक्त श्रेष्ठ हुन्छन् ॥३२॥ तिनको पनि अपेक्षा त्यो व्यक्ति श्रेष्ठ

नाभ्यां मैत्र्याऽभिन्नेन चक्षुषा ॥ २७ ॥ जीवाः श्रेष्ठा ह्यजीवानां ततः प्राणभृतः शुभे ॥ ततः सचित्ताः प्रवरास्ततश्चेन्द्रियवृत्तयः ॥ २८ ॥ तत्रापि स्पर्शवेदिभ्यः प्रवरा रसवेदिनः ॥ तेभ्यो गन्धविदः श्रेष्ठास्ततः शब्दविदो वराः ॥२९॥ रूपभेदविदस्तत्र ततश्चोभयतोदतः ॥ तेषां बहुपदाः श्रेष्ठाश्चतुष्पादस्ततो द्विपात् ॥ ३० ॥ ततो वर्णाश्च चत्वारस्तेषां ब्राह्मण उत्तमः ॥ ब्राह्मणेष्वपि वेदज्ञो ह्यर्थज्ञोऽभ्यधिकस्ततः ॥ ३१ ॥ अर्थज्ञात्संशयच्छेत्ता ततः श्रेयान्स्वकर्मकृत् ॥ मुक्तसङ्गस्ततो भूयानदोग्धा धर्ममात्मनः ॥ ३२ ॥ तस्मान्मय्यर्पिताशेषक्रियार्थात्मा निरन्तरः ॥ मय्यर्पितात्मनः पुंसो मयि संन्यस्तकर्मणः ॥ न पश्यामि परं भूतमकर्तुः समदर्शनात् ॥ ३३ ॥ मनसैतानि भूतानि प्रणमेद्बहु मानयन् ॥ ईश्वरो जीवकलया प्रविष्टो भगवानिति ॥ ३४ ॥ भक्तियोगश्च योगश्च मया मानव्युदीरितः ॥ ययोरेकतरेणैव पुरुषः पुरुषं व्रजेत् ॥३५॥ एतद्भगवतो रूपं ब्रह्मणः परमात्मनः ॥ परं प्रधानं पुरुषं दैवं कर्मविचेष्टितम् ॥ ३६ ॥ रूपभेदास्पदं दिव्यं काल इत्यभिधीयते ॥ भूतानां महदादीनां यतो भिन्नदृशां भयम् ॥ ३७ ॥ योऽन्तः प्रविश्य भूतानि भूतैरत्त्यखिलाश्रयः ॥ स विष्ण्वाख्योऽधियज्ञोऽसौ कालः कलयतां प्रभुः ॥ ३८ ॥ न चास्य कश्चिद्दयितो न द्वेष्यो न च बान्धवः ॥ आवि-

हो, जसले सारा कर्म, तिनको फल र शरीर पनि मलाई अर्पण गरिराखेको छ, त्यही व्यक्ति सर्वोपरि हो ॥३३॥ किनभने त्यो कर्तृत्वको अभिमानबाट टाढा र समदर्शी हुन्छ । अतः प्राणिमात्रको भित्र जीवरूपमा ईश्वरलाई विद्यमान जानेर सबै जीवको आदर गरोस् ॥३४॥ हे माता ! मैले भक्तियोग र योगको वर्णन गरिदिएँ । यी दुवैमा कुनै यौटाको पनि अव-लम्बन गर्नाले साधकलाई परमात्मा प्राप्त हुन्छन्॥३५॥ के पुरुष, के प्रकृति के यिनको अतिरिक्त, जे जति छ, त्यो सबै सर्वनियन्ता भगवान्को स्वरूप हो । त्यसैलाई दैव भन्दछन् जसले गर्दा जीवहरूलाई अनेक योनिहरू प्राप्त हुन्छन् ॥३६॥ भगवानको पूर्वोक्त स्वरूपलाई काल पनि भन्दछन् । यसै कालले गर्दा वस्तुहरूमा भिन्नता प्रतीत हुन्छ । भेददृष्टि र देह आदिमा ममत्व-बुद्धि हुनेलाई कालको भय हुन्छ, तर एकत्व-बुद्धि हुनेलाई कतैबाट पनि भय रहन्न ॥३७॥ जो प्राणीहरूमा प्रविष्ट भएर पंचमहाभूत द्वारा संहार-कार्य गर्दछ, जसले यज्ञ-याग आदिको फल पाइन्छ तथा जो जगतलाई वशमा राख्ने ब्रह्मा आदिका पनि अधिनायक छन्, तिनै जीवमध्यमा सबैका आधार हुन् र तिनैको नाम नारायण विष्णु हो ॥ ३८ ॥

कालको न कोही मित्र छ, न कुनै शत्रु, त्यसको कुनै आफ्नो निकट सम्बन्धी पनि छैन । त्यो मतर्क भएर असावधान प्राणिहरूमा प्रवेश गर्छ र तिनको अन्त गरिदिन्छ॥३९॥ कालको डरले हावा चल्दछ, सूर्य तातो हुन्छन्, पानी पर्दछ, ताराहरू टल्कन्छन्, वृक्ष, पोथा र लता आदि यथा समय फुल्छन् र फल्दछन् ॥४०-४१॥ कालको नै भयले नदी नाला बग्दछन् समुद्र मर्यादामा बसिरहन्छ, आगो बल्दछ, पर्वत सहित पृथ्वी जलमाथि स्थिर रहन्छिन् र आकाश प्राणिहरूलाई स्थान दिन्छ । कालको नै डरले महत्तत्त्व ( पृथ्वी आदि ) सात आवरण हुने आफ्नो शरीर (अहङ्कार) लाई (ब्रह्माण्डको रूपमा) फैलाउछ तथा ब्रह्मा, विष्णु, महेश जगत् उत्पन्न गर्छन्, पाल्दछन् र संहार गर्दै रहन्छन् । कालको न आदि छ, न अन्त्य, किन्तु त्यो जन्म दिने रूका पनि जन्मदाता र मृत्युको पनि नियन्ता हो ॥४२-४५॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषा-टीकायामेकोनत्रिंशोऽध्यायः॥२९॥(पापीहरूको अधोगतिको वर्णन)—कपिलदेवले भने—हे माता ! जस्तै हावा बादलहरूलाई उडाएर लैजान्छ,तैपनि ती बादल वायुको शक्तिलाई बुझ्नसक्तैनन्,मायाले,मोहित

शत्रुमर्त्योऽसौ प्रमत्तं जनमन्तकृत् ॥ ३८ ॥ यद्भयाद्वाति वातोऽयं सूर्यस्तपति यद्भयात् यद्भयाद्वर्षते देवो भगणो भाति यद्भयात् ॥४०॥ यद्वनस्पतयो भीता लताश्चौषधिभिः सह ॥ स्वे स्वे कालेऽभिगृह्णन्ति पुष्पाणि च फलानि च ॥ ४१ ॥ स्रवन्ति सरितो भीता नोत्सर्पत्युदधिर्यतः ॥ अग्निरिन्धे सगिरिभिर्भूर्न मज्जति यद्भयात् ॥४२॥ नभो ददाति श्वसतां पदं यन्नियमाददः ॥ लोकं स्वदेहं तनुते महान्सप्तभिरावृतम् ॥ ४३ ॥ गुणाभिमानिनो देवाः सर्गादिष्वस्य यद्भयात् ॥ वर्तन्तेऽनुयुगं येषां वश एतच्चराचरम् ॥ ४४ ॥ सोऽनन्तोऽन्तकरः कालोऽनादिरादिकृदव्ययः जनं जनेन जनयन्मारयन्मृत्युनान्तकम् ॥ ४५ ॥ इति श्रीमद्भागवते तृतीयस्कन्धे कापिलेयोपाख्याने एकोनत्रिंशोऽध्यायः ॥ २९ ॥ कपिल उवाच ॥ तस्यैतस्य जनो नूनं नायं वेदोरुविक्रमम् ॥ काल्यमानोऽपि बलिनो वायोरिव घनावलिः ॥ १ ॥ यं यमर्थमुपादत्ते दुःखेन सुखहेतवे ॥ तं तं धुनोति भगवान्पुमाञ्छोचति यत्कृते ॥२॥ यदध्रुवस्य देहस्य सानुबन्धस्य दुर्मतिः ॥ ध्रुवाणि मन्यते मोहाद्गृहक्षेत्रवसूनि च ॥ ३ ॥ जन्तुर्वै भव एतस्मिन्यां यां योनिमनुव्रजेत् ॥ तस्यां तस्यां स लभते निर्वृतिं न विरज्यते ॥ ४ ॥ नरकस्थोऽपि देहं वै न पुमांस्त्यक्तुमिच्छति ॥ नारक्यां निर्वृतौ सत्यां देवमायाविमोहितः ॥ ५ ॥ आत्मजायासुतागारपशुद्रविणबन्धुषु ॥ निरूढमूलहृदय आत्मानं बहु मन्यते ॥ ६ ॥ सन्दह्यमानसर्वाङ्ग एषामुद्वहनाधिना ॥ करोत्यविरतं मूढो दुरितानि दुराशयः ॥ ७ ॥ आक्षिप्तात्मेन्द्रियः स्त्रीणामसतीनां च मायया ॥ रहो रचितयाऽऽलापैः शिशूनां कलभा-

कालको शक्ति बुझ्न सक्तैन । सुख प्राप्त गर्नका निम्ति मनुष्य जति वस्तुको यत्नपूर्वक संग्रह गर्दछन्, ती सबै प्रभु कालले एकछिनमै वेपत्ता पारिदिन्छ त्यसको निम्ति मानिस पछिबाट पछि तो गर्न थाल्दछ ॥१-२॥ स्त्री पुत्र, शरीर र धन-सम्पत्ति आदि वास्तवमा नश्वर हुन्, तर जीव अज्ञानवश तिनलाई अविनाशी ठान्दछ ॥ ३ ॥ जीव जुन-जुन योनिमा जन्म लिन्छ, त्यसैका कामनिक सुखहरूमा अल्झेर वैराग्यको कुरासम्म विचार्न सक्तैन ॥४॥ नरकका घोर यातनाहरू सहँदा पनि प्राणी देहलाई त्याग्न सक्तैन, किनकि नरकमा मल-मूत्र आदि खाने-पिउने कीरालाई पनि आफ्नो देहको माया भइरहन्छ ॥५-६॥ शरीर, स्त्री, पुत्र, घर-द्वार, पशु, बन्धु र धन-सम्पत्ति आदिको मायामा अल्झेर प्राणी आफूलाई कृतार्थ ठान थाल्दछ । पुत्र-कलत्र आदिको पालन-पोषणको चिन्ताबाट विकल रहनाले त्यो पापमाथि अन पाप गर्दै रहन्छ ॥ ६ ॥ कुलटा स्त्रीहरूको मायाजाल ( एकान्त आदि ) ।

मधुरवाणी, छोरा-छोरीका कुरामा नै आफ्नो अहोभाग्य ठान्दछ । गृहस्थीमा यद्यपि छल-कपट गर्नाले अनेक कष्ट भोग्नु पर्दछ, तैपनि प्राणी ती दुःखलाई हटाउने चेष्टामा नै सुख मान्दछ ॥ ८॥९ ॥ जसको पालन-पोषण गरेर लाभको त कुरै छैन, झन दुर्गति नै हुन्छ । तिनैको पालन-पोषण गर्नको निम्ति मनुष्य अज्ञानवश अनेकानेक हिंसामूलक व्यापार गर्न गर्दछन् । कुटुम्बीहरूको पुरा-पात पनि त्यसलाई कठिनले प्राप्त हुन्छ ॥१०॥ जीविकाको निम्ति गरिएका विविध उद्योग बारम्बार निष्फल भएपछि पनि मनुष्य संसारी लोभमा परेर अनेक प्रकारले चोर्न थाल्दछ ॥११॥ परिवारको परिपालनका लागि त्यो अभागी जुन उपाय गर्दछ, त्यही निष्फल हुन्छ । अनि परिवार-पालनको चिन्तामा लामो-लामो सास फेर्न थाल्दछ ॥१२॥ पालन-पोषण गर्नमा असमर्थ भएपछि स्त्री-पुत्र आदि कुटुम्बी त्यसको अनादर उसै गरी गर्दछन्, जसरी किसान बूढो गोरु प्रति घृणा गर्दछ ॥१३॥ पहिले जसलाई खुवाएर खान्थ्यो, आज उनैको मुखापेक्षी हुने, वृद्धावस्थाले अशक्त र कुरूप भनेर मृत्युको मुखमा खुट्टा झुण्डाइरहेको भए पनि त्यसका आँखा खुल्दैन । चिन्ता र वृद्धावस्थाले गर्दा

पिपासु ॥ ८ ॥ गृहेषु कूटधर्मेषु दुःखतन्त्रेष्वतन्द्रितः ॥ कुर्वन्दुःखप्रतीकारं सुखवन्मन्यते गृही ॥ ९ ॥ अर्थैरापादितैर्गुर्व्या हिंसयेतस्ततश्च तान् ॥ पुष्णाति येषां पोषेण शेषभुग्यात्यधः स्वयम् ॥ १० ॥ वार्तायां लुप्यमानायामारब्धायां पुनः पुनः ॥ लोभाभिभूतो निःसत्त्वः परार्थे कुरुते स्पृहाम् ॥ ११ ॥ कुटुम्बभरणाकल्पो मन्दभाग्यो वृथोद्यमः ॥ श्रिया विहीनः कृपणो ध्यायञ्छ्वसिति मूढधीः ॥ १२ ॥ एवं स्वभरणाकल्पं तत्कलत्रादयस्तथा ॥ नाद्रियन्ते यथापूर्वं कीनाशा इव गोजरम् ॥ १३ ॥ तत्राप्यजातनिर्वेदो भ्रियमाणः स्वयंभृतैः ॥ जरयोपात्तवैरूप्यो मरणाभिमुखो गृहे ॥ १४ ॥ आस्तेऽवमत्योपन्यस्तं गृहपाल इवाहरन् ॥ आमयाव्यप्रदीप्ताग्निरल्पाहारोऽल्पचेष्टितः ॥ १५ ॥ वायुनोत्क्रमतोत्तारः कफसंरुद्धनाडिकः ॥ कासश्वासकृतायासः कण्ठे घुरघुरायते ॥ १६ ॥ शयानः परिशोचद्भिः परिवीतः स्वबंधुभिः ॥ वाच्यमानोऽपि न ब्रूते कालपाशवशं गतः ॥१७॥ एवं कुटुंबभरणे व्यापृतात्माऽजितेन्द्रियः ॥ म्रियते रुदतां स्वानामुरुवेदनयाऽस्तधीः ॥१८॥ यमदूतौ तदा प्राप्तौ भीमौ सरभसेक्षणौ ॥ स दृष्ट्वा त्रस्तहृदयः शकृन्मूत्रं विमुञ्चति ॥ १९ ॥ यातनादेह आवृत्य पाशैर्बद्ध्वा गले बलात् ॥ नयतो दीर्घमध्वानं दण्ड्यं राजभटा यथा ॥ २० ॥ तयोर्निर्भिन्नहृदयस्तर्जनैर्जातवेपथुः ॥ पथि श्वभिर्भक्ष्यमाण आर्तोऽघं स्वमनुस्मरन् ॥ २१ ॥ क्षुत्तृट्परीतोऽर्कदवानलानिलैः संतप्यमानः पथि तप्तवा-

उसका इन्द्रियहरू शिथिल भइसकेका हुन्छन् । पाचन-शक्ति बिग्रनाले पेटभरि खान पनि सक्तैन । यसले त्यो कुनै काम गर्नलायक रहन्न । त्यस दशामा खाए खा, नखाए पिउ' भनेर परिवारले दिएका एक टुक्रामा पालेको कुकुर झैं जीवन बिताउँछ ॥१४॥१५॥ अन्त्यमा उर्ध्वश्वास चल्नाले आँखा निस्कन खोज्दछन् कफले नाडीको गति रोकिदिन्छ, खोक्न र सास फेर्न पनि त्यसलाई कष्ट हुन्छ कफ बढेर घाँटीबाट घर-घर शब्द निस्कन थाल्दछ ॥१६॥ मृत्युको जालमा अल्झेको र चिन्तित बन्धुगणको माझ लमतन्न परेको त्यो प्राणी परिवारले बारम्बार डाक्ता पनि बोल्न सक्तैन ॥१७॥ यस प्रकार त्यो अभागी भाइ-बन्धुहरूलाई रुँदै-कल्पन्दै छाडी यम-यातना भोगेर सदाको निम्ति आँखा चिम्लन्छ ॥१८॥ त्यसै बखत दुइ जना डरलाग्दा यमदूतहरू आएर क्रोधपूर्ण दृष्टि द्वारा हेर्दै, डर-भय देखाउनाले त्यसको मल-मूत्र निस्कन थाल्दछ ॥१९॥ ती यमदूत त्यसको घाँटीमा पासो हालेर यमपुरीसम्म त्यसै गरी घिस्याएर लैजान्छन्, जसरी अपराधीलाई राजाका सिपाही समातेर लैजान्छन् ॥२०॥ ती दूतको हप्काई सुनेर त्यसको मुटु काम्छ र भयले थर-थर काम्न थाल्दछ । बाटोमा

त्यसलाई कुकुरले टोक्छन् । त्यस अवस्थामा त्यो प्राणी आपना गरिएका पापहरू सम्झेर दुःखी हुन्छ, भोक-प्यासले पीडित त्यो तीक्ष्ण घाम,दावानल र तातो हावा लाग्नाले छिलिन्छ र तातो बालुकामय बाटोमा हिंड्न असमर्थ भएपछि यमदूत त्यसको पिठिउँमा कोर्रा बजारेर हिंडाउँछन् ॥२१॥२२॥ त्यो बाटोमा न कहीं पिउने पानी र न कुनै विश्राम स्थल प्राप्त हुन्छ । अतः त्यो हिंड्दा-हिंड्दा थाकेर लड्दछ र मूर्छित हुन्छ, तापनि उठेर त्यो अन्धकारमय यमपुरीको कष्टप्रद बाटोमा हिंड्न थाल्दछ । अत्यन्त लामो अर्थात् निनानब्बे हजार योजन लामो बाटो त्यो प्राणी दुइ-तीन मुहूर्त (क्षण) मानै हिंडिसक्छ । त्यती नै समयमा त्यसको सबै दुर्दशा महसुस्छ ॥२३॥२४॥ त्यहाँ त्यसलाई बल्दो काठको बीचमा फालेर पोल्दछन् वा पिल्स्याउँछन् र त्यसलाई स्वयं आफ्नै वा अर्काको हातले काटेको मासु खानु पर्दछ ॥ २५ ॥ गिद्ध र कुकुर त्यसको खप्पर लुछ्छन् र अनेक सर्प, बिच्छी लामखुट्टे टोक्छन् ॥२६॥ त्यसका अङ्ग-प्रत्यङ्ग काट-कुट पार्छन्, त्यसलाई हात्ती आदिले कुल्चाउँछन्, अग्लो टाकुराबाट घुचेटिदिन्छन्, कहीं जलमा डुबाउँछन् र

लुके ॥ कृच्छ्रेण पृष्ठे कशया च ताडितश्चलत्यशक्तोऽपि निराश्रमोदके ॥ २२ ॥ यत्र तत्र पतञ्छ्रान्तो मूर्च्छितः पुनरुत्थितः ॥ पथा पापीयसा नीतस्तमसा यमसादनम् ॥ २३ ॥ योजनानां सहस्राणि नवतिं नव चाध्वनः ॥ त्रिभिर्मुहूर्तैर्द्वाभ्यां वा नीतः प्राप्नोति यातनाः ॥ २४ ॥ आदीपनं स्वगात्राणां वेष्टयित्वोल्मुकादिभिः ॥ आत्ममांसादनं क्वापि स्वमृतं परतोऽपि वा ॥ २५॥ जीवतश्चान्त्राभ्युद्धारः श्वगृध्रैर्यमसादने ॥ सर्पवृश्चिकदंशाद्यैर्दंशद्भिश्चात्मवैशसम् ॥ २६ ॥ कृन्तनं चावयवशो गजादिभ्यो भिदापनम् ॥ पातनं गिरिशृङ्गेभ्यो रोधनं चाम्बुगर्तयोः ॥ २७ ॥ यास्तामिस्रान्धतामिस्रा रौरवाद्याश्च यातनाः ॥ भुङ्क्ते नरो वा नारी वा मिथः सङ्गेन निर्मिताः ॥ २८ ॥ अत्रैव नरकः स्वर्ग इति मातः प्रचक्षते ॥ या यातना वै नारक्यस्ता इहाप्युपलक्षिताः ॥ २९ ॥ एवं कुटुम्बं बिभ्राण उदरम्भर एव वा ॥ विसृज्येहोभयं प्रेत्य भुङ्क्ते तत्फलमीदृशम् ॥३०॥ एकः प्रपद्यते ध्वान्तं हित्वेदं स्वकलेवरम् ॥ कुशलेतरपाथेयो भूतद्रोहेण यद्भृतम् ॥ ३१ ॥ दैवेनासादितं तस्य शमलं निरये पुमान् ॥ भुंक्ते कुटुम्बपोषस्य हृतवित्त इवातुरः ॥ ३२ ॥ केवलेन ह्यधर्मेण कुटुम्बभरणोत्सुकः ॥ याति जीवोऽन्धतामिस्रं चरमं तमसः पदम् ॥ ३३ ॥ अधस्तान्नर-

खाडलमा पुर्छन् ॥२७॥ सबै नर-नारीलाई आपना गरिएका पापहरूको फल तामिस्र, अन्धतामिस्र र रौरव आदि अनेक नरकहरूको यातनाको रूपमा अवश्य भोग्नै पर्दछ ॥२८॥ हे माता ! केही व्यक्ति त स्वर्ग र नर्क यसै लोकमा छ भन्दछन्, किनकि यस लोकमा राजपुरुषहरू द्वारा चोर आदि अपराधी नरकका यातना भोगिरहेका प्रत्यक्ष देखिन्छ ॥२९॥ त्यो परिवारवाला होस् वा एक्लै, त्यसले परिवार र देह समेत छाडेर परलोकमा आपना कर्मको त्यो फल भोग्नै पर्दछ, जसको वर्णन पछाडि गरिसकियो ॥ ३० ॥ प्राणीमात्रसित वैर-विरोध बोकेर पालिएको शरीरलाई छाडी प्राणी आपना पापको पोको बोकेर एक्लै नै नरकको कष्ट भोग्दछ ॥१३॥ जसले कुटुम्बको पालन गर्नका लागि विविध पाप गरेका छन्, तिनले नरकको फल भोग्नै पर्दछ । जसको सर्वस्व लुटिएको होस्, त्यस व्यक्तिलाई आपनो धन-सम्पत्तिको चिन्ताबाहेक अरु केही देखिन्न । त्यस्तै पूर्वोक्त व्यक्ति शरीर छाड्ने बेलामा कुटुम्बको चिन्तामा अभिभूत रहनाले आपना पापहरूको लागि ईश्वरसित क्षमा माग्न पनि बिर्सन्छ । त्यसैले उसको टाउकोमा पापको भारी रहिरन्छ॥३२॥जसले कुटुम्बको भरण-पोषणको

निन्दित पाप नै गरेको छ, त्यसलाई सबभन्दा डरलाग्दो अन्धतामिस्र नरकको यातना भोग्नु पर्दछ ॥३३॥ हे माता ! यस प्रकार त्यो पापी आफ्ना पापको फलस्वरूप नरकका भयङ्कर कष्ट र कुकुर, सुँगुर आदि योनिका क्लेश भोगिसकेपछि पापहरू क्षीण हुनाले विशुद्ध भइसकेपछि फेरि मनुष्य योनिमा जन्म पाउँछ ॥ ३४ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषा-टीकायां त्रिंशोऽध्यायः ॥३०॥ ( राजसी गतिको वर्णन )—कपिलदेव भन्दछन्—हे माता ! कर्मको फल ईश्वराधीन छ, अतः पूर्वजन्ममा गरिएका आफ्ना कर्मानुसार प्राणी पुरुषका वीर्यकणको आश्रय लिएर स्त्रीको उदर ( गर्भाशय ) मा प्रविष्ट हुन्छ ॥ १ ॥ एक रातमा शुक्र ( वीर्य ) को मिश्रण हुन्छ, पाँच रातमा त्यो बुद-बुद झैं वाटुलो बन्दछ र दस दिनमा बयर जस्तै कडा हुन्छ त्यसपछि त्यो कि त मांस-पिण्डको रूपमा परिवर्तित हुन्छ वा तिर्यक् योनिमा भए अण्डा (फुल) बन्दछ ॥२॥ एक महीनामा सिर, दुइ महीनामा हात-खुट्टा आदिको आकार तीन महीमा नङ, रौं वा लिङ्ग अथवा योनिको छिद्र ( प्वाल ) बन्दछ ॥ ३ ॥ चार महीनामा सातै धातुहरू तयार हुन्छन्, पाँच महीनामा भोक-प्यास

लोकस्य यावतीर्यातनादयः क्रमशः समनुक्रम्य पुनरत्राव्रजेच्छुचिः ॥ ३४ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेयोपाख्याने
कर्मविपाको नाम त्रिंशत्तमोऽध्यायः ॥ ३० ॥ श्रीभगवानुवाच ॥ कर्मणा दैवनेत्रेण जन्तुर्देहोपपत्तये ॥ स्त्रियाः प्रविष्ट उदरं पुंसो रेतःकणाश्रयः ॥१॥
कललं त्वेकरात्रेण पञ्चरात्रेण बुद्बुदम् ॥ दशाहेन तु कर्कन्धूः पेश्यण्डं वा ततः परम् ॥ २ ॥ मासेन तु शिरो द्वाभ्यां बाह्वङ्घ्र्याद्यङ्गविग्रहः ॥
नखलोमास्थिचर्माणि लिङ्गच्छिद्रोद्भवस्त्रिभिः ॥ ३ ॥ चतुर्भिर्धातवः सप्त पञ्चभिः क्षुत्तृडुद्भवः ॥ षड्भिर्जरायुणा वीतः कुक्षौ भ्राम्यति दक्षिणे ॥४॥
मातुर्जग्धान्नपानाद्यैरेधद्धातुरसम्मते ॥ शेते विण्मूत्रयोर्गर्ते स जन्तुर्जन्तुसम्भवे ॥ ५ ॥ कृमिभिः क्षतसर्वाङ्गः सौकुमार्यात्प्रतिक्षणम् ॥ मूर्च्छामाप्नो-
त्युरुक्लेशस्तत्रत्यैः क्षुधितैर्मुहुः ॥ ६ ॥ कटुतीक्ष्णोष्णलवणरूक्षाम्लादिभिरुल्वणैः ॥ मातृभुक्तैरुपस्पृष्टः सर्वाङ्गोत्थितवेदनः ॥ ७ ॥ उल्वेन
संवृतस्तस्मिन्नन्त्रैश्च बहिरावृतः ॥ आस्ते कृत्वा शिरः कुक्षौ भुग्नपृष्ठशिरोधरः ॥ ८ ॥ अकल्पः स्वाङ्गचेष्टायां शकुन्त इव पञ्जरे ॥ तत्र लब्धस्मृति-
र्दैवात्कर्म जन्मशतोद्भवम् ॥ स्मरन्दीर्घमनुच्छ्वासं शर्म किं नाम विन्दते ॥ ९ ॥ आरभ्य सप्तमान्मासाल्लब्धबोधोऽपि वेपितः ॥ नैकत्रास्ते सूतिवातै-

लाग्न थाल्दछ, छ महीनामा जरायु ( जालो ) मा बेरिन्छ, अनि बालक दाहिने कोखामा चल्दछ ॥ ४ ॥ मल-मूत्रले परिपूर्ण गर्भाशयमा त्यसले विवश भएर बस्नु पर्दछ ॥ ५ ॥ त्यहाँ उसको वृद्धि आमाले खाएका अन्न जलको सारले हुन्छ । सुकुमार हुनाले त्यस गर्भाशयमा स्थित भोका कीरा त्यसलाई टोकिरहन्छन्, त्यसको पीडाले गर्दा त्यो मूर्च्छा पर्दछ ॥ ६ ॥ आमाले खाएका अमीलो, पीरो, तीतो, टर्रो, चीसो, तातो वस्तुको रस लाग्नाले त्यसको सबै अङ्गमा कठोर वेदना हुन थाल्छ ॥ ६ ॥ जरायुले बेरिएको त्यो जीव आन्द्राहरूले ढाकिएको रहन्छ । गर्भाशयमा टाउको तलतिर, घाँटी समेत जिउ ढल्को ( कुण्डलाकार ) रहन्छ ॥ ८ ॥ पिंजडामा बन्द पक्षी झैं त्यो यति पराधीन रहन्छ—हात खुट्टा चलाउन पनि समर्थ हुँदैन । अब पूर्व संस्कारवश स्मरण शक्ति आउनाले जन्म जन्मान्तरका पापपुञ्जहरू स्मरण गरेर त्यो आत्तिन थाल्दछ ॥ ९ ॥ त्यसको सास रोकिए झैं हुन्छ । गर्भवासमा जो भयङ्कर कष्ट पाइँछ, तिनको वर्णन गर्न सकिन्न । सातौं महीनामा ज्ञानशक्ति आएपछि त्यो प्रसवीटा वायुक

प्रेरणाले हल-चल गर्न थाल्दछ र यहीं स्थानमा त्यहीं गर्भमा स्थित रहन्छ जसरी विष्ठाका कीरा ॥१०॥ देहलाई नै आत्मा मान्ने सात धातुका बन्धनमा आबद्ध जीव गर्भवासका कष्टहरूले व्याकुल भई हात जोडेर नम्रताका साथ त्यस प्रभुको स्तुति गर्न थाल्दछ, जसले उसलाई गर्भमा पठायो ॥११॥ जीव स्तुति गर्दछ—हे भगवन् ! संसारको हितका लागि हजुर आफ्नो इच्छाले बेला-बेलामा अवतार लिनुहुन्छ । म जस्तो अधमको निम्ति हजुर कर्मानुसार गर्भवास आदिको प्रबन्ध गर्नुहुन्छ, किन्तु हजुरको शरणमा गएपछि कुनै भय रहन्न । अतः म हजुरको शरणागत छु ॥ १२ ॥ गर्भाशयमा आएर मायामय पञ्चभूत ( शरीर ), इन्द्रिय र अन्तःकरणको चक्रमा अल्झेर पाप-पुण्यादि कर्मले गर्दा म त्यो स्वरूप बिम भ्रं भएको छु, हजुर निर्विकार उपाधिशून्य हुनुहुन्छ, ज्ञानका अखण्ड भण्डार भक्तका हृदयमा विराजमान रहने हजुरलाई मेरो प्रणाम छ ॥ १३ ॥ म पञ्चभौतिक शरीरसित सम्बन्ध राखेर पनि वास्तवमा त्यसदेखि अलग छु, त्यसैले इन्द्रिय, सत्त्वादि गुण, शब्दादि विषय र चिदाभासबाट पनि म पृथक् छु, अतः प्रकृति र पुरुषका नियन्ता हजुर महिमामय

विष्ठाभूरिव सोदरः ॥१०॥ नाथमान ऋषिर्भीतः सप्तवध्रिः कृताञ्जलिः ॥ स्तुवीत तं विक्लवया वाचा येनोदरेऽर्पितः ॥ ११ ॥ जन्तुरुवाच ॥
तस्योपसन्नमवितुं जगदिच्छयाऽऽत्तनानातनोर्भुवि चलच्चरणारविन्दम् ॥ सोऽहं व्रजामि शरणं ह्यकुतोभयं मे येनेदृशी गतिरदर्श्यसतोऽनुरूपा ॥१२॥
यस्त्वत्र बद्ध इव कर्मभिरावृतात्मा भूतेन्द्रियाशयमयीमवलम्ब्य मायाम् ॥ आस्ते विशुद्धमविकारमखण्डबोधमातप्यमानहृदयेऽवसितं नमामि ॥१३॥
यः पञ्चभूतरचिते रहितः शरीरे छन्नोऽयथेन्द्रियगुणार्थचिदात्मकोऽहम् ॥ तेनाविकुण्ठमहिमानमृषिं तमेनं वन्दे परं प्रकृतिपूरुषयोः पुमांसम् ॥१४॥
यन्माययोरुगुणकर्मनिबन्धनेऽस्मिन्सांसारिके पथि चरंस्तदभिश्रमेण ॥ नष्टस्मृतिः पुनरयं प्रवृणीत लोकं युक्त्या कथा महदनुग्रहमन्तरेण ॥१५॥
ज्ञानं यदेतददधात्कतमः स देवस्त्रैकालिकं स्थिरचरेष्वनुवर्तितांशः ॥ तं जीवकर्मपदवीमनुवर्तमानास्तापत्रयोपशमनाय वयं भजेम ॥ १६ ॥ देह्यन्य-
देहविवरे जठराग्निनाऽसृग्विण्मूत्रकूपपतितो भृशतप्तदेहः ॥ इच्छन्नितो विवसितुं गणयन्स्वमासान्निर्वास्यते कृपणधीर्भगवन्कदा नु ॥ १७ ॥ येनेदृशीं
गतिमसौ दशमास्य ईश संग्राहितः पुरुदयेन भवादृशेन ॥ स्वेनैव तुष्यतु कृतेन स दीननाथः को नाम तत्प्रति विनाऽञ्जलिमस्य कुर्यात् ॥ १८ ॥
पश्यत्ययं धिषणया सप्तवध्रिः शारीरके दमशरीर्यपरः स्वदेहे ॥ यत्सृष्टयाऽऽसं तमहं पुरुषं पुराणं पश्ये बहिर्हृदि च चैत्यमिव प्रतीतम् ॥ १९ ॥

परम-पुरुषलाई मेरो प्रणाम छ ॥१४॥ यो जीव जुन मायावश भएर आफ्ना कर्मका फल र प्रकृतिका लीलास्वरूप संसारमा डुल्दाडुल्दै अनेक कष्ट भोग्दै रहन्छ र आफ्नो स्वरूपसम्म बिर्सन्छ, त्यस ईश्वरको कृपा नभई आफ्नो स्वरूपको ज्ञान हुन सक्तैन ॥१५॥ त्यसैले हे प्रभो ! हजुरको शरणमा छु । जसको कृपाले जीवको त्रैकालिक ( भूत, भविष्य, वर्तमान ) ज्ञान प्राप्त हुन्छ र जो जड-चेतन सबैमा अन्तर्यामी रूपले मिलेको छ, तीन तापको शान्तिका लागि म तिनको शरण पर्दछु ॥ १६ ॥ हे भगवन् ! रक्त र मल-मूत्रले भरिएको गर्भाशय तथा अर्काको शरीर भित्र रहिरहनाले म ( जीव ) जठराग्निमा पोलिंदै बाहिर निस्कनको निम्ति आतिंदै दिन गनिरहेको छु । हे भगवन् ! मलाई यस खाल्डोबाट बाहिर कहिले झिकिदिनु हुन्छ ॥१७॥ हे प्रभो ! हजुरले म गर्भस्थित जीवलाई पनि ज्ञान दिने असीम कृपा गर्नुभयो । हजुरले समाधि यो जुन गर्नु भयो, त्यसैले हजुर प्रसन्न हुनुहवस् । हात जोर्नुबाहेक म अरु कुन सेवाद्वारा हजुरको यस उपकारको साटो तिर्न सक्छु ? ॥१८॥ पशुयोनिका जीव आफ्नो सुख-दुःख बाहेक अरु केही पनि अनुभव गर्न सक्तैनन्, तर म त

आफ्नो दिएका विवेक-बलले नै शम-दमादि साधनहरूले सम्पन्न भएर दर्शन पाउँदछु ॥१९॥ हजुर अनादि अनन्त र भित्र-बाहिर सर्वत्र विद्यमान हुनुहुन्छ हे देव ! गर्भवासमा अनेक कष्ट भोग्न मलाई स्वीकार छ, तर बाहिर आउन स्वीकार छैन किनकि बाहिर निस्कनासाथ जीवको बुद्धिमा मायाको पर्दा परिहाल्छ, जसले त्यो आवागमनको चक्रमा परि रहन्छ॥२०॥ अतः म यहीं बसेर धैर्यपूर्वक बुद्धिको सहायताले शीघ्र संसारबाट आफ्नो उद्धार गर्नसक्छु, किनकि भगवानको भजन गर्नाले फेरि बारम्बार गर्भवासको यन्त्रणा भोग्नु पर्दैन ॥२१॥ कपिलदेवले भन्नुभयो—हे माता ! यस्तो निश्चय गरेर जीव गर्भमा बसी स्तुति गर्न गर्दछ । नौ महीना बितेपछि त्यो तलतिर मुख्य भएर गर्भमा रहेको जीवलाई प्रसव वायु बाहिरतिर धकेलिदिन्छ ॥२२॥ बाहिर निस्कँदा त्यसले ठूलो कष्ट सहनु पर्दछ । त्यस बखत उसको शिर तलतिर रहन्छ, सास अड्के झैं र त्यसको स्मरण शक्ति लुप्त भएको हुन्छ ॥२३॥ बाहिर आएर त्यो रक्त र मूत्रमा मलका कृमि झैं छटपटाउँदै र ज्ञान नरहनाले रुदनमा बल गर्दछ ॥२४॥ त्यसको पालन गर्ने माता-पिता त्यस नवजात शिशुको अभिप्राय बुझ्न

सोऽहं वसन्नपि विभो बहुदुःखवासं गर्भान्न निर्जिगमिषे बहिरन्धकूपे ॥ यत्रोपयातमुपसर्पति देवमाया मिथ्यामतिर्यदनु संसृतिचक्रमेतत् ॥ २० ॥ तस्मादहं विगतविक्लव उद्धरिष्य आत्मानमाशु तमसः सुहृदाऽऽत्मनैव ॥ भूयो यथा व्यसनमेतदनेकरन्ध्रं मा मे भविष्यदुपसादितविष्णुपादः ॥ २१ ॥ कपिल उवाच ॥ एवं कृतमतिर्गर्भे दशमास्यः स्तुवन्नृषिः ॥ सद्यः क्षिपत्यवाचीनं प्रसूत्यै सूतिमारुतः ॥ २२ ॥ तेनावसृष्टः सहसा कृत्वाऽवाक्शिर आतुरः ॥ विनिष्क्रामति कृच्छ्रेण निरुच्छ्वासो हतस्मृतिः ॥ २३ ॥ पतितो भुव्यसृङ्मूत्रे विष्ठाभूरिव चेष्टते ॥ रोरूयति गते ज्ञाने विपरीतां गतिं गतः ॥२४॥ परच्छन्दं न विदुषा पुष्यमाणो जनेन सः ॥ अनभिप्रेतमापन्नः प्रत्याख्यातुमनीश्वरः ॥२५॥ शायितोऽशुचिपर्यङ्के जन्तुः स्वेदजदूषिते ॥ नेशः कण्डूयनेऽङ्गानामासनोत्थानचेष्टने ॥२६॥ तुदन्त्यामत्वचं दंशा मशका मत्कुणादयः॥ रुदन्तं विगतज्ञानं कृमयःकृमिकं यथा॥२७॥इत्येवं शैशवं भुक्त्वा दुःखं पौगण्डमेव च ॥ अलब्धाभीप्सितोऽज्ञानादिद्धमन्युः शुचार्पितः ॥ २८ ॥ सह देहेन मानेन वर्धमानेन मन्युना ॥ करोति विग्रहं कामी कामिष्वन्ताय चात्मनः ॥२९॥ भूतैः पञ्चभिरारब्धे देहे देह्यबुधोऽसकृत् ॥ अहंममेत्यसद्ग्राहः करोति कुमतिर्मतिम् ॥३०॥ तदर्थं कुरुते कर्म यद्बद्धो याति संसृतिम् ॥ योऽनुयाति ददत्क्लेशमविद्याकर्मबन्धनः ॥३१॥ यद्यसद्भिः पथि पुनः शिश्नोदरकृतोद्यमैः ॥ आस्थितो रमते जन्तुस्तमो विशति

सक्दैनन् । अब त्यो रुन थाल्दछ तब उसलाई दूध प्याउँछन्, तर त्यो आफ्नो वास्तविक अभिप्राय बुझाउन असमर्थ रहन्छ—मलाई यसको होइन, अमुक वस्तुको आवश्यकता छ । उडुस-उपियाँले भरिएको मैलो थाङ्नामा पल्टेको त्यस शिशुको नरम छाला उपियाँ, उडुस लामखुट्टे आदि ठूला कीरालाई साना कीराले झैं टोक्दछन् । अनि त्यो रुन थाल्छ । तर त्यसमा त्यो शक्ति हुँदैन कि ऊ आफ्नो अंग कन्याउन सकोस् । त्यति मात्र होइन, न त्यो आफैं कोल्टे फर्कन सक्छ, न उठेर बस्न सक्तछ ॥२५-२७॥ यही क्रममा यसको बाल्यकाल र पौगण्ड ( कुमारावस्था ) मा ( लेख्ने-पढ्नेबाट हुने ) क्लेशहरू भोगिसकेपछि जब त्यो युवावस्थामा खुड्डा राख्दछ, तब इच्छित वस्तु नपाउनाले दुःखी भएर सर्वमित बाल्दै हिँड्दछ । यस्ता वैर-विरोधले उसैको नाश हुन्छ ॥२८॥२९॥ अज्ञानी प्राणी पाञ्चभौतिक शरीरलाई नै आत्मा मानेर त्यसमा ममता बढाउँछ । शरीरमा ममता हुनाले

आत्माको उपेक्षा गरेर त्यो सारा काम देहको निम्ति नै गर्दछ । यसै कारण त्यो जन्म-मरणको चक्रमा परिरहन्छ ॥३०॥३१॥ यदि प्राणी सन्मार्गबाट भ्रष्ट तथा आत्मदेवबाट विरोध भएर तथा शिश्नोदर परायण दुर्जनहरूको कुसङ्गतिमा लागेर कुमार्गमा हिंड्न थाल्दछ, तब त्यो नरकमा जाकिन्छ ॥३२॥ कुसंगतिमा पर्नाले सत्य, पवित्रता, दया, मौन, विवेक, सम्पत्ति, लज्जा, यश, सहनशीलता इन्द्रिय र मनलाई वशमा राख्नु तथा उत्कर्ष आदि सबका सद्गुण नष्ट हुन्छन् ॥३३॥ देह नै सर्वस्व हो भन्नेलाई शान्ति मिल्न सक्तैन, ती मूढ कसैको पनि काम आउँदैनन् । ती केवल स्त्रीका दास रहन्छन्, यसैले तिनको दशा शोचनीय रहन्छ । यस्ताको संगति बिर्सेर पनि नगर्नु ॥३४॥ स्त्रीसँगीचै उठ-बस र स्त्रैणपुरुष-को सङ्गति गर्नाले बुद्धि कलुषित र बन्धन बलियो हुँदै जान्छ ॥३५॥ तब प्रजापति ब्रह्मा आफ्नी छोरीको रूपमा मोहित भए, तब यो मृगी बनेर भागी । त्यस स्थितिमा ब्रह्माले निर्लज्ज भई मृगको रूप धारण गरेर लखेटे ॥३६॥ जब ब्रह्माजीको यो हालत भयो, तब उनैका सृष्टिस्वरूप देवगण, ऋषिहरू र मनुष्यमा यस्तो को छ, जसको मन स्त्रीहरूले

पूर्ववत् ॥३२॥ सत्यं शौचं दया मौनं बुद्धिः श्रीर्ह्रीर्यशः क्षमा ॥ शमो दमो भगश्चेति यत्सङ्गाद्याति संक्षयम् ॥३३॥ तेष्वशान्तेषु मूढेषु खण्डितात्म-स्वसाधुषु ॥ सङ्गं न कुर्याच्छोच्येषु योषित्क्रीडामृगेषु च ॥ ३४ ॥ न तथाऽस्य भवेन्मोहो बन्धश्चान्यप्रसङ्गतः ॥ योषित्सङ्गाद्यथा पुंसो यथा तत्सङ्गि-सङ्गतः ॥३५॥ प्रजापतिः स्वां दुहितरं दृष्ट्वा तद्रूपधर्षितः ॥ रोहिद्भूतां सोऽन्वधावदृक्षरूपी हतत्रपः॥३६॥तत्सृष्टसृष्टसृष्टेषु को न्वखण्डितधीः पुमान् ॥ ऋषिं नारायणमृते योषिन्मय्येह मायया ॥ ३७ ॥ बलं मे पश्य मायायाः स्त्रीमय्या जयिनो दिशाम् ॥ या करोति पदाक्रान्तान्भ्रूविजृम्भेण केवलम् ॥ ३८ ॥ सङ्गं न कुर्यात्प्रमदासु जातु योगस्य पारं परमारुरुक्षुः ॥ मत्सेवया प्रतिलब्धात्मलाभो वदन्ति यां निरयद्वारमस्य ॥ ३९ ॥ योपयाति शनैर्माया योषिद्देवविनिर्मिता ॥ तामीक्षेतात्मनो मृत्युं तृणैः कूपमिवावृतम् ॥ ४० ॥ या मन्यते पतिं मोहान्मन्मायामृषभायतीम् ॥ स्त्रीत्वं स्त्रीसङ्गतः प्राप्तो वित्तापत्यगृहप्रदम् ॥ ४१ ॥ तामात्मनो विजानीयात्पत्यपत्यगृहात्मकम् ॥ दैवोपसादितं मृत्युं मृगयोर्गायनं यथा ॥ ४२ ॥ देहेन जीवभूतेन लोकाल्लोकमनुव्रजन् ॥ भुञ्जान एव कर्माणि करोत्यविरतं पुमान् ॥ ४३ ॥ जीवो ह्यस्यानुगो देहो भूतेन्द्रियमनोमयः ॥ तन्निरो-

आकृष्ट नपारेका हुन् ? केवल नारायण ऋषिमा नै नारीको प्रभाव परेन ॥३७॥ हे माता ! स्त्रीरूपिणी मेरो मायाको बल त हेर्नुहोस्, ठूला-ठूला शूरवीर, दिग्विजयीलाई पनि भ्रूविलास मात्रले मान-मर्दन गरिदिन्छन् ॥३८॥ भगवत्कृपाले जसलाई आत्मस्वरूपको ज्ञान प्राप्त भइसकेको छ र जो मोक्ष पाउने प्रयत्न गरिरहेको छ, त्यो हरेक प्रकारले स्त्रीको सम्पर्कबाट जोगियोस्, किनकि पुरुषको निम्ति नारी नरकको द्वार मानिएका छन् ॥३९॥ सेवा आदिको निहुँले यदि स्त्रीरूपिणी माया नजीकै आई भने मुमुक्षु पुरुष घाँस-पातले ढाकेको कूप झैं मृत्यु ( अधःपतन )को कारण ठान्नु ॥४०॥ पूर्वजन्ममा शरीर त्याग्दा यदि प्राणी स्त्रीको चिन्तन गरेर मर्दछ भने अर्को जन्ममा स्त्रीको नै देह पाएर आफ्नो अज्ञानवश यो पुरुषरूपिणी मेरी मायालाई पुत्र, वित्त, गृह आदि दिने पति नै ठान्दछ । पति, सन्तान र घर आदि माया नै हो, जसको परिणाम प्राक्तन कर्मको अनुसार प्राप्त हुने मृत्यु नै हो । जस्तै— गाना सुनाएर चरा पक्रनेले मृगको प्राण लिन्छ, यही काम त्यो माया गर्दछे ॥४१॥४२॥ प्राणी लिङ्ग शरीरद्वारा एक लोकबाट अर्को लोक ( वा एक योनिबाट अर्को योनि )

गएर कर्मफल भोग्दै अन्यान्य कर्म गर्द रहन्छ ॥४३। मुक्ति भएपछि नै जीवका लिङ्गदेह ज्ञानेन्द्रिय, कर्मेन्द्रिय, सूक्ष्म पञ्चभूत, मन र बुद्धिका समुदायका लय हुन्छ र पाञ्चभौतिक (स्थूल) शरीरद्वाराऊ सुख-दुःख आदिको अनुभव गर्दछ। लिङ्गशरीररहित स्थूलशरीरका काम गर्नमा असमर्थ हुनु जीवको मृत्यु हो र समर्थ हुनु नै जन्म हो ॥४४-४५॥ कमल, मोतियाबिन्द आदि रोगद्वारा दूषित भएपछि जस्तै नेत्र-गोलक काम गर्नमा असमर्थ हुन्छन् र इन्द्रियहरू पनि व्यर्थ हुन जान्छन् त्यस्तै इन्द्रियहरू बेकामे भएपछि जीव पनि विषयहरूको अनुभव गर्न असमर्थ हुन्छ। त्यस्तै नै स्थूलदेहमा विकार आएपछि लिङ्गदेह पनि बेकामे हुनु अनिवार्य छ। जीवको काम गर्न क्षमता र अक्षमताको अर्को नाम नै जन्म-मृत्यु हो। वास्तवमा जीवको स्वरूपसित इनको कुनै सम्बन्ध छैन ॥४६॥ यसनिम्ति साधक पुरुष न मृत्युसित डराओस् न दीनता नै देखाओस्, न जीवनोपयोगी वस्तुको निम्ति मरिमेटोस्। जन्म-मरणको

धोऽस्य मरणमाविर्भावस्तु सम्भवः ॥ ४४ ॥ द्रव्योपलब्धिस्थानस्य द्रव्येक्षायोग्यता यदा ॥ तत्पञ्चत्वमहंमानादुत्पत्तिर्द्रव्यदर्शनम् ॥ ४४ ॥ यथाऽक्ष्णोर्द्रव्यावयवदर्शनायोग्यता यदा ॥ तदेव चक्षुषो द्रष्टुर्द्रष्टृत्वायोग्यताऽनयोः ॥ ४६ ॥ तस्मान्न कार्यः संत्रासो न कार्पण्यं न संभ्रमः ॥ बुद्ध्वा जीवगतिं धीरो मुक्तसङ्गश्चरेदिह ॥ ४७ ॥ सम्यग्दर्शनया बुद्ध्या योगवैराग्ययुक्तया ॥ मायाविरचिते लोके चरेन्न्यस्य कलेवरम् ॥ ४८ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेयोपाख्याने जीवगतिर्नामैकत्रिंशोऽध्यायः ॥ ३१ ॥ कपिल उवाच ॥ अथ यो गृहमेधीयान्धर्मानेवावसन्गृहे ॥ काममर्थं च धर्मान्स्वान्दोग्धि भूयः पिपर्ति तान् ॥ १ ॥ स चापि भगवद्धर्मात्काममूढः पराङ्मुखः ॥ यजते क्रतुभिर्देवान्पितॄंश्च श्रद्धयान्वितः ॥२॥ तच्छ्रद्धयाऽऽक्रान्तमतिः पितृदेवव्रतः पुमान् ॥ गत्वा चान्द्रमसं लोकं सोमपाः पुनरेष्यति ॥ ३ ॥ यदा चाहीन्द्रशय्यायां शेतेऽनन्तासनो हरिः ॥ तदा लोका लयं यान्ति त एते गृहमेधिनाम् ॥४॥ ये स्वधर्मान्न दुह्यन्ति धीराः कामार्थहेतवे ॥ निःसङ्गास्त्यक्तकर्माणः प्रशान्ताः शुद्धचेतसः ॥ ५ ॥ निवृत्तिधर्मनिरता निर्ममा निरहंकृताः ॥ स्वधर्माख्येन सत्त्वेन परिशुद्धेन चेतसा ॥ ६ ॥ सूर्यद्वारेण ते यान्ति पुरुषं विश्वतोमुखम् ॥ परावरेशं प्रकृतिमस्योत्पत्त्यन्तभावनम् ॥७॥ द्विपरार्धावसाने यः प्रलयो ब्रह्मणस्तु ते ॥ तावदध्यासते लोकं परस्य परचिन्तकाः ॥ ८ ॥

रहस्य बुझेर शुशील र निवृत्तिमार्गी बनोस् ॥४७॥ भक्ति, योग, वैराग्य र ज्ञानले विशुद्ध बुद्धिद्वारा संसारलाई मायाकल्पित एवं नश्वर ठानेर देहमा मोह-ममता नराखोस् ॥४८॥ इति श्रीमद्भागवत नेपाली भाषा टीकायामेकत्रिंशोऽध्यायः ॥३१॥ ( सात्त्विक गति र पुनरागमन । कपिलदेव भन्नुहुन्छ- ) जो व्यक्ति गृहस्थाश्रममा रहेर सकाम-कर्ममा नै अल्झिरहन्छ, त्यसले [illegible] कहिल्यै मुक्ति पाउन सक्तैन ॥१॥ भगवद्भक्तिबाट विमुख अज्ञानी पुरुष यज्ञ-यागादि [illegible] र पितृहरूको श्रद्धापूर्वक आराधना गर्नाले चन्द्रलोकमा जान्छ र त्यहाँ सोमपान गरेर पुण्यक्षीण भएपछि फेरि संसारमा फर्कन्छ ॥२-३॥ प्रलयकालमा भगवान [illegible] चन्द्रलोकादिको पनि लय हुन्छ, जुन सकाम कर्महरू गरेर पाइन्छन् ॥४॥ जो निष्कामभावले कर्म गर्दछन् र निःसङ्ग रहेर ईश्वरार्पण बुद्धिद्वारा कर्म गर्नाले [illegible] शुद्ध भएको छ, ती निवृत्तिमार्गावलम्बी, ममतारहित र अहङ्कार शून्य साधकहरू सत्त्वगुण प्रधान कर्म गरेर सूर्यद्वारा (अर्चिरादिमार्ग) बाट परात्परका नियन्ता, [illegible] पूर्ण पुरुषलाई प्राप्त गर्दछन् ॥५-७॥ जो हिरण्यगर्भलाई परमेश्वर मानेर

भज्दछन् ती दुइ परार्द्ध वितेपछि महाप्रलयको स्थितिसम्म ब्रह्मलोकमा रहन्छन् ॥८॥ त्रिगुण मूर्ति ब्रह्मा द्विपरार्द्ध कालसम्म शासन गरेर पृथ्वी, जल, अग्नि, वायु आकाश, मन, इन्द्रिय शब्द र अहङ्कार आदिसमेत ब्रह्माण्डको संहार गर्नका लागि जब परमेश्वरमा लीन हुन्छन्, अनि महाप्रलय हुन्छ । प्राणायाम आदि द्वारा मनलाई वशमा पारेर जुन विरक्त साधकले ब्रह्मलोक प्राप्त गरिसकेका छन्, तिनी ब्रह्मा ( हिरण्यगर्भ ) को संगसंगै परमानन्दस्वरूप एवं अविनाशी पुराणपुरुष परब्रह्मलाई प्राप्त गर्दछन्, त्योभन्दा पहिले होइन । किनकि त्यो भन्दा पहिले अहङ्कारले छाड्दैन ॥९-१०॥ हे माता ! तिमी भक्तिभावले ती परमेश्वरको शरण पर—जो घट-घटमा व्याप्त छन् र जसको महिमा अनन्त छ ॥ ११ ॥ फलतः ईश्वर द्वारा सत्त्वादि गुण परस्पर संयुक्त भएपछि मरीचि आदि ऋषिहरु, योगप्रवर्तक सनत्कुमार आदि महात्मा तथा अध्यात्म सिद्धान्तको कुरै छैन, जड चेतनका विधाता स्वयं ब्रह्माजीलाई

क्ष्माम्भोऽनलानिलवियन्मनइन्द्रियार्थभूतादिभिः परिवृतं प्रतिसञ्जिहीर्षुः ॥ अव्याकृतं विशति यर्हि गुणत्रयात्मा कालं पराख्यमनुभूय परः स्वयम्भूः ॥ ९ ॥ एवं परेत्य भगवन्तमनुप्रविष्टा ये योगिनो जितमरुन्मनसो विरागाः ॥ तेनैव साकममृतं पुरुषं पुराणं ब्रह्मप्रधानमुपयान्त्यगताभिमानाः ॥१०॥ अथ तं सर्वभूतानां हृत्पद्मेषु कृतालयम् ॥ श्रुतानुभावं शरणं व्रज भावेन भामिनि ॥ ११ ॥ आद्यः स्थिरचराणां यो वेदगर्भः सहर्षिभिः ॥ योगेश्वरैः कुमाराद्यैः सिद्धैर्योगप्रवर्तकैः ॥ १२ ॥ भेददृष्ट्याऽभिमानेन निःसङ्गेनापि कर्मणा ॥ कर्तृत्वात्सगुणं ब्रह्मपुरुषं पुरुषर्षभम् ॥ १३ ॥ स संसृत्य पुनः काले कालेनेश्वरमूर्तिना ॥ जाते गुणव्यतिकरे यथापूर्वं प्रजायते ॥ १४ ॥ ऐश्वर्यं पारमेष्ठ्यं च तेऽपि धर्मविनिर्मितम् ॥ निषेव्य पुनरायान्ति गुणव्यतिकरे सति ॥ १५ ॥ ये त्विहासक्तमनसः कर्मसु श्रद्धयान्विताः ॥ कुर्वन्त्यप्रतिषिद्धानि नित्यान्यपि च कृत्स्नशः ॥ १६ ॥ रजसा कुण्ठमनसः कामात्मनो जितेन्द्रियाः ॥ पितॄन् यजन्त्यनुदिनं गृहेष्वभिरताशयाः ॥ १७ ॥ त्रैवर्गिकास्ते पुरुषा विमुखा हरिमेधसः ॥ कथायां कथनीयोरुविक्रमस्य मधुद्विषः ॥ १८ ॥ नूनं दैवेन विहता ये चाच्युतकथासुधाम् ॥ हित्वा शृण्वन्त्यसद्गाथाः पुरीषमिव विड्भुजः ॥ १९ ॥ दक्षिणेन पथाऽर्यम्णः पितृलोकं व्रजन्ति ते ॥ प्रजामनुप्रजायन्ते श्मशानान्तक्रियाकृतः ॥ २० ॥ ततस्ते क्षीणसुकृताः पुनर्लोकमिमं सति ॥ पतन्ति विवशा देवैः सद्यो विभ्रंशितोदयाः ॥ २१ ॥ तस्मात्त्वं सर्वभावेन भजस्व परमेष्ठिनम् ॥ तद्गुणाश्रयया भक्त्या भजनीयपदाम्बुजम् ॥ २२ ॥

निष्काम कर्म गरेर पनि भेददृष्टि राख्ने र कर्तृत्वको अभिमानले सृष्टिको आरम्भमा आफ्नो अधिकारानुसार संसारमा आउनै पर्दछ ॥ १२-१४ ॥ अझ अघि गएर यी सबैलाई पुण्योपार्जित ऐश्वर्यको उपभोग प्राप्त भएर सगुण परब्रह्मको प्राप्ति हुन्छ ॥ १५ ॥ जो श्रद्धापूर्वक नित्य-नैमित्तिक कर्म नै गर्दछन् जसको मनमा रजोगुणको अधिकार रहन्छ र इन्द्रियहरू जसका वशमा छैनन्, यस्ता गृहस्थाश्रमी प्रतिदिन पितृका आराधनामा तत्पर रहन्छन् । जो जन अर्थ र कामका साधक कार्यमा अल्झि रहन्छन्, भगवान्को गुणगान गर्दैनन् र शूकर जस्तै राम्रा वस्तु छाडेर विष्ठातिर दगुर्छ, त्यस्तै जो भगवत्कथामृत छाडेर व्यर्थका कुरामा अल्झि रहन्छन्, ती ठूला अभागी हुन् ॥ १६-१९ ॥ गर्भाधानदेखि लिएर अन्त्येष्टिपर्यन्त संस्कारहरू विधिपूर्वक गर्ने व्यक्ति पितृका राजा अर्यमाको दक्षिण ( धूम ) मार्गबाट पितृलोकमा जान्छन् ॥२०॥ त्यहाँ पुण्यक्षीण भएपछि देवताहरू तिनलाई पितृ-

[illegible] सुख भोग्नदाट वंचित गरिदिन्छन् । अनि ती फेरि मृत्युलोकमा फर्कन्छन् ॥२१॥ अतः हे माता ! तिमी भक्तिपूर्वक भगवान्को भजन गर । भगवान्को भक्ति गर्नाले [illegible] वैराग्य हुनासाथ शीघ्रै विवेक बुद्धि उत्पन्न हुन्छ । अनि ब्रह्म-साक्षात्कार हुन्छ ॥२२॥२३॥ भक्तको चित्त जब इन्द्रियसित मिल्दैनन् र राग-द्वेषको सीमालाई [illegible] भई भगवान्मा लीन हुन्छन्, अनि त्यो आफूलाई परमानन्दस्वरूप मानेर निःसंग, समदर्शी र स्वप्रकाशमय आफ्नो आत्माको दर्शन गर्दछ ॥ २४ ॥ २५ ॥ द्रष्टा, [illegible] र दर्शनका साधनादि भएले भगवान् भिन्न भैं प्रतीत हुन्छन्, तर वास्तवमा ती ज्ञानस्वरूप र अद्वितीय छन् ॥२६॥ संसारको नफंबाट पूर्ण निःसंग बुद्धि हुनु नै योगीको [illegible] सम्पूर्णको फल हो ॥२७॥ ज्ञानमय एवं अद्वितीय निर्गुण ब्रह्म नै विषयोन्मुख इन्द्रिय द्वारा भ्रान्तिवश आकाश र देव-मनुष्यादिको रूपमा प्रतीत हुन्छ । वास्तवमा [illegible] पदार्थको सत्ता ब्रह्मबाट पृथक् हुँदैन ॥२८॥ जस्तै-महत्तत्त्व स्वरूपतः एउटै भए पनि अहङ्कारादिरूपले त्रिविध ( सात्त्विक, राजस, तामस ) पंचविध ( पंचभूतको

[illegible] भगवति भक्तियोगः प्रयोजितः ॥ जनयत्याशु वैराग्यं ज्ञानं यद्ब्रह्मदर्शनम् ॥ २३ ॥ यदाऽस्य चित्तमर्थेषु समेष्विन्द्रियवृत्तिभिः ॥ न विगृ-[illegible] वैषम्यं प्रियमप्रियमित्युत ॥ २४ ॥ स तदैवात्मनाऽऽत्मानं निःसङ्गं समदर्शनम् ॥ हेयोपादेयरहितमारूढं पदमीक्षते ॥ २५ ॥ ज्ञानमात्रं परं [illegible] परमात्मेश्वरः पुमान् ॥ दृश्यादिभिः पृथग्भावैर्भगवानेक ईयते ॥ २६ ॥ एतावानेव योगेन समग्रेणेह योगिनः ॥ युज्यतेऽभिमतो ह्यर्थो यद-[illegible] कृत्स्नशः ॥२७॥ ज्ञानमेकं पराचीनैरिन्द्रियैर्ब्रह्म निर्गुणम् ॥ अवभात्यर्थरूपेणभ्रान्त्याशब्दादिधर्मिणा ॥ २८ ॥ यथा महानहंरूपस्त्रिवृत्पञ्चविधः [illegible] ॥ एकादशविधस्तस्य वपुरण्डं जगद्यतः ॥२९॥ एतद्वै श्रद्धया भक्त्या योगाभ्यासेन नित्यशः ॥ समाहितात्मा निःसंगो विरक्त्या परिपश्यति [illegible] ॥ इत्येतत्कथितं गुर्वि ज्ञानं तद्ब्रह्मदर्शनम् ॥ येनानुबुद्ध्यते तत्त्वं प्रकृतेः पुरुषस्य च ॥ ३१ ॥ ज्ञानयोगश्च मन्निष्ठो नैर्गुण्यो भक्तिलक्षणः ॥ [illegible] एवार्थो भगवच्छब्दलक्षणः ॥३२॥ यथेन्द्रियैः पृथग्द्वारैरर्थो बहुगुणाश्रयः ॥ एको नानेयते तद्वद्भगवान् शास्त्रवर्त्मभिः ॥३३॥ क्रियया [illegible] तपःस्वाध्यायमर्शनैः ॥ आत्मेन्द्रियजयेनापि संन्यासेन च कर्मणाम् ॥ ३४ ॥ योगेन विविधाङ्गेन भक्तियोगेन चैव हि ॥ धर्मेणोभय-

[illegible] र एकादशविध ( दश इन्द्रिय र मनसहित रहनाले ) जीवलाई शरीर र ब्रह्माण्ड अनेक थरिको प्रतीत हुन्छ । वस्तुतः अहङ्कारादि महत्तत्त्वबाट पृथक् छैनन् ) ! त्यस्तै नै ज्ञान [illegible] हुनाले ज्ञान स्वरूप ब्रह्मको साक्षात्कार हुन्छ ॥२९-३०॥ हे माता ! यो त्यस ज्ञानको स्पष्टीकरण हो, जसको फल ब्रह्मको साक्षात्कार हो । यसै द्वारा प्रकृति र [illegible] शब्द स्पर्श आदिको रूपमा भिन्न-भिन्न ज्ञात हुन्छ, तर यदि हो, भक्ति, वैराग्य र निरन्तर योगाभ्यासले जब मन शान्त र विषयबाट पृथक् हुन्छ, तब कुनै प्रकारको पनि भिन्नता [illegible] । पुरुषको तत्त्व बुझ्न सकिन्छ ॥३१॥ उपासना-निर्गुण ज्ञानयोग ) द्वारा होस् अथवा सगुण ( भक्तियोग ) द्वारा दुवैको फल भगवत्प्राप्ति नै हो । अधिकारी भेदले अनुभव गर्द, त्यस्तै नै भगवान्को स्वरूपमा नभए पनि उनको प्राप्तिका लागि अधिकारी-भेदले शास्त्रमा अनेक उपाय बहिएका छन् ॥३३॥ तलाऊ, इनार आदि खनाउने, यज्ञ यागादि गर्ने,

दान, तप, वेदाध्ययन र वेदार्थको विचार गर्ने मन र इन्द्रियको निग्रह गर्ने, ईश्वरार्पण बुद्धिले धर्मको आचरण गर्ने, अष्टाङ्गयोग र भक्तियोग साधने सकाम र निष्काम कर्म गर्ने, आत्मचिन्तन र प्रबल वैराग्य आदि उपाय द्वारा सगुण तथा निर्गुण र प्रकाश-स्वरूप ब्रह्मको प्राप्ति हुन्छ ॥३५॥३६॥ हे माता ! मैले हजुरलाई पूर्वोक्त चार प्रकारका ज्ञान र भक्ति योगका र उस कालका स्वरूप बताएँ—जसको शक्ति र गति बुझ्न सकिन्न र जो प्राणिमात्रका लागि जन्म-मरण आदिको कारण मानिन्छ ॥ ३७ ॥ हे माता ! अविद्यामय कर्म गर्नाले जीवले बुन विविध योनिहरूमा जन्म लिनु पर्दछ, तिनमा घुमेपछि त्यसलाई आफ्नो स्वरूप सम्मको ज्ञान रहन्न। यस प्रकार सबै योनिहरूको पनि वर्णन मैले गरिदिएँ ॥३८॥ खल, उद्दण्ड, मन्दबुद्धि, नास्तिक, दुराचारी, पाखण्डी, लोभी, गृहस्थीको जंजालमा अल्झिएको, श्रद्धाहीन र मेरा भक्तको विरोधीलाई यस तत्त्वज्ञानको उपदेश दिनु हुँदैन ॥३९, ४० ॥ यसका अधिकारी त मेरा ती अनन्य भक्त हुन्, जो श्रद्धालु विनम्र, ईर्ष्या द्वेष हीन, प्राणिमात्रका हितैषी, सेवा परायण, विरक्त मन हुने,

सिद्धेन यः प्रवृत्तिनिवृत्तिमान् ॥ ३५ ॥ आत्मतत्त्वावबोधेन वैराग्येन दृढेन च ॥ ईयते भगवानेभिः सगुणो निर्गुणः स्वदृक् ॥ ३६ ॥ प्रावोचं भक्तियोगस्य स्वरूपं ते चतुर्विधम् ॥ कालस्य चाव्यक्तगतेर्योऽन्तर्धावति जन्तुषु ॥ ३७ ॥ जीवस्य संसृतीर्बह्वीरविद्याकर्मनिर्मिताः ॥ यास्वङ्ग प्रविशन्नात्मा न वेद गतिमात्मनः ॥३८॥ नैतत्खलायोपदिशेन्नाविनीताय कर्हिचित् ॥ न स्तब्धाय न भिन्नाय नैव धर्मध्वजाय च ॥३९॥ न लोलुपायोपदिशेन्न गृहारूढचेतसे ॥ नाभक्ताय च मे जातु न मद्भक्तद्विषामपि ॥ ४० ॥ श्रद्दधानाय भक्ताय विनीतायानसूयवे ॥ भूतेषु कृतमैत्राय शुश्रूषाभिरताय च ॥ ४१ ॥ बहिर्जातविरागाय शान्तचित्ताय दीयताम् ॥ निर्मत्सराय शुचये यस्याहं प्रेयसां प्रियः ॥ ४२ ॥ य इदं शृणुयादम्ब श्रद्धया पुरुषः सकृत् ॥ यो वाऽभिधत्ते मच्चित्तः स ह्येति पदवीं च मे ॥४३॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेये द्वात्रिंशोऽध्यायः ॥३२॥ मैत्रेय उवाच ॥ एवं निशम्य कपिलस्य वचो जनित्री सा कर्दमस्य दयिता किल देवहूतिः ॥ विस्रस्तमोहपटला तमभिप्रणम्य तुष्टाव तत्त्वविषयाङ्कितसिद्धिभूमिम् ॥ १ ॥ देवहूतिरुवाच ॥ अथाप्यजोऽन्तःसलिले शयानं भूतेन्द्रियार्थात्ममयं वपुस्ते ॥ गुणप्रवाहं सदशेषबीजं दध्यौ स्वयं यज्जठ-

शान्त चित्त, राग-द्वेष र निष्कपट रहन्छन् ॥४१॥४२॥ हे माता ! जो व्यक्ति एकपल्ट पनि मेरो यो उपदेश श्रद्धापूर्वक, मत्परायण भएर सुन्दछ, त्यो मुक्त भएर जान्छ ॥४३॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे नेपाली भाषाटीकायां द्वात्रिंशोऽध्यायः ॥३२॥ ( कपिलदेवको ज्ञानले जीवन-मुक्तिको प्राप्ति ) मैत्रेय भन्दछन्—हे विदुर ! सर्वज्ञ कपिल भगवान्‌को उपदेश सुन्नासाथ देवहूतिको सबै माया-मोह गयो। ती ज्ञान मार्गका प्रवर्तक कपिलदेवलाई प्रणाम गरेर यसरी स्तुति गर्न लागिन् ॥ १ ॥ देवहूतिले भनिन्—हे ईश ! हे भगवन् ! हजुर कार्य-कारण मात्रका बीजस्वरूप र गुणत्रयका नियन्ता तथा पंचभूत, इन्द्रिय, शब्दादि विषय र मन, यी सबै हजुरका नै व्यक्त स्वरूप हुन्। हजुर प्रलयकालमा शेषशय्यामा शयन गर्नुहुन्छ। हजुरको नाभिकमलबाट उत्पन्न स्वयंब्रह्माजी हजुरको ध्यान गरेर नै पर्खिरहे, दर्शन तिनले पनि पाएनन्। हजुर सत्य सङ्कल्प हुनुहुन्छ हजुरका का शक्ति अचिन्त्य र अनन्त छन्। सत्त्व आदि गुणका प्रवाहरूपले आफ्ना शक्तिलाई विभक्त गरेर निष्क्रिय भएर पनि हजुर जीवलाई कर्मफल दिनको लागि विश्वको उत्पत्ति, स्थिति र प्रलय

गर्दछन् ॥ २ । ३ ॥ प्रलयकालमा जो विशाल ब्रह्माण्ड आफूमा लीन गरेर वरको पातमा पल्टिई आनन्दपूर्वक खुट्टाको बूढीऔंला चुस्ने गर्दथे, तिनै हजुरलाई मैले आफ्नो उदरमा यसरी धारण गरें, यसैमा म छक्क पर्दछु ॥ ४ ॥ दुर्जनको दलन र सज्जनहरूको पालन गर्नका लागि हजुरले यसरी वेला वेलामा वाराहादि अनेक अवतार लिनुभएथ्यो, उसै गरी हजुरको यो कपिल अवतार पनि ज्ञानमार्गको उपदेश दिनका लागिनै भएको ॥५॥ जसको नामको श्रवण कीर्तन गर्ने र कहिलेकाहीं स्मरण गर्नाले चाण्डाल पनि सोमयाग गरेको अधिकारी र आदरणीय बन्दछ, त्यसको दर्शनले पाइने लाभको त कुरै छैन ॥ ६ ॥ पूर्वजन्ममा विधिपूर्वक कोही तपश्चर्या, हवन र तीर्थयात्रा, व्रत, दान आदि गरेको फलस्वरूप यस जन्ममा हरि-कीर्तन गर्ने उच्च अधिकार प्राप्त हुन्छ । अतएव जसको जिब्रोमा हजुरको नाम बनिरहन्छ र जो सधैं हजुरको भजन गर्ने गर्दछ, त्यो चाण्डाल पनि सर्वश्रेष्ठ छ । हजुर नै परब्रह्म र परमपुरुष तथा विष्णु हुनुहुन्छ । बाल विषयबाट मन पृथक् भएपछि नै हजुरको चिन्तन गर्न सकिन्छ, हजुरको कृपादृष्टि भएपछि मात्र जीव जन्म-मरणको चक्रबाट

राब्जजातः ॥ २ ॥ स एव विश्वस्य भवान्विधत्ते गुणप्रवाहेण विभक्तवीर्यः ॥ सर्गाद्यनीहोऽवितथाभिसन्धिरात्मेश्वरोऽतर्क्यसहस्रशक्तिः ॥ ३ ॥ स त्वं भृतो मे जठरेण नाथ कथं नु यस्योदर एतदासीत् ॥ विश्वं युगान्ते वटपत्र एकः शेते स्म मायाशिशुरंघ्रिपानः ॥ ४ ॥ त्वं देहतन्त्रः प्रशमाय पाप्मनां निदेशभाजां च विभो विभूतये ॥ यथाऽवतारास्तव शूकरादयस्तथाऽयमप्यात्मपथोपलब्धये ॥ ५ ॥ यन्नामधेयश्रवणानुकीर्तनाद्यत्प्रह्वणाद्यत्स्मरणादपि क्वचित् ॥ श्वादोऽपि सद्यः सवनाय कल्पते कुतः पुनस्ते भगवन्नु दर्शनात् ॥ ६ ॥ अहो बत श्वपचोऽतो गरीयान् यज्जिह्वाग्रे वर्तते नाम तुभ्यम् ॥ तेपुस्तपस्ते जुहुवुः सस्नुरार्या ब्रह्मानूचुर्नाम गृहन्ति ये ते ॥ ७ ॥ तं त्वामहं ब्रह्म परं पुमांसं प्रत्यक्स्रोतस्यात्मनि संविभाव्यम् ॥ स्वतेजसा ध्वस्तगुणप्रवाहं वन्दे विष्णुं कपिलं वेदगर्भम् ॥ ८ ॥ मैत्रेय उवाच ॥ ईडितो भगवानेवं कपिलाख्यः परः पुमान् ॥ वाचाऽविक्लवयेत्याह मातरं मातृवत्सलः ॥ ९ ॥ कपिल उवाच ॥ मार्गेणानेन मातस्ते सुसेव्येनोदितेन मे ॥ आस्थितेन परां काष्ठामचिरादवरोत्स्यसि ॥ १० ॥ श्रद्धत्स्वैतन्मतं मह्यं जुष्टं यद्ब्रह्मवादिभिः ॥ येन मामभवं याया मृत्युमृच्छन्त्यतद्विदः ॥ ११ ॥ मैत्रेय उवाच ॥ इति प्रदर्श्य भगवान्सतीं तामात्मनो गतिम् ॥ स्वमात्रा ब्रह्मवादिन्या कपिलोऽनुमतो ययौ ॥ १२ ॥ सा चापि तनयोक्तेन योगादेशेन योगयुक् ॥ तस्मिन्नाश्रम आपीडे सरस्वत्याः समाहिता ॥१३॥ अभीक्ष्णावगाहकपिशान् जटिलान्कुटिलालकान् ॥ आत्मानं चोग्रतपसा बिभ्रती चीरिणं कृशम् ॥१४॥

मुक्त हुन सक्तछ । हजुर नै वेदका प्रधान आधार हुनुहुन्छ । हे भगवन् ! म हजुरलाई प्रणाम गर्दछु, ॥ ७-८ ॥ मैत्रेयजी भन्दछन् हे विदुर ! माता देवहूतिले जब यसरी कपिल भगवान्को स्तुति गरिन् तब आमाको हितका निम्ति कपिलदेवले गम्भीरतापूर्वक भने—॥ ९ ॥ हे माता ! मैले बुझाएको यस सरल मार्गमा हिंडेर तिमी शीघ्र जीवन-मुक्त हुनेछौ ॥ १० ॥ ब्रह्मज्ञानी जन मेरो मत ( सांख्य ) को समर्थन गर्दछन् । अतएव यसमा हिंडनाले तिमी पनि मुक्त हुनेछौ । जो यसलाई मान्दैनन् ती भवसागरमा डुब्दै-उत्रन्दै रहन्छन् ॥ ११ ॥ मैत्रेय भन्दछन्—हे विदुर ! माता देवहूतिलाई यसरी आत्मज्ञानको उपदेश दिएर र उनीबाट अनुमति लिएर कपिलदेव यहाँबाट हिंडे॥१२॥ त्यसै वेलादेखि उनले बताएका विधि अनुसार एकाग्रचित्त भई माता देवहूति सरस्वती नदीको किनारमा बिन्दुसर आश्रममा गएर योगाभ्यास गर्न लागिन् ॥ १३ ॥ दिनको तीन पल्ट स्नान गर्नाले रातो कपाल लट्टिए,

कथ पहेला भए र वल्कल वसन लगाएर कठोर तपस्या गर्नाले ती नान्दै दुर्बल भइन् प्रजापति कर्दमको गार्हस्थ्य आश्रममा ती सबै सम्पत्तिहरू थिए जुन तपस्या र योगबलले नै प्राप्त गर्न सकिन्थ्यो । यसै कारण त्यस आश्रमको निम्ति देवता पनि लोभिन्थे ॥ १४ ॥ त्यस आश्रममा हात्ती-दाँतका पलंग थिए, तिनमा सेता बिछौना बिछाइएका थिए र सबै सामान सुनका थिए । सुवर्णका आसन ( चौकीहरू ) राखिएका थिए, तिनमा नरम उसना थिए । स्फटिक र मरकतमणिका भित्ताहरूमा अनेक सुन्दरीगणका मूर्तिहरू बनेका थिए, तिनका हातमा टल्कने रत्नप्रदीप विद्यमान थिए । फुलेका कल्पवृक्ष आदि देवद्रुम त्यस आश्रमको शोभा बढाइरहेका थिए, वृक्षहरूमा पक्षीगण बोल्दथे र भ्रमर गुञ्जन गरिरहेथे ॥१५–१८॥ वाटिकाका सरोवरमा फुलेका कमलको सुगन्ध लिंदै देवहूति कर्दम प्रजापति जलविहार गर्दथे र गन्धर्व, किन्नर आदि उनलाई स्तुति ( संगीत ) ले प्रसन्न गर्दथे । यस्ता सुख-सामग्रीका निम्ति इन्द्रपुरीका ललनाहरू पनि लालायित थिए, किन्तु देवहूतिलाई त्यसको त्याग गर्न अलिकति पनि कष्ट भएन, तर पति वनवासी भएपछि जब छोरो पनि उनलाई छाडेर

प्रजापतेः कर्दमस्य ततोयोगविजृम्भितम् ॥ स्वगार्हस्थ्यमनौपम्यं प्रार्थ्यं वैमानिकैरपि ॥ १५ ॥ पयःफेननिभाः शय्या दान्ता रुक्मपरिच्छदाः ॥
आसनानि च हैमानि सुस्पर्शास्तरणानि च ॥ १६ ॥ स्वच्छस्फटिककुड्येषु महामारकतेषु च ॥ रत्नप्रदीपा आभान्ति ललनारत्नसंयुताः ॥ १७ ॥
गृहोद्यानं कुसुमितै रम्यं बह्वमरद्रुमैः ॥ कूजद्विहङ्गमिथुनं गायन्मत्तमधुव्रतम् ॥१८॥ तत्र प्रविष्टमात्मानं विबुधानुचरा जगुः ॥ वाप्यामुत्पलगन्धिन्यां
कर्दमेनोपलालितम् ॥ १९ ॥ हित्वा तदीप्सिततममप्याखण्डलयोषिताम् ॥ किञ्चिच्चकार वदनं पुत्रविश्लेषणातुरा ॥ २० ॥ वनं प्रव्रजिते पत्या-
वपत्यविरहातुरा ॥ ज्ञाततत्त्वाऽप्यभून्नष्टे वत्से गौरिव वत्सला ॥ २१ ॥ तमेव ध्यायती देवमपत्यं कपिलं हरिम् ॥ बभूवाचिरतो वत्स निःस्पृहा तादृशे
गृहे ॥ २२ ॥ ध्यायती भगवद्रूपं यदाह ध्यानगोचरम् ॥ सुतं प्रसन्नवदनं समस्तव्यस्तचिंतया ॥ २३ ॥ भक्तिप्रवाहयोगेन वैराग्येण बलीयसा ॥
युक्तानुष्ठानजातेन ज्ञानेन ब्रह्महेतुना ॥ २४ ॥ विशुद्धेन तदाऽऽत्मानमात्मना विश्वतोमुखम् ॥ स्वानुभूत्या तिरोभूतमायागुणविशेषणम् ॥ २५ ॥
सा ब्रह्मणि स्थितमतिर्भगवत्यात्मसंश्रये ॥ निवृत्तजीवापत्तित्वात्क्षीणक्लेशाप्तनिर्वृतिः ॥ २६ ॥ नित्यारूढसमाधित्वात्परावृत्तगुणभ्रमा ॥ न सस्मार
तदात्मानं स्वप्ने दृष्टमिवोत्थितः ॥२७॥ तद्देहः परतः पोषोऽप्यकृशश्चाध्यसम्भवात् ॥ बभौ मलैरवच्छन्नः सधूम इव पावकः ॥२८॥ स्वाङ्गं तपोयो-

हिंडिदिए । तब ती गाई झैं व्याकुल भइन्, जसको बाछो बिछोडिएको होस् ॥ १९-२१ ॥ यद्यपि उनलाई तत्त्वज्ञान प्राप्त भइसकेको थियो, तापनि उनको मुखमा पुत्र-वियोगको कष्ट स्पष्ट देखिइरहेको थियो । भगवान कपिलदेवको स्मरण गर्दागर्दै देवहूतिको चित्त परिपूर्ण गृहस्थीबाट हट्यो र तिनका सारा वासनाहरू नष्ट भए ॥ २ ॥ कपिलदेवले जुन रूपको ध्यान गर्न भनेका थिए, त्यस मधुर हास्ययुक्त भगवानको सम्पूर्ण रूप र भिन्न-भिन्न अवयवहरूको ध्यान गर्दागर्दै तिनको बुद्धि स्थिर भयो । आत्म-परमात्म-विषयक भेद-बुद्धि निवारण भएको हुनाले तिनका कायिक, वाचिक, मानसिक क्लेश नष्ट भएर उनलाई आत्मानन्दको अनुभव हुनलाग्यो । नित्यप्रति समाधि लागिरहनाले उनको सत्त्व-रज आदि गुणमूलक भ्रम हरायो ॥२३-२६॥ सुतेर उठेका व्यक्तिलाई जस्तै स्वप्नका घटनाको स्मरण रहन्न, त्यसै गरी नित्य समाधिस्थ रहनाले उनलाई आफ्नो शरीरको पनि शुद्धि रहेन ॥ २७ ॥

कर्दम प्रजापति द्वारा नियुक्त किन्नरीहरू देवहूतिको खान-पानको व्यवस्था गर्दथे र योगाभ्यास गरिरहनाले तिनलाई कुनै मानसिक क्लेशले दुःख दिँदैनथ्यो। त्यसै कारण उनको देह जर्जर हुनबाट जोगियो, तर अब स्वयं हेर-विचार नगर्नाले शरीरमा मयल जमेको थियो, त्यसैले ती धूमयुक्त आगो झैं देखिन्थिन्। तपस्या र योगाभ्यास गर्दै देवहूति भगवानमा यति वर्ता तन्मय रहन्थिन् कि उनलाई कपाल लट्टिएको र देहबाट वस्त्र खुस्केको पनि ध्यान रहन्नथ्यो ॥२९॥ तिनको देहको रक्षा त प्रारब्ध (दैव) वश नै भइरहेको थियो। यस प्रकार कपिलदेवले भनेको मार्गबाट हिंड्नाले थोरै समयमा नै देवहूतिलाई नित्यमुक्त आत्मस्वरूप परब्रह्मको प्राप्ति भयो ॥ ३० ॥ जुन स्थानमा देवहूतिलाई सिद्धि प्राप्त भएको थियो त्यो पुण्यक्षेत्र सिद्धपदको नामले तीनै लोकमा प्रसिद्ध भयो। योगसाधना द्वारा त्यागेको तिनको देह 'सिद्धिदा' नामकी नदीको रूपमा परिणत भयो ॥ ३१-३२ ॥

गमयं मुक्तकेशं गताम्बरम् ॥ दैवगुप्तं न बुबुधे वासुदेवप्रविष्टधीः ॥ २६ ॥ एवं सा कपिलोक्तेन मार्गेणाचिरतः परम् ॥ आत्मानं ब्रह्म निर्वाणं भगवन्तमवाप ह ॥ ३० ॥ तद्वीरासीत्पुण्यतमं क्षेत्रं त्रैलोक्यविश्रुतम् ॥ नाम्ना सिद्धपदं यत्र सा संसिद्धिमुपेयुषी ॥ ३१ ॥ तस्यास्तद्योगविधुतमार्त्यं मर्त्यमभूत्सरित् ॥ स्रोतसां प्रवरा सौम्य सिद्धिदा सिद्धसेविता ॥ ३२ ॥ कपिलोऽपि महायोगी भगवान्पितुराश्रमात् ॥ मातरं समनुज्ञाप्य प्रागुदीचीं दिशं ययौ ॥ ३३ ॥ सिद्धचारणगन्धर्वैर्मुनिभिश्चाप्सरोगणैः ॥ स्तूयमानः समुद्रेण दत्तार्हणनिकेतनः ॥ ३४ ॥ आस्ते योगं समास्थाय सांख्याचार्यैरभिष्टुतः ॥ त्रयाणामपि लोकानामुपशान्त्यै समाहितः ॥ ३५ ॥ एतन्निगदितं तस्य यत्पृष्टोऽहं तवानघ ॥ कपिलस्य च संवादो देवहूत्याश्च पावनः ॥ ३६ ॥ य इदमनुशृणोति योऽभिधत्ते कपिलमुनेर्मतमात्मयोगगुह्यम् ॥ भगवति कृतधीः सुपर्णकेतावुपलभते भगवत्पदारविन्दम् ॥ ३७ ॥ इति श्रीमद्भागवते महापुराणे तृतीयस्कन्धे कापिलेयोपाख्याने त्रयस्त्रिंशत्तमोऽध्यायः ॥ ३३ ॥

माताभित आज्ञा लिएर योगीश्वर कपिल कर्दम प्रजापतिको आश्रम विन्दुसरबाट ईशान दिशामा पुगे। ती त्यहाँ समुद्रतटमा बसेर तीनैलोकलाई शान्ति प्राप्त गराउनको निम्ति अझ पनि योगाभ्यास गर्दछन्, सिद्ध, चारण, गन्धर्व, ऋषि-मुनि र सांख्यमतका ठूला-ठूला ज्ञाता उनको स्तुति गर्न गर्दथे ॥ ३३-३५ ॥ हे विदुर ! तिमीले मसित जुन कपिलदेव र देवहूतिको पवित्र संवाद सोधेका थियौ त्यो मैले सुनाइदिएँ। कपिलदेवको उपदेशरूप रहस्य जो व्यक्ति सधैं सुन्दछ, त्यसको भगवान्मा चित्त लाग्दछ र अन्त्यमा त्यसलाई अवश्य भगवत् प्राप्ति हुन्छ ॥३६-३७॥ इति श्रीमद्भागवते तृतीयस्कन्धे पं० गौरीशंकर 'वसिष्ठ' कृत नेपाली भाषाटीकायां त्रयस्त्रिंशोऽध्यायः ॥३३॥

३१३

समाप्तोऽयं तृतीयः स्कन्धः।

अथ 'वासिष्ठी' भाषाटीकासहिते

# श्रीमद्भागवते चतुर्थः स्कन्धः प्रारभ्यते।

श्रीहरि: ( स्वायम्भुव मनुका दुइ कन्याको वंश विस्तार )—मैत्रेय भन्दछन्—हे विदुर ! स्वायम्भुव मनुको शतरूपा पत्नीबाट दुइ छोरा र तीन छोरी उत्पन्न भए । यी आकूति, देवहूति र प्रसूति नामले प्रसिद्ध थिए ॥१॥ राजा मनुले तीमती भ्रातृमती आकूतिलाई शतरूपाको अनुमतिले ❀पुत्रिका-धर्मको विधानले रुचि नामका प्रजापतिसित विवाह गरिदिए ॥२॥ ईश्वरको ध्यान गर्दै ब्रह्मतेजस्वी भगवान् रुचि प्रजापतिले तिनबाट यौटा छोरो र यौटी छोरी उत्पन्न गरे ॥३॥ तिनमा पुत्र साक्षात् यज्ञस्वरूप धारी विष्णु भगवान् थिए र कन्या भगवन्‌सित कहिल्यै पृथक् नहुने लक्ष्मीको उत्तम अंश 'दक्षिणा' थिइन् ॥४॥ अनि स्वायम्भुव मनु अतिशय प्रसन्न भएर आफ्नी छोरीसित ती परम तेजस्वी छोरालाई आफ्नो घर ल्याए र दक्षिणालाई रुचिले राखे ॥५॥ जब दक्षिणालाई पतिको इच्छा भयो, तब तिनलाई भगवान् यज्ञपुरुषले ग्रहण गर्नुभयो । यसले दक्षिणालाई निकै आनन्द प्राप्त भयो र

ॐ नमो भगवते वासुदेवाय ॥ मैत्रेय उवाच ॥ मनोस्तु शतरूपायां तिस्रः कन्याश्च जज्ञिरे ॥ आकूतिर्देवहूतिश्च प्रसूतिरिति विश्रुताः ॥ १ ॥
आकूतिं रुचये प्रादादपि भ्रातृमतीं नृपः ॥ पुत्रिकाधर्ममाश्रित्य शतरूपाऽनुमोदितः ॥ २ ॥ प्रजापतिः स भगवान् रुचिस्तस्यामजीजनत् ॥ मिथुनं
ब्रह्मवर्चस्वी परमेण समाधिना ॥ ३ ॥ यस्तयोः पुरुषः साक्षाद्विष्णुर्यज्ञस्वरूपधृक् ॥ या स्त्री सा दक्षिणा भूतेरंशभूताऽनपायिनी ॥ ४ ॥ आनिन्ये
स्वगृहं पुत्र्याः पुत्रं विततरोचिषम् ॥ स्वायम्भुवो मुदा युक्तो रुचिर्जग्राह दक्षिणाम् ॥ ५ ॥ तां कामयानां भगवानुवाह यजुषां पतिः ॥ तुष्टायां
तोषमापन्नोऽजनयद्द्वादशात्मजान् ॥ ६ ॥ तोषः प्रतोषः सन्तोषो भद्रः शान्तिरिडस्पतिः ॥ इध्मः कविर्विभुः स्वह्नः सुदेवो रोचनो द्विषट् ॥ ७ ॥
तुषिता नाम ते देवा आसन्स्वायम्भुवान्तरे ॥ मरीचिमिश्रा ऋषयो यज्ञः सुरगणेश्वरः ॥ ८ ॥ प्रियव्रतोत्तानपादौ मनुपुत्रौ महौजसौ ॥ तत्पुत्रपौत्र-
नप्तृणामनुवृत्तं तदन्तरम् ॥ ९ ॥ देवहूतिमदात्तात कर्दमायात्मजां मनुः ॥ यत्सम्बन्धि श्रुतप्रायं भवता गदतो मम ॥ १० ॥ दक्षाय ब्रह्मपुत्राय
प्रसूतिं भगवान्मनुः ॥ प्रायच्छद्यत्कृतः सर्गस्त्रिलोक्यां विततो महान् ॥ ११ ॥ याः कर्दमसुताः प्रोक्ता नव ब्रह्मर्षिपत्नयः ॥ तासां प्रसूतिप्रसवं

यज्ञ-भगवान्‌ले पनि प्रसन्न भएर तीबाट बाह्र पुत्र जन्माए ॥६॥ ती तोष, प्रतोष, सन्तोष, भद्र, शान्ति, इडस्पति, इध्म, कवि, विभु, स्वह्न, सुदेव र रोचन नामले प्रसिद्ध भए ॥७॥ स्वायम्भुव मन्वन्तरमा यी 'तुषित' देवता कहिए । मरीचि आदि सप्तर्षि र यज्ञ नामक भगवान् नै देवताका अधीश्वर इन्द्र भए ॥८॥ महाराज मनुका प्रियव्रत र उत्तानपाद यी दुवै महातेजस्वी छोरा थिए । तिनका छोरा-नाति र नातिनाहरूले सारा मन्वन्तरको पालन गरे ॥९॥ हे तात ! मनुले आफ्नी अर्की कन्या देवहूति महर्षि कर्दमलाई दिएका थिए तिनको वंशको विषयमा सबै वर्णन तिमीले मेरो मुखबाट सुनिसक्यौ ॥१०॥ त्यसै गरी मनुले ब्रह्माजीका पुत्र दक्षप्रजापतिसित आफ्नी प्रसूति नामकी कन्या विवाह गरेर दिए । तीबाट धेरै सन्तान तीनै लोकमा फैलिएका छन् ॥११॥ हे विदुर ! मैले कर्दमजीका जुन नौ कन्याहरूको वृत्तान्त पहिले भनेथें, तिनै ब्रह्मर्षिका नौ पत्नी भए । अब तिनीको वंशपरम्परा वर्णन

❀ उदाहरण—( अभ्रातृकां प्रदास्यामि तुभ्यं कन्यां अलंकृताम् । अस्यां यो जायते पुत्रः स मे पुत्रो भविष्यति—दाजु-भाइ नभएकी र राम्ररी अलंकृत गरिएकी यो कन्या म तिमीलाई दिन्छु । यसबाट जुन पुत्र उत्पन्न होला, त्यो मेरो पुत्र हुनेछ । यस्तो कबोल गरेर कन्यादान दिइने 'पुत्रिका धर्म' कहिन्छ ।

सुन्नुहवस् ।।१२।। कर्दमकी पुत्री र महर्षि मरीचिकी पत्नी कलासित कश्यप तथा पूर्णिमा नामका दुई छोरा जन्मिए। तिनैका सन्तानले सारा जगत् भरिएका छ ।।१३।। हे परन्तप ! पूर्णिमाका विरज र विश्वग नामका दुई पुत्र र देवकुल्या नामकी यौटी कन्या उत्पन्न भइन् । पछि ती श्रीहरिका पादप्रक्षालन-जलले गङ्गा भइन् ।।१४।। अत्रि ऋषिकी पत्नी अनसूयाको गर्भबाट श्रीविष्णु, महादेव र ब्रह्माजीको अंशबाट क्रमशः दत्तात्रय, दुर्वासा र चन्द्रमा नामका तीन यशस्वी छोरा भए ।।१५।। यति कथा सुनेर विदुरले सोधे–हे गुरो ! जगत्को उत्पत्ति, स्थिति र प्रलय गर्ने ब्रह्मा, विष्णु र महादेव यी तीनै देवताले कुन अभिप्रायले अत्रि मुनिकहाँ जन्म लिएका थिए। यो मलाई भन्नुहवस् ।।१६।। श्रीमैत्रेयजी भन्न लागे—जब ब्रह्माजीले ब्रह्मज्ञानीमा श्रेष्ठ महर्षिलाई सृष्टि रचनाको आज्ञा दिए, अनि ती तपस्या गर्न आफ्नी सहधर्मिणी सहित ऋक्ष पर्वतमा गए ।।१७।। त्यहाँ निर्विन्ध्या नदीको प्रवाहित जलले सर्वत्र शब्दायमान तथा फूलहरूको गुच्छाले सुशोभित पलाश र अशोकको वनमा महामुनि अत्रि प्राणायाम द्वारा आफ्नो चित्त वशमा पारेर

प्रोच्यमानं निबोध मे ॥ १२ ॥ पत्नी मरीचेस्तु कला सुषुवे कर्दमात्मजा ॥ कश्यपं पूर्णिमानं च ययोरापूरितं जगत् ॥ १३ ॥ पूर्णिमाऽसूत विरजं विश्वगं च परंतप ॥ देवकुल्यां हरेः पादशौचाद्याऽभूत्सरिद्दिवः ॥ १४ ॥ अत्रेः पत्न्यनसूया त्रीञ्जज्ञे सुयशसः सुतान् ॥ दत्तं दुर्वाससं सोममात्मेशब्रह्मसम्भवान् ॥ १५ ॥ विदुर उवाच ॥ अत्रेर्गृहे सुरश्रेष्ठाः स्थित्युत्पत्त्यन्तहेतवः ॥ किंचिच्चिकीर्षवो जाता एतदाख्याहि मे गुरो ॥ १६ ॥ मैत्रेय उवाच ॥ ब्रह्मणा नोदितः सृष्टावत्रिर्ब्रह्मविदां वरः ॥ सह पत्न्या ययावृक्षं कुलाद्रिं तपसि स्थितः ॥ १७ ॥ तस्मिन्प्रसूनस्तबकपलाशाशोककानने ॥ वार्भिः स्रवद्भिरुद्घुष्टे निर्विन्ध्यायाः समन्ततः ॥ १८ ॥ प्राणायामेन संयम्य मनो वर्षशतं मुनिः ॥ अतिष्ठदेकपादेन निर्द्वन्द्वोऽनिलभोजनः ॥ १९ ॥ शरणं तं प्रपद्येऽहं य एव जगदीश्वरः ॥ प्रजामात्मसमां मह्यं प्रयच्छत्विति चिन्तयन् ॥ २० ॥ तप्यमानं त्रिभुवनं प्राणायामैधसाऽग्निना ॥ निर्गतेन मुनेर्मूर्ध्नः समीक्ष्य प्रभवस्त्रयः ॥ २१ ॥ अप्सरोमुनिगन्धर्वसिद्धविद्याधरोरगैः ॥ वितायमानयशसस्तदाश्रमपदं ययुः ॥ २२ ॥ तत्प्रादुर्भावसंयोगविद्योतितमना मुनिः ॥ उत्तिष्ठन्नेकपादेन ददर्श विबुधर्षभान् ॥ २३ ॥ प्रणम्य दण्डवद्भूमावुपतस्थेऽर्हणाञ्जलिः ॥ वृषहंससुपर्णस्थान्स्वैः स्वैश्चिह्नैश्च चिह्नितान् ॥ २४ ॥ कृपावलोकेन हसद्वदनेनोपलम्भितान् ॥ तद्रोचिषा प्रतिहते निमील्य मुनिरक्षिणी ॥ २५ ॥

सय वर्षसम्म केवल हावा पिएर निर्द्वन्द भावले यौटै खुट्टामा उभिइरहे ।।१८।।१९।। त्यस बेला ती यो चिन्तन गरिरहेका थिए–जो सारा जगत्का ईश्वर छन्, हामी उनकै शरणमा छौं । ती हामीलाई आफूजस्तै सन्तान देउन् ।।२०।। प्राणायामरूपी काठद्वारा प्रज्वलित अत्रि मुनिको मस्तकबाट बाहिर निस्के र तीनै लोकलाई तप्त पार्ने अग्निलाई देखेर अप्सरा, मुनि गन्धर्व, सिद्ध विद्याधर तथा नागगण द्वारा गान गरिने योग्य गुण भएका ब्रह्मा, विष्णु र महादेव–यी तीनै जगत्पति अत्रिमुनिको आश्रममा उपस्थित भए ।।२१।।२२।। ती तीनै जनाको [illegible] आगमन भएको थियो, यसले अत्रि मुनिको अन्तःकरण प्रकाशित भएर आयो र यौटै खुट्टाले उभिएका ती मुनिले आफाफना चिह्नले सुशोभित, आफ्ना दयार्द्र तथा [illegible] मुखमलबाट प्रसन्नता प्रकट गर्दै तथा वृषभ, हंस एवं गरुडमा चढेर शंकर, ब्रह्मा र श्रीहरि यी तीनै देवलाई देखेर तथा पृथ्वीमा लट्ठी झैं लम्पसार तथा प्रणाम गर्न [illegible]

श्रद्धांजलि अर्पण गरे । ती उनको तीक्ष्ण तेजले आत्तिई आफ्ना दुवै आँखा चिम्ले र चित्तलाई उनैमा लगाएर हात जोडेर सबै लोकमा ती त्रिदेवको अतिशय मधुर र सुन्दर वाणीद्वारा यसरी स्तुति गर्नलागे ॥ २३-२६॥ अत्रिमुनिले भने–हे देवता हो ! तपाई मायाका भिन्न-भिन्न गुणद्वारा जगत्‌को उत्पत्ति, स्थिति तथा लयका निमित्त युग-युगमा विभिन्न शरीर धारण गर्न, ब्रह्मा, विष्णु र शिव हुनुहुन्छ, म हजुरलाई नमस्कार गर्दछु । अँ, भन्नोस्, मैले कुन देवताको आवाहान गरेको थिएँ ॥२७॥ सन्तान-प्राप्तिको निम्ति मैले केवल ईश्वर भगवान्‌को चिन्तन गरेको थिएँ । ती सबै देहधारीहरूको मनदेखि पनि अगोचर हजुर तीनै देवता यहाँ आउनु भयो । यसले मलाई निकै आश्चर्य भइरहेको छ । यहाँहरू प्रसन्न भएर यसको कारण भन्नुहवस् ॥२८॥ मैत्रेयजी भन्दछन्–हे विदुर ! अत्रि मुनिका वचन सुनेर तीनै देवता हाँसे र उनले सुनिश्चित मधुर वाणीमा भने ॥२९॥ देवगण भन्दछन्—हे ब्रह्मन् ! तिमी सत्यसंकल्प हौ । तिमीले जुन संकल्प गरेका थियौ, त्यही पूर्ण भएको हो । त्यसको प्रतिकूल केही भएको छैन ।तिमीले जुन 'ईश्वरको ध्यान गरिका थियौ, ती हामीनै हौं ॥३०॥

चेतस्तत्प्रवणं युञ्जन्नस्तावीत्संहतांजलिः ॥ श्लक्ष्णया सूक्तया वाचा सर्वलोकगरीयसः ॥२६॥ अत्रिरुवाच ॥ विश्वोद्भवस्थितिलयेषु विभज्यमानैर्मायागु-
णैरनुयुगं विगृहीतदेहाः ॥ ते ब्रह्मविष्णुगिरिशाः प्रणतोऽस्म्यहं वस्तेभ्यः क एक भवतां म इहोपहूतः ॥ २७ ॥ एको मयेह भगवान्विविधप्रधानश्चित्ती-
कृतः प्रजननाय कथं नु यूयम् ॥ अत्रागतास्तनुभृतां मनसोऽपि दूराद् ब्रूत प्रसीदत महानिह विस्मयो मे ॥ २८ ॥ मैत्रेय उवाच ॥ इति तस्य वचः
श्रुत्वा त्रयस्ते विबुधर्षभाः ॥ प्रत्याहुः श्लक्ष्णया वाचा प्रहस्य तमृषिं प्रभो ॥ २९ ॥ देवा ऊचुः ॥ यथा कृतस्ते सङ्कल्पो भाव्यं ते नैव नान्यथा ॥
सत्संकल्पस्य ते ब्रह्मन् यद्वै ध्यायति ते वयम् ॥ ३० ॥ अथास्मदंशभूतास्ते आत्मजा लोकविश्रुताः ॥ भवितारोऽङ्ग भद्रं ते विस्रप्स्यंति च ते यशः
॥ ३१ ॥ एवं कामवरं दत्त्वा प्रतिजग्मुः सुरेश्वराः ॥ सभाजितास्तयोः सम्यग्दंपत्योर्मिषतोस्ततः ॥३२॥ सोमोऽभूद्ब्रह्मणोऽंशेन दत्तो विष्णोस्तु योग-
वित् ॥ दुर्वासाः शंकरस्यांशो निबोधांगिरसः प्रजाः ॥ ३३ ॥ श्रद्धा त्वङ्गिरसः पत्नीचतस्रोऽसूत कन्यकाः ॥ सिनीवालीकुहू रामा चतुर्थ्यनुमतिस्तथा
॥३४॥ तत्पुत्रावपरावास्तां ख्यातौ स्वारोचिषेऽन्तरे ॥ उतथ्यो भगवान्साक्षाद्ब्रह्मिष्ठश्चबृहस्पतिः ॥३५॥ पुलस्त्योऽजनयत्पत्न्यामगस्त्यं च हविर्भुवि ॥

अतः हे मुने ! तिम्रो कल्याण होस् । तिम्रो घरमा हामी तीनै जनाको अंशले जायमान तीन जगद्विख्यात पुत्र उत्पन्न हुनन् ती तिम्रो सुयशको विस्तार गर्नन् ॥ ३१ ॥ तिनलाई इच्छित वर दिई तीनै सुरेश्वर ती दम्पतिबाट राम्ररी पूजित हुँदै, तिनले देख्दा देख्दा आफ्ना लोकमा फर्केर गए र ॥३२॥ महर्षि अत्रिका छोराहरूमा ब्रह्माजीको अंशबाट चन्द्रमा, विष्णुको अंशबाट योगवेत्ता दत्तात्रय र महादेवजीको अंशबाट दुर्वासा उत्पन्न भए । अब अङ्गिरा ऋषिका सन्तानहरूको वर्णन गर्दछु ॥३३॥ अङ्गिरा ऋषिकी पत्नी श्रद्धाबाट सिनीवाली, कुहू, राका तथा अनुमति यी चार कन्याहरू उत्पन्न भए ॥३४॥ इनको अतिरिक्त साक्षात् भगवान् उतथ्य र ब्रह्मनिष्ठ बृहस्पति–यी दुइ छोरा पनि भए, जसले स्वरोचिष मन्वन्तरमा प्रसिद्धि प्राप्त गरे ॥ ३५ ॥ महर्षि पुलस्त्यले आफ्नी पत्नी हविर्भूबाट अगस्त्य र महातपस्वी विश्रवालाई उत्पन्न गरे । यी दुवैमा अगस्त्य दोस्रो जन्ममा जठराग्निको

रूपमा उत्पन्न भए ॥३६॥ विश्रवा मुनिकी पत्नी इडविडाको गर्भबाट यक्षराज कुबेरको जन्म भयो र विश्रवाकी कैकसी नामकी अर्की पत्नीबाट रावण, कुम्भकर्ण र विभीषण जन्मे ॥३७॥ हे महामते ! महर्षि पुलहकी स्त्री गतिले कर्मश्रेष्ठ, वरीयान र सहिष्णु नामका तीन पुत्र उत्पन्न गरिन् ॥३८॥ त्यसै गरी क्रतुकी पत्नी क्रियाले साठी हजार बालखिल्य आदि ऋषिहरूलाई उत्पन्न गरिन् ती ब्रह्मतेजले देदीप्यमान भइरहेका थिए ॥३९॥ हे परन्तप ! वसिष्ठकी भार्या ऊर्जा अर्थात् अरुन्धतीबाट चित्रकेतु आदि सात पुत्र उत्पन्न भए, यी सातजना शुद्धचित्त ब्रह्मर्षि थिए ॥४०॥ तिनको नाम थियो–चित्रकेतु, सुरोचि, विरजा, मित्र, उल्वण,वसुभृद्यान द्युमान् । यीबाहेक उनीद्वारा शक्ति आदि अरु पुत्र पनि जन्मिए ॥४१॥ चिति अथर्वण ऋषिकी पत्नी थिइन् । तिनको गर्भबाट तपोनिष्ठ, दध्यङ् (दधीचि) नामका पुत्र भए, जो 'अश्वशिरा' नामले पनि प्रख्यात थिए । अब भृगुवंशको वृत्तान्त सुन ॥४२॥ महाभाग भृगुले ख्याति नामकी भार्याबाट धाता र विधाता नामका दुइ छोरा तथा श्री नामकी यौटी कन्या उत्पन्न गरिन् ॥ ४३ ॥ ती धाता र विधातासित मेरुऋषिले आफ्नी

सोऽन्यजन्मनि दह्याग्निर्विश्रवाश्च महातपाः ॥३६॥ तस्य यक्षपतिर्देवः कुबेरस्त्विडविडासुतः ॥ रावणः कुम्भकर्णश्च तथाऽन्यस्यां विभीषणः ॥३७॥ पुलस्त्यस्य गतिर्भार्या त्रीनसूत सती सुतान् ॥ कर्मश्रेष्ठं वरीयांसं सहिष्णुं च महामते ॥ ३८ ॥ क्रतोरपि क्रिया भार्या बालखिल्यानसूयत ॥ ऋषीन्षष्टिसहस्राणि ज्वलतो ब्रह्मतेजसा ॥३९॥ उर्जायां जज्ञिरे पुत्रा वसिष्ठस्य परंतप ॥ चित्रकेतुप्रधानास्ते सप्त ब्रह्मर्षयोऽमलाः ॥४०॥ चित्रकेतुः सुरोचिश्च विरजा मित्र एव च ॥ उल्वणो वसुभृद्यानो द्युमाञ्छक्त्यादयोऽपरे ॥ ४१ ॥ चितिस्त्वथर्वणः पत्नी लेभे पुत्रं धृतव्रतम् ॥ दध्यञ्चमश्वशिरसं भृगोर्वंशं निबोध मे ॥४२॥ भृगुः ख्यात्यां महाभागः पत्न्यां पुत्रानजीजनत् ॥ धातारं च विधातारं श्रियं च भगवत्पराम् ॥४३॥ आयतिं नियतिं चैव सुते मेरुस्तयोरदात् ॥ ताभ्यां तयोरभवतां मृकण्डः प्राण एव च ॥ ४४ ॥ मार्कण्डेयो मृकण्डस्य प्राणाद्वेदशिरा मुनिः ॥ कविश्च भार्गवो यस्य भगवानुशना सुतः ॥४५॥ त एते मुनयः क्षत्तर्लोकान्सर्गैरभावयन् ॥ एष कर्दमदौहित्रसंतानः कथितस्तव ॥ शृण्वतः श्रद्दधानस्य सद्यः पापहरः परः ॥ ४६ ॥ प्रसूतिं मानवीं दक्ष उपयेमे ह्यजात्मजः ॥ तस्यां ससर्ज दुहितॄः षोडशामललोचनाः ॥ ४७ ॥ त्रयोदशादाद्धर्माय तथै-

आयति र नियति नामकी कन्या दिए । तीबाट मृकण्ड र प्राण नामका दुइ छोरा उत्पन्न भए ॥४४॥ तिनमा मृकण्डबाट *मार्कण्डेय र प्राणबाट मुनिवर वेदशिराको जन्म भयो । वेदशिराका छोरा भगवान् उशना ( शुक्राचार्य ) भए, जो कवि पनि कहिन्थे ॥४५॥ हे विदुर ! यी सबै मुनिहरूले आफ्ना-आफ्ना सन्तान द्वारा सारा त्रिलोक परिपूर्ण पारिदिए । यो मैले तिमीलाई कर्दमका नाति-नातिनाका सन्तानको वृत्तान्त सुनाएँ । जो पुरुष श्रद्धापूर्वक यो कथा सुन्दछ यसले तिनका पापहरू तत्काल नष्ट गरिदिन्छ ॥४६॥ ब्रह्माजीका छोरा दक्ष-प्रजापतिमित मनुकी छोरी प्रसूतिको विवाह भयो । तिनले सोह्र सुनयना छोरीहरू उत्पन्न गरिन् ॥४७॥ भगवान् दक्षले तीमध्ये तेह्र कन्याहरू धर्मलाई, एउटी कन्या अग्निलाई,

* दृष्टान्त— मार्कण्डेय र कण्टनमार )— कुनै बाबाजीले थोरा ग्वालालाई गुरुमन्त्र दिएर शिष्य तुल्याए । बाबाजी कतै जान लागे, तब ग्वालाले भन्यो— 'महाराज ! मलाई आफ्नो नाम भनेर जानोस्, कुनै बेला केही काम पर्‍यो भने तपाईंलाई खोज्न सजिलो हुनेछ । बाबाजीले भने— 'मेरो नाम मार्कण्डेय हो र गङ्गाको निवासी हुँ ।' केही दिनमै ग्वालाको गुरुकी कहाँ जाने विचार भयो अनि त्यहाँ सोध्न लाग्यो— ए भाइ हो ! यहाँ कतै कण्टनमार बाबाजी बस्छन् ? गाउँके हरूले उत्तर दिए— 'यहाँ कण्टनमार त छैनन्, मार्कण्डेय महाराज अवश्य बस्छन् ।' ग्वालाले भन्यो— 'हो, हो, तिनै मारकण्डे-मारकण्डे यार ।'

319

पाँटी छोरी पितृगणलाई र पाँटी कन्या संहार गर्ने भगवान् शंकरलाई अर्पण गरे ॥ ४८ ॥ श्रद्धा, मैत्री, दया, शान्ति, तुष्टि, पुष्टि, क्रिया उन्नति, बुद्धि, मेधा, तितिक्षा, ह्री र मूर्ति— यी धर्मका पत्नी थिए ॥४९॥ तिनमा श्रद्धाबाट शुभ, मैत्रीबाट प्रसाद, दयाबाट अभय, शान्तिबाट सुख, तुष्टिबाट हर्ष, पुष्टिबाट अहङ्कार, क्रियाबाट योग, उन्नतिबाट दर्प, बुद्धिबाट अर्थ, मेधाबाट स्मृति, तितिक्षाबाट क्षेम र ह्री ( लज्जा ) बाट प्रश्रय (विनय) नामका छोरा जन्मिए ॥५०-५१॥ सबै गुणकी उत्पत्ति-स्थान मूर्तिले ऋषिवर नर-नारायणलाई जन्म दिइन् । उसको जन्मले अतिशय आनन्दित भएर सारा जगतले प्रसन्नता प्रकट गरे । सबैको मन दिशाहरू, वायु, नदी तथा पर्वत सबै प्रसन्न भए ॥ ५२-५३ ॥ त्यसबखत आकाशमा तूर्यबाजा हुन लाग्यो देवता पुष्पवर्षा गर्न लागे । मुनिगण प्रसन्न भएर स्तुति गर्नलागे गन्धर्व र किन्नर भगवानको सुयश गान गर्नलागे ॥ ५४ ॥ अप्सराहरू नाच्न लागे । त्यस बखत निकै ठूलो मङ्गलमय समारोह भयो र ब्रह्मादिक सबै देवता स्तोत्रद्वारा भगवानको स्तुति गर्नलागे॥५५॥देवतागण भन्नलागे—जस्तै बादलमा मनुष्य अनेक थरिका रूपको कल्पना

कामग्नये विभुः ॥ पितृभ्य एकां युक्तेभ्यो भवायैकां भवच्छिदे ॥ ४८ ॥ श्रद्धा मैत्री दया शांतिस्तुष्टिः पुष्टिः क्रियोन्नतिः ॥ बुद्धिर्मेधा तितिक्षा ह्रीर्मूर्तिर्धर्मस्य पत्नयः ॥४९॥ श्रद्धाऽसूत शुभं मैत्री प्रसादमभयं दया ॥ शांतिः सुखं मुदं तुष्टिः स्मयं पुष्टिरसूयत ॥ ५० ॥ योगं क्रियोन्नतिर्दर्पमर्थं बुद्धिरसूयत ॥ मेधा स्मृतिं तितिक्षा तु क्षेमं ह्रीः प्रश्रयं सुतम् ॥ ५१ ॥ मूर्तिः सर्वगुणोत्पत्तिर्नरनारायणावृषी ॥ ५२ ॥ ययोर्जन्मन्यदो विश्वमभ्यनन्दत्सुनिर्वृतम् ॥ मनांसि ककुभो वाताः प्रसेदुः सरितोऽद्रयः ॥ ५३ ॥ दिव्यवाद्यन्त तूर्याणि पेतुः कुसुमवृष्टयः ॥ मुनयस्तुष्टुवुस्तुष्टा जगुर्गन्धर्वकिन्नराः ॥ ५४ ॥ नृत्यन्तिस्म स्त्रियो देव्य आसीत्परममंगलम् ॥ देवा ब्रह्मादयः सर्वे उपतस्थुरभिष्टवैः ॥ ५५ ॥ देवा ऊचुः ॥ यो मायया विरचितं निजयात्मनीदं खे रूपभेदमिव तत्प्रतिचक्षणाय ॥ एतेन धर्मसदने ऋषिमूर्तिनाद्य प्रादुश्चकार पुरुषाय नमः परस्मै ॥५६॥ सोऽयं स्थितिव्यतिकरोपशमाय सृष्टान्सत्त्वेन नः सुरगणाननुमेयतत्त्वः ॥ दृश्याददभ्रकरुणेन विलोकनेन यच्छ्रीनिकेतममलं क्षिपतारविन्दम् ॥५७॥ एवं सुरगणैस्तात भगवन्ताविभिष्टुतौ ॥ लब्धावलोकैर्ययतुरर्चितौ गन्धमादनम् ॥५८॥ताविमौ वै भगवतो हरेरंशाविहागतौ ॥ भारव्ययाय च भुवः कृष्णौ यदुकुरूद्वहौ ॥५९॥ स्वाहाभिमानिनश्चाग्नेरात्मजांस्त्रीनजीजनत् ॥ पावकं पवमानं च शुचिं च हुतभोजनम् ॥६०॥ तेभ्योऽग्नयः समभवंश्चत्वारिंशच्च पञ्च च ॥ त

गरिलिन्छ, त्यसै गरी जसले आफ्नो मायाद्वारा सम्पूर्ण जगत्लाई अनेक रूपबाट अवलोकन गर्नका लागि आफूमा नै निर्माण गरेको छ र जो यस बखत धर्मकहाँ ऋषिरूपबाट अवतरित छन्, ती परम पुरुषलाई नमस्कार छ ।।५६।। शास्त्रद्वारा जसका तत्त्वको केवल अनुमान मात्र गर्न सकिन्छ, लक्ष्मीको निवासस्थान स्वरूप कमललाई पनि 'धिरे बस' भन्ने ती भगवान् जसले संसारका मर्यादाको विघ्नका शान्तिको निम्ति सत्वगुणबाट हामीलाई उत्पन्न गरेको छ, ती आफ्ना करुणामय नयनले हामी देवताहरूतिर हेरून् ।।५७।। हे तात ! देवताहरू द्वारा यस प्रकार स्तुति गरिएपछि भगवानले उनीहरूतिर हेर्नुभयो र फेरि उनीद्वारा पूजित भई गन्धमादन पर्वतमा जाँदा भए ।।५८।। भगवान् हरिका अंशस्वरूप ती नर तथा नारायण नै यस बखत पृथ्वीको भार हर्नको निम्ति कुरु र यदुकुल दुवै ठाउँमा (कुरुकुलमा 'अर्जुन' र यदुकुलमा 'कृष्ण' नामले) अवतरित छन् ।।५९।। अग्निकी पत्नी स्वाहाले हवि-भक्षणशील

अग्निका अभिमानी देवता पावक, पवमान तथा शुचि नामका तीन छोरा उत्पन्न भए ॥ ६० ॥ तीबाट पैंतालीस अग्नि उत्पन्न भए । तीनै तीनजना पिता ( पावक, पवमान र शुचि )
तथा एक पितामह अर्थात् अग्निसहित उनचास थरिका अग्नि मानिन्छन् ॥६१॥ वेदवादी मुनि यज्ञकर्ममा जुन उनचास अग्निको नाम लिएर आग्नेय याग गर्दछन्, यहाँ इनै अग्नि-
हरूबाट उनको अभिप्राय छ ॥६२॥ अग्निष्वात्ता, बर्हिषद्, सोमपा, आज्यप, साग्निक र निरग्निक—यी पितृहरूकी पत्नी दक्षकी छोरी स्वधा थिइन् ॥६३॥ ती पितृहरूद्वारा स्वधाको
गर्भबाट धारिणी र वयुना नामकी दुई कन्याहरू उत्पन्न भए । ती दुवै नै ज्ञान-विज्ञानका पारगामिनी र ब्रह्मज्ञानको उपदेश गर्नमा समर्थ थिइन् ॥६४॥ महादेवकी पत्नी सती थिइन् ।
जो सधैं तनमनले पतिको अनुसरण गर्दथिन् किन्तु तिनको गुण र शीलमा आफ्नो अनुरूप कुनै पुत्र उत्पन्न भएनन् ॥ ६५ ॥ किनकि उनले प्रौढावस्था प्राप्त हुनुभन्दा पहिले नै आफ्ना
पिताले कुनै अपराध नगरेका शङ्कर भगवान्को विरोध गरेको देखेर क्रोधवश योगाग्निमा शरीर भस्म पारिदिइन्॥६६॥ इति श्रीमद्भागवते चतुर्थस्कन्धे भाषाटीकायां प्रथमोऽध्यायः॥१॥

एवैकोनपञ्चाशत्साकं पितृपितामहैः ॥ ६१ ॥ वैतानिके कर्मणि यन्नामभिर्ब्रह्मवादिभिः ॥ आग्नेय्य इष्टयो यज्ञे निरूप्यन्तेऽग्नयस्तु ते ॥६२॥ अग्नि
ष्वात्ता बर्हिषदः सौम्याः पितर आज्यपाः ॥ साग्नयोऽनग्नयस्तेषां पत्नी दाक्षायणी स्वधा ॥ ६३ ॥ तेभ्यो दधार कन्ये द्वे वयुनां धारिणीं स्वधा ॥
उभे ते ब्रह्मवादिन्यौ ज्ञानविज्ञानपारगे ॥ ६४ ॥ भवस्य पत्नी तु सती भवं देवमनुव्रता ॥ आत्मनः सदृशं पुत्रं न लेभे गुणशीलतः ॥ ६५ ॥
पितर्यप्रतिरूपे स्वे भवायानागसे रुषा ॥ अप्रौढैवात्मनाऽऽत्मानमजहाद्योगसंयुता ॥ ६६ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे विदुरमैत्रेय-
संवादे प्रथमोऽध्यायः ॥ १ ॥ विदुर उवाच ॥ भवे शीलवतां श्रेष्ठे दक्षो दुहितृवत्सलः ॥ विद्वेषमकरोत्कस्मादनादृत्यात्मजां सतीम् ॥ १ ॥ कस्तं
चराचरगुरुं निर्वैरं शान्तविग्रहम् ॥ आत्मारामं कथं द्वेष्टि जगतो दैवतं महत् ॥ २ ॥ एतदाख्याहि मे ब्रह्मञ्जामातुः श्वशुरस्य च ॥ विद्वेषस्तु यतः
प्राणांस्तत्यजे दुस्त्यजान्सती ॥ ३ ॥ मैत्रेय उवाच ॥ पुरा विश्वसृजां सत्रे समेताः परमर्षयः ॥ तथाऽमरगणाः सर्वे सानुगा मुनयोऽग्नयः ॥ ४ ॥
तत्र प्रविष्टमृषयो दृष्ट्वाऽर्कमिव रोचिषा ॥ भ्राजमानं वितिमिरं कुर्वन्तं तन्महत्सदः ॥५॥ उदतिष्ठन्सदस्यास्ते स्वधिष्ण्येभ्यः सहाग्नयः ॥ ऋते विरिञ्चं
शर्वं च तद्भासाऽऽक्षिप्तचेतसः ॥ ६ ॥ सदसस्पतिभिर्दक्षो भगवान्साधु सत्कृतः ॥ अजं लोकगुरुं नत्वा निषसाद तदा ज्ञयः ॥ ७ ॥ प्राङ्निषण्णं मृडं

( शिव र दक्षको शत्रुताको कारण)—विदुरले सोधे—हे ब्रह्मन् ! पुत्रीवत्सल दक्षले आफ्नी छोरी सती र शीलवान्हरूमा श्रेष्ठ श्रीमहादेवको अनादर गरेर तिनको अपमान किन गरे ?
॥१॥ श्रीशिवजी त चराचरका गुरु, निर्वैर, शान्तमूर्ति, आत्माराम तथा समस्त जगत्का परम इष्टदेव हुन् । तिनीसित कसले शत्रुता गर्न सक्छ ? ॥२॥ हे ब्रह्मन् ! ती ससुरा र ज्वाईमा
कुन यस्तो विद्वेष कसरी हुन गयो—जसले गर्दा सतीले आफ्नो दुस्त्यज प्राणसम्म त्यागिदिइन् ? त्यो हजुर मलाई भन्नुहवस् ॥३॥ मैत्रेयजी भन्दछन्—हे विदुर ! पूर्वकालमा एकपल्ट
मरीचि आदि प्रजापतिहरूका यज्ञमा सबै महर्षि, देवता मुनि र अग्नि आफ्ना-आफ्ना अनुयायी जनका साथै एकत्रित भए ॥४॥ अनि सूर्य झैं तेजस्वी र आफ्नो कान्तिद्वारा सारा सभा
भवनको अन्धकार नष्ट पार्ने दक्षप्रजापतिलाई त्यहाँ आएका देखेर तिनको तेजले प्रभावित भई ब्रह्मा र महादेव बाहेक अग्निहरू सहित अन्य सबै सदस्य आफ्ना-आफ्ना आसनबाट

उठी ठिक्क उभिए ।।५-६।। यसरी सबै सभासदहरूसित हामी सम्मानित भएर दक्षप्रजापति लोकगुरु ब्रह्माजीलाई नमस्कार गरेर उनको आज्ञा पाई आफ्नो आसनमा गएर बसे ।। ७ ।। तर महादेवजीलाई आसनमा बसेका देखेर र आफ्नो अपमान ठानी ठूला क्रोधी दक्ष प्रजापतिलाई उनको व्यवहार सहन भएन। तिनले उनीतिर बाङ्गो नेत्रले हेरे र मानो उनलाई भस्म पार्छन् कि भनेर कराए—।।८।। हे सम्पूर्ण देवगण र अग्निहरू सहित ब्रह्मर्षिगण ! मेरो भनाइ सबै जना सुन्नुहवस् । म अज्ञान वा मत्सरताले केही भनिरहेको छैन, बरू जुन शिष्ट पुरुषहरूको आचरण हो, त्यसै विषयमा मेरो कथन छ ।। ९ ।। यो निर्लज्ज शिव सबै लोकपालहरूको सुयश नष्ट पार्ने प्राणी छ। हेर्नुहोस् न, यो धृष्टले सत्पुरुषले आचारित मार्गलाई पनि कलङ्कित पारिदिएको छ ।।१०।। यौटा साधु पुरुष झैं यसले मेरी सावित्री सदृश पवित्र कन्याको अग्नि तथा ब्राह्मणहरूको सामुन्ने पाणिग्रहण गरेको छ। अतः यो मेरो शिष्यत्वमा प्राप्त भइसकेको छ ।।११।। परन्तु यो बाँदर जस्तै आँखा भएको शिवले मेरी मृगनयनी कन्याको प्राणिग्रहण गरेर---उसले उठेर प्रणामादि गर्नु पर्दथ्यो, तर यसले वाणीले पनि मेरो

दृष्ट्वा नामृष्यत्तदनादृतः ।। उवाच वामं चक्षुर्भ्यामभिवीक्ष्य दहन्निव ।। ८ ।। श्रूयतां ब्रह्मर्षयो मे सहदेवाः सहाग्नयः ।। साधूनां ब्रुवतो वृत्तं नाज्ञा-
नान्न च मत्सरात् ।। ९ ।। अयं तु लोकपालानां यशोघ्नो निरपत्रपः ।। सद्भिराचरितः पन्था येन स्तब्धेन दूषितः ।। १० ।। एष मे शिष्यतां प्राप्तो
यन्मे दुहितुरग्रहीत् ।। पाणिं विप्राग्निमुखतः सावित्र्या इव साधुवत् ।। ११ ।। गृहीत्वा मृगशावाक्ष्याः पाणिं मर्कटलोचनः ।। प्रत्युत्थानाभिवादार्हे
वाचाऽप्यकृत नोचितम् ।। १२ ।। लुप्तक्रियायाशुचये मानिने भिन्नसेतवे ।। अनिच्छन्नप्यदां बालां शूद्रायेवोशतीं गिरम् ।। १३ ।। प्रेतावासेषु
घोरेषु प्रेतैर्भूतगणैर्वृतः ।। अटत्युन्मत्तवन्नग्नो व्युप्तकेशो हसन् रुदन् ।।१४।। चिताभस्मकृतस्नानः प्रेतस्रङ्न्रस्थिभूषणः ।। शिवापदेशो ह्यशिवो मत्तो
मत्तजनप्रियः ।। पतिः प्रमथभूतानां तमोमात्रात्मनात्मनाम् ।। १५ ।। तस्मा उन्मादनाथाय नष्टशौचाय दुर्हृदे ।। दत्ता बत मया साध्वी चोदिते

सत्कार गर्न सकेन। यसको यो आचरण कुनै प्रकारले पनि उचित छैन ।।१२।। अहो ! जस्तै—कुनै पुरुष शूद्रलाई वेदवाणी देओस् त्यसै नै मैले इच्छा नभए पनि यो क्रिया भ्रष्ट, अपवित्र, अभिमानी एवं लोक मर्यादाको उल्लंघन गर्नेलाई आफ्नी छोरी दिएँ ।।१३।। हेर न, यो प्रेतगणको निवासस्थान श्मशान आदिमा भूत-प्रेतले घेरिएर उन्मत्त झैं नाङ्गो, कपाल छरिएको तथा कहिले हाँस्ने र कहिले रुने गर्दै घुमिरहन्छ ।।१४।। यो सधैं आफ्नो देहमा चिताको भस्म लगाइराख्छ। घाँटीमा प्रेतका मुण्डको माला र अङ्ग-प्रत्यङ्गमा मनुष्यका हाडको आभूषण लगाइराख्दछ। यसको नाम त शिव हो, तर वास्तवमा यो अशिव अर्थात् अमङ्गल स्वरूप छ। यो स्वयं मतवाला छ र यो जस्तै मतवाला पुरुषलाई मनपराउँछ। यो प्रथम र भूतादि केवल तमोमय प्राणीहरूको अग्रणी हो। मैले ब्रह्माजीको कुरा मानेर यो उन्मत्त, अपवित्र, दूषित र मतवालाईलाई आफ्नी कन्या दिएको थिएँ। मैत्रेय भन्दछन्—हे विदुर ! कसैपनि

☐ दृष्टान्त ( ठूलो रिसाहा )—कुनै ठूलो रिसाहा सेठकहाँ यौटा नोकर थियो। सेठको निरर्थक रिस जब नोकरले सहन सकेन, तब एक दिन सेठसित भन्न लाग्यो—'सेठजी ! मेरो हिसाब गरिदिनुस् ।' सेठले भन्यो—'किन, तिमी नोकरी किन छाडिरहेका छौ ?' नोकरले उत्तर दियो—'थोपो कुरा के भने तपाईंको रिस म सहन सक्ने छैन ।' सेठले भन्यो—'यो त साधारण कुरा हो। मेरो रिस त एक क्षणमै हराएर जान्छ।' नोकरले भन्यो—'यो त सत्य हो, तर यति छिटो जान्छ त्यति नै छिटो फेरि फर्केर आउँछ।'

3·22

पनि कुनै प्रकारको विरोध नगर्ने व्यक्ति झैं चुपचाप बसेका महादेवको त्यस्तो निन्दा गरेर दक्ष झन् क्रोधसहित जलको आचमन गरेर उनलाई श्राप दिँदै कराए—॥१५-१७॥ दक्षले भने—यो शिव इन्द्र उपेन्द्र आदि देवगणसित यज्ञ-भाग नपाओस् ॥१८॥ यद्यपि त्यस सभामा उपस्थित सभासद्हरूले दक्षलाई धेरै रोके, किन्तु हे कुल नन्दन ! ती श्रीमहादेवजीलाई श्राप दिएर मान्दै रिसाई त्यस सभाबाट निस्केर आफ्नो घर गए ॥ १९ ॥ शिवजीलाई श्राप दिएको कुरा सुनेर शङ्करजीका अनुयायी सबैमा श्रेष्ठ नन्दीश्वरलाई बेसरी रिस उठ्यो र उनले दक्ष तथा ती ब्राह्मणहरूलाई, जसले दक्षका कुवाच्यको समर्थन गरेका थिए, भयंकर श्राप दिए ॥२०॥ नन्दीश्वरले भने—यो भेदबुद्धि र मूर्ख दक्ष यो मरणधर्मा शरीरमा यस्तो अभिमान गरेर यसैसित पनि द्रोह नगर्ने भएका शङ्करजीसित द्वेष गरिरहेको छ । अतएव यो सदा तत्त्वज्ञानबाट विमुख रहला ॥ २१ ॥ यो मूर्ख वेदवाक्यबाट भ्रान्त भएर विषय सुख प्राप्तिको इच्छाले कपट-धर्ममय गृहस्थाश्रममै आसक्त भएर कर्मकाण्डमा सदा डुबिरहन्छ ॥२२॥ यसको बुद्धि सधैं अविद्याग्रस्त रहन्छ । यसैनिम्ति यो आत्मस्वरूपलाई बिर्सेर रहने छ

परमेष्ठिना ॥ १६ ॥ मैत्रेय उवाच ॥ विनिन्द्यैवं स गिरिशमप्रतीपमवस्थितम् ॥ दक्षोऽथाप उपस्पृश्य क्रुद्धः शप्तुं प्रचक्रमे ॥ १७ ॥ अयं तु देवयजन इन्द्रोपेन्द्रादिभिर्भवः ॥ सह भागं न लभतां देवैर्देवगणाधमः ॥ १८ ॥ निषिध्यमानः स सदस्यमुख्यैर्दक्षो गिरित्राय विसृज्य शापम् ॥ तस्माद्विनिष्क्रम्य विवृद्धमन्युर्जगाम कौरव्य निजं निकेतनम् ॥ १९ ॥ विज्ञाय शापं गिरिशानुगाग्रणीर्नन्दीश्वरो रोषकषायदूषितः ॥ दक्षाय शापं विससर्ज दारुणं ये चान्वमोदंस्तदवाच्यतां द्विजाः ॥ २० ॥ य एतन्मर्त्यमुद्दिश्य भगवत्यप्रतिद्रुहि ॥ द्रुह्यत्यज्ञः पृथग्दृष्टिस्तत्त्वतो विमुखो भवेत् ॥ २१ ॥ गृहेषु कूटधर्मेषु सक्तो ग्राम्यसुखेच्छया ॥ कर्मतन्त्रं वितनुते वेदवादविपन्नधीः ॥ २२ ॥ बुद्ध्या पराभिध्यायिन्या विस्मृतात्मगतिः पशुः ॥ स्त्रीकामः सोऽस्त्वतितरां दक्षो बस्तमुखोऽचिरात् ॥ २३ ॥ विद्याबुद्धिरविद्यायां कर्ममय्यामसौ जडः ॥ संसरन्त्विह ये चामुमनु शर्वावमानिनम् ॥ २४ ॥ गिरः श्रुतायाः पुष्पिण्या मधुगन्धेन भूरिणा ॥ मथ्ना चोन्मथितात्मानः संमुह्यन्तु हरद्विषः ॥ २५ ॥ सर्वभक्षा द्विजा वृत्त्यै धृतविद्यातपोव्रताः ॥ वित्तदेहेन्द्रियारामा याचका विचरन्त्विह ॥ २६ ॥ तस्यैवं वदतः शापं श्रुत्वा द्विजकुलाय वै ॥ भृगुः प्रत्यसृजच्छापं ब्रह्मदण्डं दुरत्ययम् ॥ २७ ॥ भवव्रतधरा ये च ये च तान्समनुव्रताः ॥ पाखण्डिनस्ते भवन्तु सच्छास्त्रपरिपन्थिनः ॥ २८ ॥ नष्टशौचा मूढधियो

यो दक्ष अत्यन्त स्त्री लम्पट होस् र यसको श्राप दिने मुख तुरुन्त बोकाको मुख बनोस् ॥२३॥ यो मूर्ख कर्ममयी अविद्यालाई नै विद्या ठान्दछ, यसै निम्ति यो र अरु जो भगवान् शंकरको अपमान गर्ने यस दुष्टका अनुयायी छन्, ती सबै जन्म-मरणको संसारचक्रमा सर्वदा गडिइरहुन् ॥ २४ ॥ फलश्रुतिरूपी पुष्पहरूले सुशोभित एवं वेदवाणी लताले आच्छादित तथा मनलाई क्षुब्धपार्ने कर्मफलरूपी गन्धले इनको चित्त मुग्ध भइरहेछ । अतः यी शंकरद्रोही जीव कर्ममार्गमा डुलिरहुन् ॥२५॥ भक्ष्याभक्ष्यको विचारले रहित यी ब्राह्मण केवल पेट पाल्नको निम्ति विद्या, तप तथा व्रत आदिको आश्रय लिउन् र धन, शरीर एवं इन्द्रियभोगमयी मान्दै भिक्षुक बनेर पृथ्वीमा डुलिरहुन् ॥२६॥ यसरी नन्दीश्वरले ब्राह्मण वंशलाई श्राप दिएको देखेर महर्षि भृगुले साटो फेर्दै तिनलाई अतिशय दुस्तर ब्रह्मशाप दिए । भृगुले भने—शिवका भक्त र ती भक्तका अनुयायी सत्शास्त्रहरूको विरुद्ध आचरण गर्ने भएका

पाखण्डी होउन् ॥ २७-२८॥ शौचहीन, बुद्धिहीन तथा जटा, भस्म एवं अस्थिहरू धारण गर्ने भएका यस्ता व्यक्ति शिवदीक्षा ग्रहण गरुन्, तिनको धर्ममा सुरा र आसव नै देवताहरूको समान आदरणीय मानिन्छन् ॥२९॥ अहो ! तिमी जुन मानव-धर्मका मर्यादाको रक्षक देवहरू तथा ब्राह्मणवर्गको निन्दा गर्दछौ, यसले ज्ञात हुन्छ कि तिमी पाखण्डी भइसकेका ॥३०॥ संसारमा वेद-मार्ग नै कल्याणकारक तथा सनातन मार्ग हो । हाम्रा पूर्व-पुरुष यही बाटोमा हिंड्दै आएका छन् र यसका प्रवर्तक साक्षात् विष्णु भगवान् हुन् ॥३१॥ तिमीहरू परम विशुद्ध सज्जनहरूको सनातन मार्गको तिरस्कार गर्दछौ । अतएव तिमी त्यही पाखण्ड-मार्गमा जाओ, जहाँ तिम्रा इष्टदेव भूतनाथ (शिवजी) बस्तछन् ॥ ३२ ॥ मैत्रेयजीले भने— हे विदुर ! यस प्रकार भृगुले श्राप दिएपछि भगवान् शंकर केही नबोली त्यहाँबाट आफ्ना अनुयायी साथै लिई हिंडिदिए ॥ ३३ ॥ हे महधनुर्धारी विदुर ! उता प्रजापतिहरूले पनि, जसमा सर्व श्रीहरि नै उपास्यदेव थिए, त्यस्तो सहस्रवर्षीय यज्ञ समाप्त पारिदिए र जहाँ गङ्गा-यमुनाको संगम भएको छ, त्यस प्रयागको निम्ति प्रस्थान गरे । त्यहीं उनले अवभृथस्नान

जटाभस्मास्थिधारिणः ॥ विशन्तु शिवदीक्षायां यत्र दैवं सुरासवम् ॥ २९ ॥ ब्रह्म च ब्राह्मणाँश्चैव यद्यूयं परिनिन्दथ ॥ सेतुं विधारणं पुंसामतः पाखण्डमाश्रिताः ॥ ३० ॥ एष एव हि लोकानां शिवः पन्थाः सनातनः ॥ यं पूर्वे चानुसंतस्थुर्यत्प्रमाणं जनार्दनः ॥ ३१ ॥ तद्ब्रह्म परमं शुद्धं सतां वर्त्म सनातनम् ॥ विगर्ह्य यात पाखण्डं दैवं वो यत्र भूतराट् ॥ ३२ ॥ मैत्रेय उवाच ॥ तस्यैवं वदतः शापं भृगोः स भगवान् भवः ॥ निश्चक्राम ततः किञ्चिद्विमना इव सानुगः ॥ ३३ ॥ तेऽपि विश्वसृजः सत्रं सहस्रपरिवत्सरान् ॥ संविधाय महेष्वास यत्रेज्य ऋषभो हरिः ॥ ३४ ॥ आप्लुत्यावभृथं यत्र गङ्गा यमुनयाऽन्विता ॥ विरजेनात्मना सर्वे स्वं स्वं धाम ययुस्ततः ॥ ३५ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे द्वितीयोऽध्यायः ॥ २ ॥ मैत्रेय उवाच ॥ सदा विद्विषतोरेवं कालो वै ध्रियमाणयोः ॥ जामातुः श्वशुरस्यापि सुमहानतिचक्रमे ॥ १ ॥ यदाऽभिषिक्तो दक्षस्तु ब्रह्मणा परमेष्ठिना ॥ प्रजापतीनां सर्वेषामाधिपत्ये स्म योऽभवत् ॥ २ ॥ इष्ट्वा स वाजपेयेन ब्रह्मिष्ठानभिभूय च ॥ बृहस्पतिसवं नाम समारेभे क्रतूत्तमम् ॥ ३ ॥ तस्मिन्ब्रह्मर्षयः सर्वे देवर्षिपितृदेवताः ॥ आसन्कृतस्वस्त्ययनास्तत्पत्न्यश्च सभर्तृकाः ॥ ४ ॥ तदुपश्रुत्य नभसि खेचराणां प्रजल्पताम् ॥ सती दाक्षायणी देवी पितुर्यज्ञमहोत्सवम् ॥ ५ ॥ व्रजतीः सर्वतो दिग्भ्य उपदेववरस्त्रियः ॥ विमान-

गरेर शुद्ध भएर आफ्नो-आफ्नो स्थानमा फर्किए ॥३४-३५॥ इति श्रीमद्भागवते चतुर्थ-स्कन्धे नेपाली भाषा-टीकायां द्वितीयोऽध्यायः ॥२॥ (पिताको यज्ञमा जानको निम्ति सतीको हठ र आग्रह ) मैत्रेय भन्दछन्—हे विदुर ! यस प्रकार परस्पर मनोमालिन्यको व्यवहार गर्दै ती ससुरा र ज्वाइँको धेरै काल बितेर गयो ॥१॥ जब परमेष्ठी ब्रह्माजीले दक्षलाई सबै प्रजापतिहरूका अधिपति पदमा अभिषिक्त गरे तब तिनको अभिमान झन् बढ्दै गयो ॥२॥ अतएव तिनले शंकर आदि ब्रह्मज्ञानीहरूलाई यज्ञको भाग नदिई झन् उनको तिरस्कार गरेर वाजपेय यज्ञ गरे । त्यसपछि यज्ञहरूमा श्रेष्ठ बृहस्पति सव नामक यज्ञ आरम्भ गरिदिए ॥३॥ त्यस यज्ञको उत्सवमा समस्त ब्रह्मर्षि, देवर्षि, पितृगण तथा देवता उनीद्वारा निम्ता दिएर आए, आफ्ना-आफ्ना पत्नीहरू पनि आफ्ना पतिहरूसित त्यहाँ आएका थिए ॥४॥ आकाशमार्गबाट जानलागेका देवता दक्षका यज्ञको विषयमा अनेक थरिका कुरा गर्दै गइरहेथे । तिनका

मुखबाट दक्षकन्या सतीलाई आफ्ना पिताकहाँ यज्ञोत्सव हुने कुरा ज्ञात भयो ॥५॥ तिनले आफ्नो निवासस्थानको नगीचै देखिन्–सबै यक्ष-गन्धर्व आदि देवताका राम्रा पत्नीहरू राम्रा स्वच्छ कुण्डल र पदक धारण गरी आफ्ना-आफ्ना पतिहरूसित विमानमा बसेर त्यो यज्ञोत्सवमा सम्मिलित हुन गइरहेछन् । तिनलाई देखेर सतीले अतिशय उत्सुक भई आफ्ना पति भगवान् शंकरसित भनिन् ॥६-७॥ सतीले भनिन्—हे देव ! मैले सुनेकी छु कि यस बखत हजुरका ससुरा दक्ष-प्रजापतिकहाँ निकै ठूलो यज्ञोत्सव हुन लागिरहेछ । हेर्नुहवस्—यी सबै देवता त्यहाँ नै गइरहेछन् । यदि हजुरले आज्ञा दिए म पनि त्यहाँ जाने थिएँ ॥८॥ यस्तो अवसरमा आफ्ना बन्धु-बान्धवसित भेट्न आफ्ना पतिसहित मेरा दिदीहरू पनि त्यहाँ अवश्य आएका होलान् । मेरो पनि इच्छा छ—हजुरसित त्यहाँ गएर माता-पिताले दिएको दर्शन भेट पाऊँ ॥९॥ आफ्ना पतिप्रिया दिदीहरू सानिमा तथा ममतामयी आमाको दर्शनार्थ मेरो मन धेरै दिनदेखि लोभिइरहेको छ । त्यहाँ अगणित महर्षिहरू द्वारा रचिएको यज्ञोत्सव तथा आकाशमा उड्ने ध्वजा पताका देख्न पाइन्छ ॥१०॥ हे अज ! यद्यपि यो आश्चर्यपूर्ण

यानाः सभेष्ठा निष्ककण्ठीः सुवाससः ॥ ६ ॥ दृष्ट्वा स्वनिलयाभ्याशे लोलाक्षीर्मृष्टकुण्डलाः ॥ पतिं भूतपतिं देवमौत्सुक्यादभ्यभाषत ॥ ७ ॥ सत्युवाच ॥ प्रजापतेस्ते श्वशुरस्य साम्प्रतं निर्यापितो यज्ञमहोत्सवः किल ॥ वयं च तत्राभिसराम वाम ते यद्यर्थिताऽमी विबुधा व्रजन्ति हि ॥ ८ ॥ तस्मिन्भगिन्यो मम भर्तृभिः स्वकैर्ध्रुवं गमिष्यन्ति सुहृद्दिदृक्षवः ॥ अहं च तस्मिन्भवताऽभिकामये सहोपनीतं परिबर्हमर्हितुम् ॥ ९ ॥ तत्र स्वसॄर्मे ननु भर्तृसम्मिता मातृष्वसॄः क्लिन्नधियं च मातरम् ॥ द्रक्ष्ये चिरोत्कण्ठमना महर्षिभिरुन्नीयमानं च मृडाध्वरध्वजम् ॥ १० ॥ त्वय्येतदाश्चर्यमजात्ममायया विनिर्मितं भाति गुणत्रयात्मकम् ॥ तथाप्यहं योषिदतत्त्वविच्च ते दीना दिदृक्षे भव मे भवक्षितिम् ॥ ११ ॥ पश्य प्रयान्तीरभवान्ययोषितोऽप्यलङ्कृताः कान्तसखा वरूथशः ॥ यासां व्रजद्भिः शितिकण्ठ मण्डितं नभो विमानैः कलहंसपाण्डुभिः ॥१२॥ कथं सुतायाः पितृगेहकौतुकं निशम्य देहः सुरवर्य नेङ्गते ॥ अनाहुता अप्यभियन्ति सौहृदं भर्तुर्गुरोर्देहकृतश्च केतनम् ॥ १३ ॥ तन्मे प्रसीदेदममर्त्यवांछितं कर्तुं भवान्कारुणिको बताहर्ति ॥ त्वयात्मनोऽर्धेऽहमदभ्रचक्षुषा निरूपिता माऽनुगृहाण याचितः ॥१४॥ ऋषिरुवाच ॥ एवं गिरित्रः प्रिययाऽभिभाषितः प्रत्यभ्यधत्त

र त्रिगुणात्मक जगत् हजुरमा आफ्नै मायाले निर्मित भएर भासमान भइरहेको छ, तापनि हे शङ्करजी ! स्त्री-स्वभावले गर्दा म त्यो परम तत्त्वबाट अनभिज्ञ र दीन छु । अतएव मलाई आफ्नी जन्मभूमि हेर्ने प्रबल अभिलाषा छ ॥११॥ हे प्रभो ! हेर्नुहवस्–जसको दक्षसित कुनै सम्बन्ध छैन, ती समूहका समूह स्त्रीहरू पनि आज राम्ररी अलंकृत भएर आफ्ना पतिहरूसित गइरहेका छन् । हे शितिकण्ठ ! ती जाने स्त्रीहरूका राजहंस झैं विमानद्वारा आकाश मण्डल व्याप्त भइरहेको छ ॥१२॥ हे सुरश्रेष्ठ ! आफ्ना पिताकहाँ उत्सवको समाचार पाएर तिनकी छोरीको मन त्यसमा सम्मिलित हुनको निम्ति किन नलोभियोस ? यदि हजुर 'डाकेका छैनन्' भनेर आज्ञा हुन्छ भने–पति, गुरु र माता-पिता आदि सुहृद्गणकहाँ उनले नडाके पनि जानमा केही बाधा पर्दैन ॥१३॥ हे देव ! हजुर मसित प्रसन्न हुनुहोस् । हजुर साह्रै दयालु हुनुहुन्छ । अतः मेरो इच्छा पूर्ण गरिदिनु हवस । हजुर यस्तो कारुणिक हुनुहुन्छ कि परम ज्ञानी भएर पनि मलाई आफ्नो आधा अंगमा स्थान दिनुभएको छ । अतः मेरो यो प्रार्थना स्वीकार गरेर अनुगृहीत तुल्याउनोस् ॥१४॥ मैत्रेय भन्दछन्–हे विदुर ! सतीले यसरी

आग्रह गर्नाले सुहृज्जन हरूको प्रिय गर्ने शिवजीलाई दक्षप्रजापतिका ती मर्मभेदी वाक्य स्मरण भए–जो उनले सबै प्रजापतिहरूका सामुन्ने भनेका थिए। त्यसपछि ती हाँसेर भन्नलागे– ॥१५॥ शंकर भगवान् भन्नुहुन्छ–हे सुन्दरी ! तिमीले जुनभन्यौ–'आफ्ना बन्धुजनको घर नडाके पनि जानमा हानि छैन। त्यो ठीक हो, तर त्यस्तो गर्न उसै बेला राम्रो हुन्छ, जब ती देहाभिमान जनित अतिशय बलवान् क्रोधले गर्दा दोषपूर्ण दृष्टिले नहेर्दा हुन् ॥१६॥ हे देवि ! विद्या, तप, धन, परिपुष्ट शरीर, युवावस्था तथा उच्च कुल–यी छ सत्पुरुषहरूका गुण मानिन्छन्, परन्तु यिनैगुण नीच पुरुषमा देखिए भने अवगुणमा परिणत हुन्छन् किनभने यसले तिनको अभिमान बढ्दछ र तिनको सम्झना र बुद्धि विवेक नष्ट भएर जान्छ। यसैले ती मूर्ख–महापुरुषहरूको महिमा देख्दैनन् ॥१७॥ अतः जो आफ्नो घर आएका व्यक्तिलाई कुटिलबुद्धिले आँखीभौं खुम्चाई रोषपूर्ण दृष्टिले हेर्दछन्, त्यस्ता अव्यवस्थित चित्त हुने व्यक्तिकहाँ बान्धवभावले पनि कहिल्यै नजानु ॥१८॥ हे देवि ! शत्रुका बाणले घायल भएर त्यति क्लेश हुन्न, अति कुटिल बुद्धि हुने आफ्ना स्वजनहरूका कठोर वाक्यले कष्ट

प्रहसन्सुहृत्प्रियः ॥ संस्मारितो मर्मभिदः कुवागिषून्यानाह को विश्वसृजां समक्षतः ॥ १५ ॥ श्रीभगवानुवाच ॥ त्वयोदितं शोभनमेव शोभने अनाहुता अप्यभियन्ति बन्धुषु ॥ ते यद्यनुत्पादितदोषदृष्टयो बलीयसाऽनात्म्यमदेन मन्युना ॥ १६ ॥ विद्यातपोवित्तवपुर्वयःकुलैः सतां गुणैः षड्भिरसत्तमेतरैः ॥ स्मृतौ हतायां भृतमानदुर्दृशः स्तब्धा न पश्यन्ति हि धाम भूयसाम् ॥ १७ ॥ नैतादृशानां स्वजनव्यपेक्षया गृहान्प्रतीयादनवस्थितात्मनाम् ॥ येऽभ्यागतान्वक्रधियाऽभिचक्षते आरोपितभ्रूभिरमर्षणाक्षिभिः ॥ १८ ॥ तथाऽरिभिर्न व्यथते शिलीमुखैः शेतेऽर्दिताङ्गो हृदयेन दूयता ॥ स्वानां यथा वक्रधियां दुरुक्तिभिर्दिवानिशं तप्यति मर्मताडितः ॥ १९ ॥ व्यक्तं त्वमुत्कृष्टगतेः प्रजापतेः प्रियाऽऽत्मजानामसि सुभ्रु सम्मता ॥ अथापि मानं न पितुः प्रपत्स्यसे मदाश्रयात्कः परितप्यते यतः ॥ २० ॥ पापच्यमानेन हृदाऽऽतुरेन्द्रियः समृद्धिभिः पूरुषबुद्धिसाक्षिणाम् ॥ अकल्प एषामधिरोढुमञ्जसा पदं परं द्वेष्टि यथाऽसुरा हरिम् ॥ २१ ॥ प्रत्युद्गमप्रश्रयणाभिवादनं विधीयते साधु मिथः सुमध्यमे ॥ प्राज्ञैः परस्मै पुरुषाय चेतसा गुहाशयायैव न देहमानिने ॥ २२ ॥ सत्त्वं विशुद्धं वसुदेवशब्दितं यदीयते तत्र पुमानपावृतः ॥ सत्त्वे च तस्मिन्भगवान्वासुदेवो ह्यधोक्षजो

हुन्छ, किनकि बाणले शरीर छिन्न-भिन्न भएपछि मनुष्यको शरीरमा पीडा रहे पनि कुनै प्रकारले निद्रा लाग्दछ, किन्तु दुष्टको कुवाक्यले मर्मस्थान विद्ध भएपछि दिन-रात अत्यास बनिरहन्छ ॥१९॥ हे सुभ्रु ! मलाई सम्झना छ कि तिमी परमोन्नति पुगेका दक्षप्रजापतिकी छोरीहरूमा सबै भन्दा मनपरेकी छौ, तैपनि मेरो आश्रममा रहनाले तिमीलाई आफ्ना पिताद्वारा सम्मान मिल्न सक्तैन, किनकि ती मसित द्वेष भाव राख्दछन् ॥२०॥ सबै जीवहरूमा चित्तवृत्तिको साक्षीस्वरूप महापुरुषका समृद्धिलाई देखेर जसको हृदय तथा इन्द्रियहरू सन्तप्त हुन्छन्, त्यो उनको पद प्राप्त गर्न सक्तैन। सबै दैत्यगण जसरी श्रीहरिको द्वेष गर्दछन्, त्यस्तै दक्षप्रजापति मसित नराम्रो मान्दछन् ॥२१॥ हे सुमध्यमे ! यो उचित नै हो कि ज्ञानी जनहरूमा पनि परस्पर 'सम्मुख जानु, नम्रता देखाउनु र प्रणाम गर्नु' आदि सत्कारहरूको व्यवहार हुने गर्दछ, तापनि ती सबैको अन्तःकरणमा विराजमान महापुरुषलाई मनमनै प्रणामादि गर्दछन्। देहाभिमानी पुरुषहरूलाई अभिवादन गर्दैनन् ॥२२॥ ज्ञान सम्पन्न अन्तःकरणको नाम नै 'वासुदेव' हो, किनकि महापुरुष अर्थात् ज्ञानस्वरूप भगवान् वासुदेवको

साक्षात् अनुभव हुन्छ । अतः आफ्नो विशुद्ध चित्तमा बसेका इन्द्रियातीत भगवान् वासुदेवलाई म सदा अभिवादन गर्दछु ॥२३॥ अतएव हे वरोरु ! जसले प्रजापति हरूको सभामा म निरपराधको अत्यन्त कटु वचनले तिरस्कार गरेका थिए । ती दक्ष यद्यपि तिम्रो शरीर उत्पन्न गर्ने पिता हुन् । तैपनि मेरो शत्रु हुनाले तिमीले उनलाई अथवा तिनका अनुयायीहरूलाई हेर्न विचार गर्नु पनि उचित हाइन ॥२४॥ यदि मेरो कुरा नमानेर त्यहाँ गयौ भने तिम्रो कल्याण हुने छैन, किनकि अब कुनै प्रतिष्ठित व्यक्तिलाई आफ्ना आत्मीय जनहरूबाट अपमानित हुनुपर्दछ, तब त्यो अपमान तत्काल त्यसको मरणको कारण बन्न सक्छ ॥२५॥ इति श्रीमद्भागवते चतुर्थस्कन्धे नेपालीभाषाटीकायां तृतीयोऽध्यायः ॥३॥ ( दक्षप्रजापतिको यज्ञमा सतीको देह त्याग )—मैत्रेयजी भन्दछन्–हे विदुर ! यति भनेर शंकर भगवान् जाने र छेक्ने—दुवै स्थितिमा आफ्नी पत्नी सतीको देहत्यागको सम्भावना देखेर चुपलागिरहे । त्यस समय सती कहिले बन्धुजनलाई हेर्न जाने अभिप्रायले बाहिर निस्कने र कहिले शंकरजी रिसाउने आशङ्काले फर्केर आउने गर्दथिन् । त्यसरी बारम्बार

मे मनसा विधीयते ॥ २३ ॥ तत्ते निरीक्ष्यो न पिताऽपि देहकृद्दक्षो मम द्विट् तदनुव्रताश्च ये ॥ यो विश्वसृग्यज्ञगतं वरोरु मामनागसं दुर्वचसाऽकरोत्तिरः ॥ २४ ॥ यदि व्रजिष्यस्यतिहाय मद्वचो भद्रं भवत्या न ततो भविष्यति ॥ सम्भावितस्य स्वजनात्पराभवो यदा स सद्यो मरणाय कल्पते ॥ २५ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे उमारुद्रसंवादे तृतीयोऽध्यायः ॥ ३ ॥ मैत्रेय उवाच ॥ एतावदुक्त्वा विरराम शङ्करः पत्न्यङ्गनाशं ह्युभयत्र चिन्तयन् ॥ सुहृद्दिदृक्षुः परिशङ्किता भवान्निष्क्रामती निर्विशती द्विधाऽऽस ॥ १ ॥ सुहृद्दिदृक्षाप्रतिघातदुर्मना स्नेहाद्रुदत्यश्रुकलाऽतिविह्वला ॥ भवं भवान्यप्रतिपूरुषं रुषा प्रधक्ष्यतीवैक्षत जातवेपथुः ॥ २ ॥ ततो विनिःश्वस्य सती विहाय तं शोकेन रोषेण च दूयता हृदा ॥ पित्रोरगात्स्त्रैणविमूढधीर्गृहान्प्रेम्णाऽऽत्मनो योऽर्धमदात्सतां प्रियः ॥ ३ ॥ तामन्वगच्छन्द्रुतविक्रमां सतीमेकां त्रिनेत्रानुचराः सहस्रशः ॥ सपार्षदा मे मणिमन्मदादयः पुरो वृषेन्द्रास्तरसा गतव्यथाः ॥ ४ ॥ तां सारिकाकन्दुकदर्पणाम्बुजश्वेतातपत्रव्यजनस्रगादिभिः ॥ गीतायनैर्दुन्दुभिशङ्खवेणुभिर्वृषेन्द्रमारोप्य विटङ्किता ययुः ॥ ५ ॥ आब्रह्मघोषोर्जितयज्ञवैशसं विप्रर्षिजुष्टं विबुधैश्च सर्वशः ॥

आउने-जाने गर्नाले स्पष्ट थाहा हुन्थ्यो कि उनले आफ्नो दुइ रूप धारण गरिसकिन् ॥१॥ सुहृज्जनहरूसित भेट-घाट गर्न बलवती इच्छामा बाधा पर्नाले ती निष्क्रिय झैं भइन् र स्नेहवश अतिशय विह्वल भई आँसु बगाउँदै रुन लागिन् । त्यस बखत रिसले तिनको शरीर काँप्न लाग्यो र ओमन्दा ठूलो संसारमा अरु कुनै पुरुष छैनन्, ती शङ्कर भगवानतिर सती यसरी रोषपूर्ण दृष्टिले हेर्न लागिन्–मानो शिवलाई भस्म पर्छिन् ॥२॥ अन्त्यमा शोक र रिसले खिन्न अन्तःकरण तथा स्त्री-स्वभावले गर्दा मूढ-बुद्धि सतीजी, जुन सत्पुरुषहरूका प्रिय शंकर भगवानले उनलाई प्रेमवश आफ्नो आधा अङ्ग दिएका थिए, तिनलाई त्यागेर लामू सास फेर्दै आफ्ना पिताको घर जान हिंडिन ॥३॥ ती सतीलाई शीघ्रतापूर्वक एक्लै गएको देखेर शंकर भगवानका मणिमान र मद आदि हजारौं अनुचर नन्दीश्वरलाई अघि लगाएर अन्य पार्षद सहित तुरुन्त निर्भयतापूर्वक सतीका पछि-पछि हिंडे ॥ ४ ॥ तिनले सतीलाई नन्दीश्वरमाथि बसाले र मैना, गेंद, दर्पण, कमल, श्वेत, छत्र, चँवर र माला आदि तिनका खेल-कूदका सामग्री तथा दुन्दुभी, शङ्ख र बाँसुरी आदि गान-बजानका सामग्री

स्याहारेर उनीसित हिंडे ॥ ५ ॥ यस प्रकार हिंडेर सतीजी त्यो यज्ञ-मण्डपमा पुगिन्, जहाँ वेद-घोषका साथै पशुहरूको बलि दिइरहेको थियो—जसमा चारैतिर ब्रह्मर्षि तथा देवताहरू बसेका थिए। जुन माटो, धुन, दर्भ ( कुश ) तथा छालाका पात्रहरूले परिपूर्ण थियो ॥६॥ त्यहाँ पुगेपछि यजमान दक्षले सतीको अलिकति पनि आदर-सत्कार गरेनन्। यहाँसम्म कि दक्षको भयले सतीकी आमा र दिदीहरूबाहेक कसैले तिनको आदर गरेन। तिनकी आमा र दिदीहरूले भने आनन्दित तथा प्रेमले गद्गद् भएर उनलाई निकै आदर सहित अंकमाल गरे ॥७॥ तर पिताद्वारा अपमानित भएकी हुनाले सतीले दिदीहरूको प्रश्न तथा आमा र सानिमाहरूले दिएका आसन र उपहारादितिर हेर्दा पनि हेरिनन् ॥ ८ ॥ त्यसपछि त्यस यज्ञलाई शंकरजीको भाग रहित देखेर तथा पिताद्वारा गरिएको उनको अपमानको विचार गरेर त्यस यज्ञ-सभामा तिरस्कृत सर्वलोकेश्वरी देवी सतीलाई बेसरी रिस उठ्यो। त्यसबेला उनलाई

मृदार्वयःकाञ्चनदर्भचर्मभिर्निसृष्टभाण्डं यजनं समाविशत् ॥ ६ ॥ तामागतां तत्र न कश्चनाद्रियद्विमानितां यज्ञकृतो भयाज्जनः ॥ ऋते स्वसॄर्वै जननीं च सादराः प्रेमाश्रुकण्ठ्यः परिषस्वजुर्मुदा ॥ ७ ॥ सोदर्यसंप्रश्नसमर्थवार्तया मात्रा च मातृस्वसृभिश्च सादरम् ॥ दत्तां सपर्यां वरमासनं च सा नादत्त पित्रा प्रतिनन्दिता सती ॥ ८ ॥ अरुद्रभागं तमवेक्ष्य चाध्वरं पित्रा च देवे कृतहेलनं विभौ ॥ अनादृता यज्ञसदस्यधीश्वरी चुकोप लोकानिव धक्ष्यती रुषा ॥ ९ ॥ जगर्ह सामर्षविपन्नया गिरा शिवद्विषं धूमपथश्रमस्मयम् ॥ स्वतेजसा भूतगणान्समुत्थितान्निगृह्य देवी जगतोऽभिशृण्वतः ॥ १० ॥ श्रीदेव्युवाच ॥ न यस्य लोकेऽस्त्यतिशायनः प्रियस्तथाऽप्रियो देहभृतां प्रियात्मनः ॥ तस्मिन्समस्तात्मनि मुक्तवैरके ऋते भवन्तं

हेर्दा यस्तो ज्ञात हुन्थ्यो—मानो ती आफ्नो रोषले सर्व लोकलाई भस्म पार्दछिन् ॥ ९ ॥ त्यसपछि देवी सती कर्मकाण्डमा ०अति गर्वित तथा शिवद्रोही दक्षलाई मारिदिनको निम्ति तत्पर भूतगणहरूलाई आफ्नो तेजले रोकेर तथा सबैलाई सुनाउँदै रिसले लरबरिएको वाणीमा आफ्ना अभिमानी पिता दक्षको निन्दा गर्दै भन्न लागिन् ॥ १० ॥ सतीले भनिन्—हे पिता ! जो भन्दा ठूलो संसारमा कोही छैन र जसका कोही प्रिय अथवा अप्रिय छैनन् जो समस्त देहधारीहरूका प्रिय आत्मा छन्, ती सर्वान्तरात्मा, वैरहीन शंकरभगवान् सिवतिस्रो

० दृष्टान्त ( अभिमानीको एकान्त निवास )—यौटा साधकको मनमा अहङ्कार पस्यो र त्यो मेरो भजन साधनामा खूब उन्नति भयो भन्ने ठान्न थाल्यो। यसनिम्ति अब कुनै निर्जन स्थानमा गए बस्नुपर्दछ—यस्तो विचार गरेर त्यो निर्जन स्थानमा बस्न लाग्यो। त्यहाँ दिनहुँ यौटा ऊँट आएर साधकसित भन्दथ्यो—'हिंड तिमीलाई स्वर्ग लैजान्छु।' त्यो ऊँटमाथि बस्तथ्यो र ऊँट त्यसलाई यौटा रमणीक स्थानमा लैजान्थ्यो। त्यहाँ गएर त्यो मीठो अन खान्थ्यो र दास-दासीहरूसित सेवा गराउँथ्यो। रातभरि त्यहाँ सोएर बिहान आँखा खोल्दा—आफूलाई उही निर्जन स्थानमा भेट्टाउँथ्यो। 'भलाई देवता दिनहुँ स्वर्ग लैजान्छन्' यस्तो विचार गरेर त्यो झन् झन् अभिमानी बन्दै गयो। त्यसका गुरुले यस यो कुरा सुने तब त्यसको झुपडीमा पुगे। त्यहाँ तिनले देखे—त्यसको अभिमानको कुनै अन्त थिएन। सोधेपछि साधकले सारा कथा सुनाइदियो। त्यसमा गुरुले भने—आज राती तिमीलाई डाक्न आएपछि सम्झेर तीन पल्ट भन्नु—'छि छि तिमीलाई धिक्कार छ।' राती फेरि त्यही गरी ऊँट आयो र त्यो दिनहुँको स्थानमा पुग्यो। त्यहाँ पुगेर उसले तीन पल्ट उपरोक्त वाक्य उच्चारण गर्‍यो। अनि एक क्षणमै त्यहाँका सबै वस्तु चिम्ह्याएर विलीन भए र अहङ्कारी साधक एक्लै रह्यो। अनि त्यसले देख्यो—त्यो एकदम भ्रष्ट स्थान छ, मरेका जीवहरूको हाडहरू त्यहाँ थुप्रो लागेको छ र अत्यन्त दुर्गन्ध आइरहेको छ। अब त्यसलाई आफ्नो भूल ज्ञात भयो र त्यो फेरि गुरुको शरणमा गयो। सिद्धि प्राप्त नभएको काँचो शिष्यले एक्लै बस्नु डरलाग्दो काम रहेछ भन्ने कुरा बल्ल उसले बुझ्यो।

बाहेक अरु कसले विरोध गर्ला ? ॥११॥ हे द्विज ! कुनै सज्जन अरूको दोषलाई पनि गुणकै दृष्टिले हेर्दछन्, तर तिमी जस्ता पुरुष यस्ता हुँदैनन् । जो व्यक्ति अरूको अलिकति गुणलाई पनि धेरै मान्दछन्, ती अत्यन्त महान् हुन्छन् । तर खेदको कुरा यो छ—तिमीले भगवान् शंकरमा पनि दोषारोपण गर्‍यौ ॥१२॥ जो दुष्ट यो शवरूपी शरीरलाई नै आत्मा मान्दछन् ती यदि महापुरुषसित ईर्ष्या तथा निन्दा गर्छन् भन्ने कुरा होइन, किनकि महापुरुषका आचरणले तेज नष्ट भएका ईर्ष्यालुहरूको निम्ति यही शोभाको कुरा हो ॥ १३ ॥ उनको 'शिव' यो दुइ अक्षरको नाम एकपल्ट पनि लिने मनुष्यका सबै पाप तुरुन्त नष्ट भएर जान्छन् र तिनको आज्ञा उल्लंघन कसैले गर्न सक्तैन । अहो ! ती पवित्र कीर्तिशाली शंकर भगवान्सित द्वेष गर्दछौ ? अतः तिमी अवश्य अमङ्गल रूप हौ ॥१४॥ ब्रह्मानन्दको रस-पान गर्नका इच्छुक महापुरुषका मनरूपी मधुकर उनका चरणकमलको सेवन गर्दछन् र जो सकाम पुरुषहरूको सबै कामना तत्काल पूर्ण गरिदिन्छन् ती विश्वबन्धु भगवान् शिवसित तिमी द्रोह गर्दछौ ? ॥१५॥ के ले सुनेको छु—तिमी भन्दछौ शिव नाममात्रका

स्तमः प्रतीपयेत् ॥११॥ दोषान्परेषां हि गुणेषु साधवो गृह्णन्ति केचिन्न भवादृशा द्विज ॥ गुणाँश्च फल्गून् बहुलीकरिष्णवो महत्तमास्तेष्वविदद्भवा-
नघम् ॥ १२ ॥ नाश्चर्यमेतद्यदसत्सु सर्वदा महद्विनिन्दा कुणपात्मवादिषु ॥ सेर्ष्यं महापूरुषपादपांसुभिर्निरस्ततेजःसु तदेव शोभनम् ॥ १३ ॥
यद्द्व्यक्षरं नाम गिरेरितं नृणां सकृत्प्रसङ्गादघमाशु हन्ति तत् ॥ पवित्रकीर्तिं तमलङ्घ्यशासनं भवानहो द्वेष्टि शिवं शिवेतरः ॥१४॥ यत्पाद
पद्मं महतां मनोऽलिभिर्निषेवितं ब्रह्मरसासवार्थिभिः ॥ लोकस्य यद्वर्षति चाशिषोऽर्थिनस्तस्मै भवान्द्रुह्यति विश्वबन्धवे ॥ १५ ॥ किं वा शिवा-
ख्यमशिवं न विदुस्त्वदन्ये ब्रह्मादयस्तमवकीर्य जटाः श्मशाने ॥ तन्माल्यभस्मनृकपाल्यवसत्पिशाचैर्ये मूर्धभिर्दधति तच्चरणावसृष्टम् ॥ १६ ॥
कर्णौ पिधाय निरयाद्यदकल्प ईशे धर्मावितर्यसृणिभिर्नृभिरस्यमाने ॥ छिन्द्यात्प्रसह्य रुशतीमसतीं प्रभुश्चेज्जिह्वामसूनपि ततो विसृजेत्स धर्मः ॥ १७ ॥
अतस्तवोत्पन्नमिदं कलेवरं न धारयिष्ये शितिकण्ठगर्हिणः ॥ जग्धस्य मोहाद्धि विशुद्धिमन्धसो जुगुप्सितस्योद्धरणं प्रचक्षते ॥ १८ ॥ न वेदवा-
दाननुवर्तते मतिः स्व एव लोके रमतो महामुनेः ॥ यथा गतिर्देवमनुष्ययोः पृथक् स्व एव धर्मे न परं क्षिपेत्स्थितः ॥ १९ ॥ कर्म प्रवृत्तं न निवृत्त-

शिव हुन्, तिनको वेश अशिव अर्थात् अमङ्गलमय छ । ती जटा छरेर आफ्नो देहमा श्मशानको फूल-माला लगाई, भस्म घसेर मनुष्यका टाउकाको माला पहिरी पिशाचसित श्मशानमा बस्तछन् । उनको यो अशिवतालाई के ब्रह्मादि देवता जान्दैनन्, जो उनको पाउबाट झरेको निर्माल्य आफ्नो मस्तकमा राख्दछन् ॥ १६ ॥ मेरो त यस्तो विचार छ कि यदि धर्मको मर्यादालाई तोड्ने पुरुष धर्मका रक्षक ईश्वरको निन्दा गर्छन् भने—यदि बल पुग्दछ भने तिनको अमङ्गलमयी जिब्रो काटौं, सक्तिन भने आफ्नै प्राण त्यागौंस् । यदि त्यो त्यस्तो गर्न सक्तैन भने कान थुनेर त्यहाँबाट अन्तै जाओस्, किनकि यस्तो गर्नु नै उसको धर्म हो॥१७॥अतः भगवान् नीलकण्ठको निन्दा गर्ने तिम्रो शरीरबाट उत्पन्न यस देहलाई अब म राख्दिन । किनकि नजानेर खाइएको अभक्ष्यवस्तु वमन गरेर फालिदिनु नै अशुद्धिको शुद्धि हुने उपाय कहिएको छ ॥१८॥ हे दक्ष ! जुन महामुनि सदा आफ्नो स्वरूपमा रमण गर्दछन्, तिनको बुद्धि वेदको विधि-निषेधमय वचनमा मिल्दैन । आकाश-विहारी देवता तथा पृथ्वी निवासी मनुष्य झैं ज्ञानी र अज्ञानीहरूको गति भिन्न भिन्न हुने गर्दछ । अतः आफ्नो धर्ममा स्थित

पुरुष कहिल्यै पनि अरूका निन्दा नगरुन् ॥ १९ ॥ प्रवृत्ति निवृत्तिरूपी [illegible] वेदमा यी दुवैका विवेचन गरेर भिन्न-भिन्न अधिकारीलाई उपयुक्त विधान बताइएको छ । परस्पर विरोधी हुनाले कर्ता ती दुवैको संगसँगै [illegible], तर शंकर भगवान्लाई यी दुवैबाट कुनै पनि कर्म गर्न आवश्यकता पर्दैन ॥ २० ॥ हे पिता ! हाम्रो ऐश्वर्य अव्यक्त छ । आत्मज्ञानी महात्माजनहरू त्यसको सेवन गर्दछन् । तिमीसित त्यस्तो ऐश्वर्य छैन, किनकि तिम्रो ऐश्वर्य त यज्ञशालामा रहन्छ र यज्ञको अन्नले तृप्त भएर आफ्नो पेटपाल्ने धूममार्गी कर्मकाण्डी नै त्यसको स्तुति गर्ने गर्दछन् । ती हाम्रो ऐश्वर्यको प्रशंसा कहिल्यै गर्दैनन् ॥ २१ ॥ शंकर भगवान्को अपमान गर्ने तिम्रो अधम शरीरबाट उत्पन्न भएको यो निन्दनीय देहको मलाई कुनै मोह रहेन । तिमीजस्ता भ्रष्ट पुरुषसित मेरो सम्बन्ध छ, यो विचार्दा मलाई लाज लाग्छ । जो प्राणी महापुरुषको अपराधी छ, त्यसको जन्मलाई हजारौं धिक्कार छ ॥ २२ ॥ जब शिवजी तिमीसित मेरो सम्बन्ध दर्शाउँदै ठट्टामा मलाई 'दक्षकन्या' भनेर डाक्छन् तब तिनको हाँसो सुनेर मलाई लाज लाग्दछ र

मप्यतं वेदे विविच्योभयलिङ्गमाश्रितम् ॥ विरोधि तद्यौगपदैककर्तरि द्वयं तथा ब्रह्मणि कर्म नर्च्छति ॥ २० ॥ मा वः पदव्यः पितरस्मदास्थिता
या यज्ञशालासु च धूमवर्त्मभिः ॥ ददन्नतृप्तैरसुभृद्भिरीडिता अव्यक्तलिंगा अवधूतसेविताः ॥ २१ ॥ नैतेन देहेन हरे कृतागसो देहोद्भवेनालमलं
कुजन्मना ॥ व्रीडा ममाभूत्कुजनप्रसङ्गतस्तज्जन्म धिग्यो महतामवद्यकृत् ॥ २२ ॥ गोत्रं त्वदीयं भगवान्वृषध्वजो दाक्षायणीत्याह यदा सुदुर्मनाः ॥
व्यपेतनर्मस्मितमाशु तद्ध्यहं व्युत्स्रक्ष्य एतत्कुणपं त्वदङ्गजम् ॥ २३ ॥ मैत्रेय उवाच ॥ इत्यध्वरे दक्षमनूद्य शत्रुहन् क्षिताबुदीचीं निषसाद
शान्तवाक् ॥ स्पृष्ट्वा जलं पीतदुकूलसंवृता निमील्य दृग्योगपथं समाविशत् ॥ २४ ॥ कृत्वा समानावनिलौ जितासना सोदानमुत्थाप्य च नाभि-
चक्रतः ॥ शनैर्हृदि स्थाप्य धियोरसि स्थितं कण्ठाद्भ्रुवोर्मध्यमनिन्दिताऽनयत् ॥ २५ ॥ एवं स्वदेहं महतां महीयसा मुहुः समारोपितमङ्कमाद-
रात् ॥ जिहासती दक्षरुषा मनस्विनी दधार गात्रेष्वनिलाग्निधारणम् ॥ २६ ॥ ततः स्वभर्तुश्चरणाम्बुजासवं जगद्गुरोश्चिन्तयती न
चापरम् ॥ ददर्श देहो हतकल्मषः सती सद्यः प्रजज्वाल समाधिजाग्निना ॥ २७ ॥ तत्पश्यतां खे भुवि चाद्भुतं महद्धाहेति वादः सुमहान-

खेद हुन्छ । अब म तिम्रो शरीरबाट उत्पन्न यो शवसमान शरीरलाई तुरुन्त त्यागिदिन्छु ॥ २३ ॥ मैत्रेयजी भन्दछन्—हे शत्रुहन्ता विदुरजी ! दक्षसित त्यति भनेर सतीदेवी मौन भइन् र आचमन गरी पहेंलो वस्त्र ओढेर, उत्तरतिर फर्केर पृथ्वीमा बसिन् र योगयागमा प्रवृत्त भइन् ॥ २४ ॥ ती अनिन्दिता सतीदेवीले आसन स्थिर गरेर प्राण र अपानवायुलाई समान पारिन् अनि ती दुवैलाई ऊर्ध्वगति गरेर बिस्तार-बिस्तार नाभिकमलबाट माथि आफ्नो हृदयमा स्थित पारिन् । त्यसपछि हृदयस्थित प्राणवायुलाई बुद्धिद्वारा कण्ठमार्गबाट आफ्ना भृकुटीका माझमा लगिन् ॥ २५ ॥ यसरी जुन शरीरलाई महापुरुषहरूमा श्रेष्ठ शंकरजीले आदरपूर्वक बारम्बार आफ्नो काखमा बसालेका थिए, दक्षप्रति कुपित हुनाले तत्काल आफ्नू शरीर नै त्यागिदिने कामनाले महामनस्विनी सतीले सम्पूर्ण अंगमा वायु तथा अग्निको भावना गरिन् ॥ २६ ॥ त्यसपछि आफ्ना पति तथा जगद्गुरु शंकर भगवान्का चरणकमलको ध्यान गर्दै परम पवित्र सतीले सबै थरिका सम्झना बिर्सिदिइन् । त्यसो गर्नाले उनको शरीर योगाग्निमा बल्नलाग्यो ॥२७॥

यो विचित्र चरित्र देख्ने देवता तथा आकाश र भूतलका प्राणीहरूमा ठूलो र डरलाग्दो हाहाकार मच्चियो। त्यहाँका सबै जना भन्न लागे—हा, हा! महादेवकी प्रियतमा सतीदेवीले शरीर त्यागिदिइन् किनकि दक्षले आफ्नो आचरणले तिनलाई क्रुद्ध पारिदिएका थिए ॥२८॥ अहो! चराचर जीव जसका प्रजा छन्, ती दक्षको दुष्टता द्वारा तिरस्कृत भएर उसकी मर्यादाकी आदरपात्री र उदारचित्त हुने सतीले प्राण त्यागिदिइन् ॥२९॥ यो कुटिल हृदय र ब्राह्मणहरूको द्रोही दक्ष संसारमा ठूलो अपयश पाउनेछ र यो शंकर भगवान्‌को द्रोही व्यक्तिले आफ्नै अपराधले प्राण त्याग्न तयार आफ्नी छोरीलाई 'यस्तो नगर' पनि भन्न सकेन ॥३०॥ उता सबै जना यस्तै कुरा गर्दैथिए, यता सतीको त्यो अद्भुत प्राणत्याग देखेर शिवका सबै पार्षदहरू अस्त्र-शस्त्र स्याहारेर दक्षलाई मार्न दगुरे ॥३१॥शिवगणको आक्रमण गर्ने उद्योग देखेर महर्षि भृगुले यज्ञमा विघ्न पार्नेहरूलाई नष्ट गरिदिने मन्त्र पढेर दक्षिणाग्निमा तत्काल आहुति दिए॥३२॥ ती अध्वर्यु भृगुले आहुति हाल्नासाथ त्यसको प्रभावले एकैसाथ हजारौं 'ऋभु' नामका यस्ता देवता त्यस यज्ञ कुण्डबाट प्रकट भए,जसले तपस्याको प्रभाव

जायत ॥ हन्त प्रिया दैवतमस्य देवी जहावसून्केन सती प्रकोपिता ॥ २८ ॥ अहो अनात्म्यं महदस्य पश्यत प्रजापतेर्यस्य चराचरं प्रजाः ॥ जहावसून्यद्विमताऽऽत्मजा सती मनस्विनी मानमभीक्ष्णमर्हति ॥ २९ ॥ सोऽयं दुर्मर्षहृदयो ब्रह्मध्रुक् च लोकेऽपकीर्तिं महतीमवाप्स्यति ॥ यदङ्गजां स्वां पुरुषद्विडुद्यतां न प्रत्यषेधन्मृतयेऽपराधतः ॥ ३० ॥ वदत्येवं जने सत्या दृष्ट्वाऽसुत्यागमद्भुतम् ॥ दक्षं तत्पार्षदा हन्तुमुदतिष्ठन्नुदायुधाः ॥३१॥ तेषामापततां वेगं निशाम्य भगवान्भृगुः ॥ यज्ञघ्नघ्नेन यजुषा दक्षिणाग्नौ जुहाव ह ॥ ३२ ॥ अध्वर्युणा हूयमाने देवा उत्पेतुरोजसा ॥ ऋभवो नाम तपसा सोमं प्राप्ताः सहस्रशः ॥ ३३ ॥ तैरलातायुधैः सर्वे प्रथमाः सहगुह्यकाः ॥ हन्यमाना दिशो भेजुरुशद्भिर्ब्रह्मतेजसा ॥ ३४ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे चतुर्थोऽध्यायः ॥ ४ ॥ मैत्रेय उवचा ॥ भवो भवान्या निधनं प्रजापतेरसत्कृताया अवगम्य नारदात् ॥ स्वपार्षदसैन्यं च तदध्वरर्भुभिर्विद्रावितं क्रोधमपारमादधे ॥ १ ॥ क्रुद्धः सुदष्टौष्ठपुटः स धूर्जटिर्जटां तडिद्वह्निसटोग्ररोचिषम् ॥ उत्कृत्य रुद्रः सहसोत्थितो हसन्गम्भीरनादो विससर्ज तां भुवि ॥ २ ॥ ततोऽतिकायस्तनुवा स्पृशन्दिवं सहस्रबाहुर्घनरुक् त्रिसूर्यदृक् ॥ करालदंष्ट्रोज्ज्वलदग्नि-

हजारौं वर्ष सोमरस पिएका थिए ॥३३॥ ब्रह्मतेजले तेजस्वी ती देवगणद्वारा बल्दो अगुल्टोले आक्रमण गरेपछि यक्षसहित सबै प्रमथगण दिशा र विदिशाहरूमा भागे ॥ ३४ ॥ इति श्री मद्भागवते महापुराणे नेपाली भाषाटीकां चतुर्थोऽध्यायः ॥ ४ ॥ ( वीरभद्र द्वारा दक्षको यज्ञ विध्वंस र दक्षवध )—मैत्रेय भन्दछन्—हे विदुर! जब शङ्कर भगवान्‌ले नारदजीको मुखबाट दक्षप्रजापति द्वारा तिरस्कृत सती-मरण र ऋभुगण द्वारा आफ्ना पार्षदका सेनाहरू भगाएको वृत्तान्त सुने तब क्रोध उठ्यो ॥ १ ॥ अनि रुद्र भगवान्‌ले अति क्रुद्ध भावबाट आफ्ना ओठ टोक्तै विद्युत तथा अग्निका ज्वाला समान देदीप्यमान आफ्ना जटाबाट यौटा रौं उखेले र सहसा उभिएर गम्भीर अट्टहास गरेर हाँस्तै त्यस जटालाई भूमिमा राखिदिए ॥२॥ तत्काल त्यसबाट यौटा विशालकाय पुरुष उत्पन्न भयो। तिनको शरीर लामू र चौडा थियो। त्यो आफ्नो अग्लाईले आकाश स्पर्श गरिरहेको थियो। त्यसका हजार बाहु थिए। मेघझैं उसको श्यामवर्ण थियो। सूर्य झैं देदीप्यमान तिनका तीन नेत्र थिए। विकराल दाह्रा थिए र अग्निको ज्वाला समान रक्तवर्णका केश थिए। त्यो आफ्नो

पर्वतमा नर-मुण्डको माला लगाई अनेक थरिका अस्त्र-शस्त्र धारण गरेको थियो ॥३॥ उसले हात जोरेर शंकर-भगवान्‌सित सोध्यो—'हे प्रभो ! म के गरूँ ? अनि भगवान् भूतभावन शिवले आज्ञा गर्नुभयो—'रुद्र ! तिमी मेरै अंश हौ, अतः मेरा पार्षदमा अगुवा हौ । तिमी तुरुन्त गएर दक्ष र त्यसको यज्ञ नष्ट पार ॥४॥ रिसाएका शङ्कर भगवान्‌ले यस्तो आज्ञा दिएपछि वीरभद्रले देवाधिदेव शिवको प्रदक्षिणा गरे । हे तात ! वीरभद्रलाई यस्तो ज्ञात हुन थाल्यो—मेरो सामुन्ने टिक्नसक्ने संसारमा कोही पनि छैन र म ठूला-ठूला वीरहरूको वेग सहन गर्न समर्थ छु ॥५॥ अनि अरू रुद्र-पार्षदहरू ... पार्षदमा श्रेष्ठ वीरभद्र शिवगणले गर्जन गरेपछि आफू पनि विकराल शब्दले गर्जन गर्दै जगत्‌को अन्त्य गर्ने मृत्युलाई पनि अन्त्य गर्नेमा समर्थ अतिशय कराल त्रिशूल हातमा लिई दगुर्दै यज्ञ मण्डपतिर दगुरे । त्यस बखत तिनका पाउको आभूषण छम-छम गरेर बज्नथाले ॥६॥ उता दक्षका यज्ञ-मण्डपमा बसेका ऋत्विज, सदस्य, ब्राह्मण तथा ब्राह्मण-पत्नीहरू उत्तर दिशातिर धुलो उडेको देखेर परस्पर विचार गर्नलागे—'होइन, यो अन्धकार कसरी हुँदै गइरहेछ ?

मूर्धजः कपालमाली विविधोद्यतायुधः ॥ ३ ॥ तं किं करोमीति गृणन्तमाह बद्धाञ्जलिं भगवान् भूतनाथः ॥ दक्षं सयज्ञं जहि मद्भटानां त्वमग्रणी
रुद्र भटांशको मे ॥४॥ आज्ञप्त एवं कुपितेन मन्युना स देवदेवं परिचक्रमे विभुम् ॥ मेने तदाऽऽत्मानमसङ्गरंहसा महीयसां तात सहः सहिष्णुम् ॥५॥
अन्वीयमानः स तु रुद्रपार्षदैर्भृशं नदद्भिर्व्यनदत्सुभैरवम् ॥ उद्यम्य शूलं जगदन्तकान्तकं स प्राद्रवद् घोषणभूषणाङ्घ्रिः ॥ ६ ॥ अथर्त्विजो
यजमानः सदस्याः ककुभ्युदीच्यां प्रसमीक्ष्य रेणुम् ॥ तमः किमेतत्कुत एतद्रजोऽभूदिति द्विजा द्विजपत्न्यश्च दध्युः ॥ ७ ॥ वाता न वान्ति न हि
सन्ति दस्यवः प्राचीनबर्हिर्जीवति होग्रदण्डः ॥ गावो न काल्यन्त इदं कुतो रजो लोकोऽधुना किं प्रलयाय कल्पते ॥८॥ प्रसूतिमिश्राः स्त्रिय उद्वि-
ग्नचित्ता ऊचुर्विपाको वृजिनस्यैव तस्य ॥ यत्पश्यन्तीनां दुहितॄणां प्रजेशः सुतां सतीमवदध्यावनागाम् ॥ ९ ॥ यस्त्वन्तकाले व्युप्तजटाकलापः
स्वशूलसूच्यर्पितदिग्गजेन्द्रः ॥ वितत्य नृत्यत्युदितास्त्रदोर्ध्वजानुच्चाट्टहासस्तनयित्नुभिन्नदिक् ॥ १० ॥ अमर्षयित्वा तमसह्यतेजसं मन्युप्लुतं
दुर्विषहं भ्रुकुट्या ॥ करालदंष्ट्राभिरुदस्तभागणं स्यात्स्वस्ति किं कोपयतो विधातुः ॥ ११ ॥ बह्वेवमुद्विग्नदृशोच्यमाने जनेन दक्षस्य मुहुर्महा-

यो धूलो हो जस्तो बुझिन्छ, तर यो धूलो कसरी र कहाँबाट आयो ? यस बखत कतै आँधी पनि छैन र कहीं चोर पनि देखिँदैनन्, किनकि अपराधीहरूलाई कठोर दण्ड दिनमा समर्थ राजा प्राचीनबर्हि अहो जीवित छन् । गाईहरू आउने बेला पनि अहिले भएको छैन भने यो धूलो कसरी आयो ? अब संसारको प्रलय हुन आँट्यो कि ॥७।८॥ उता प्रसूति अर्थात् दक्ष-पत्नी आदि स्त्रीहरू व्याकुल भएर परस्पर भन्नलागे—'दक्षप्रजापतिले आफ्ना सबै छोरीको सामुन्ने बिचरी सतीको ठूलो अपमान गरे । ज्ञात भइरहेको छ कि यो त्यही पापको फल हो, जुन उत्पात देखिइरहेछ ॥९॥ जो कल्पान्तको बेलामा आफ्ना जटा-जूट फुकाएर त्रिशूलको टुप्पाले दिग्गजहरूलाई उचालेर यता-उता फ्याँकदछन् र मेघ-गर्जन झैं विकराल अट्टहास गरेर दसै दिशाहरूलाई कम्पित गर्दै आफ्ना सशस्त्र हातलाई ध्वजा झैं फिजाएर नाच्दछन् । जसको भृकुटिविलास अतिशय असह्य हुन्छ । जो आफ्ना भयानक दाह्राले तारागणलाई फुलो पारिदिन्छन्, ती अत्यन्त तेजस्वी र क्रोधमूर्ति शंकरलाई कुपित पारेर—के विधाता पनि सुखी रहन सक्ला ? ॥१०।११॥ त्यस यज्ञशालामा बसेका

गर्न थाले। आश्विनका मन्त्रले हे यस प्रकारदेँ परस्पर अनेक थरिका कुरा गरिरहेका थिए। उसैवेला आकाश र पृथ्वीमा सबैतिर परम सामर्थ्यशाली दक्षलाई पनि भयभीत पार्न भएका हजारौँ भयंकर उत्पात हुन लागेका देखिनथाले ॥१२॥ हे विदुर ! त्यसै वेला झम्टेर आएका रुद्रका अनुचरहरूले त्यो यज्ञमण्डप ढाके। ती विचित्र प्रकारका शस्त्रास्त्र लिएका थिए। ती शिवगणहरूमा कोही बाउन्ने, कोही पिङ्गलवर्णका, कोही पहेँला र कोही मगर-मच्छ झैँ पेट र मुखका थिए ॥१३॥ तिनमा कैयौँगणले प्राग्वंश ( यज्ञशालाको पूर्व तथा पश्चिमका खम्बामा पूर्व-पश्चिमतिर तेर्सो पारेर राखिएका काठ ) भाँचिदिए, कसैले पत्नीशाला नष्ट-भ्रष्ट पारिदिए, कसैले यज्ञशालाको सामुन्नेको मण्डप-अगाडिको हविर्धान र कतिले यजमान-गृह एवं भोजनागार नैं ध्वस्त पारिदिए ॥१४॥ केही गणहरूले यज्ञका पात्र तोडी-फोरी दिए, कसैले आगो निभाइदिए, केही शिवगणले यज्ञ-कुण्डमा मुतिदिए र वेदीको सीमा-सूत्रहरू तोडिदिए ॥१५॥ कतिले मुनिहरूलाई कष्ट दिन आरम्भ गरिदिए, केही गण स्त्रीहरूलाई हप्काउन थाले र कसैले आफ्नो नजीकैबाट भाग्न लागेका देवतालाई बाँधिदिए

त्मनः ॥ उत्पेतुरुत्पाततमाः सहस्रशो भयावहा दिवि भूमौ च पर्यक् ॥ १२ ॥ तावत्स रुद्रानुचरैर्मखो महान्नानायुधैर्वामनकैरुदायुधैः ॥ पिङ्गैः पिशङ्गैर्मकरोदराननैः पर्याद्रवद्भिर्विदुरान्वरुध्यत ॥१३॥ केचिद्बभञ्जुः प्राग्वंशं पत्नीशालां तथापरे ॥ सद आग्नीध्रशालां च तद्विहारं महानसम् ॥१४॥ रुरुजुर्यज्ञपात्राणि तथैकेऽग्नीननाशयन् ॥ कुण्डेष्वमूत्रयन्केचिद्बिभिदुर्वेदिमेखलाः ॥ १५ ॥ अबाधन्त मुनीनन्य एके पत्नीरतर्जयन् ॥ अपरे जगृहुर्देवान्प्रत्यासन्नान्पलायितान् ॥ १६ ॥ भृगुं बबन्ध मणिमान्वीरभद्रः प्रजापतीन् ॥ चण्डीशः पूषणं देवं भगं नन्दीश्वरोऽग्रहीत् ॥ १७ ॥ सर्व एवर्त्विजो दृष्ट्वा सदस्याः सदिवौकसः ॥ तैरर्द्यमानाः सुभृशं ग्रावभिर्नैकधाऽद्रवन् ॥ १८ ॥ जुह्वतः स्रुवहस्तस्य श्मश्रूणि भगवान्भवः ॥ भृगोर्लुलुञ्चे सदसि योऽहसच्छ्मश्रु दर्शयन् ॥ १९ ॥ भगस्य नेत्रे भगवान्पातितस्य रुषा भुवि ॥ उज्जहार सदःस्थोऽक्ष्णा यः शपन्तमसूसुचत् ॥२०॥ पूष्णश्चापातयद्दन्तान्कालिङ्गस्य यथा बलः ॥ शप्यमाने गरिमणि योऽहसद्दर्शयन्दतः ॥ २१ ॥ आक्रम्योरसि दक्षस्य शितधारेण हेतिना ॥ छिन्दन्नपि तदुद्धर्तुं नाशक्नोत्त्र्यम्बकस्तदा ॥ २२ ॥ शस्त्रैरस्त्रान्वितैरेवमनिर्भिन्नत्वचं हरः ॥ विस्मयं परमापन्नो दध्यौ पशुपतिश्चिरम् ॥ २३ ॥

॥१६॥ मणिमानले महर्षि भृगुलाई बाँधे। वीरभद्रले दक्षप्रजापतिलाई थुने र चण्डीशले पूषालाई तथा नन्दीश्वरले भगदेवलाई समाते ॥१७॥ कति ऋत्विज, सदस्य तथा देवता शङ्कर भगवान्‌का पार्षदहरूको यो लीला देखेर तथा तिनले फालेका ढुङ्गा आदिरो अतिशय पीडाले जसरी-तसरी त्यहाँबाट भागे ॥१८॥ अनि शंकर भगवान्‌का पार्षदप्रवर वीरभद्रले हातमा स्रुवो लिएर हवन गर्न भएका भृगु ऋषिका दाही-जुँगा उखेले, किनकि तिनले दक्षप्रजापतिको सभामा आफ्नो जुँगा हल्लाउँदै महादेवको ठट्टा गरेका थिए ॥१९॥ तिनले भगदेवलाई क्रोधपूर्वक पृथ्वीमा पछारेर तिनका आँखा झिकिदिए, किनकि तिनले उही सभामा शंकर भगवानलाई मनपरी भन्दै दक्षलाई आँखाले उत्साहित पारेका थिए ॥२०॥ महापराक्रमी वीरभद्रले पूषाका दाँत यसरी उखेले, जसरी बलरामजीले कलिंगराजका दाँत उखेलेका थिए। जब दक्ष शिवको निन्दा गरिरहेका थिए, तब पूषा दाँत झिक्ब पारेर हाँसेथे॥२१॥ त्यसपछि रुद्र भगवानले दक्षलाई पछारेर त्यसको छातीमा बसेर धारिलो तीखो धारको तरवारले घाँटी काट्न लागे तर धेरै प्रयत्न गर्दा पनि काट्न सकेनन् ॥२२॥ उनले थरि-थरिका

अस्त्र-शस्त्रको उपयोग गरे, तापनि त्यसको छालासम्म काटिएन अनि रुद्रदेवलाई ठूलो आश्चर्य भयो । ती धेरै बेरसम्म यस विषयमा विचार गर्दै रहे ॥ २३ ॥ त्यसपछि पशुपति भगवान् रुद्रले यज्ञमा पशुहरूको घाँटी काटेर मार्ने यन्त्र आदि खोजेर त्यसैद्वारा युक्तिपूर्वक त्यो यजमान-पशुरूपी दक्षको शिर काटेर गिंडबाट छुट्याइदिए ॥ २४ ॥ तिनको यस कार्यका प्रशंसक भूत-प्रेत र पिशाचादि धन्य-धन्य भनेर उनको सराहना गर्नलागे र दक्षका सम्बन्धी आदि अन्य पुरुष हाहाकार गर्नलागे ॥ २५ ॥ यस प्रकार तिनले मनमा सार्है क्रोधित भएर त्यो शिर यज्ञको दक्षिणाग्निमा हालिदिए र यज्ञशालालाई भस्म पारेर कैलास पर्वतमा फर्किए ॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषा-टीकायां पञ्चमोऽध्यायः ॥ ५ ॥ ( सबै देवता कैलास पर्वतमा एकत्र भएर भगवान् शंकरको स्तुति गर्नु )—मैत्रेयजी भन्दछन्–हे विदुर ! यस प्रकार भगवान् रुद्रका पार्षदहरू द्वारा तिनका त्रिशूल, पट्टिश, खड्ग, गदा, परिघ तथा मुद्गर आदि आयुधहरूले सर्वाङ्गमा आहत भएर ऋत्विज र सदस्यहरू सहित भयले व्याकुल भएर हारिसकेका देवता । ब्रह्माजीकहाँ

दृष्ट्वा संज्ञपनं योगं पशूनां स पतिर्मखे ॥ यजमानपशोः कस्य कायात्तेनाहरच्छिरः ॥ २४ ॥ साधुवादस्तदा तेषां कर्म तत्तस्य शंसताम् ॥ भूतप्रेत- पिशाचानामन्येषां तद्विपर्ययः ॥ २५ ॥ जुहावैतच्छिरस्तस्मिन्दक्षिणाग्नावमर्षितः ॥ तद्देवयजनं दग्ध्वा प्रातिष्ठद्गुह्यकालयम् ॥ २६ ॥ इति श्रीमद्भा- गवते महापुराणे चतुर्थस्कन्धे दक्षयज्ञविध्वंसो नाम पञ्चमोऽध्यायः ॥ ५ ॥ मैत्रेय उवाच ॥ अथ देवगणाः सर्वे रुद्रानीकैः पराजिताः ॥ शूल- पट्टिशनिस्त्रिंशगदापरिघमुद्गरैः ॥ १ ॥ संछिन्नभिन्नसर्वाङ्गाः सर्त्विक्सभ्या भयाकुलाः ॥ स्वयम्भुवे नमस्कृत्य कार्त्स्न्येनैतन्न्यवेदयन् ॥ २ ॥ उपलभ्य पुरैवैतद्भगवानब्जसम्भवः ॥ नारायणश्च विश्वात्मा न कस्याध्वरमीयतुः ॥ ३ ॥ तदाकर्ण्य विभुः प्राह तेजीयसि कृतागसि ॥ क्षेमाय तत्र सा भूयान्न प्रायेण बुभूषताम् ॥ ४ ॥ अथापि यूयं कृतकिल्बिषा भवं ये बर्हिषो भागभाजं परादुः ॥ प्रसादयध्वं परिशुद्धचेतसा क्षिप्रप्रसादं प्रगृहीतांघ्रिपद्मम् ॥ ५ ॥ आशासाना जीवितमध्वरस्य लोकाः सपालाः कुपिते न यस्मिन् ॥ तमाशु देवं प्रियया विहीनं क्षमापयध्वं हृदि विद्धं दुरुक्तैः ॥ ६ ॥ नाहं न यज्ञो न च यूयमन्ये ये देहभाजो मुनयश्च तत्त्वम् ॥ विदुः प्रमाणं बलवीर्ययोर्वा तस्यात्मतन्त्रस्य क उपायं विधित्सेत् ॥७॥

गए र उनलाई नमस्कार गरी सारा वृत्तान्त वर्णन गरेर सुनाए ॥१-२॥ ब्रह्माजी र सर्वका अन्तरात्मा-स्वरूप नारायण यो भावी उत्पात पहिलेदेखि नै जान्दथे त्यसैले ती दक्षको यज्ञमा सम्मिलित भएनन् ॥ ३ ॥ सबै वृत्तान्त सुनेर ब्रह्माजीले भने—हे देवता हो ! उन्नतिका इच्छुक पुरुषहरूका लागि तेजस्वी महापुरुषको अपमान गर्नु प्रायः कुशलताको हेतु हुँदैन ॥४॥ तिमीहरू यज्ञ-भागका अधिकारी भगवान् शङ्करलाई त्यसबाट वञ्चित गरेर तिनको ठूलो अपराध गरिसक्यौ । तापनि ती अत्यन्त छिटै प्रसन्न हुने गर्दछन् । अतएव तिमीहरू सबै शुद्धचित्तले तिनको चरण समाओ र प्रसन्न तुल्याओ ॥५॥ शङ्कर भगवानको हृदय दक्षका कटुवाक्यले पहिले नै छेडिएको थियो, त्यसमाथि अब तिनकी प्रियाको वियोग भयो । यदि त्यो यज्ञ फेरि आरम्भ भएर पूर्ण पार्न खोज्दछौ भने उनीसित आफ्ना अपराधको निम्ति क्षमा माग। नत्र यज्ञ मात्र होइन कि तिनीरिसाएपछि लोकपालसहित समस्त लोक नै नष्ट हुने छन् ॥ ६ ॥ ती अतिशय स्वतन्त्र भगवान् शंकरको तत्त्व तथा बल वीर्यको प्रमाण म, इन्द्र, सबै देवता तथा मुनिगण आदि देहधारीहरूमा कसैले पनि जान्दैनन् । अनि तिनलाई

आन्त गर्ने उपाय जरु कस्ले गर्न सक्छ ? ॥ ६ ॥ यस प्रकार देवताहरूलाई भनेर भगवान् ब्रह्माजी, पितर सबै प्रजापति तथा [illegible] [illegible] आफ्ना [illegible] [illegible] शिवपुरीको निम्ति पर्वतराज कैलासमा गए ॥८॥ त्यो पर्वत जन्म, औषधि, तप, मन्त्र र योग आदि विविध विभूतिहरू तथा सिद्ध, [illegible], किन्नर, गन्धर्व र अप्सराहरूले [illegible] रहन्थ्यो ॥९॥ भिन्न-भिन्न धातुहरू [illegible] शिखर, [illegible], लता-गुल्मादि तथा वरि-परिका मृगसमूहहरूले घेरिएको विविध [illegible] [illegible] [illegible] पर्वत [illegible] [illegible] देखिन्थ्यो ॥१०॥ त्यो कैलास निर्मल जल-प्रपात र धेरै कन्दरा, गुफा एवं शिखरहरूले सुशोभित भएर आफ्ना प्रियतमाका साथ विहार गर्ने [illegible] [illegible] [illegible] [illegible] थियो ॥ ११ ॥ त्यसमा मनैतिर मयूरको ध्वनि, मदान्ध भ्रमरको गुञ्जन, कोइलीको मीठो शब्द र पक्षिहरूका चिरबिर सुनिइरहन्थ्यो ॥ १२ ॥ [illegible] पर्वत [illegible] [illegible] हाँगाले मानौं अनेक पक्षीहरूलाई आकुलित [illegible] । हात्तीहरूले हिंड-डुल गर्नाले त्यो हिंडे हैं र झरनाहरूको मीठो [illegible] [illegible] [illegible] [illegible] ॥ १३ ॥ त्यस पर्वतमा पारिजात, सरल,

स इत्थमादिश्य सुरानजस्तैः समन्वितः पितृभिः सप्रजेशैः ॥ ययौ स्वधिष्ण्यान्निलयं पुरद्विषः कैलासमद्रिप्रवरं प्रिय प्रभोः ॥ ८ ॥ जन्मौषधितपो-
मन्त्रयोगसिद्धैर्नरेतरैः ॥ जुष्टं किन्नरगन्धर्वैरप्सरोभिर्वृतं सदा ॥ ९ ॥ नानामणिमयैः शृङ्गैर्नानाधातुविचित्रितैः ॥ नानाद्रुमलतागुल्मैर्नानामृग-
गणावृतैः ॥ १० ॥ नानाऽमलप्रस्रवणैर्नानाकन्दरसानुभिः ॥ रमणं विहरन्तीनां रमणैः सिद्धयोषिताम् ॥ ११ ॥ मयूरकेकाविरुत मन्दान्धालिवि-
मूर्च्छितम् ॥ प्लावितै रक्तकण्ठानां कूजितैश्च पतत्त्रिणाम् ॥ १२ ॥ आह्वयन्तमिवोद्धस्तैर्द्विजान्कामदुघैर्द्रुमैः ॥ व्रजन्तमिव मातङ्गैर्गृणन्तमिव
निर्झरैः ॥१३॥ मन्दारैः पारिजातैश्च सरलैश्चोपशोभितम् ॥ तमालैः शालतालैश्च कोविदारासनार्जुनैः ॥ १४ ॥ चूतैः कदम्बैर्नीपैश्च नागपुन्ना-
गचम्पकैः ॥ पाटलाशोकवकुलैः कुन्दैः कुरबकैरपि ॥१५॥ स्वर्णार्णशतपत्रैश्च वररेणुकजातिभिः ॥ कुब्जकैर्मल्लिकाभिश्च माधवीभिश्च मण्डितम् ॥१६॥
पनसोदुम्बराश्वत्थप्लक्षन्यग्रोधहिङ्गुभिः ॥ भूर्जैरोषधिभिः पूगै राजपूगैश्च जम्बुभिः ॥ १७ ॥ खर्जूराम्रातकाम्राद्यैः प्रियालमधुकेङ्गुदैः ॥ द्रुमजातिभि-
रन्यैश्च राजितं वेणुकीचकैः ॥१८॥ कुमुदोत्पलकह्लारशतपत्रवनर्द्धिभिः ॥ नलिनीषु कलं कूजत्खगवृन्दोपशोभितम् ॥१९॥ मृगैः शाखामृगैः क्रोडैर्मृ-
गेन्द्रैर्ऋक्षशल्यकैः ॥ गवयैः शरभैर्व्याघ्रै रुरुभिर्महिषादिभिः ॥ २० ॥ कर्णान्त्रैकपदाश्वास्यैर्निर्जुष्टं वृकनाभिभिः ॥ कदलीषण्डसंरुद्धनलिनीपुलि-

तमाल, शाल, कोविदार असन र अर्जुनका वृक्ष विद्यमान थिए । अतएव त्यो सदा शोभायमान रहन्थ्यो ॥ १४ ॥ यसै प्रकार आम, कटहर, कदम्ब, नाग, पुन्नाग, चम्पक, पाटल, अशोक, बकुल, कुन्द, कुरबक सुवर्ण जस्तै शतदल कमल, अतिशय सुन्दर अलैंची र मालतीका लताहरू, कुब्जक, मोगरा तथा माधवी, आदिका लताहरू भित्रै त्यसको शोभा बढाइ-रहेका थिए ॥१५-१६॥ कटहर, गूलर, पीपल, पाकरी, वट, भोजपत्र औषधिहरू, पूगीफल, ठूलो सुपारी, जामुन, खजूर, अमला, आँप प्रियाल, मधूक, इंगुदी आदि विभिन्न वृक्ष थि। वेणु अर्थात् भँदिलो बाँस र कीचक अर्थात् खोक्रो बाँसका वृक्षले त्यो पर्वत सार्है राम्रो देखिन्थ्यो ॥ १७-१८ ॥ त्यसका अनेक सरोवरमा कुमुद, कह्लार तथा शतपत्र आदि अनेक कमल फक्रेमा थिए । तिनमा मनोहर ढंगले बोल्ने पक्षिहरूद्वारा त्यो पर्वत धेरै राम्रो देखिन्थ्यो ॥१९॥ हरिण, वानर, सूकर, सिंह, भालु, दुमसी, चमरी मृग, बाघ, कृष्ण-मृग र रांगादि

वन्य पशुले त्यो वन परिपूर्ण थियो ॥२०॥ त्यस पर्वतमा जहाँ, तहाँ कर्णान्त, वृकपद, अश्वास्य, वृक र कस्तूरी मृग डुलिरहन्थे। त्यहाँका सरोवर-तटमा फलेका केराको पंक्तिहरूले पनि शोभित भइरहेथ्यो ॥२१॥ भगवती सतीले स्नान गर्नाले जसको जल पवित्र भइसकेको थियो, त्यो नन्दा नदीद्वारा पर्वतराज सबैतिरबाट घेरिएको थियो। ती भगवान् भूतपतिको कैलास देखेरदेवताहरू छक्क परे ॥ २२ ॥ त्यहाँ उनले अतिशय रमणीक अलकापुरी र सौगन्धिक वन देखे—जसमा सौगन्धिक नामको कमल फलेका थिए ॥ २३ ॥ अलकापुरीको बाहिरतिर नन्दा नदी तथा अलकनन्दा नामका दुइ नदीहरू थिए। ती तीर्थपाद भगवान् विष्णुका चरण-रजले अतिशय पवित्र भइसकेको थियो ॥ २४ ॥ हे विदुर ! रतिले गर्दा थाकेका देवाङ्गना आफ्नो निवासस्थान अर्थात् स्वर्गलोकबाट आएर ती नदीहरूमा जलक्रीडा गर्दथे र तिनमा स्नान गर्दै आफ्ना पतिको देहमा त्यो जल उफार्थ ॥२५॥ त्यहाँ ती देवीहरूको स्नानले तिनका कुचमा लागेको कुंकुम पखालिएर मिसिएको जल हात्तीहरू प्यास नलागे पनि ढोइलाई प्याउँदै स्वयं पनि पिउँथे ॥२६॥ त्यसको नजीचै चाँदी,

नाश्रियम् ॥२१॥ पर्यस्तं नन्दया सत्याः स्नानपुण्यतरोदका ॥ विलोक्य भूतेशगिरिं विबुधा विस्मयं ययुः ॥ २२ ॥ ददृशुस्तत्र ते रम्यामलकां नाम वै पुरीम् ॥ वनं सौगन्धिकं चापि यत्र तन्नाम पङ्कजम् ॥२३॥ नन्दा चालकनन्दा च सरितौ बाह्यतः पुरः ॥ तीर्थपादपदाम्भोजरजसाऽतीव पावने ॥ २४ ॥ ययोः सुरस्त्रियः क्षत्तरवरुह्य स्वधिष्ण्यतः ॥ क्रीडन्ति पुंसः सिञ्चन्त्यो विगाह्य रतिकर्शिताः ॥ २५ ॥ ययोस्तत्स्नानविभ्रष्टनवकुङ्कुमपिञ्जरम् ॥ वितृषोऽपि पिबन्त्यम्भः पाययन्तो गजा गजीः ॥ २६ ॥ तारहेममहारत्नविमानशतसंकुलाम् ॥ जुष्टां पुण्यजनस्त्रीभिर्यथा खं सतडिद्घनम् ॥ २७ ॥ हित्वा यक्षेश्वरपुरीं वनं सौगन्धिकं च तत् ॥ द्रुमैः कामदुघैर्हृद्यं चित्रमाल्यफलच्छदैः ॥ २८ ॥ रक्तकण्ठखगानीकस्वरमण्डितषट्पदम् ॥ कलहंसकुलप्रेष्ठं खरदण्डजलाशयम् ॥ २९ ॥ वनकुञ्जरसंघृष्टहरिचन्दनवायुना ॥ अधि पुण्यजनस्त्रीणां मुहुरुन्मथयन्मनः ॥ ३० ॥ वैदूर्यकृतसोपाना वाप्य उत्पलमालिनीः ॥ प्राप्तं किंपुरुषैर्दृष्ट्वा त आराद्ददृशुर्वटम् ॥ ३१ ॥ स योजनशतोत्सेधः पादोनविटपायतः ॥ पर्यक्कृ-

सुन र महामणिहरूका अनेकौं विमानले संकुलित र अनेक दक्ष-पत्नी द्वारा सुशोभित अलकापुरी बिजुली र रंग-बिरंगी बादलले युक्त आकाश झैं देखिन्थे ॥ २७ ॥ ती सबै देवता कुबेरका अलकापुरीलाई पछाडि छाडेर सौगन्धिक वनमा पुगे, जुन कल्पवृक्ष तथा चित्र-विचित्र फूल, फल तथा पातले अतिशय सुशोभित भइरहेको थियो ॥ २८ ॥ कोकिल आदि पक्षिहरूका कलरव र भ्रमराको गुञ्जारले परिपूर्ण तथा राजहंसलाई अतिशय प्रिय त्यो वन कमल-कुसुममण्डित सरोवरले अलंकृत थियो ॥२९॥ जंगली हात्तीको मस्तकले घोटिएर श्रीखण्ड वृक्षका गन्धले युक्त एवं मलय-पवनले गर्दा त्यो बारम्बार दक्षपत्नीहरूका मनलाई अत्यन्त मोहित पारिरहेथ्यो । ३० ॥ त्यस वनका सरोवरका खुडकिला वैदूर्यमणिका थिए, तिनमा कमलका पंक्तिहरू फक्रेका थिए र ती सरोवरमा अनेक किन्नर मन प्रसन्न तुल्याउन आउँदथे। यस प्रकार सौगन्धिक वनको शोभा हेर्दै देवगण अलि अगाडि जाँदा—तिनले एउटा वटवृक्ष देखे ॥ ३१ ॥ त्यो सय योजन अग्लो तथा सबैतिर पौने-पौने सय अर्थात् पचहत्तर योजन सम्म आफ्ना लामा-लामा शाखाहरूले फैलिएको थियो

त्यस वटवृक्षको चारैतिर निश्चल छाया विराजमान थियो। त्यसमा कुनै पक्षीको गुँड थिएन र वृक्षमुनि बस्नेहरूलाई घाम-शीतको कष्ट हुँदैनथ्यो ॥३२॥ हे विदुर ! त्यस महायोगमय तथा मुमुक्षुको आश्रयस्थल वटवृक्ष मुनि देवताहरूले रोषविहीन काल झैं शंकर भगवान्‌लाई बसेको देखे ॥३३॥ सनन्दन आदि शान्त सिद्धगण, यक्ष-राक्षसका अधिपति र तिनका सखा स्वयं कुबेरजी ती शान्तमूर्ति शंकरजीको सेवामा तत्पर थिए ॥३४॥ समस्त विश्वका हितकारी श्रीशिवजी सारा जगतका स्वामी हुन्। अतएव प्रेमवश संसारको कल्याण गर्नका निम्ति ती विद्या, तप एवं समाधि आदिको अभ्यास गर्ने गर्दछन् ॥३५॥ सन्ध्याकालीन मेघ झैं कान्तियुक्त आफ्नो अंगमा भस्म, दण्ड, जटा तथा मृगचर्म आदि तपस्वी जनका योग्य चिह्न र चन्द्रमाको कला धारण गरेका थिए ॥ ३६ ॥ त्यस बखत कुशको आसनमा विराजमान शङ्कर भगवान नारदजीले सोधेपछि सनातन ब्रह्मसम्बन्धी उपदेश दिइरहेका थिए र अनेकौं सन्तहरू एकाग्र-चित्तले उनको उपदेश सुन्नमा तल्लीन थिए ॥३७॥ शङ्कर भगवान् आफ्नो दाहिने तिघ्रामा बायाँ पाउ तथा बायाँ घुँडामा हात राखेका एवं भुजदण्डमा अक्ष-

ताचलच्छायो निर्नीडस्तापवर्जितः ॥ ३२ ॥ तस्मिन्महायोगमये मुमुक्षुशरणे सुराः ॥ ददृशुः शिवमासीनं त्यक्तामर्षमिवान्तकम् ॥ ३३ ॥ सनन्दनाद्यैर्महासिद्धैः शान्तैः संशान्तविग्रहम् ॥ उपास्यमानं सख्या च भर्त्रा गुह्यकरक्षसाम् ॥ ३४ ॥ विद्यातपोयोगपथमास्थितं तमधीश्वरम् ॥ चरन्तं विश्वसुहृदं वात्सल्याल्लोकमङ्गलम् ॥ ३५ ॥ लिङ्गं च तापसाभीष्टं भस्मदण्डजटाजिनम् ॥ अङ्गेन सन्ध्याभ्ररुचा चन्द्रलेखां च बिभ्रतम् ॥ ३६ ॥ उपविष्टं दर्भमय्यां बृस्यां ब्रह्म सनातनम् ॥ नारदाय प्रवोचन्तं पृच्छते शृण्वतां सताम् ॥ ३७ ॥ कृत्वोरौ दक्षिणे सव्यं पादपद्मं च जानुनि ॥ बाहुप्रकोष्ठेऽक्षमालामासीनं तर्कमुद्रया ॥ ३८ ॥ तं ब्रह्मनिर्वाणसमाधिमाश्रितं व्युपाश्रितं गिरिशं योगकक्षाम् ॥ सलोकपाला मुनयो मनूनामाद्यं मनुं प्राञ्जलयः प्रणेमुः ॥ ३९ ॥ स तूपलभ्यागतमात्मयोनिं सुरासुरेशैरभिवन्दिताङ्घ्रिः ॥ उत्थाय चक्रे शिरसाऽभिवन्दनमर्हत्तमः कस्य यथैव विष्णुः ॥४०॥ तथाऽपरे सिद्धगणा महर्षिभिर्ये वै समन्तादनु नीललोहितम् ॥ नमस्कृतः प्राह शशाङ्कशेखरं कृतप्रणामं प्रहसन्निवात्मभूः ॥ ४१ ॥ ब्रह्मोवाच ॥ जाने त्वामीशं विश्वस्य जगतो योनिबीजयोः ॥ शक्तेः शिवस्य च परं यत्तद्ब्रह्म निरन्तरम् ॥ ४२ ॥ त्वमेव भगवन्नेतच्छिवशक्त्योः सरू-

माला धारण गरेर तर्क-मुद्रामा सुशोभित भइरहेका थिए ॥३८॥ ती भूतभावन भगवान् योगपट्टको आश्रय लिएर एकाग्र मनले ब्रह्मानन्दको अनुभव गरिरहेका थिए। विचारवान्‌मा श्रेष्ठ ती शंकर भगवान्‌लाई लोकपाल सहित मुनीश्वरहरूले हात जोरेर साष्टाङ्ग प्रणाम गरे ॥३९॥ सबै देवता र दैत्यहरूका अधिपति जसका चरण-कमलको वन्दना गर्दछन् ती महादेवजीले जब लोक-पितामह श्री ब्रह्माजीलाई उपस्थित देखे तब आसनबाट उठेर तथा शिर निहुराई यस प्रकार प्रणाम गरे—जस्तै वामनावतारमा परमपूज्य विष्णु भगवानले कश्यपलाई अभिवादन गरेका थिए ॥४०॥ त्यस बखत भगवान् नीलकण्ठको समीप जो अरु सिद्ध तथा महर्षिगण बसेका थिए, ती सबैले प्रणाम गरिसकेपछि ब्रह्माजीले चन्द्रशेखर शंकरसित हाँस्तै यस प्रकार भने—॥४१॥ श्रीब्रह्माजी भन्नलागे—हे देव ! हजुर सारा संसारका स्वामी हुनुहुन्छ। हजुरलाई म राम्ररी चिन्दछु। हजुर यस संसारका योनि शक्ति अर्थात प्रकृति र त्यसको बीज 'शिव' अर्थात् पुरुष यी दुवैदेखि भिन्न तथा भेदहीन सनातन ब्रह्म हुनुहुन्छ॥४२॥हे भगवन् ! जस्तै माकुरो स्वयं जाल बुनेर त्यसमा क्रीडा गर्छ तथा अन्त्यमा त्यसलाई आफूमै समेटिलिन्छ त्यस्तै

पनि आफ्नै स्वरूप पुरुष तथा प्रकृति द्वारा संसारको रचना, पालन र संहार गर्न गर्दछन् ॥ ४३ ॥ धर्म तथा अर्थ प्राप्त गराउने भएका, वेदको रक्षागर्न हजुरले नै दक्षलाई निमित्त तुल्याएर यज्ञ प्रकट गर्नुभयो। व्रतपरायण ब्राह्मण जसको श्रद्धाले पालन गर्दछन्, त्यो धर्म-मर्यादा पनि त हजुरले नै बाँधिएको हो ॥४४॥ हे मङ्गलमय महेश ! हजुरनै पुण्य कर्म गर्नेहरूलाई स्वर्ग र मोक्षरूपी मङ्गलमय फल एवं पापकर्म गर्नेहरूलाई नरकादि भयंकर गति प्रदान गर्नुहुन्छ। अनि फेरि कर्ता-कर्ता यस नियमको उल्टो कुरा भएको किन देखिन्छ ? ॥४५॥ जुन सत्पुरुष आफ्नो अन्तरात्मालाई हजुरका चरण-कमलमा समर्पित गरिदिन्छन्, जो सबै प्राणीहरूमा हजुरलाई विराजमान देख्दछन्, जो सबै जीवनममान भावले आफूमानै अभ्यस्त मान्दछन्, तिनलाई पशुका समान क्रोधले आफ्नो अधीन पार्न सक्तैन ॥४६॥ भेदबुद्धिले गर्दा कर्ममै जसको आस्था रहन्छ, जसको मन मलीन रहन्छ, जो अर्काको उत्कर्ष

पयोः ॥ विश्वं सृजसि पास्यत्सि क्रीडन्नूर्णपटो यथा ॥ ४३ ॥ त्वमेव धर्मार्थदुघाभिपत्तये दक्षेण सूत्रेण ससर्जिथाध्वरम् ॥ त्वयैव लोकेऽवसिताश्च सेतवो यान्ब्राह्मणाः श्रद्दधते धृतव्रताः ॥ ४४ ॥ त्वं कर्मणां मङ्गलमङ्गलानां कर्तुः स्म लोकं तनुषे स्वः परं वा ॥ अमङ्गलानां च तमिस्रमुल्बणं विपर्ययः केन तदेव कस्यचित् ॥ ४५ ॥ न वै सतां त्वच्चरणार्पितात्मनां भूतेषु सर्वेष्वभिपश्यतां तव ॥ भूतानि चात्मन्यपृथग्दिदृक्षतां प्रायेण रोषोऽभिभवेद्यथा पशुम् ॥ ४६ ॥ पृथग्धियः कर्मदृशो दुराशयाः परोदयेनार्पितहृद्रुजोऽनिशम् ॥ परान्दुरुक्तैर्वितुदन्त्यरुन्तुदास्तान्मावधीद्दैववधा-न्भवद्विधः ॥४७॥ यस्मिन्यदा पुष्करनाभमायया दुरन्तया स्पृष्टधियःपृथग्दृशः ॥ कुर्वन्ति तत्र ह्यनुकम्पया कृपां न साधवो दैवबलात्कृते क्रमम् ॥४८॥ भवांस्तु पुंसः परमस्य मायया दुरन्तया स्पृष्टमतिः समस्तदृक् ॥ तया हतात्मस्वनुकर्मचेतःस्वनुग्रहं कर्तुमिहार्हसि प्रभो ॥ ४९ ॥ कुर्वध्वरस्योद्धरणं

देखेर दिन-रात चिन्ता गरिरहन्छ र जो *बौलाहा पुरुष आफ्ना दुर्वचनद्वारा अर्काको हृदय विदीर्ण पारिरहन्छ, तीमाथि विधाताको कोप परिरहन्छ। हजुर तिनलाई नष्ट पार्न प्रयत्न नगर्नु हवस् ॥४७॥ हे देव ! विष्णु भगवानको प्रबल मायाले बुद्धि भ्रष्ट भएपछि भेददर्शी पुरुष जहाँ र जब साधु पुरुषहरूको अपमान गर्दछन्, तब ती साधु पुरुष सधैं आफ्नो दयालुताले तीमाथि कृपा नै गरिरहन्छन्। त्यस दुःखलाई दैवाधीन मानेर ती उनको अहित गर्दैनन् ॥४८॥ हे प्रभो ! हजुर सबै कुरा जान्नु हुन्छ। परम पुरुष परमात्माको दुरन्त माया हजुरको बुद्धिलाई छुन पनि सक्तिन। अतएव जसको मन त्यस मायाको अधीन भएर कर्म-मार्गमा आसक्त हुन्छ, तिनीमाथि कृपा गर्नु हजुरको कर्तव्य हो

दृष्टान्त ( बौलाहा को ? )—श्रीरामकृष्ण परमहंसको नाम नसुन्ने को होला ! तिनको कीर्ति सम्पूर्ण बंगाल त के सारा देश-विदेशसम्म फैलिएको थियो। एक दिन ब्रह्मसमाजको चोटा पण्डितले तिनको कीर्ति सहन सकेन। अतएव त्यो उनको निन्दा गर्नलाग्यो—परमहंस त बौलाहा भएको छ। यसैनिमित्त ऊ मन लाग्यो, त्यही भन्दै रहन्छ। विदेशमा पनि गएको बस्तै खोटे कुरामा विचार गर्दा-गर्दा पेट बना बौलाहा भएका देखिन्छन्।' परमहंस-देवले पनि यो कुरा सुने-अनि ती पण्डितलाई डाकन उनले मान्छि पठाए। पण्डितले दुइ बजे आउने समय दिए, तर ती बेलामा आएनन्। अर्को दिन निश्चित गरे, तर त्यस दिन पनि आएनन्। पछि एक दिन अगावै समचार नपाइकन आफ्ना अनुयायी साथमा लिएर आइपुगे। परमहंसदेवले तिनलाई देखेर हाँसो भने—'हे काली ! तेरो माया विचित्र छ।' फेरि हाँसी हाँसी तिनले पण्डितसित भने—'म बौलाहा त हुँ, तर तिमी जस्तो दुइ दिन आउँछु भनेर समय दिई बिर्सने बानी छैन। विदेशमा जो अति बौलाहा हुन्छन्, ती आइलाई नेतन पादोपादै बौलाहा हुन्छन्। किन्तु सर्वाधार चैतन्य स्वरूपको ध्यान गर्ने व्यक्तिहरूलाई पनि के तिमीले बौलाहा भएका देखेका छौ ? यो सुनेर ब्रह्मसमाजी पण्डित स्तब्ध भयो र त्यसै दिनदेखि परमहंसदेवको शिष्य बने।

॥४९॥ हे प्रभो ! हजुरका मायाद्वारा विभ्रान्त दक्षप्रजापतिको त्यो अपूर्ण यज्ञ हजुर पूर्ण पारिदिनुहवस्, जसका दुर्बुद्धि याज्ञिकले यज्ञभागका अधिकारी हजुरलाई यज्ञभागबाट वंचित राखेका थिए । हजुरकै कृपाले सबै यज्ञ सम्पन्न हुन्छन् भन्ने कुरा तिनलाई के थाहा ? अब हजुर यस्तो कृपा गर्नुहवस्–यजमान दक्ष जीवित होउन । भगदेवले नेत्र पाउन । भृगुको दाह्री-जुँगा उम्रोस र पूषाका दाँत फेरि पलाउन् ॥५०॥५१॥ हे प्रभो ! वीरभद्रका अस्त्र र ढुङ्गाको वर्षाले जुन देवताहरू र ऋत्विजगणको अंग भंग भएका छन् ती हजुरका कृपाले शीघ्र फेरि निरोग होउन् ॥५२॥ हे रुद्रदेव ! यो यज्ञ पूर्ण भएपछि जे जति पदार्थ शेष रहला, त्यो हजुरको भाग हुनेछ । हे यज्ञ-विध्वंसकारी महादेव ! हजुरको भागले नै आज यो यज्ञ पूर्ण होओस् ॥५३॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां षष्ठोऽध्यायः ॥६॥ (दक्षको यज्ञ पूर्ण हुनु)—मैत्रेयजी भन्दछन्–हे महाबाहो ! हे विदुरजी ! ब्रह्माजीले स्तुति गरिसकेपछि शङ्कर भगवानले प्रसन्नतापूर्वक हाँसेर जे भन्नुभयो, त्यो सुन–॥१॥ महादेवजी भन्नुहुन्छ–हे प्रजापते ! भगवानको मायाले मोहित दक्षजस्ता

हतस्य भो त्वया समाप्तस्य मनोः प्रजापतेः ॥ न यत्र भागं तव भागिनो ददुः कुयाज्विनो येन मखो निनीयते ॥५०॥ जीवताद्यजमानोऽयं प्रपद्येताक्षिणी भगः ॥ भृगोः श्मश्रूणि रोहन्तु पूष्णो दन्ताश्च पूर्ववत् ॥ ५१ ॥ देवानां भग्नगात्राणामृत्विजां चायुधाश्मभिः ॥ भवताऽनुगृहीतानामाशु मन्योऽस्त्वनातुरम् ॥ ५२ ॥ एष ते रुद्र भागोऽस्तु यदुच्छिष्टोऽध्वरस्य वै ॥ यज्ञस्ते रुद्रभागेन कल्पतामद्य यज्ञहन् ॥५३॥ इति श्रीमद्भागवते चतुर्थस्कन्धे रुद्रसान्त्वनं नाम षष्ठोऽध्यायः ॥ ६ ॥ मैत्रेय उवाच ॥ इत्यजेनानुनीतेन भवेन परितुष्यता ॥ अभ्यधायि महाबाहो प्रहस्य श्रूयतामिति ॥ १ ॥ श्रीमहादेव उवाच ॥ माघं प्रजेश बालानां वर्णये नानुचिन्तये ॥ देवमायाभिभूतानां दण्डस्तत्र धृतो मया ॥ २ ॥ प्रजापतेर्दग्धशीर्ष्णो भवत्वजमुखं शिरः ॥ मित्रस्य चक्षुषेक्षेत भागं स्वं बर्हिषो भगः ॥ ३ ॥ पूषा तु यजमानस्य दद्भिर्जक्षतु पिष्टभुक् ॥ देवाः प्रकृतसर्वाङ्गा ये म उच्छेषणं ददुः ॥ ४ ॥ बाहुभ्यामश्विनोः पूष्णो हस्ताभ्यां कृतबाहवः ॥ भवन्त्वध्वर्यवश्चान्ये बस्तश्मश्रुर्भृगुर्भवेत् ॥ ५ ॥ मैत्रेय उवाच ॥ तदा सर्वाणि भूतानि श्रुत्वा मीढुष्टमोदितम् ॥ परितुष्टात्मभिस्तात साधु साध्वित्यथाब्रुवन् ॥ ६ ॥ ततो मीढ्वांसमामन्त्र्य शुनासीराः सहर्षिभिः ॥ भूयस्तद्देवयजनं समीढ्वद्वेधसो ययुः ॥ ७ ॥ विधाय कार्त्स्न्येन च तद्यदाह भगवान्भवः ॥ संदधुः कस्य कायेन सवनीयपशोः

बालबुद्धि मनुष्यको अपराधलाई न म कर्णमित भन्दछु र न त्यसको स्मरण नै गर्दछु । तिनलाई केवल सावधान गर्नको निम्ति मैले अलिकति दण्ड दिएको हुँ ॥२॥ अब दक्षप्रजापतिको शिर डढिसक्यो, त्यसको साटो बोकाको लगाई दिइयोस् । भगदेव मित्र देवताका आँखाले आफ्नू यज्ञभाग देखुन् ॥३॥ पिंधेको अन्न खाने पूषादेवता यजमानका दाँतले अन्न खाउन् तथा अन्य देवताका छिन्न-भिन्न अङ्ग फेरि दुरुस्त होउन् किनकि तिनले यज्ञको शेष भाग मेरो निम्ति गरेका छन् ॥४॥ अध्वर्यु, ऋत्विक आदिका जसका हात भाँचिएका छन् ती अश्विनीकुमारका भुजाले र जसका हातमात्र नष्ट भएका छन्, ती पूषाका हातले आफ्नो काम गरून् । भृगुऋषिको बोकाको जस्तै दाह्री-जुँगा होउन् ॥५॥ मैत्रेय भन्दछन्–हे विदुर ! शंकर भगवानका वचन सुनेर सबै जना प्रसन्न चित्तले 'साधु-साधु' भन्न लागे ॥६॥ उसै बखत सबै महर्षिगण तथा देवताहरूले महादेवजीलाई त्यस यज्ञमा सम्मिलित

व्यवस्था गरिएको छ । त्यस धर्मका प्रवर्तक ऋक्, यजुः तथा साम यी तीनै वेदद्वारा प्रतिपादित 'यज्ञ' लाई नै ती हजुरको रूप मान्दछन् ॥२७॥ सदस्य भन्दछन्–हे ईश ! अनेक क्लेशको कारण अतिशय दुर्गम र कालरूपी भयंकर सर्पद्वारा अध्यस्त, नाना प्रकारका द्वन्द्वरूप खाल्डोले पूर्ण, खलजनरूपी वन्य-पशुको भयले आक्रान्त, शोकरूपी दन्किरहेको दावानलभन्दा भयंकर एवं आश्रमहीन संसार-मार्गमा यदि अज्ञानी पुरुष विभिन्न कामनाको वशीभूत भएर मृगतृष्णा झैं विषयको निम्ति देह-गेहको भार शिरमा बोकेका छौं, ती हजुरका चरणमा कसरी पुग्न सक्छन् ? ॥२८॥ शिवजी भन्दछन्–हे वरदायक ! यस संसारमा पुरुषार्थ प्राप्तिका साधन तथा आसक्तिहीन मुनिजन द्वारा अतिशय आदरपूर्वक पूजा गरिने योग्य हजुरका चरण-कमलमा दत्तचित्त रहनाले यदि अज्ञानीजन मलाई आचार-भ्रष्ट भन्छन् भने भन्दै रहून्, हजुरको अनुग्रहले म तिनका वक-वादलाई केही मान्दिन ॥२९॥ भृगुले भने–हे परमात्मन् ! हजुरको गहन मायाले गर्दा जसको आत्मज्ञान नष्ट भइसकेको छ, अज्ञानरूपी निद्रामा सुतेका यी ब्रह्मादिक शरीरी पनि

शिरः ॥ ८ ॥ संधीयमाने शिरसि दक्षो रुद्राभिवीक्षितः ॥ सद्यः सुप्त इवोत्तस्थौ ददृशे चाग्रतो मृडम् ॥ ९ ॥ तदा वृषध्वजद्वेषकलिलात्मा प्रजापतिः ॥ शिवावलोकादभवच्छरद्ध्रद इवामलः ॥ १० ॥ भवस्तवाय कृतधीर्नाशक्नोदनुरागतः ॥ औत्कण्ठ्याद्बाष्पकलया संपरेतां सुतां स्मरन् ॥ ११ ॥ कृच्छ्रात्संस्तभ्य च मनः प्रेमविह्वलितः सुधीः ॥ शशंस निर्व्यलीकेन भावेनेशं प्रजापतिः ॥ १२ ॥ दक्ष उवाच ॥ भूयाननुग्रह अहो भवता कृतो मे दण्डस्त्वया मयि भृतो यदपि प्रलब्धः ॥ न ब्रह्मबन्धुषु च वां भगवन्नवज्ञा तुभ्यं हरेश्च कुत एव धृतव्रतेषु ॥१३॥ विद्यातपोव्रतधरान्मुखतः स्म विप्रान्ब्रह्मात्मतत्त्वमवितुं प्रथमं त्वमस्राक् ॥ तद्ब्राह्मणान्परम सर्वविपत्सु पासि पालः पशूनिव विभो प्रगृहीतदण्ड ॥ १४ ॥ योऽसौ मयाऽविदिततत्त्वदृशा सभायां क्षिप्तो दुरुक्तिविशिखैर्विगणय्य तन्माम् ॥ अर्वाक् पतन्तमर्हत्तमनिन्दयाऽपाद्दृष्ट्याऽऽर्द्रया स भगवान्स्वकृतेन तुष्येत् ॥ १५ ॥ मैत्रेय उवाच ॥ क्षमाप्यैवं स मीढ्वांसं ब्रह्मणा चानुमन्त्रितः ॥ कर्म सन्तानयामास सोपाध्यायर्त्विगग्निभिः ॥ १६ ॥ वैष्णवं यज्ञसन्तत्यै त्रिकपालं द्विजोत्तमाः ॥ पुरोडाशं निरवपन्वीर संसर्गशुद्धये ॥ १७ ॥ अध्वर्युणाऽऽत्तहविषा यजमानो विशाम्पते ॥ धिया विशुद्धया

आफ्नो रूपमा स्थित हजुरको स्वरूप अहसम्म जान्न सकेनन् । हजुर शरणागतका प्रिय आत्मा तथा बन्धु हुनुहुन्छ, अतः हजुर ममाथि प्रसन्न हुनोस् ॥३०॥ ब्रह्मा भन्दछन्–हे प्रभो ! सर्व वस्तुको भिन्नाभिन्नै ज्ञान राख्ने इन्द्रियहरू द्वारा पुरुष जे गति देख्दछ, त्यो हजुरको स्वरूप हुन सक्तैन, किनकि ज्ञान, शब्दादि विषय तथा श्रोत्रादि इन्द्रियका आश्रय हजुर सर्व मायिक पदार्थबाट पृथक् रहनु हुन्छ ॥३१॥ इन्द्र भन्दछन्–हे अच्युत ! हजुरका आठै भुजामा देवद्रोहीहरूलाई नष्ट पार्ने आयुध विद्यमान रहन्छन् । अतः हजुरको विश्वपावन स्वरूप हाम्रो मन तन नेत्रलाई परमानन्ददायक प्रतीत हुन्छ ॥३२॥ यज्ञपत्नीहरूले भने–हे भगवन् ! हजुरको पूजाका निमित्त ब्रह्माद्वारा रचिएको यो यज्ञ शंकर भगवानले दक्षमाथि कुपित हुनाले नै नष्ट गरिदिनु भएको हो । हे यज्ञमूर्ते ! श्मशान भूमि जस्तै उत्सव हीन त्यस यज्ञलाई आफ्ना कमल-नयनले हेरेर पवित्र पारिदिनोस् ॥३३॥ ऋषि भन्न लागे— हे भगवन् ! हजुरको लीला अद्भुत छ, किनकि हजुर सबै कर्म गरेर पनि त्यसबाट असङ्ग रहनु हुन्छ । अन्य जन महान् वैभव पाउनको निम्ति जुन लक्ष्मीको उपासना गर्दछन्, ती स्वयं

हजुरको सेवामा लागिरहन्छन्, तैपनि हजुर यहिल्यै तिनको सम्मान गर्नुहुन्न ॥३४॥ सिद्धजन भन्दछन्–हे प्रभो ! विविध प्रकारका क्लेशरूपी दावानलले दग्ध हाम्रा मनरूपी हात्ती तृषित भएर हजुरको कथारूपिणी निर्मल अमृत-नदीमा पसेर डुबुल्की लगाएर बसेको छु । त्यहाँ मानौं ब्रह्मानन्दमा लीन हुनाको कारण त्यसलाई न संसाररूपी दावानलको स्मरण रहन्छ, न त्यो उस नदीबाट बाहिर नै निस्कन सक्छ ॥३५॥ यजमान-पत्नी भन्दछिन्–हे ईश ! हजुर राम्रो पाल्नु भयो, हजुरलाई प्रणाम गर्दछु । ममाथि प्रसन्न हुनुहोस् । हे लक्ष्मीपते ! आफ्नी प्रिया लक्ष्मीसहित हजुर हाम्रो रक्षा गर्नोस् । हे यज्ञेश्वर ! जस्तै शिर नभएको गिड शोभित हुन्न, त्यसै गरी हजुर विना सर्व अंग पूर्ण भए पनि यज्ञको शोभा हुँदैन ॥३६॥ लोकपालहरूले भने–हे प्रभो ! जसको सत्ताले सारा जगत् जाग्रत् प्रतीत हुन्छ, ती हजुर सबैका अन्तःकरणमा साक्षीस्वरूप हुनुहुन्छ । मायिक पदार्थलाई ग्रहण गर्ने यी नेत्रादि इन्द्रियद्वारा के हामी हजुरलाई देख्न पाउँछौं ? हे भूमन् ! हामीलाई जुन हजुर पंचभूतदेखि भिन्न छैठौं जीवरूपमा देखिनु हुन्छ, त्यो पनि हजुरको माया नै हो

दध्यौ तदा प्रादुरभूद्धरिः ॥ १८ ॥ तदा स्वप्रभया तेषां द्योतयन्त्या दिशो दश ॥ मुष्णंस्तेज उपानीतस्ताक्ष्येण स्तोत्रवाजिना ॥ १९ ॥ श्यामो हिरण्यरशनोऽर्ककिरीटजुष्टो नीलालकभ्रमरमण्डितकुण्डलास्यः ॥ कम्ब्वब्जचक्रशरचापगदासिचर्मव्यग्रैर्हिरण्मयभुजैरिव कर्णिकारः ॥ २० ॥ वक्षस्यधिश्रितवधूर्वनमाल्युदारहासावलोककलया रमयंश्च विश्वम् ॥ पार्श्वभ्रमद्व्यजनचामरराजहंसः श्वेतातपत्रशशिनोपरि रज्यमानः ॥ २१ ॥ तमुपागतमालक्ष्य सर्वे सुरगणादयः ॥ प्रणेमुः सहसोत्थाय ब्रह्मेन्द्रत्र्यक्षनायकाः ॥ २२ ॥ तत्तेजसा हतरुचः सन्नजिह्वाः ससाध्वसाः ॥ मूर्ध्ना धृताञ्जलिपुटा उपतस्थुरधोक्षजम् ॥ २३ ॥ अप्यर्वाग्वृत्तयो यस्य महित्वात्मभुवादयः ॥ यथामति गृणन्ति स्म कृतानुग्रहविग्रहम् ॥ २४ ॥ दक्षो गृहीतार्हणसादनोत्तमं यज्ञेश्वरं विश्वसृजां परं गुरुम् ॥ सुनन्दनन्दाद्यनुगैर्वृतं मुदा गृणन्प्रपेदे प्रयतः कृताञ्जलिः ॥ २५ ॥ दक्ष उवाच ॥ शुद्धं स्वधाम्न्युपरताखिलबुद्ध्यवस्थं चिन्मात्रमेकमभयं प्रतिषिध्य मायाम् ॥ तिष्ठंस्तयैव पुरुषत्वमुपेत्य तस्यामास्ते भवानपरिशुद्ध इवात्मतन्त्रः ॥ २६ ॥ ऋत्विज ऊचुः ॥ तत्त्वं न ते वयमनञ्जन रुद्रशापात्कर्मण्यवग्रहधियो भगवन्विदामः ॥ धर्मोपलक्षणमिदं त्रिवृदध्वराख्यं ज्ञानं

॥३७॥ योगेश्वर भन्दछन्–हे प्रभो ! जुन प्राणी हजुर विश्वात्मालाई आफूबाट पृथक् देख्दैनन्, ती भन्दा प्रिय हजुरलाई कोही हुँदैन, तैपनि अनन्यभक्तिसहित हजुरलाई भज्ने हामीमाथि हजुर कृपा गर्नोस् ॥ ३८ ॥ जसका गुण जगत्को उत्पत्ति, स्थिति र लयका निमित्त विभिन्न रूप धारण गर्दछन्, ती आफ्नी मायाको बलले ब्रह्मादि विविधरूप धारण गर्नुभएको छ, तर आफ्नो स्वरूपमा हजुर भ्रमवश भासमान सर्व गुणले रहित हुनुहुन्छ । यस्ता हजुरलाई हाम्रो प्रणाम छ ॥३९॥ शब्दब्रह्म भन्दछन्–धर्मादिको उत्पत्तिका निमित्त शुद्धसत्त्वको आश्रय लिने र जसको स्वरूप म तथा ब्रह्मादि देवता पनि जान्दैनन, ती निर्गुण स्वरूपलाई प्रणाम छ ॥४०॥ अग्निले भने–जसको तेजले प्रज्वलित भएर म घृतयुक्त हवि देवताकहाँ पुन्याउँछु, ती 'आश्रावय' 'अस्तु' 'श्रौषट्' 'ये यजामहे' र 'वषट्' यी पाँच मन्त्रद्वारा पूजित अग्निहोत्र दर्श, पूर्णमास, चातुर्मास्य, पशु र साम, यी पाँचै रूपयुक्त यज्ञरक्षक महापुरुषलाई मेरो प्रणाम छ॥४१॥ देवता भन्दछन्–हे देव ! पूर्वकल्पको प्रलयमा हजुर आदिपुरुष नै आफ्नो कार्यरूपी यो जगत् आफ्नू उदरमा राखेर प्रलयको समय

हुनको निम्ति निम्ता दिए। सबै जना शंकरजी र ब्रह्माजीलाई साथै लिएर त्यही यज्ञशालामा गए ॥७॥ त्यहाँ महादेवजीको कथनानुसार सबै काम राम्ररी सम्पन्न पारेर उनले दक्षको गिँडमा यज्ञ पशु अर्थात् बोकाको मस्तक जोरिदिए ॥ ८ ॥ त्यो शिर जोरिएपछि भगवान् शङ्करको दृष्टि पर्नासाथ दक्ष तत्काल सुतेर उठे झैं भए। जीवित भएर तिनले आफ्नो सामु शिवजीलाई उपस्थित देखे ॥९॥ पहिले दक्षको हृदय शंकर-द्रोहरूपी कालिमाले कालो भएको थियो, अब त्यो शिवको दर्शन गर्नाले शरत्कालको सरोवर झैं निर्मल भएको थियो ॥१०॥ तिनले शिवजीको स्तुति गर्ने इच्छा गरे, तर मृत-कन्या ( सती ) को सम्झना भएर प्रेम तथा शोकाकुले गर्दा त्यस्तो गर्न सकेनन् ॥११॥ त्यसपछि प्रेमले विह्वल भएर परम बुद्धिमान दक्षप्रजापतिले आफ्नो मन स्थिर पारे र निष्कपट भावले यस प्रकार स्तुति आरम्भ गरे ॥१२॥ दक्ष भन्दछन्–हे भगवन् ! मैले हजुरको ठूलो अपराध गरें, त्यसको साटो दण्ड दिएर हजुरले ममाथि ठूलो कृपा गर्नुभयो। हजुर र विष्णु भगवान् अधम ब्राह्मणको पनि अवज्ञा गर्नु हुँदैन भने व्रतशील ब्राह्मणहरूको कुरै छैन ॥१३॥

यदर्थमधिदैवमदो व्यवस्थाः ॥ २७ ॥ सदस्या ऊचुः ॥ उत्पत्त्यध्वन्यशरण उरुक्लेशदुर्गेऽन्तकोग्रव्यालान्विष्टे विषयमृगतृष्यात्मगेहोरुभारः ॥ द्वन्द्वश्वभ्रे खलमृगभये शोकदावेऽज्ञसार्थः पादौ कस्ते शरणद कदा याति कामोपसृष्टः ॥ २८ ॥ रुद्र उवाच ॥ तव वरद वरांघ्रावाशिषेहाखिलार्थे ह्यपि मुनिभिरसक्तैरादरेणार्हणीये ॥ यदि रचितधियं माविद्यलोकोऽविद्धं जपति न गणये तत्परानुग्रहेण ॥ २९ ॥ भृगुरुवाच ॥ यन्मायया गहनयाऽपहृतात्मबोधा ब्रह्मादयस्तनुभृतस्तमसि स्वपन्तः ॥ नात्मन् श्रितं तव विदन्त्यधुनाऽपि तत्त्वं सोऽयं प्रसीदतु भवान्प्रणतात्मबन्धुः ॥ ३० ॥ ब्रह्मोवाच ॥ नैतत्स्वरूपं भवतोऽसौ पदार्थभेदग्रहैः पुरुषो यावदीक्षेत् ॥ ज्ञानस्य चार्थस्य गुणस्य चाश्रयो मायामयाद्व्यतिरिक्तो यतस्त्वम् ॥ ३१ ॥ इन्द्र उवाच ॥ इदमत्यच्युत विश्वभावनं वपुरानन्दकरं मनोदृशाम् ॥ सुरविद्विट्क्षपणैरुदायुधैर्भुजदंडैरुपपन्नमष्टभिः ॥ ३२ ॥ पत्न्य ऊचुः ॥ यज्ञोऽयं तव यजनाय केन सृष्टो विध्वस्तः पशुपतिनाऽद्य दक्षकोपात् ॥ तं नस्त्वं शवशयनाभशांतमेधं यज्ञात्मन्नलिनरुचा दृशा पुनीहि ॥ ३३ ॥ ऋषय ऊचुः ॥ अनन्वितं ते भगवन्विचेष्टितं यदात्मना चरसि हि कर्म नाज्यसे ॥ विभूतये यत उपसेदुरीश्वरीं न मन्यते स्वयमनुवर्ततीं भवान् ॥ ३४ ॥

हे विभो ! हजुरले वेद तथा आत्मतत्त्वको रक्षा गर्नका लागि नै सर्वप्रथम आफ्नो मुखबाट विद्या, तप तथा व्रत धारण गर्ने ब्राह्मणहरूको रचना गर्नुभयो, जस्तै ग्वाला लट्ठी लिएर गाईहरूको रक्षा गर्दछ, त्यसै गरी हजुर विपत्तिबाट ब्राह्मणहरूको रक्षा गर्नुहुन्छ ॥१४॥ हजुरका तत्त्वबाट अनभिज्ञ भएर मैले भरिएको सभामा दुर्वचनरूपी बाणले हजुरलाई घाउ पारें, तर हजुरले त्यस अपराधलाई अकिंचन ठानेर आफ्नो कृपादृष्टिले महापुरुषको निन्दाको महान् अपराधको कारण नरकादि अधोलोकमा जानबाट बचाउनु भयो। अतः आफ्नो उदारताले गर्दा नै ममाथि प्रसन्न हुनोस् ॥१५॥ मैत्रेय भन्दछन्–हे विदुर ! यसरी शंकरजीसित आफ्नो अपराध क्षमा गराएर दक्षले ब्रह्माको कथनानुसार उपाध्याय, ऋत्विक र अग्नि साथै फेरि आफ्नो यज्ञ-कार्य आरम्भ गरे ॥१६॥ त्यस बखत ब्राह्मणहरूले यज्ञ सम्पन्न गर्न र भूत-प्रेतादिको संसर्गजनित शुद्धिको निम्ति विष्णु सम्बन्धी त्रिकपाल नामक पुरोडाशको आहुति दिए ॥१७॥ हे विदुर ! त्यो पुरोडाशरूपी हवि हातमा लिएर उभिएका अध्वर्यु सित यजमान दक्षले शुद्धचित्तले नारायणको ध्यान गरे, तब परम प्रभु स्वयं त्यहाँ प्रकट भए।

॥१८॥ विष्णु भगवान्‌ले दशै दिशालाई देदीप्यमान पार्ने आफ्नो तेजले सबै सभासदका नेत्र चकित पारिदिए। त्यस बखत ती उप गरुडमा चढेका थिए, जसका प्वाँखबाट वेदमन्त्रको ध्वनि निस्किरहेथ्यो ॥१९॥ भगवान्‌को श्यामवर्ण थियो, तिनको कटिप्रदेशमा सुनको बन्धनी सुशोभित थियो, तिनको शिरमा सूर्य झैं देदीप्यमान मुकुट थियो, उनको मुखमण्डल भ्रमरझैं नीलो अलकावली तथा कान्तिमय कुण्डलले सुशोभित थियो र ती आफ्नो स्वर्णाभूषण-भूषित आठै भुजामा शङ्ख, चक्र, पद्म, बाण, धनुष, गदा, खड्ग तथा चर्म अर्थात् ढाल धारण गरेका, फूलेको कनेरको वृक्ष झैं देखिइरहेका थिए। २०॥ तिनको हृदयमा लक्ष्मीजी र घाँटीमा वनमाला सुशोभित थियो। ती आफ्नो उदार हास्य र लीलामय कटाक्षले विश्वलाई आनन्दित पारिरहेथे। तिनको दायाँ-बायाँ पार्षद राजहंसको समान व्यजन तथा सेतो चमर हम्किरहेथे र तिनको माथमा चन्द्रमा झैं धवल छत्र सुशोभित भइरहेथ्यो ॥२१॥ भगवान सामुन्ने आएका देखेर 'ब्रह्मा, इन्द्र तथा शिवजी आदि सबै देवताहरू उठेर उनलाई प्रणाम गरे ॥२२॥ त्यस बखत उनको तेजले सबैको कान्ती मलीन

सिद्धा ऊचुः ॥ अयं त्वत्कथामृष्टपीयूषनद्यां मनोवारणः क्लेशदावाग्निदग्धः ॥ तृषार्तोऽवगाढो न सस्मार दावं न निष्कामति ब्रह्मसम्पन्नवन्नः ॥३५॥ यजमान्युवाच ॥ स्वागतं ते प्रसीदेश तुभ्यं नमः श्रीनिवास श्रिया कान्तया त्राहि नः ॥ त्वामृतेऽधीश नाङ्गैर्मखः शोभते शीर्षहीनः कबन्धो यथा पूरुषः ॥ ३६ ॥ लोकपाला ऊचुः ॥ दृष्टः किं नो दृग्भिरसद्ग्रहैस्त्वं प्रत्यग्द्रष्टा दृश्यते येन दृश्यम् ॥ माया ह्येषा भवदीया हि भूमन् यस्त्वं षष्ठः पंचभिर्भासि भूतैः ॥ ३७ ॥ योगेश्वरा ऊचुः ॥ प्रेयान्न तेऽन्योऽस्त्यमुतस्त्वयि प्रभो विश्वात्मनीक्षेन्न पृथग्य आत्मनः ॥ अथापि भक्तेश तयोपधावतामनन्यवृत्त्याऽनुगृहाण वत्सल ॥३८॥ जगदुद्भवस्थितिलयेषु दैवतो बहुभिद्यमानगुणयाऽऽत्ममायया ॥ रचितात्मभेदमतये स्वसंस्थया विनिवर्तितभ्रमगुणात्मने नमः ॥ ३९ ॥ ब्रह्मोवाच ॥ नमस्ते श्रितसत्त्वाय धर्मादीनां च सूतये ॥ निर्गुणाय च यत्काष्ठां नाहं वेदापरोऽपि च ॥ ४० ॥ अग्निरुवाच ॥ यत्तेजसाऽहं सुसमिद्धतेजसा हव्यं वहे स्वध्वर आज्यसिक्तम् ॥ तं यज्ञियं पंचविधं च पंचभिः स्विष्टं यजुर्भिः प्रणतोऽस्मि यज्ञम् ॥४१॥ देवा ऊचुः ॥ पुरा कल्पापाये स्वकृतमुदरीकृत्य विकृतं त्वमेवाद्यस्तस्मिन्सलिल उरगेन्द्राधिशयने ॥ पुमाञ्छेषे सिद्धैर्हृदि विमृशिताध्यात्मपदविः

देखियो र फिक्रो लाटियो। तिनले अलिकति विस्मित भएर हात जोरी श्रीअधोक्षज भगवान्‌लाई प्रणाम गरे ॥२३॥ यद्यपि ती भगवान्‌को महिमाको निकट ब्रह्मादिहरूको बुद्धि पनि पुग्न सक्तैनथ्यो तापनि कृपापूर्वक शरीर धारण गरेर प्रगट भएका भगवान्‌को आफआफ्ना बुद्धि अनुसार स्तुति गर्न लागे ॥२४॥ पहिले दक्षप्रजापतिले पूजाको उत्तम सामग्री हातमा लिएर नन्द-सुनन्दादि पार्षदले घेरिएका प्रजापतिहरूका परम पुरुष भगवान् यज्ञेश्वरको नजीक गए र अतिशय आनन्दित भई विनीत भावले यसरी उनको स्तुति गर्न लागे ॥२५॥ दक्ष भन्दछन्–हे भगवन्! हजुर नित्यशुद्ध हुनहुन्छ, आफ्नो स्वरूपमा स्थित हजुर बुद्धिको जाग्रदादि अवस्थाबाट रहित, चिन्मात्र, अभय हुनुहुन्छ हजुर आफ्नो मायालाई तिरस्कार गरेर स्वतन्त्र रहनु हुन्छ, तैपनि लीलाको निम्ति त्यसलाई स्वीकार गरेर जीवभावमा प्राप्त भएर अज्ञानी पुरुष झैं देखिन्छौ ॥२६॥ ऋत्विजले भने—हे निरंजन ! हे भगवन् ! हामी रुद्रदेवका अंशस्वरूप नन्दीश्वरको शापले हजुरको तत्त्व जान्न सकेनौं। हाम्रो बुद्धि केवल कर्मकाण्डमा अल्झेको छ, जसमा 'अमुक कर्म अमुक देवता हुन्' यो

शेषनागको शय्यामा सुतछन् । सिद्धगण पनि आफ्नो हृदयमा हजुरकै आध्यात्मिक स्वरूपको ध्यान गर्दछन्, उही हजुर आज हाम्रा दृष्टिगोचर हुनुहुन्छ । अतएव हे प्रभो ! हजुर हामी सेवकको रक्षा गर्नोस् ॥४२॥ गन्धर्व भन्दछन्—हे देव ! मरीचि ऋषि र ब्रह्मा, इन्द्र, रुद्र आदि देवता हजुरका अंशको पनि अंश मानिन्छन् । हे भूमन् ! हे नाथ ! यो सारा विश्व जसको खेलाउनेहरूको ढक्का सदृश छन्, त्यस्ता हजुरलाई हामी प्रणाम गर्दछौं ॥४३॥ विद्याधर भन्दछन्–हे प्रभो ! धर्मादि चारै पदार्थको प्राप्तिका साधनस्वरूप यो शरीर पाएर पनि मनुष्य हजुरकी मायाले मोहित देहमा 'म, तँ र मेरो' भन्ने अभिमान गर्दछ र त्यो दुर्बुद्धि आफ्ना आत्मीयजनले उपेक्षा गर्दा पनि असत् विषयहरूको लालसा गर्दछन्, तर जो जन हजुरका कथामृतको पान गर्दछन्, ती आफ्नो अन्तःकरणको मोह त्यागिदिन्छन् ॥४४॥ ब्राह्मण भन्दछन्—हे भगवन् ! हजुर स्वयं यज्ञ हुनुहुन्छ । हजुर नै हवि, हजुर नै अग्नि र हजुर नै मन्त्र हुनुहुन्छ । हजुर नै समिधा, कुश र यज्ञपात्र तथा हजुर नै सदस्य, ऋत्विक् यजमान-दम्पति, देवता, अग्निहोत्र, स्वधा, होम, घृत तथा बलिपशु हुनुहुन्छ ॥ ४५ ॥

स एवाद्याक्ष्णोर्यः पथि चरसि भृत्यानवसि नः ॥ ४२ ॥ गन्धर्वा ऊचुः ॥ अंशांशास्ते देव मरीच्यादय एते ब्रह्मेन्द्राद्या देवगणा रुद्रपुरोगाः ॥
क्रीडाभाण्डं विश्वमिदं यस्य विभूमंस्तस्मै नित्यं नाथ नमस्ते करवाम ॥ ४३ ॥ विद्याधरा ऊचुः ॥ त्वन्माययाऽर्थमभिपद्य कलेवरेऽस्मिन्कृत्वा
ममाहमिति दुर्मतिरुत्पथैः स्वैः ॥ क्षिप्तोऽप्यसद्विषयलालस आत्ममोहं युष्मत्कथामृतनिषेवक उद्व्युदस्येत् ॥ ४४ ॥ ब्राह्मणा ऊचुः ॥ त्वं क्रतुस्त्वं
हविस्त्वं हुताशः स्वयं त्वं हि मन्त्रः समिद्दर्भपात्राणि च ॥ त्वं सदस्यर्त्विजो दम्पती देवता अग्निहोत्रं स्वधा सोम आज्यं पशुः ॥ ४५ ॥ त्वं पुरा
गां रसाया महासूकरो दंष्ट्रया पद्मिनीं वारणेन्द्रो यथा ॥ स्तूयमानो नदँल्लीलया योगिभिर्व्युज्जहर्थ त्रयीगात्र यज्ञक्रतुः ॥ ४६ ॥ स प्रसीद
त्वमस्माकमाकांक्षतां दर्शनं ते परिभ्रष्टसत्कर्मणाम् ॥ कीर्त्यमाने नृभिर्नाम्नि यज्ञेश ते यज्ञविघ्नाः क्षयं यान्ति तस्मै नमः ॥ ४७ ॥ मैत्रेय उवाच ॥
इति दक्षः कविर्यज्ञं भद्र रुद्राभिमर्शितम् ॥ कीर्त्यमाने हृषीकेशे संनिन्ये यज्ञभावने ॥ ४८ ॥ भगवान्स्वेन भागेन सर्वात्मा सर्वभाग-
भुक् ॥ दक्षं बभाष आभाष्य प्रीयमाण इवानघ ॥ ४९ ॥ श्रीभगवानुवाच ॥ अहं ब्रह्मा च शर्वश्च जगतः कारणं परम् ॥ आत्मेश्वर उपद्रष्टा स्वयं-

हे त्रयीमूर्ति ! यज्ञक्रतु ! हजुरले यौटा विशालकाय शूकरको रूप धारण गरेर योगिहरू द्वारा स्तूयमान हुँदै र भीषण गर्जन गर्दै लीलाले नै यो पृथ्वी आफ्नो दाह्रामा उचालेर यस प्रकार जलबाट बाहिर ल्याउनु भयो–जस्तै कोही गजराज कमलिनीलाई उखेलेर लिन्छ॥४६॥हे यज्ञेश ! मनुष्यहरू द्वारा जसको नाम कीर्तन गर्नाले यज्ञका सबै विघ्न नष्ट भएर जान्छन्, त्यस्ता हजुरलाई मेरो नमस्कार छ । त्यस बखत हाम्रा सबै यज्ञरूपी सत्कर्म नष्ट भएका थिए । अतः हामी हजुरको दर्शनका इच्छुक थियौं । अब हजुर हामीमाथि प्रसन्न हुनुहोस् ॥४७॥ मैत्रेय भन्दछन्—हे भद्र ! यज्ञरक्षक हृषीकेश भगवान्‌को यसरी स्तुति भइसकेपछि बाठा दक्षले रुद्रका पार्षद वीरभद्रद्वारा विध्वंस गरिएको यज्ञलाई फेरि आरम्भ गरिदिए ॥४८॥ हे अनघ ! सर्वान्तर्यामी तथा सर्वभोक्ता विष्णुभगवान्‌ले आफ्नो त्रिकपाल पुरोडाशरूपी भागले तृप्त भएर दक्षलाई सम्बोधन गरेर भने ॥५९॥ भगवान भन्नुहुन्छ—हे दक्ष ! सारा संसारका परम कारण

सर्वका आत्मा ईश्वर, साक्षी, स्वयं प्रकाश तथा भेदभावले रहित म नै ब्रह्मा र शिव हुँ ॥५०॥ हे द्विज ! मैले नै आफ्नी त्रिगुणात्मिका *मायाका आश्रय लिएर जगत्‌को रचना, पालन तथा संहार गर्नाले कर्मको अनुरूप ब्रह्मा, विष्णु र शिव यी तीन नाम धारण गरिराखेको छु ॥५१॥ अज्ञ जीव ती सर्वान्तरयामी, केवल तथा अद्वितीय ब्रह्ममा नै ब्रह्मा, शिव र अन्य सबै जीवलाई भेदभावले देख्दछ ॥५२॥ जस्तै पुरुष आफ्नो मस्तक र हात-खुट्टा आदि अंगमा 'यी अन्य हुन्' यस्तो बुद्धि कहिल्यै गर्दैन, त्यस्तै मेरा भक्त सबै प्राणीहरूमा अन्य बुद्धि गर्दैनन् ।५३॥ हे ब्रह्मन् ! जो वस्तुतः एक तर कार्यभेदले तीन रूपका छन् । ती ब्रह्मा, विष्णु, रुद्रमा जो पुरुष केही पनि भेदभाव राख्दैन, त्यसैले शान्ति प्राप्त गर्दछ ॥ ५४ ॥

दृगविशेषणः ॥ ५० ॥ आत्ममायां समाविश्य सोऽहं गुणमयीं द्विज ॥ सृजन् रक्षन्हरन्विश्वं दध्रे संज्ञां क्रियोचिताम् ॥ ५१ ॥ तस्मिन्ब्रह्मण्य-द्वितीये केवले परमात्मनि ॥ ब्रह्मरुद्रौ च भूतानि भेदेनाज्ञोऽनुपश्यति ॥ ५२ ॥ यथा पुमान्न स्वाङ्गेषु शिरःपाण्यादिषु क्वचित् ॥ पारक्यबुद्धिं कुरुते एवं भूतेषु मत्परः ॥ ५३ ॥ त्रयाणामेकभावानां यो न पश्यति वै भिदाम् ॥ सर्वभूतात्मनां ब्रह्मन्स शान्तिमधिगच्छति ॥ ५४ ॥ मैत्रेय उवाच ॥ एवं भगवताऽऽदिष्टः प्रजापतिपतिर्हरिम् ॥ अर्चित्वा क्रतुमान् स्वेन देवानुभयतोऽयजत् ॥ ५५ ॥ रुद्रं च स्वेन भागेन ह्युपाधावत्स-माहितः ॥ कर्मणोदवसानेन सोमपानितरानपि ॥ उदवस्य सहर्त्विग्भिः सस्नाववभृथं ततः ॥ ५६ ॥ तस्मा अप्यनुभावेन स्वेनैवावाप्तराधसे ॥ धर्म एव मतिं दत्त्वा त्रिदशास्ते दिवं ययुः ॥ ५७ ॥ एवं दाक्षायणी हित्वा सती पूर्वकलेवरम् ॥ जज्ञे हिमवतः क्षेत्रे मेनायामिति शुश्रुम ॥५८॥

मैत्रेय भन्दछन्—यसरी भगवान्‌ले आज्ञा दिएपछि प्रजापतिहरूका अधिपति दक्षले यज्ञ द्वारा यज्ञेश्वरको पूजा गरेर अङ्ग र प्रधान दुवै प्रकारले देवताहरूको पूजन गरे ॥ ५५ ॥ अनि एकाग्रचित्त भएर दक्षले भगवान् शङ्करलाई उनको भाग दिएर पूजन गरे । त्यसपछि उदवसान कर्मले सोमपायी एवं अन्य देवताको पूजन गरे ! त्यसपछि ऋत्विजका साथै अवभृत स्नान गरे ॥ ५६ ॥ अनि जसलाई आफ्नो पुरुषार्थले नै सबै ऐश्वर्य प्राप्त थियो, ती दक्षप्रजापतिलाई सबै देवता 'तिम्रो बुद्धि सधैं धर्ममा लागिरहोस्' भन्ने आशीर्वाद दिएर

* दृष्टान्त—(मायाको बन्धन) एक समय नारदजी विष्णु भगवान्‌सित भने—'हजुर आफ्नी मायालाई धेरै ठूली भनेर थाक लगाउनु हुन्छ र त्यसलाई दुस्तर पनि भन्नुहुन्छ । म त भन्छौ मान्दछु कि माया विषयी मनुष्यलाई नै फसाउन सक्छे र तिनैको निम्ति दुस्तर पनि होली ! तर हामी भक्ताका लागि हजुरको माया तुच्छ छ । म त हजुरको मायालाई तृणवत् ठान्दछु । किनकि म पूर्ण संन्यासी र नैष्ठिक ब्रह्मचारी हुँ । यस निमित्त अब कहिल्यै मेरो सामुन्ने हजुर आफ्नी मायाको गुणगान नगर्नु होला ।' त्यस बखत भगवान केही बोल्नु भएन । पछि एक दिन नारदजीलाई साथै लिएर भगवान् डुल्न हिंडे । बाटोमा विष्णुले भन्नुभयो—'मलाई प्यास लागे-को छ, कतैबाट पानी ल्याऊ ।' नारदजी जल लिन हिंडे । सामुन्ने थोरै टाढा नदी देखिंदा । नदीको किनारमा थोरै सोह्र वर्षकी युवती बसेकी थिई । त्यसको रूप देख्नासाथ नारदजीले भगवान्‌को निम्ति पानी लिएर जाने कुरा बिर्सिए र त्यस युवतीको दासता स्वीकार गरेर उनसँग थोरैसित विवाह गरे । विवाह भएसकेपछि छुट्ट तीन सन्तान पनि भए । केही दिनपछि त्यस देशमा अनिकाल पर्‍यो । अनि ती आफ्ना कुटुम्ब सहित परदेश जानको निम्ति निस्के । बाटोमा थोरै पुलबाट तर्नलागेका थिए, सहसा पुल भाँचियो र नारद बाहेक तिनका सबै परिवार नदीमा परेर मरे । स्त्री र पुत्रको वियोगले दुःखी भएर नारदजी रुन लागे । त्यसै बखत भगवान् डुल्दै त्यहाँ आइपुगेर नारदको हात समातेर भने—'मैले पानी पिइसकें । घर जाऊँ, हिंड ।' नारदजी आत्तिएर भन्न लागे—'नाथ ! साँच्चै नै हजुरको माया प्रबल रहेछ ।'

365

प्रस्थान गरे ॥ ५७ ॥ हे विदुर ! यस्तो पनि कथा पाइन्छ—दक्षकी कन्या सतीले त्यसरी पहिलो शरीर त्यागेर फेरि हिमालयकी भार्या मेनाको गर्भबाट जन्म लिइन् ॥५८॥ जस्तै प्रलय कालमा शक्ति फेरि ईश्वरको आश्रय लिन्छिन्, त्यस्तै अनन्यपरायणा अम्बिकादेवीले दोस्रो जन्ममा पनि आफ्ना एकमात्र आश्रय भगवान् शङ्करलाई नै आफ्नो पति रोजिन् ॥५९॥ हे विदुर ! दक्ष-यज्ञको विध्वंस पार्ने शिवजीको यो चरित्र मैले बृहस्पतिका शिष्य परम भक्त उद्धवसित सुनेथें ॥ ६० ॥ हे विदुर ! श्रीशिवको यो पवित्र चरित्र यश तथा आयुवर्धक र पापपुञ्ज नष्ट पार्नेछ । जो पुरुष नित्य भक्तिभावले यसको श्रवण तथा कीर्तन गर्दछ, त्यसका सबै पाप नष्ट भएर जान्छन् ॥ ६१ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां सप्तमोऽध्यायः ॥ ७ ॥ ( ध्रुवको वनगमन )—मैत्रेयजी भन्दछन्—हे विदुर ! सनकादि मुनि, नारद, ऋभु, हंस, आरुणि तथा यति—ब्रह्माजीका यी बाल-ब्रह्मचारी छोरा गृहस्थ भएनन् ॥१॥ ब्रह्माजीको एक पुत्र अधर्मकी मृषा नामकी भार्या थिइन् । हे शत्रुहन्ता ! त्यसबाट दम्भ नामक पुत्र र माया नामकी कन्या जन्मी । ती दुवै पुत्र र

तमेव दयितं भूय आवृङ्क्त पतिमम्बिका ॥ अनन्यभावैकगतिंशक्तिः सुप्तेव पूरुषम् ॥५८॥ एतद्भगवतः शम्भोः कर्म दक्षाध्वरद्रुहः ॥ श्रुतं भागवता-
च्छिष्यादुद्धवान्मे बृहस्पतेः ॥६०॥ इदं पवित्रं परमीशचेष्टितं यशस्यमायुष्यमघौघमर्षणम् ॥ यो नित्यदाऽऽकर्ण्य नरोऽनुकीर्तयेद्धुनोत्यघं कौरव
भक्तिभावतः ॥ ६१ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे दक्षयज्ञसन्धानं नाम सप्तमोऽध्यायः ॥ ७ ॥ मैत्रेय उवाच ॥ सनकाद्या नारदश्च
ऋभुर्हंसोऽरुणिर्यतिः ॥ नैते गृहान्ब्रह्मसुता ह्यावसन्नूर्ध्वरेतसः ॥ १ ॥ मृषाऽधर्मस्य भार्याऽऽसीद्दम्भं मायां च शत्रुहन् ॥ असूत मिथुनं तत्तु निर्ऋति
र्जगृहेऽप्रजः ॥२॥ तयोः समभवल्लोभो निकृतिश्च महामते ॥ ताभ्यां क्रोधश्च हिंसा च यद्दुरुक्तिः स्वसा कलिः ॥३॥ दुरुक्तौ कलिराधत्त भयं मृत्युं
च सत्तम ॥ तयोश्च मिथुनं जज्ञे यातना निरयस्तथा ॥ ४ ॥ संग्रहेण मयाऽऽख्यातः प्रतिसर्गस्तवानघ ॥ त्रिः श्रुत्वैतत्पुमान्पुण्यं विधुनोत्यात्मनोमलम्
॥ ५ ॥ अथातः कीर्तये वंशं पुण्यकीर्तेः कुरूद्वह ॥ स्वायम्भुवस्यापि मनोर्हरेरंशांशजन्मनः ॥६॥ प्रियव्रतोत्तानपादौ शतरूपापतेः सुतौ ॥
वासुदेवस्य कलया रक्षायां जगतः स्थितौ ॥ ७ ॥ जाये उत्तानपादस्य सुनीतिः सुरुचिस्तयोः ॥ सुरुचिः प्रेयसी पत्युर्नेतरा यत्सुतो ध्रुवः ॥ ८ ॥

कन्यालाई निर्ऋतिले लगे, किनकि तिनका कुनै सन्तान थिएनन् ॥२॥ हे महामते ! ती दुवैबाट लोभ र निकृति अर्थात् शठता उत्पन्न भई । ती दुवैबाट क्रोध र हिंसा अनि ती दुवैबाट कलि र दुरुक्तिको उत्पत्ति भयो ॥ ३ ॥ हे साधुश्रेष्ठ ! दुरुक्तिबाट कलिले भय र मृत्यु उत्पन्न गरे । ती दुवैको संयोगले यातना र नरकको प्रादुर्भाव भयो ॥ ४ ॥ हे अनघ ! संक्षेपमा मैले तिमीलाई प्रलयका कारणस्वरूप अधर्मको वंश सुनाएँ, जो यसलाई तीनपल्ट सुन्दछ, त्यो व्यक्ति पुण्यात्मा बन्दछ र त्यसको चित्तका सबै मलिनता नष्ट भएर जान्छन् ॥५॥ हे कुरुकुलनन्दन ! अब म भगवान्को अंशबाट उत्पन्न पवित्रकीर्ति महाराज स्वायम्भुव मनुको वंश विस्तार सुनाउँछु ॥६॥ रानी शतरूपाका पति महाराज स्वायम्भुवका प्रियव्रत र उत्तानपाद यी दुइ छोरा थिए । यी दुवै नै साक्षात् वासुदेवको कलाबाट उत्पन्न भएका थिए । अतः ती सारा संसारको रक्षामा तत्पर रहन्थे ॥७॥ तीमध्ये उत्तानपादकी सुनीति तथा सुरुचि नामका दुइ रानी थिए । सुरुचि राजाकी मनपरेकी थिइन् तिनकै पुत्र ध्रुव थिए, ती सुनीतिप्रति राजाको अनुराग थिएन ॥ ८ ॥ एक दिनको कुरा हो—राजा उत्तानपाद

सुरुचिको छोरो उत्तमलाई काखमा लिएर खेलाइरहेका थिए, त्यसै बखत ध्रुवले पनि काखमा बस्ने इच्छा गरे, तर राजाले तिनलाई अभिनन्दन गरेनन् ॥९॥ यस बेला रानी सुरुचिले सौताको पुत्र ध्रुवलाई राजाको काखमा बस्न उत्सुक देखेर राजाको सामुन्ने नै ईर्ष्याले भनिन्—॥१०॥ अरे वत्स ! तँ राजाको काखमा बस्ने लायक छैनस्, किनकि राज-पुत्र भए पनि मैले तँलाई आफ्नो उदरमा धारण गरेकी होइन ॥११॥ तँ अहिले बालकै छस्, अतः तँलाई थाहा छैन कि मैले बाहेक अर्की आमाको गर्भबाट जन्म लिएको होस् । अब तँ यस्तो दुर्लभ मनोरथ किन गर्दछस् ? ॥१२॥ तँलाई यदि राजसिंहासनको अभिलाषा छ भने तँ तपस्या गरेर परमपुरुष परमात्माको उपासना गर, उनको कृपाले फेरि मेरो गर्भबाट उत्पन्न हो ॥१३॥ मैत्रेयजी भन्दछन्—आफ्नी आमाको सौताको दुर्वचन गाडिएर लट्ठी खाएको सर्प जस्तै रिसले लामो सास फेर्दै बालक ध्रुव आफ्ना पितालाई चुपचाप चिन्तामा पाडिएका छाडेर रुँदै-रुँदै आफ्नी आमाकहाँ गए ॥१४॥ त्यस बखत बालक ध्रुवका ओंठ फरफराइरहेका थिए र सुँक्क-सुँक्क गरिरहेका थिए । माता सुनीतिले उठाएर तिनलाई काखमा लिइन् ।

एकदा सुरुचेः पुत्रमङ्कमारोप्य लालयन् ॥ उत्तमं नारुरुक्षन्तं ध्रुवं राजाऽभ्यनन्दत ॥ ९ ॥ तथा चिकीर्षमाणं तं सपत्न्यास्तनयं ध्रुवम् ॥ सुरुचिः शृण्वतो राज्ञः सेर्ष्यमाहातिगर्विता ॥ १० ॥ न वत्स नृपतेर्धिष्ण्यं भवानारोढुमर्हति ॥ न गृहीतो मया यत्त्वं कुक्षावपि नृपात्मज ॥ ११ ॥ बालोऽसि बत नात्मानमन्यस्त्रीगर्भसम्भृतम् ॥ नूनं वेद भवान् यस्य दुर्लभेऽर्थे मनोरथः ॥ १२ ॥ तपसाऽऽराध्य पुरुषं तस्यैवानुग्रहेण मे ॥ गर्भे त्वं साधयात्मानं यदीच्छसि नृपासनम् ॥१३॥ मैत्रेय उवाच ॥ मातुः सपत्न्याः स दुरुक्तिविद्धः श्वसन्रुषा दण्डहतो यथाऽहिः ॥ हित्वा मिषन्तं पितरं सन्नवाचं जगाम मातुः प्ररुदन्सकाशम् ॥ १४ ॥ तं निःश्वसन्तं स्फुरिताधरोष्ठं सुनीतिरुत्सङ्ग उदूह्य बालम् ॥ निशम्य तत्पौरमुखान्नितान्तं सा विव्यथे यद्गदितं सपत्न्या ॥ १५ ॥ सोत्सृज्य धैर्यं विललाप शोकदावाग्निना दावलतेव बाला ॥ वाक्यं सपत्न्याः स्मरती सरोजश्रिया दृशा बाष्पकलामुवाह ॥ १६ ॥ दीर्घं श्वसन्ती वृजिनस्य पारमपश्यती बालकमाह बाला ॥ माऽमङ्गलं तात परेषु मंस्था भुङ्क्ते जनो यत्परदुःखदस्तम् ॥ १७ ॥ सत्यं सुरुच्याऽभिहितं भवान्मे यद्दुर्भगाया उदरे गृहीतः ॥ स्तन्येन वृद्धश्च विलज्जते यां भार्येति वा वोढुमिड-स्पतिर्माम् ॥ १८ ॥ आतिष्ठ तत्तात विमत्सरस्त्वमुक्तं समात्रापि यदव्यलीकम् ॥ आराधयाधोक्षजपादपद्मं यदीच्छसेऽध्यासनमुत्तमो यथा ॥ १९ ॥

नागरिकहरूका मुखबाट आफ्नी सौताको कथन सुनेर तिनलाई निकै कष्ट भयो ॥ १५ ॥ आफ्नी सौताको वचन स्मरण गरेर सुनीति दावानलले दग्ध लता झैं शोक-सन्तप्त भएर ओइलाइन् । तिनका कमल झैं नेत्रबाट आँसुका धारा बग्न लागे र ती अधीर भएर रुन लागिन् ॥ १६ ॥ ती दुखियालाई आफ्नो दुःख-समुद्रको अन्त देखिन्नथ्यो । अनि तिनले दीर्घ निःश्वास छाड्दै आफ्नो छोरो ध्रुवसित भनिन्—बाबु ! तिमी अर्काको निम्ति कुनै प्रकारको अमङ्गल कुरा नसोच । जो मनुष्य अर्कालाई दुःख दिन्छ, ऊ स्वयं त्यसको फल भोग्दछ ॥१७॥ तिम्री आमा सुरुचिले जे जति भनिन्, त्यो सबै ठीक हो । जसलाई महाराज आफ्नी भार्या त के दासी मान्न पनि लाज मान्दछन् तिमी त्यही म मन्दभागिनी आमाको गर्भबाट जन्म्यौ र उसैको स्तनको दूध पिएर पालियौ ॥ १८ ॥ हे बाबु ! यदि तिमीलाई उत्तम झैं राजसिंहासनमा बस्ने अभिलाषा छ भने तिम्री सौतेनी आमाले जो यथार्थ कुरा भनिन्

तिमी द्वेष भाव छाडेर त्यसैको पालन गर्दै श्रीअधोक्षज ( विष्णु ) भगवान्‌का चरण-कमलको आराधना गर ॥१९॥ वत्स ! सारा जगत्‌को पालन गर्न शुद्ध सत्त्वगुणमय शरीर धारण गर्ने ती भगवान्‌का चरण-कमलको आराधना गर्नाले नै ब्रह्माजीलाई सृष्टाको सर्वोत्तम पद प्राप्त भयो। मन तथा प्राणलाई जित्ने योगी मुनिजन पनि उनकै वन्दना गर्दछन् ॥२०॥ तिम्रो हजुरबा स्वायम्भुव मनुले पनि एकाग्र चित्तले धेरै दक्षिणायुक्त यज्ञहरू द्वारा उनको यजन गरेर अरूको निम्ति दुष्प्राप्य भौम, दिव्य र मोक्ष यी तीन थरिका सुख प्राप्त गरेका थिए ॥२१॥ अतः वत्स ! मुमुक्षु जन जसका चरण-कमलको बाटो सधैं खोजिरहन्छन्, तिमी पनि उनै भक्तवत्सल भगवान् हरिको शरणमा जाऊ र स्वधर्म पालन गर्नाले पवित्र आफ्नो अनन्य भावयुक्त चित्तमा ती पुरुषोत्तमलाई विराजमान पारेर उनको ध्यान गर ॥२२॥ हे पुत्र ! मलाई त ती कमलदलझैं नेत्र हुने भगवानलाई छाडेर अरु कसैले पनि तेरो दुःख निवारण गर्न देख्दिन। ब्रह्मादिक देवताहरू द्वारा खोजिने लक्ष्मीजी पनि हातमा कमल लिई सधैं उनलाई खोज्दै रहन्छिन् ॥ २३ ॥ मैत्रेयजी भन्दछन्–हे विदुर !

यस्यांघ्रिपद्मं परिचर्य विश्वविभावनायात्तगुणाभिपत्तेः ॥ अजोऽध्यतिष्ठत्खलु पारमेष्ठ्यं पदं जितात्मश्वसनाभिवन्द्यम् ॥ २० ॥ तथा मनुर्वो भगवान्पितामहो यमेकमत्या पुरुदक्षिणैर्मखैः ॥ इष्ट्वाऽभिपेदे दुरवापमन्यतो भौमं सुखं दिव्यमथापवर्ग्यम् ॥ २१ ॥ तमेव वत्साश्रय भृत्यवत्सलं मुमुक्षुभिर्मृग्यपदाब्जपद्धतिम् ॥ अनन्यभावे निजधर्मभाविते मनस्यवस्थाप्य भजस्व पूरुषम् ॥ २२ ॥ नान्यं ततः पद्मपलाशलोचनाद्दुःखच्छिदं ते मृगयामि कञ्चन ॥ यो मृग्यते हस्तगृहीतपद्मया श्रियेतरैरङ्ग विमृग्यमाणया ॥ २३ ॥ मैत्रेय उवाच ॥ एवं संजल्पितं मातुराकर्ण्यार्थागमं वचः ॥ सन्नियम्यात्मनाऽऽत्मानं निश्चक्राम पितुः पुरात् ॥ २४ ॥ नारदस्तदुपाकर्ण्य ज्ञात्वा तस्य चिकीर्षितम् ॥ स्पृष्ट्वा मूर्धन्यघघ्नेन पाणिना प्राह विस्मितः ॥२५॥ अहो तेजः क्षत्रियाणां मानभंगममृष्यताम् ॥ बालोऽप्ययं हृदा धत्ते यत्समातुरसद्वचः ॥ २६ ॥ नाधुनाऽप्यवमानं ते सम्मानं वापि पुत्रक ॥ लक्षयामः कुमारस्य सक्तस्य क्रीडनादिषु ॥२७॥ विकल्पे विद्यमानेऽपि न ह्यसंतोषहेतवः ॥ पुंसो मोहमृते भिन्नं यल्लोके निजकर्मभिः ॥२८॥ परितुष्येत्ततस्तात तावन्मात्रेण पूरुषः ॥ दैवोपसादितं यावद्वीक्ष्येश्वरगतिं बुधः ॥ २९ ॥ अथ मात्रोपदिष्टेन योगेनावरुरुत्ससि ॥ यत्प्रसादं स वै

आफ्नी माताको यसरी कामना पूर्ण पार्ने वचन सुनेर ध्रुवले आफ्नो बुद्धिले चित्त शान्त पारेर पिताको नगरबाट बाहिर निस्किए ॥ २४ ॥ ध्रुव हिंडेको समाचार सुनेर ध्रुवको के गर्ने इच्छा छ, यो जानेर देवर्षि नारद ध्रुवको नजीक गए र तिनको मस्तकमा आफ्नो पापनाशक हातले छुमाउँदै भन्नलागे– ॥ २५ ॥ अहो ! अपमान सहनमा असमर्थ यी क्षत्रियहरूको तेज कस्तो अद्भुत हुन्छ ? हेर, ध्रुव अहिले बालक छ तापनि यसले सौतेनी आमाका कटुवचन सहन सकेन ॥२६॥ उनले भने—'बाबु ! अहिले तिमी खेल-कूदमै मग्न रहने भएका बच्चा छौ। अहिले मलाई त कुनै कुराले तिम्रो मान वा अपमान हुने जस्तो लागिरहेको छैन। यदि तिमीलाई मानापमानको विचार भए पनि मनुष्यको असन्तोषको कारण मोहबाहेक अरु केही पनि छैन किनकि मनुष्य आफ्ना कर्म अनुसार यस लोकका मान-अपमान वा सुख-दुःख आदि भिन्न-भिन्न अवस्थाका वशीभूत हुँदै रहन्छ ॥२७-२८॥ अतः हे तात ! भगवानको विचित्र लीला ठानेर भाग्यवश उसलाई सुख-दुःख वा मानापमान जे प्राप्त हुनेछ, त्यसैमा सन्तुष्ट रहनु ॥ २९ ॥ अब तिमी आफ्नी आमाको

उपदेशले योगसाधन द्वारा जसलाई प्राप्त गर्न खोजिरहेका छौं, अजितेन्द्रिय पुरुष द्वारा त्यस परमात्माको आराधना गर्नु धेरै कठिन काम छ ॥३०॥ त्यसको सत्य स्वरूपलाई न ठूला-ठूला योगीजन अनेक जन्मसम्म असङ्ग रहेर बलियो समाधि योगद्वारा खोजेरपनि भेट्टाउन सक्तैनन् ॥३१॥ अतः तिम्रो आफ्नो घर फर्क–तिम्रो हठ व्यर्थ छ। जब तिम्रो परमार्थ साधनको समय अर्थात् बूढो हुन्छौ, अनि यो काम गर्नु, अहिले होइन ॥३२॥ दैवले जसको निम्ति जुन विधान तोकेको छ, त्यसको अनुसार नै प्राणी सुख-दुःख भोग्दछ।' यसैले जो आफ्नो अन्तःकरण सन्तुष्ट राख्दछ, त्यो पुरुष अज्ञान सागरबाट पारि तर्दछ ॥ ३३ ॥ प्रत्येक मनुष्यको कर्तव्य हो कि आफूभन्दा बढ्ता गुणी पुरुषलाई देखेर प्रसन्न होओस्। गुणमा आफूभन्दा तल्लो खण्डका व्यक्तिलाई देखेर तिनमा दया गरोस्। जो आफूसमान गुणी छ, त्योसँग मैत्रीभाव राखोस्। यसो गर्नाले त्यो प्राणी कहिल्यै सन्तप्त हुँदैन ॥३४॥ ध्रुवभन्छन्–हे भगवन ! जो व्यक्ति सुख-दुःखको अधीन रहन्छन्, तिनको निम्ति हजुरले कृपा गरेर यो यस्तो बाटो भन्नुभयो—त्यहाँसम्म हामी जस्ता अज्ञानी जनको दृष्टि बढ्ले नै पुग्न

पुंसां दुराराध्यो मतो मम ॥ ३० ॥ मुनयः पदवीं यस्य निःसङ्गेनोरुजन्मभिः ॥ न विदुर्मृगयन्तोऽपि तीव्रयोगसमाधिना ॥ ३१ ॥ अतो निवर्तताभेष निर्बन्धस्तव निष्फलः ॥ यतिष्यति भवान्काले श्रेयसां समुपस्थिते ॥ ३२ ॥ यस्य यद्दैवविहितं स तेन सुखदुःखयोः ॥ आत्मानं तोषयन्देही तमसः पारमृच्छति ॥ ३३ ॥ गुणाधिकान्मुदं लिप्सेदनुक्रोशं गुणाधमात् ॥ मैत्रीं समानादन्विच्छेन्न तापैरभिभूयते ॥ ३४ ॥ ध्रुव उवाच ॥ सोऽयं शमो भगवता सुखदुःखहतात्मनाम् ॥ दर्शितः कृपया पुंसां दुर्दर्शोऽस्मद्विधैस्तु यः ॥ ३५ ॥ अथापि मेऽविनीतस्य क्षात्रं घोरमुपेयुषः ॥ सुरुच्या दुर्वचोबाणैर्न भिन्ने श्रयते हृदि ॥ ३६ ॥ पदं त्रिभुवनोत्कृष्टं जिगीषोः साधु वर्त्म मे ॥ ब्रूह्यस्मत्पितृभिर्ब्रह्मन्नन्यैरप्यनधिष्ठितम् ॥ ३७ ॥ नूनं भवान्भगवतो योऽङ्गजः परमेष्ठिनः ॥ वितुदन्नटते वीणां हितार्थं जगतोऽर्कवत् ॥३८॥ मैत्रेय उवाच ॥ इत्युदाहृतमाकर्ण्य भगवान्नारदस्तथा ॥ प्रीतः प्रत्याह तं बालं सद्वाक्यमनुकम्पया ॥ ३९ ॥ नारद उवाच ॥ जनन्याऽभिहितः पन्थाः स वै निःश्रेयसस्य ते ॥ भगवान्वासुदेवस्तं भज तत्प्रवणात्मना ॥ ४० ॥ धर्मार्थं काममोक्षाख्यं य इच्छेच्छ्रेय आत्मनः ॥ एकमेव हरेस्तत्र कारणं पादसेवनम् ॥ ४१ ॥ तत्तात गच्छ भद्रं ते यमुनाया-

सक्छ ॥३५॥ हजुरको उपदेश यद्यपि मेरो निम्ति कल्याणकारी छ, तथापि अत्यन्त घोर क्षत्रिय स्वभावको वशीभूत हुनाले म जस्तो दुर्विनीतको मनमा टिक्न सक्तैन। किनकि मेरो मन मेरी सौतेनी आमा सुरुचिका वाग्-बाणले विद्ध भएको छ। हे ब्रह्मन् ! म त त्यस पदको अभिलाषी छु, जसमा मेरा पूर्वज पनि पुग्न सकेका छैनन्। अतः हजुर मलाई तीनै लोकमा त्यो सर्वश्रेष्ठ पद पाउने कुनै उत्तम बाटो देखाउनोस्। हजुर साक्षात् भगवान् ब्रह्माका पुत्र हुनुहुन्छ। त्यसैले त हजुर स्वयं जस्तै संसारको कल्याणार्थ वीणा बजाउँदै तीनै लोकमा डुलिरहनु हुन्छ ॥३६-३८॥ मैत्रेय भन्दछन्—ध्रुवका वचन सुनेर नारदजी निकै प्रसन्न भए र कृपापूर्वक ती बालकसित भने—॥३९॥ नारदजीले भने–बाबू ! तेरी माताले तँलाई जुन बाटो देखाई, त्यसैले तेरो कल्याण गर्दछ, तँ मनलगाएर उनै वासुदेवको भजन गर ॥४०॥ जो जन धर्म, अर्थ, काम र मोक्षरूप कल्याणका इच्छुक भएर त्यो पाउने

उपाय केवल भगवान्‌को चरण-सेवन नै हो ॥ ४१ ॥ अतः हे प्रिय ! तिम्रो कल्याण होस्। तिमी यमुनाको पवित्र तटमा स्थित पुनीत मधुवन जाऊ—जहाँ श्रीहरि सदा विद्यमान रहन्छन् ॥४२॥ त्यहाँ आफ्नो नित्यकर्मबाट निवृत्त भएर कालिन्दीको पवित्र तटमा त्रिकाल स्नान गरेर स्थिर आसनमा बस्नु॥४३॥अनि रेचक, कुम्भक र पूरक तीन थरिका प्राणायाम द्वारा आफ्नो प्राण, इन्द्रिय तथा मनको मल बिस्तार-बिस्तार हटाएर शुद्धचित्तले परमगुरु भगवान् वासुदेवको यसरी ध्यान गर्नु—॥ ४४ ॥ भगवान्‌का मुख र नेत्र सदा अतिशय प्रसन्न रहन्छन्, तिनलाई देख्नाले यस्तो ज्ञात हुन्छ कि—ती वरदान दिन उद्यत छन्। तिनको नाक, आँखीभौं र गाला, अत्यन्त राम्रा छन्। ती सबै देवता भन्दा राम्रा छन् ॥४५॥ तिनको अवस्था छ। तिनका सबै अंग ठम्म मिलेका छन्। तिनको नेत्र, अधर र ओंठ राता छन्। ती आफ्ना भक्तलाई आश्रय दिन्छन् र ती अतिशय सुखदायक शरणागतवत्सल र करुणाका पारावार (समुद्र) हुन्॥४६॥तिनको वक्षस्थलमा श्रीवत्स चिन्ह विराजमान छ, तिनको शरीर जलधरको समान श्याम छ, तिनको घाँटीमा वनमाला रहन्छ र ती आफ्ना चारै भुजाहरूमा

स्तटं शुचि ॥ पुण्यं मधुवनं यत्र सान्निध्यं नित्यदा हरेः ॥ ४२ ॥ स्नात्वाऽनुसवनं तस्मिन्कालिन्द्याः सलिले शिवे ॥ कृत्वोचितानि निवसन्नात्मनः कल्पितासनः ॥४३॥ प्राणायामेन त्रिवृता प्राणेन्द्रियमनोमलम् ॥ शनैर्व्युदस्याभिध्यायेन्मनसा गुरुणा गुरुम् ॥ ४४ ॥ प्रसादाभिमुखं शश्वत्प्रसन्नवदनेक्षणम् ॥ सुनासं सुभ्रुवं चारुकपोलं सुरसुन्दरम् ॥ ४५ ॥ तरुणं रमणीयाङ्गमरुणोष्ठेक्षणाधरम् ॥ प्रणताश्रयणं नृम्णं शरण्यं करुणार्णवम् ॥४६॥ श्रीवत्साङ्कं घनश्यामं पुरुषं वनमालिनम् ॥ शङ्खचक्रगदापद्मैरभिव्यक्तं चतुर्भुजम् ॥ ४७ ॥ कुण्डलिनं किरीटिनं केयूरवलयान्वितम् ॥ कौस्तुभाभरणग्रीवं पीतकौशेयवाससम् ॥ ४८ ॥ काञ्चीकलापपर्यस्तं लसत्कांचननूपुरम् ॥ दर्शनीयतमं शान्तं मनोनयनवर्धनम् ॥ ४९ ॥ पद्भ्यां नखमणिश्रेण्या विलसद्भ्यां समर्चताम् ॥ हृत्पद्मकर्णिकाधिष्ण्यमाक्रम्यात्मन्यवस्थितम् ॥ ५० ॥ स्मयमानमभिध्यायेत्सानुरागावलोकनम् ॥ नियतेनैकभूतेन मनसा वरदर्षभम् ॥ ५१ ॥ एवं भगवतो रूपं सुभद्रं ध्यायतो मनः ॥ निर्वृत्या परया तूर्णं सम्पन्नं न निवर्तते ॥५२॥ जपश्च परमो गुह्यः श्रूयतां मे नृपात्मज ॥ यः सप्तरात्रं प्रपठन्पुमान्पश्यति खेचरान् ॥ ५३ ॥ "ॐ नमो भगवते वासुदेवाय ॥" मन्त्रेणानेन देवस्य कुर्याद्द्रव्यमयीं बुधः ॥

शङ्ख, चक्र, गदा र पद्म धारण गरिरहन्छन् ॥ ४७ ॥ ती किरीट, कुण्डल, केयूर एवं कङ्कण आदि सबै आभूषणहरूले विभूषित रहन्छन्। तिनको घाँटीमा कौस्तुभ मणि अपूर्व आभामय रेशमी पीताम्बर लगाइराख्छन् ॥४८॥ तिनको कम्मरमा कंचनको करधनी र तिनका चरणमा सुनका नूपुर शोभायमान रहन्छन्। तिनको स्वरूप अत्यन्त दर्शनीय, शान्त एवं मन तथा नयनलाई आनन्दित पार्दछन् ॥ ४९ ॥ ती मणिहरू झैं टल्कने नङले सुशोभित एवं भक्तजन द्वारा राम्ररी पूजित आफ्ना चरण-कमलले भक्तका हृदयरूपी सिंहासनमा विराजमान रहन्छन् ॥५०॥ यसरी ती वरदायकहरूमा श्रेष्ठ प्रभुको संयत चित्तले ध्यान गर्दा मनमा ठान्नोस्—ती प्रेमपूर्वक मतिर हेर्दै मन्द-मन्द हाँसिरहेका छन् ॥५१॥ ती भगवान्‌को मङ्गलमयी मूर्तिको यसरी सर्वदा चिन्तन गर्दा-गर्दा मन शीघ्र परमानन्दमा लीन हुन्छ र त्यहाँबाट फेरि कहिल्यै हट्दैन ॥५२॥ हे राजपुत्र ! यस ध्यानको साथसाथै त्यस समय जुन परम गुप्त मन्त्रको जप गर्नुपर्दछ, त्यो पनि भन्दछु। अनवरत सात रातसम्म यस मन्त्रको जप गर्नाले मनुष्य आकाशचारी सिद्धगणहरूलाई देख्न सक्दछ ॥५३॥ त्यो मन्त्र हो—ॐ नमो भगवते

वासुदेवाय ।' देश-काल-विभागका ज्ञाता तथा बुद्धिमान् पुरुषको कर्तव्य हो—त्यो यस मन्त्र द्वारा भगवान्को विविध सामग्रीहरुले पूजा गरोस् ॥ ५४ ॥ साधकको कर्तव्य हो कि त्यो त्यस पवित्र जल, माला, जंगली फल-मूलादि, सुन्दर पत्र, पुष्प तथा भगवान्लाई मनपर्ने तुलसीदल आदि द्वारा ती प्रभुको पूजा गरोस् ॥५५॥ यदि शालिग्राम शिला आदिको मूर्ति सुलभ भए त्यसमा नभए पृथ्वी वा जल आदिमा नै सबै सामग्रीले भगवान्को पूजा गरोस् । साधनको कर्तव्य हो—ऊ संयत-चित्त, मननशील, मौन तथा जङ्गली फल-मूलादिको स्वल्प आहार मात्र गर्ने बनोस् ॥५६॥ ती भगवान् उत्तमश्लोक आफ्नो अचिन्त्य मायालाई स्वीकार गरेर स्वेच्छाले अवतार लिई जुन मनोहर चरित्र गर्दछन्, भक्त तिनको मनभित्रै ध्यान गर्दै रहोस् ॥५७॥ ती भगवान्को पूजाका लागि जुन-जुन उपचारहरूको उपयोग कहिएको छ, तिनलाई मन्त्रमूर्ति भगवान्लाई उपर्युक्त द्वादशाक्षरी मन्त्रद्वारा अर्पण गरोस् ॥५८॥ यसरी मन, वचन एवं शरीरले भक्तिपूर्वक विविध सामग्रीहरूद्वारा मनमा स्थित भगवान्को पूजा गर्नाले भक्ति बढाउने भएका भगवान् निष्कपट भावले राम्ररी भजन गर्ने पुरुषहरूलाई तिनको

सपर्यां विविधैर्द्रव्यैर्देशकालविभागवित् ॥ ५४ ॥ सलिलैः शुचिभिर्माल्यैर्वन्यैर्मूलफलादिभिः ॥ शस्ताङ्कुरांशुकैश्चार्चेत्तुलस्या प्रियया प्रभुम् ॥५५॥ लब्ध्वा द्रव्यमयीमर्चां क्षित्यम्ब्वादिषु वाऽर्चयेत ॥ आभृतात्मा मुनिः शान्तो यतवाङ्मितवन्यभुक् ॥ ५६ ॥ स्वेच्छावतारचरितैरचिन्त्यनिजमायया ॥ करिष्यत्युत्तमश्लोकस्तद्ध्यायेद्धृदयङ्गमम् ॥ ५७ ॥ परिचर्या भगवतो यावत्यः पूर्वसेविताः ॥ ता मन्त्रहृदयेनैव प्रयुञ्ज्यान्मन्त्रमूर्तये ॥ ५८ ॥ एवं कायेन मनसा वचसा च मनोगतम् ॥ परिचर्यमाणो भगवान्भक्तिमत्परिचर्यया ॥ ५९ ॥ पुंसाममायिनां सम्यग्भजतां भाववर्धनः ॥ श्रेयो दिशत्य·

कायेन मनसा वचसा च मनोगतम् ॥ परिचर्यमाणो भगवान्भक्तिमत्परिचर्यया ॥ ५९ ॥ पुंसाममायिनां सम्यग्भजतां भाववर्धनः ॥ श्रेयो दिशत्य·

भिमतं यद्धर्मादिषु देहिनाम् ॥ ६० ॥ विरक्तश्चेन्द्रियरतौ भक्तियोगेन भूयसा ॥ तं निरन्तरभावेन भजेताद्धा विमुक्तये ॥ ६१ ॥ इत्युक्तस्तं परिक्रम्य प्रणम्य च नृपार्भकः ॥ ययौ मधुवनं पुण्यं हरेश्चरणचर्चितम् ॥ ६२ ॥ तपोवनं गते तस्मिन्प्रविष्टोऽन्तःपुरं मुनिः ॥ अर्हितार्हणको राज्ञा सुखासीन उवाच तम् ॥ ६३ ॥ नारद उवाच ॥ राजन्किं ध्यायसे दीर्घं मुखेन परिशुष्यता ॥ किं वा न रिष्यते कामो धर्मो वाऽर्थेन संयुतः ॥ ६४ ॥ राजोवाच ॥ सुतो मे बालको ब्रह्मन् स्त्रैणेनाकरुणात्मना ॥ निर्वासितः पंचवर्षः सह मात्रा महान्कविः ॥ ६५ ॥ अप्यनाथं वने ब्रह्मन्मास्मा·

इच्छानुसार धर्म, अर्थ, काम तथा मोक्षरूपी श्रेय प्रदान गर्दछन् ॥५९-६०॥ अतएव उपासक इन्द्रिय सम्बन्धी भोगहरूको इच्छा त्यागोस् र मोक्ष-प्राप्तिको निम्ति प्रबल भक्तियोग साधन गर्दै सर्वदा अनन्य भावले भगवान्को भजन गरिरहोस् ॥६१॥ यसरी नारदजीले उपदेश दिएपछि राजकुमार ध्रुवले नारदजीको परिक्रमा गरे र उनलाई प्रणाम गरे अनि भगवान्का चरणचिह्नले पवित्र मधुवन गए ॥६२॥ राजपुत्र ध्रुवले तपोवन प्रस्थान गरेपछि नारदजी राजा उत्तानपादको अन्तःपुरमा गए र राजाद्वारा यथायोग्य पूजा पएर सुखपूर्वक आसनमा बसेर राजासित भने—॥६३॥ नारदजी भन्दछन्—हे राजन् ! तिम्रो मुख किन सुकेको र निन्याउरो भयो ? चिन्तामा गाडियौ ? अर्थ सहित धर्म अथवा कामरूपी तिम्रो पुरुषार्थ त नष्ट भएर गएन ? ॥६४॥ राजाले उपछितो मान्दै भने—हे ब्रह्मन् ! म साह्रै नै स्त्रैण एवं निर्दयी छु । हरे ! मैले आफ्नो स्याने बाठो पाँचवर्षको बालकलाई त्यसकी आमासहित घरबाट बाहिर

*दृष्टान्त—(हृदयको परिवर्तन)—बौद्ध सत्संगमण्डली प्रतिदिन नियमले कथा हुन्थे, ईश्वरसम्बन्धी वार्तालाप गर्दथे र भजन गाउँदथे । भजन गर्दथे । त्यही नजीकै एउटा केटाको रेखदेख गरिन्थ्यो । उसको मन त्यसै रंग गुण कथनको अनुसार लेखरदास पनि त्यस सत्संगमण्डलीमा मिसियो । त्यो सबै अनामित भजन गर्न थालेको, तर उसको चित्त पकाव दैनथ्यो, सत्यपारा थियो । भय बोल्ने व्यक्तिलाई नै

निकालि दिएँ ॥ ६५ ॥ हे भगवान् ! थकाईले मलीन अनुहार भएको, भोक-प्यासले आतुर भएर बाटोमा सुतेको त्यस अनाथ बालकलाई वनका जन्तुले त खाएनन् ? ॥६६॥ म स्त्री-
परवश (कामी) को दुष्टता त हेर, त्यो सानो बालक प्रेमले मेरो काखामा बस्न खोजिरहेथ्यो, किन्तु म पापीले त्यसको अलिकति पनि ख्याल राख्न सकिन ॥६७॥ अनि नारदजी भन्न-
लागे–हे राजन् ! तिमी आफ्नो छोराको चिन्ता नगर । त्यसका रक्षक भगवान् छन् । तिमी त्यसको प्रभाव जान्दैनौ । केही समयपछि त्यसको यश सम्पूर्ण संसारमा फैलिने छ ॥६८॥
त्यो वीर बालक लोकपालहरुद्वारा पनि निकै बल्ले गरिने योग्य सान्है ठूलो काम गरेर शीघ्र तिम्रो नजीक फर्केर आउने छ । त्यसैले गर्दा तिम्रो यश पनि संसारमा फैलिने छ ॥६९॥
मैत्रेयजी भन्दछन्—हे विदुर ! देवर्षि नारदको वचन सुनेर महाराज उत्तानपाद राज्यलक्ष्मीको पनि अनादर गरेर सधैंदा आफ्नो छोराको चिन्तामा लीन रहन लागे ॥७०॥ उता ध्रुवले

दन्त्यर्भकं वृकाः ॥ श्रान्तं शयानं क्षुधितं परिम्लानमुखाम्बुजम् ॥ ६६ ॥ अहो मे बत दौरात्म्यं स्त्रीजितस्योपधारय ॥ योऽङ्कं प्रेम्णाऽऽरुरुक्षन्तं
नाभ्यनन्दमसत्तमः ॥ ६७ ॥ नारद उवाच ॥ मा मा शुचः स्वतनयं देवगुप्तं विशाम्पते ॥ तत्प्रभावमविज्ञाय प्रावृङ्क्ते यद्यशो जगत् ॥ ६८ ॥
सुदुष्करं कर्म कृत्वा लोकपालैरपि प्रभुः ॥ एष्यत्यचिरतो राजन्यशो विपुलयंस्तव ॥ ६९ ॥ मैत्रेय उवाच ॥ इति देवर्षिणा प्रोक्तं विश्रुत्य जगती-
पतिः ॥ रालक्ष्मीमनादृत्य पुत्रमेवान्वचिन्तयत् ॥७०॥ तत्राभिषिक्तः प्रयतस्तामुपोष्य विभावरीम् ॥ समाहितः पर्यचरदृष्यादेशेन पूरुषम् ॥ ७१ ॥
त्रिरात्रान्ते त्रिरात्रान्ते कपित्थबदराशनः ॥ आत्मवृत्त्यनुसारेण मासं निन्येऽर्चयन्हरिम् ॥ ७२ ॥ द्वितीयं च तथा मासं षष्ठे षष्ठेऽर्भको दिने ॥
तृणपर्णादिभिः शीर्णैः कृतान्नोऽभ्यर्चयद्विभुम् ॥ ७३ ॥ तृतीयं चानयन्मासं नवमे नवमेऽहनि ॥ अब्भक्ष उत्तमश्लोकमुपाधावत्समाधिना
॥ ७४ ॥ चतुर्थमपि वै मासं द्वादशे द्वादशेऽहनि ॥ वायुभक्षो जितश्वासो ध्यायन्देवमधारयत् ॥ ७५ ॥ पञ्चमे मास्यनुप्राप्ते जितश्वासो नृपात्मजः ॥

मधुवन पुगेर कालिन्दीमा स्नान गरे र त्यस रात मांकै बसेर नारदजीको आदेशानुसार एकाग्र-चित्तले नारायणको उपासनामा लागे ॥ ७१ ॥ बालक ध्रुव पहिलो महीनामा तीन-
तीन दिनमा शरीर निर्वाहको निम्ति मात्र जंगली फल खाएर भगवान्को उपासना गरिरहे ॥ ७२ ॥ दोस्रो महीनामा तिनले छ–छ दिन बिराएर सुकेर वृक्षबाट स्वयं झरेका पात र
तृण आदिको आहार गरी भगवान्को आराधना गर्दै रहे ॥ ७३ ॥ तेस्रो महीना नौ-नौ दिनमा केवल पानी पिएर समाधि-योगद्वारा भगवान्को उपासना गरेर बिताए ॥ ७४ ॥
चौथो महीनामा तिनले श्वासलाई जितिलिए र बाह-बाह दिनपछि केवल वायु पिएर ध्यानयोग द्वारा भगवान्को आराधना गरे ॥ ७५ ॥ पाँचौं महीनामा ध्रुव श्वास

सत्य वस्तु प्राप्त हुन्छ । अतएव लेखनदासले भन्यो— 'मेरो मन भजनमा लाग्दैन ।' मण्डलीका प्रधानले भने—'तिम्रो हृदयमा कुनै पाप होला नभए भन्यो हुने थिएन ।' उसले भन्यो—'हो, मैले सेठको दुइ हजार रुपियाँ चोरेँ । यो कुरा कसैलाई पनि थाहा छैन । तर आज म रुपियाँ फर्काइदिन्छु ।' रुपियाँ फर्काइदिएपछि उसले भन्यो—'अब भजनमा अलि-अलि मन लाग्दछ । तर पूर्णरूपले लाग्दैन ।' अनि प्रधानले भने—'तिमीले पापको निमित्त क्षमा मागेन होलाउ ।' उसले भन्यो—'म क्षमा कसरी मागौं । सेठको सामुन्ने म सज्जनमा गनिएको छु । तो रुपियाँ मैले यसै जमा गरिदिएको छु । सेठलाई यो कुरा थाहा भयो भने मेरो इज्जत तीन कौडाको हुनेछ ।' प्रधानले भने—'प्रिय मित्र ! लौकिक प्रतिष्ठाका लागि हृदयमा पापरूपी सर्पलाई बसालि राख्नु उचित होइन । हिंड म तिमीसित जान्छु ।' अब ती दुवै सेठकहाँ गए । लेखनदासले सेठसित क्षमा माग्यो । सबै कुरा सुनि सेठलाई ठूलो विस्मय भयो । पछि लेखनदासको सच्चाइले प्रसन्न भएर सेठ उसको अंकमाल गर्नलाग्यो र भित्री मनले क्षमा गरिदियो ।

रोकेर एकमात्र परब्रह्मको चिन्तन गर्दै त्यो झैं निश्चल भएर यहाँ खुट्टाको भरमा रहेर भगवान्को आराधना गरे ॥ ७६ ॥ त्यस बखत ध्रुव आफ्नो चित्त सर्वतिरबाट हटाएर मनमनै सबै तत्त्व र इन्द्रियहरुका आश्रयस्थल श्रीहरिको स्वरुप नै ध्यान गर्न लागे । अतः तिनलाई भगवान् बाहेक अरु केही पनि देखिरहेको थिएन ॥ ७७ ॥ यसरी ध्रुवले महदादि सबै तत्त्वका आधार तथा प्रकृति र पुरुषका पनि अधीश्वर परब्रह्मलाई आफ्नो हृदयमा बसालेपछि तीनै लोक कम्पित हुन लाग्यो ॥ ७८ ॥ जब ती आफ्नो यौटै खुट्टाले उभिए तब तिनको बूढी औंलाले थिचिएर आधा पृथ्वी त्यसै गरी बाङ्गो भइन्, जसरी हात्ती चढेपछि डुङ्गा धरि दायाँ र धरि बायाँ र धरि बायाँ हल्लिरहन्छ ॥७९॥ ध्रुवजी आफ्ना इन्द्रियद्वार प्राणलाई रोकेर अनन्य बुद्धिले विश्वात्मा भगवान्को चिन्तन गरिरहेका थिए । त्यसले सबै जीवको श्वास प्रश्वास अडियो । तब लोकपाल सहित सबै जीव अतिशय पीडित भएर विष्णु भगवान्को शरणमा पुगे ॥ ८० ॥ देवताहरुले भने—हे भगवन् ! सबै लोकका निवासी समस्त चराचर प्राणिहरुको श्वास-प्रश्वास अडियो—यसको के कारण हो, त्यो हामीहरुले

ध्यायन्ब्रह्म पदैकेन तस्थौ स्थाणुरिवाचलः ॥ ७६ ॥ सर्वतो मन आकृष्य हृदि भूतेन्द्रियाशयम् ॥ ध्यायन्भगवतो रूपं नाद्राक्षीत्किञ्चनापरम् ॥७७॥ आधारं महदादीनां प्रधानपुरुषेश्वरम् ॥ ब्रह्म धारयमाणस्य त्रयो लोकाश्चकम्पिरे ॥ ७८ ॥ यदैकपादेन स पार्थिवार्भकस्तस्थौ तदङ्गुष्ठनिपीडिता मही ॥ ननाम तत्रार्धमिभेन्द्रधिष्ठिता तरीव सव्येतरतः पदे पदे ॥ ७९ ॥ तस्मिन्नभिध्यायति विश्वमात्मनो द्वारं निरुध्यासुमनन्यया धिया ॥ लोका निरुच्छ्वासनिपीडिता भृशं सलोकपालाः शरणं ययुर्हरिम् ॥ ८० ॥ देवा ऊचुः ॥ नैवं विदामो भगवन्प्राणरोधं चराचरस्याखिलसत्त्वधाम्नः ॥ विधेहि तन्नो वृजिनाद्विमोक्षं प्राप्ता वयं त्वां शरणं शरण्यम् ॥ ८१ ॥ श्रीभगवानुवाच ॥ मा भैष्ट बालं तपसो दुरत्ययान्निवर्तयिष्ये प्रतियात स्वधाम ॥ यतो हि वः प्राणनिरोध आसीदौत्तानपादिर्मयि संगतात्मा ॥ ८२ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे ध्रुवचरितेऽष्टमोऽध्यायः ॥ ८ ॥ मैत्रेय उवाच ॥ त एवमुत्सन्नभया उरुक्रमे कृतावनामाः प्रययुस्त्रिविष्टपम् ॥ सहस्रशीर्षापि ततो गरुत्मता मधोर्वनं भृत्य दिदृक्षया गतः ॥ १ ॥ स वै धिया योगविपाकतीव्रया हृत्पद्मकोशे स्फुरितं तडित्प्रभम् ॥ तिरोहितं सहसैवोपलक्ष्य बहिः स्थितं तदवस्थं ददर्श ॥ २ ॥

बुझ्न सकेनौं । हजुर शरणागतहरुका रक्षक हुनुहुन्छ, अतः आफ्नो शरणमा आएका हामीलाई यस महासङ्कटबाट छिटो बचाउनुहवस् ॥ ८१ ॥ भगवान् भन्नुहुन्छ—हे देवगण ! नडराओ । राजा उत्तानपादको छोरो ध्रुवले आफ्नो चित्त ममा लीन गरिदियो, त्यसैले उ बालकको प्राणनिरोधले समस्त विश्वको श्वास अडिएको हो । तिमीहरु आफ्नाआफ्ना लोकमा जाओ । म त्यस बालकलाई अहिल्यै त्यो दुष्कर तपस्याबाट निवृत्त पारिदिन्छु ॥८२॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां अष्टमोऽध्यायः ॥८॥ (ध्रुवले भगवान्बाट वर पाएर घर फर्कनु) मैत्रेय भन्दछन्—हे विदुर ! भगवान्ले त्यसरी भनेपछि निर्भय भएर सबै देवता उनलाई प्रणाम गरेर स्वर्गलोक फर्के । तब सहस्रशीर्ष भगवान् पनि गरुडमा आरुढ भई आफ्ना भक्तलाई हेर्नको निम्ति मधुवनतिर हिड्नु भयो॥१॥ध्रुव तीव्र योगाभ्यास द्वारा एकाग्र पारिएको बुद्धिले आफ्नो हृदयरुपी कमलकोशमा भगवान्को जुन विद्युत् झैं देदीप्यमान मूर्तिको ध्यान गरिरहेका थिए, त्यसलाई सहसा हराएको देखेर ती आत्तिए र तुरुन्त आँखा उघारे, तब श्रीहरि रुपमा तिनको सामुन्ने उभिएका देखिए ॥२॥ प्रभुको दर्शनले आश्चर्यमा परेका

बालकले लट्ठी झैं पृथ्वीमा परेर प्रणाम गरे—मानो ती नेत्रले पिउछन्, मुखले चुम्बन गर्छन् तथा भुजाहरूले अँगालो हाल्छन्—यस प्रकार प्रेमपूर्ण दृष्टिले भगवानतिर हेर्न लागे ॥३॥ बालक ध्रुव प्रशंसित केही भन्न खोज्दै थिए, तर कसरी भनौं र के भनौं—यो ज्ञान भइरहेको थिएन। सर्वान्तर्यामी भगवान्ले तिनका मनको कुरा जान्नुभयो र उहाँले ठूलो दया कृपाका साथ आफ्नो वेदमय शङ्खले दुवै हात जोडेर उभिएका ध्रुवको गालामा छोइदिनु भयो ॥३॥ त्यो शङ्खको स्पर्श हुनासाथ उनलाई दिव्यवाणी प्राप्त भयो, साथै उनलाई जीवात्मा र परमात्माको स्वरूप निश्चितरूपले ज्ञात भयो र जसलाई भविष्यमा ध्रुवपद प्राप्त हुने भएको थियो, ती ध्रुव जसको पवित्र यश सर्वत्र प्रख्यात छ, ती श्रीहरिको ठूलो भक्तिभावले स्तुति गर्न लागे ॥५॥ उनले भने—जुन सर्वशक्तिसम्पन्न भगवान् मेरो हृदयमा प्रविष्ट भएर आफ्नो तेजले मेरो निदाएकी वाणीलाई सजीव पारेर, चरण, कर्ण एवं त्वचा आदि अन्यान्य इन्द्रिय र प्राणहरूलाई पनि चेतना प्रदान गर्दछन् ती हजुर परम पुरुषलाई प्रणाम छ ॥ ६ ॥ हे भगवन् ! हजुर एक्लै आफ्नो गुणमयी माया शक्ति द्वारा महदादि सम्पूर्ण जगत्लाई

तद्दर्शनेनागतसाध्वसः क्षिताववन्दताङ्गं विनमय्य दण्डवत् ॥ दृग्भ्यां प्रपश्यन्प्रपिबन्निवार्भकश्चुम्बन्निवास्येन भुजैरिवाश्लिषन् ॥ ३ ॥ स तं
विवक्षन्तमतद्विदं हरिर्ज्ञात्वाऽस्य सर्वस्य च हृद्यवस्थितः ॥ कृताञ्जलिं ब्रह्ममयेन कम्बुना पस्पर्श बालं कृपया कपोले ॥ ४ ॥ स वै तदैव प्रतिपा-
दितां गिरं दैवीं परिज्ञातपरात्मनिर्णयः ॥ तं भक्तिभावोऽभ्यगृणादसत्वरं परिश्रुतोरुश्रवणं ध्रुवक्षितिः ॥ ५ ॥ ध्रुव उवाच ॥ योऽन्तः प्रविश्य मम
वाचमिमां प्रसुप्तां सञ्जीवयत्यखिलशक्तिधरः स्वधाम्ना ॥ अन्यांश्च हस्तचरणश्रवणत्वगादीन्प्राणान्नमो भगवते पुरुषाय तुभ्यम् ॥ ६ ॥ एकस्त्वमेव
भगवन्निदमात्मशक्त्या मायाख्ययोरुगुणया महदाद्यशेषम् ॥ सृष्ट्वाऽनुविश्य पुरुषस्तदसद्गुणेषु नानेव दारुषु विभावसुवद्विभासि ॥ ७ ॥ त्वद्दत्तया
वयुन दमचष्ट विश्वं सुप्तप्रबुद्ध इव नाथ भवत्पन्नः ॥ तस्यापवर्ग्यशरणं तव पादमूलं विस्मर्यते कृतविदा कथमार्तबन्धो ॥ ८ ॥ नूनं विमुष्टमत-
यस्तव मायया ते ये त्वां भवाप्ययविमोक्षणमन्यहेतोः ॥ अर्चन्ति कल्पकतरुं कुणपोपभोग्यमिच्छन्ति यत्स्पर्शजं निरयेऽपि नृणाम् ॥ ९ ॥ या
निर्वृतिस्तनुभृतां तव पादपद्मध्यानाद्भवज्जनकथाश्रवणेन वा स्यात् ॥ सा ब्रह्मणि स्वमहिमन्यपि नाथ माभूत्किंत्वन्तकासिलुलितात्पततां विमा-

रचेर त्यसका इन्द्रिय आदि असत् गुणहरूमा जीवरूपले प्रविष्ट भएर यद्यपि एक भए पनि अनेक झैं देखिनु हुन्छ। जस्तै—अनेक थरिका काठमा प्रविष्ट अग्नि आफ्ना उपाधिहरूको अनुसार भिन्न रूपमा भासमान हुन्छ ॥ ७ ॥ हे नाथ ! ब्रह्माजीले पनि हजुरको शरणमा गएर हजुरले दिएका ज्ञानको प्रभावले नै जगत्लाई सुतेर उठे झैं देखेका थिए। हे दीनबन्धो ! मुक्त पुरुषहरूका पनि आश्रय पाउने योग्य हजुरका चरणलाई कुनै कृतज्ञ पुरुष कसरी बिर्सन सक्तछ ? ॥८॥ जसको संसर्ग द्वारा प्राप्त हुने सुख नरकतुल्य योनिमा पनि प्राप्त सकिन्छ, ती शवसदृश शरीरले भोगिने योग्य विषयहरूको जुन पुरुष इच्छा गर्दछन् र जो जन्म-मरणरूपी संसारबाट मुक्त पार्ने कल्पवृक्षरूपी हजुरको, मोक्ष बाहेक अन्य कुनै लाभले उपासना गर्दछन्, अवश्य नै तिनको बुद्धिलाई हजुरको मायाले हरेको छन् ॥९॥ हजुरका चरणको ध्यान गर्न अथवा हजुरका भक्तजनको कथा सुन्नाले प्राणिहरूलाई जुन आनन्द प्राप्त हुन्छ, त्यो आनन्द

स्वरूपभूत परब्रह्ममा पनि पाउन सकिन्न । फेरि जसलाई कालको तरवारले खण्डित पारिदिन्छ— ती स्वर्गका विमानबाट झरेका पुरुषलाई त्यो कसरी प्राप्त होला ? ॥ १० ॥ अतएव हे अनन्त ! हजुरमा सर्वदा भक्तिभाव राख्ने शुद्धचित्त महापुरुषसित मेरो बराबर समागम होस् जसद्वारा म हजुरका गुणरूपी कथामृत पिउनाले उन्मत्त भएर उग्र तथा विविध प्रकारका कष्टले परिपूर्ण यस संसार-सागरलाई सजिलै तर्न सकूँ। हे कमलनाभ ! हजुरका चरणकमलमा जसको मन संलग्न छ, ती महापुरुषसित ज्यो व्यक्ति सत्सङ्ग गर्दछन् हे ईश ! ती आफ्नो परमप्रिय शरीर तथा यसका सम्बन्धी स्त्री-पुत्र, घर आदिको सम्झना पनि गर्न पाउन्नन् ॥११-१२॥ हे अज ! पशु-पक्षि आदि तिर्यक् योनि पर्वत, चरा र सर्प, दैत्य, देवता तथा मनुष्य आदिले परिपूर्ण एवं महत्तत्त्वादि कार्य-कारणले युक्त हजुरको यस स्थूल शरीरलाई नै म जान्दछु। जुन सम्म वाणको गति पनि छैन, हजुरको त्यो स्वरूपलाई मैले जान्न सकेको छैन ॥ १३ ॥ हे नाथ ! कल्पान्तको समयमा जुन शेषजीका सखा, स्वयं प्रकाश तथा परम पुरुष भगवान् सम्पूर्ण संसारलाई आफ्नो उदरमा लीन गरेर

नात् ॥१०॥ भक्तिं मुहुः प्रवहतां त्वयि मे प्रसङ्गो भूयादनन्त महताममलाशयानाम् ॥ येनाञ्जसोल्बणमुरुव्यसनं भवाब्धिं नेष्ये भवद्गुणकथामृतपा-
नमत्तः ॥११॥ ते न स्मरन्त्यतितरां प्रियमीश मर्त्यं ये चान्वदः सुतसुहृद्गृहवित्तदाराः ॥ ये त्वब्जनाभ भवदीयपदारविन्दसौगन्ध्यलुब्धहृदयेषु
कृतप्रसङ्गाः ॥१२॥ तिर्यङ्नगद्विजसरीसृपदेवदैत्यमर्त्यादिभिः परिचितं सदसद्विशेषम् ॥ रूपं स्थविष्ठमज ते महदाद्यनेकं नातः परम वेद्मि न यत्र
वादः ॥१३॥ कल्पान्त एतदखिलं जठरेण गृहन् शेते पुमान् स्वदृगनन्तसखस्तदङ्के ॥ यन्नाभिसिन्धुरुहकाञ्चनलोकपद्मगर्भे द्युमान्भगवते प्रणतोऽस्मि
तस्मै ॥ १४ ॥ त्वं नित्यमुक्तपरिशुद्धविबुद्ध आत्मा कूटस्थ आदिपुरुषो भगवांस्त्र्यधीशः ॥ यद्बुद्ध्यवस्थितमखण्डितया स्वदृष्ट्या द्रष्टा स्थिताव-
धिमखो व्यतिरिक्त आस्से ॥१५॥ यस्मिन्विरुद्धगतयो ह्यनिशं पतन्ति विद्यादयो विविधशक्तय आनुपूर्व्यात् ॥ तद्ब्रह्म विश्वभवमेकमनन्तमाद्यमान-
न्दमात्रमविकारमहं प्रपद्ये ॥१६॥ सत्याशिषो हि भगवंस्तव पादपद्ममाशीस्तथाऽनुभजतः पुरुषार्थमूर्तेः ॥ अप्येवमार्य भगवान्परिपाति दीनान्वाश्रेव
वत्सकमनुग्रहकातरोऽस्मान् ॥ १७ ॥ मैत्रेय उवाच ॥ अथाभिष्टुत एवं वै सत्सङ्कल्पेन धीमता ॥ भृत्यानुरक्तो भगवा प्रतिनन्द्येदमब्रवीत् ॥ १८ ॥

शेष-शय्यामा सुत्छन्, तथा जसको नाभि-सिन्धुबाट उत्पन्न सबै लोकका उत्पत्ति-स्थानस्वरूप सुवर्णमय कमलबाट तेजस्वी ब्रह्माजी उत्पन्न भएका थिए, तिनै हजुर परमेश्वरलाई म नमस्कार गर्दछु ॥१४॥ हे प्रभो ! हजुर जीवात्माबाट भिन्न अर्थात् सबै पुरुषहरूमा उत्तम हुनुहुन्छ किनकि हजुर नित्यमुक्त, नित्यशुद्ध, चेतन, आत्मा, निर्विकार, आदिपुरुष, षडैश्वर्य सम्पन्न तथा तीनै लोकका अधिपति हुनुहुन्छ र आफ्नो दृष्टिले बुद्धिका अवस्थाहरूले देख्नुहुन्छ। संसारको स्थितिका लागि नै हजुर यज्ञपुरुष श्रीविष्णु भगवान्को रूपमा विराजमान हुनुहुन्छ ॥ १५ ॥ जसबाट विद्या तथा अविद्या आदि विरुद्ध गतिहरूले युक्त अनेक शक्तिहरू क्रमशः हुँदै रहन्छन्, म विश्वलाई उत्पन्न गर्ने ती एक आद्य, आनन्दमात्र तथा निर्विकार परब्रह्मको शरणमा छु ॥१६॥ हे भगवन् ! जो पुरुषार्थका मूर्ति हुनेर ( ठानेर ) निष्कामभावले सदासर्वदा हजुरको भजन गर्ने गर्दछन् ती भक्तजनको निम्ति राज्यादि भोगको अपेक्षा पुरुषार्थस्वरूप हजुरका चरण-कमलको प्राप्ति हुनु नै वास्तविक फल हो। यद्यपि यही उचित छ तथापि गाई जस्तै आफ्नो तत्काल जन्मेको बाछोलाई दूध पिलाउँछे र व्याघ्रादि

बाट रक्षा गर्दछौ, त्यस्तै भक्तजनमा अनुग्रह गर्नका निम्ति गर्भ विकल रहने भएका हजुर हामीजस्ता सकाम भक्तका पनि मनोकामना पूर्ण पारेर उनलाई संसार-सागरबाट पारी तार्नुहुन्छ ॥१७॥ मैत्रेयजी भन्दछन्–हे विदुर ! शुभ-सङ्कल्प तथा बुद्धिमान ध्रुवले यसरी स्तुति गरेपछि भक्तवत्सल भगवान् तिनको प्रशंसा गर्दै यस प्रकार बोल्नुभयो ॥१८॥ श्रीभगवान्ले भन्नुभयो– हे राजकुमार ! तिम्रो जे इच्छा छ, त्यो म जान्दछु । हे सुव्रत ! म तिमीलाई त्यो सर्वोच्च पद दिन्छु, जुन पाउन धेरै कठिन छ । तिम्रो कल्याण होस् ॥१९॥ हे कल्याण-स्वरूप ! जुन तेजोमय ध्रुवलोक आजसम्म कसैले पनि प्राप्त गरेको छैन तथा जसमा ग्रह, नक्षत्र र तारागणरूप ज्योतिश्चक्र विद्यमान छ ॥ २० ॥ जो कल्पान्तसम्म रहिरहने लोकभन्दा माथि रहने र कोल्हुको चारैतिर घुमिरहने गोरुको समान नक्षत्र, धर्म, अग्नि, कश्यप तथा शुक्र आदि वनवासी मुनिजन जसको प्रदक्षिणा गर्दै घुमि नै रहन्छन्, त्यो ध्रुवलोक म तिमीलाई दिन्छु ॥२१॥ यस लोकमा पनि तिमीलाई राज्य दिएपछि जब तिम्रा पिता वनमा जानेछन् तब तिमी छत्तीस हजार वर्षसम्म इन्द्रियशक्तिको ह्रास नभई

श्रीभगवानुवाच ॥ वेदाहं ते व्यवसितं हृदि राजन्यबालक ॥ तत्प्रयच्छामि भद्रं ते दुरापमपि सुव्रत ॥ १९ ॥ नान्यैरधिष्ठितं भद्र यद्भ्राजिष्णु ध्रुवक्षिति ॥ यत्र ग्रहर्क्षताराणां ज्योतिषां चक्रमाहितम् ॥ २० ॥ मेढ्यां गोचक्रवत्स्थास्नु परस्तात्कल्पवासिनाम् ॥ धर्मोऽग्निः कश्यपः शुक्रो मुनयो ये वनौकसः ॥ चरन्ति दक्षिणीकृत्य भ्रमन्तो यत्सतारकाः ॥ २१ ॥ प्रस्थिते तु वनं पित्रा दत्त्वा गां धर्मसंश्रयः ॥ षट्त्रिंशद्वर्षसाहस्रं रक्षिताऽव्याहतेन्द्रियः ॥ २२ ॥ त्वद्भ्रातर्युत्तमे नष्टे मृगयायां तु तन्मनाः ॥ अन्वेषन्ती वनं माता दावाग्निं सा प्रवेक्ष्यति ॥२३॥ इष्ट्वा मां यज्ञहृदयं यज्ञैः पुष्कलदक्षिणैः ॥ भुक्त्वा चेहाशिषः सत्या अन्ते मां संस्मरिष्यसि ॥ २४ ॥ ततो गन्तासि मत्स्थानं सर्वलोकनमस्कृतम् ॥ उपरिष्टादृषिभ्यस्त्वं यतो नावर्तते गतः ॥२५॥ मैत्रेय उवाच ॥ इत्यर्चितः स भगवानतिदिश्यात्मनः पदम् ॥ बालस्य पश्यतो धाम स्वमगाद्गरुडध्वजः ॥२६॥ सोऽपि सङ्कल्पजं विष्णोः पादसेवोपसादितम् ॥ प्राप्य सङ्कल्पनिर्वाणं नातिप्रीतोऽभ्यगात्पुरम् ॥ २७ ॥ विदुर उवाच ॥ सुदुर्लभं यत्परमं पदं हरेर्मायाविनस्तच्चरणार्चनार्जितम् ॥ लब्ध्वाऽप्यसिद्धार्थमिवैकजन्मना कथं स्वमात्मानममन्यतार्थवित् ॥ २८ ॥ मैत्रेय उवाच ॥ मातुः सपत्न्या वाग्बा

धर्ममा स्थित रहेर पृथ्वीको राज्य गर्नेछौ॥२२॥ अब तिम्रो दाजु उत्तम शिकारको प्रसङ्गमा मारिने छन्, अनि तिनकी आमा सुरुचि पुत्र-स्नेहले बौलाही भएर छोरालाई खोज्दै दावानलमा डढेर मर्नेछन् ॥ २३ ॥ तिमी धेरै-धेरै दक्षिणा दिइने अनेकौं यज्ञद्वारा म यज्ञमूर्तिको यजन गरेर यस लोकमा नाना प्रकारका उत्तम भोग भोगेर वृद्धावस्थामा मेरो स्मरण गर्नेछौ ॥२४॥ अनि तिमी सबै लोकहरूमा वन्दनीय तथा सप्तर्षि लोकभन्दा पनि माथि मेरो निज धाममा प्राप्त हुनेछौ जहाँ पुगेपछि प्राणीलाई फेरि संसारमा फर्कनु पर्दैन । मैत्रेयजी भन्दछन्– यस प्रकार ध्रुवद्वारा पूजित गरुडध्वज भगवान् आफ्नो पद दिएर ती बालकले हेर्दाहेर्दै आफ्नो लोकमा फर्केर गए ॥ २५-२६ ॥ यता ध्रुव पनि भगवानका चरण-सेवाद्वारा आफ्ना सङ्कल्प पूर्तिको वरदान पाएर आफ्नो नगरमा फर्केर आए, किन्तु त्यस बेला तिनको चित्त बर्ता प्रसन्न थिएन ॥२७॥ यति कथा सुनेर विदुरले सोधे–हे ब्रह्मन् ! मायापति भगवानको जुन परमपद अत्यन्त दुर्लभ छ, जुन उनको चरण-कमलको उपासनाले नै प्राप्त हुन सक्छ, त्यस पदलाई पहिलै जन्ममा प्राप्त गरेर पनि पुरुषार्थको तत्त्वलाई जान्ने ध्रुवका

ध्रुवले आफुलाई अकृतार्थ किन ठाने ? ॥२८॥ मैत्रेयजी भन्दछन्—आफ्ना सौतेनी आमाका वाग्बाणले विद्ध भएर ध्रुवले त्यही कुराको स्मरण गर्दै मुक्तिदाता श्रीहरिसित मुक्तिको वरदान मागेनन् । पछि यसको निम्ति उनलाई ठूलो सन्ताप भयो ॥२९॥ उनले विचार गरे—अहो ! जुन पदको ब्रह्मचर्य-व्रतधारी सनन्दनादि ऋषिगण अनेक जन्ममा प्राप्त गर्न सक्दैन, उनै भगवच्चरणको छायालाई मैले केवल छः महीनामै प्राप्त गरें, किन्तु भेद-बुद्धिले गर्दा मैले भगवानका चरणबाट टाढा रहनु पर्ने भयो ॥३०॥ अहो ! म मन्द-भाग्य हुने मेरो मूर्खता त हेर, मैले संसार-पाशलाई छिनाल्ने भगवानको चरण-कमलमा पुगेर पनि नाशवान् पदार्थ नै मागें ॥ ३१ ॥ स्वर्ग भोगपछि त्यो भन्दा नीच गति पाउने देवताहरूले मेरो भगवद् प्राप्ति रूपिणी उच्च स्थितिलाई सहन नसकेर मेरो बुद्धि भ्रष्ट पारिदिए, त्यसै कारण म मूर्खले नारदका ती वाक्यहरूको—अहिले तिमी रानै छौ, मलाई तिम्रो मानापमान हुने कारण देखिरहेको छैन, विश्वास मानिन ॥ ३२॥ जस्तो निद्राको मानिस सपनामा आफैले कल्पित सर्प व्याघ्रादि देखि डराउँछ त्यस्तै आत्मा बाहेक कुनै अन्य

णैर्हृदि विद्धस्तु तान्स्मरन् ॥ नैच्छन्मुक्तिपतेर्मुक्तिं तस्मात्तापमुपेयिवान् ॥ २९ ॥ ध्रुव उवाच ॥ समाधिना नैकभवेन यत्पदं विदुः सनन्दादय ऊर्ध्वरेतसः ॥ मासैरहं षड्भिरमुष्य पादयोश्छायामुपेत्यापगतः पृथङ्मतिः ॥ ३० ॥ अहो बत ममानात्म्यं मन्दभाग्यस्य पश्यत ॥ भवच्छिद पादमूलं गत्वा याचे यदन्तवत् ॥ ३१ ॥ मतिर्विदूषिता देवैः पतद्भिरसहिष्णुभिः ॥ यो नारदवचस्तथ्यं नाग्राहिषमसत्तमः ॥ ३२ ॥ दैवीं मायामुपाश्रित्य प्रसुप्त इव भिन्नदृक् ॥ तप्ये द्वितीयेऽप्यसति भ्रातृभ्रातृव्यहृद्रुजा ॥ ३३ ॥ मयैतत्प्रार्थितं व्यर्थं चिकित्सेव गतायुषि ॥ प्रसाद्य जगदात्मानं तपसा दुष्प्रसादनम् ॥ भवच्छिदमयाचेऽहं भवं भाग्यविवर्जितः ॥ ३४ ॥ स्वाराज्यं यच्छतो मौढ्यान्मानो मे भिक्षितो बत ॥ ईश्वरात्क्षीणपुण्येन फलीकारानिवाधनः ॥ ३५ ॥ मैत्रेय उवाच ॥ न वै मुकुन्दस्य पदारविन्दयो रजोजुषस्तात भवादृशा जनाः ॥ वाञ्छन्ति तद्दास्यमृतेऽर्थमात्मनो यदृच्छया लब्धमनःसमृद्धयः ॥३६॥ आकर्ण्यात्मजमायान्तं सम्परेत्य यथागतम् ॥ राजा न श्रद्दधे भद्रमभद्रस्य कुतो मम ॥३७॥ श्रद्धाय वाक्यं देवर्षेर्हर्षवेगेन धर्षितः ॥ वार्ताहर्तुरतिप्रीतो हारं प्रादान्महाधनम् ॥ ३८ ॥ सदश्वं रथमारुह्य कार्तस्वरपरिष्कृतम् ॥ ब्राह्मणैः कुलवृद्धैश्च पर्यस्तोऽमात्यब-

पदार्थ नभए पनि भगवान्‌की मायाले मोहित र भेद-बुद्धि भएको म आफ्नो दाईलाई नै शत्रु मानेर ईर्षारूपी हार्दिक रोगले सन्ताप अनुभव गर्दछु । ३३ । जो ठूलो कष्टले प्रसन्न हुन्छन्, संसार-पाशलाई काट्ने ती विश्वात्मा श्रीहरिलाई प्रसन्न पारेर पनि जस्तै कोही मरणासन्न प्राणी औषधि माग्दछ, त्यस्तै म अभागीले संसार नै मागें ॥ ३४ ॥ जस्तै कोही निर्धन व्यक्ति सार्व भौम राजालाई खुशी पारेर त्यो सित चामलको कनिका मागोस् त्यस्तै म क्षीण-पुण्यले परमानन्ददायक भगवान्‌सित सुखेच्छावश केवल सम्मान मागें ॥३५॥ मैत्रेय भन्दछन्—हे तात ! भगवान् कृष्णको चरण-रजका सेवक र स्वयं प्राप्त भएको वस्तुले नै मनलाई सन्तुष्ट राख्ने तिमी जस्ता मानिस भगवानसित उनको दासत्व बाहेक अरू केही पनि माग्दैनन् ॥३६॥ उता उत्तानपादले कुनै मरिसकेको व्यक्ति फर्केर आए झैं अब छोराको समाचार सुने तब यो विचार गरेर-म भाग्यहीनको यस्तो भाग्य कहाँ हुनु ? तिनलाई विश्वास नै भइरहेको थिएन ॥ ३७ ॥ तर देवर्षि नारदको वचन सम्झना साथ विश्वास भयो र उनले अपार हर्षले विह्वल भएर त्यो समाचार सुनाउन आउने व्यक्तिलाई

यौटा मूल्यवान् हार उपहारमा दिए ॥३८॥ पुत्रको मुख देर्नको निम्ति उत्कण्ठित भएर राजा उत्तानपाद ब्राह्मणहरू,आफ्नू कुलका बूढा-पाका, मन्त्रिमण्डल र बन्धुहरूले चारैतिर घेरिएर एक सुवर्णमण्डित रथमा आरूढ भई वेदध्वनि र शङ्ख, दुन्दुभी आदि बाजाहरूका साथै छिटो-छिटो नगरबाट बाहिर निस्के ॥३९॥४०॥ राजा उत्तानपादकी रानीहरू सुनीति र सुरुचि उत्तमलाई साथमा लिएर सुवर्णका गहनाहरूले सुसज्जित भई पालकीमा चढेर हिंडे ॥ ४१ ॥ ध्रुवलाई राजोद्यानको नजीकै देखेर महाराज उत्तानपाद तत्काल रथबाट ओर्ले र धेरै दिनदेखि भेट्न उत्कण्ठित रहनाको कारण छोरोको नजीक पुगेर लामो सास छाड्दै श्रीहरिको चरण-स्पर्शले जसका सबै पाप नष्ट भइसकेका छन्, ती ध्रुवजीलाई प्रेमातुर भावले दुवै बाहुमा अंगाल्दै छातीमा टाँसे ॥ ४२ ॥ ४३ ॥ यस प्रकार राजा उत्तानपादको यौटा ठूलो कामना पूर्ण भयो । तिनले बारम्बार ध्रुवको सिर सुँघे र प्रेमातिरेकले गर्दा

न्धुभिः ॥ ३९ ॥ शंखदुन्दुभिनादेन ब्रह्मघोषेण वेणुभिः ॥ निश्चक्राम पुरात्तूर्णमात्मजाभीक्षणोत्सुकः ॥ ४० ॥ सुनीतिः सुरुचिश्चास्य महिष्यौ रुक्मभूषिते ॥ आरुह्य शिबिकां सार्धमुत्तमेनाभिजग्मतुः ॥ ४१ ॥ तं दृष्ट्वोपवनाभ्याश आयान्तं तरसा रथात् ॥ अवरुह्य नृपस्तूर्णमासाद्य प्रेमविह्वलः ॥ ४२ ॥ परिरेभेऽङ्गजं दोर्भ्यां दीर्घोत्कण्ठमनाः श्वसन् ॥ विष्वक्सेनांघ्रिसंस्पर्शहताशेषाघबन्धनम् ॥ ४३ ॥ अथाजिघ्रन्मुहुर्मूर्ध्नि शीतैर्नयनवारिभिः ॥ स्नापयामास तनयं जातोद्दाममनोरथः ॥ ४४ ॥ अभिवन्द्य पितुः पादावाशीर्भिश्चाभिमन्त्रितः ॥ ननाम मातरौ शीर्ष्णा सत्कृतः सज्जनाग्रणीः ॥ ४५ ॥ सुरुचिस्तं समुत्थाप्य पादावनतमर्भकम् ॥ परिष्वज्याह जीवेति बाष्पगद्गदया गिरा ॥ ४६ ॥ यस्य प्रसन्नो भगवान्गुणैर्मैत्र्यादिभिर्हरिः ॥ तस्मै नमन्ति भूतानि निम्नमाप इव स्वयम् ॥ ४७ ॥ उत्तमश्च ध्रुवश्चोभावन्योन्यं प्रेमविह्वलौ ॥ अङ्गसङ्गादुत्पुलकावस्रौघं

बालक ध्रुवलाई आफ्नो चीसो आँसुले रुझाइदिए ॥४४॥ ⊕साधु र सज्जनहरूका अग्रणी ध्रुवजीले आफ्ना पिताका चरणको वन्दना गरे र आशीर्वाद पाए। कुशल प्रश्नादिले सम्मानित भएपछि उनले दुवै आमालाई मस्तक निहुराएर प्रणाम गरे ॥ ४५ ॥ ४६ ॥ सुरुचिले आफ्नो पाउमा निहुरेका बालक ध्रुवलाई उठाएर हृदयमा टाँसिन् र गद्गद्-वाणीद्वारा 'चिरञ्जीवी भए' भनेर आशीर्वाद दिइन् । जस्तै जल स्वतः भिरालोतिर बग्दछ, त्यसै गरी मैत्री आदि गुणहरूले गर्दा जसमाथि भगवान् प्रसन्न हुन्छन्, त्यसको अघिल्तिर

⊕ उदाहरण ( साधुको परीक्षा )—यौटा भक्तले एक जना महात्मालाई आफ्नो घर भोजन गर्न निम्ता दिए। खाने बेला भएपछि तिनलाई स्वयं डाक्न गयो। घर फर्कंदा बाटोमै उसले भन्यो—'बाबाजी! ऊः सामुन्ने हाम्रो घर देखिंदैछ। हजुर अघि गर्नुहोस्, तबसम्म म यौटा काम गरेर आउँछु।' महात्मा त्यसको घर गए। घरमा त्यसकी स्त्रीले भनी—तिमी जस्ता हजारौं लठुवा बेकाममा डुलिरहन्छन्। जाऊ, अहिले बेला भएको छैन।' महात्मा प्रसन्न मनले फर्केर आए। बाटैमा त्यो भक्त भेटियो। उसले भन्यो—'बाबाजी! त्यसले हजुरलाई चिन्ह सकिन! हिड्नोस् मसाथै आउनु।' महात्माजी फेरि खोलिन गए। घर पुगेपछि साधु भरेर फसरयो। त्यसै बखत स्त्रीले आएर हप्काई—'तिमीलाई अलिकति पनि लाज लागेन! साधु हुनासाथ नाक-कान पनि काटिदियो! गृहस्थीहरूको करतो स्थति हुन्छ, त्यसको पनि तिमीलाई केही ज्ञान छ! महात्मा फेरि हाँसै फर्कादिदिए। त्यसै बखत फर्कादिदिरको श्यावाट भक्तले फेरि उनलाई डाक्यो र भन्यो— क्षमा गर्नुहोला।' महात्माजी फेरि भरेर ढ लन ल गे। फेरि त्यही स्त्रीले रोकेर भनी—'अब नजाई तिमी फर्कंदो पेट भर्दैन भने त्यसलाई दुइ थप्पड पार न। यति भन्दाभन्दै त्यसले खानेकुरा पस्की। महात्माले प्रसन्न मनले भोजन गरे। पछि त्यो स्त्री महात्माको खुट्टामा न्यूरिई र भनी—'बाबाजी! क्षमा गर्नु होला। हजुर साक्षात् ईश्वर र शान्तिका सागर हुनुहुन्छ। यो मैले प्रत्यक्ष देखें। मान-अपमानको त स्वादै थाहा हुँदो रहेनछ।' महात्माले भने—'मभन्दा असल त कुकुर हुन्छ—जो कुदाइ लाएर पनि डाकनासाथ फेरि आइपुग्दछ। तिमीले त एकाघो भाथ, कुटेकी होइनौ।'

सबै जीव नतमस्तक हुन्छन् ॥४७॥ त्यसपछि उत्तम र ध्रुव ती दुवै भाइ गाला आलिङ्गित अतिशय प्रेम विह्वल भएर भेटे। पारस्परिक अङ्गसङ्गले दुवैको शरीर पुलकित भएर आए र दुवैका आँखाबाट अविरल अश्रुधारा बग्नलागे ॥४८॥ ध्रुवकी आमा सुनीति आफ्नो प्राणभन्दा प्रिय छोरोको आलिङ्गनपूर्वक अङ्गस्पर्शले आनन्दित भएर आफ्ना सबै सन्ताप बिर्सिइन् ॥४९॥ हे वीर ! ध्रुवकी आमा सुनीतिका स्तन आँखाबाट बगेका आँसुले पूरा भिजे र त्यसबाट दूधका धारा बग्न लागे ॥५०॥ सबै पुरवासी त्यस बखत महारानी सुनीतिको सराहना गर्दै भन्नलागे—'हे माता ! हजुरको दुःख नाश पार्ने बालक ध्रुव—जुन हजुरसित धेरै दिन पहिले नै छुटिएका थिए, सौभाग्यले आज ती फर्कर आएका छन्। यी बालक धेरै कालसम्म यस भूमण्डलको पालन गर्नेछन् ॥५१॥ निःसन्देह हजुरले ती शरणागत-भयहारी भगवान्को उपासना गर्नु भयो, जसको ध्यान गर्ने धैर्यशाली पुरुष परम दुर्जय मृत्युलाई पनि जित्न सक्छन् ॥५२॥ हे विदुरजी ! यस प्रकार सर्वपूजित सत्कृत ध्रुव र तिनका दाजू उत्तमलाई पोटी ढोईमा बसालेर महाराज उत्तानपाद समस्त

मुहुरूहतुः ॥ ४८ ॥ सुनीतिरस्य जननी प्राणेभ्योऽपि प्रियं सुतम् ॥ उपगूह्य जहावाधिं तदङ्गस्पर्शनिर्वृता ॥ ४९ ॥ पयः स्तनाभ्यां सुस्राव नेत्रजैः सलिलैः शिवैः ॥ तदाऽभिषिच्यमानाभ्यां वीर वीरसुवो मुहुः ॥ ५० ॥ तां शशंसुर्जना राज्ञीं दिष्ट्या ते पुत्र आर्तिहा ॥ प्रतिलब्धश्चिरं नष्टो रक्षिता मण्डलं भुवः ॥ ५१ ॥ अभ्यर्चितस्त्वया नूनं भगवान्प्रणतार्तिहा ॥ यदनुध्यायिनो धीरा मृत्युं जिग्युः सुदुर्जयम् ॥ ५२ ॥ लाल्यमानं जनैरेवं ध्रुवं सभ्रातरं नृपः ॥ आरोप्य करिणीं हृष्टः स्तूयमानोऽविशत्पुरम् ॥ ५३ ॥ तत्र तत्रोपसंक्लृप्तैर्लसन्मकरतोरणैः ॥ सवृन्दैः कदलीस्तम्भैः पूगपोतैश्च तद्विधैः ॥ ५४ ॥ चूतपल्लववासःस्रङ्मुक्तादामविलम्बिभिः ॥ उपस्कृतं प्रतिद्वारमपां कुम्भैः सदीपकैः ॥५५॥ प्राकारैर्गोपुरागारैः शातकुम्भपरिच्छदैः ॥ सर्वतोऽलंकृतं श्रीमद्विमानशिखरद्युभिः ॥ ५६ ॥ मृष्टचत्वररथ्याट्टमार्गं चन्दनचर्चितम् ॥ लाजाक्षतैः पुष्पफलैस्तण्डुलैर्बलिभिर्युतम् ॥५७॥ ध्रुवाय पथि दृष्टाय तत्र तत्र पुरस्त्रियः ॥ सिद्धार्थाक्षतदध्यम्बुदूर्वापुष्पफलानि च ॥५८॥ उपजह्रुः प्रयुञ्जाना वात्सल्यादाशिषः सतीः ॥ शृण्वंस्तद्वल्गुगीतानि प्राविशद्भवनं पितुः ॥५९॥ महामणिव्रातमये स तस्मिन्भवनोत्तमे ॥ लालितो नितरां पित्रा न्यवसद्दिवि देववत् ॥ ६० ॥

पुरवासी द्वारा स्तूयमान हुँदै आफ्नो राजधानीमा प्रविष्ट भए ॥ ५३ ॥ ध्रुवको आगमनको उपलक्षमा सारा नगर मकराकृति तोरणहरूले र फल-फूलका गुच्छाले युक्त केरा सुपारी आदिका वृक्षले सजाएका थिए ॥५४॥ नगरका प्रत्येक द्वारमा आम्रपल्लव, वस्त्र, पुष्प-माला र मोतीका मालाहरूले सुसज्जित भवन र दीपयुक्त जलपूर्ण कलशको अपूर्व शोभा थियो ॥५५॥ अतिशय सुन्दर विमानका सुवर्ण-मण्डित शिखरहरूको दीप्तिले सुशोभित प्राकार, राजद्वार तथा महलहरूले गर्दा त्यो सर्वतिरबाट अलंकृत थियो ॥ ५६ ॥ त्यसका सबै चौबाटो, गल्ली, अटाली तथा बाटोहरू बढारेर त्यहाँ जल, चन्दन छर्किएको थियो र सर्वतिर धानको लावा, फूल-फल, अक्षता र दर्शन-भेटका सामग्री राखिएका थिए ॥५७॥ बाटोमा जान लागेका ध्रुवलाई देखेर सफल-मनोरथ पुर-नारीहरूले स्थान-स्थानमा सरस्यूँ, अक्षता, दही, जल, दूबो एवं पुष्पहरूको वर्षा गरेर वात्सल्यभावले उनलाई अनेक राम्रा-राम्रा आशिर्वाद दिए। यसरी नर-नारीहरूको सुन्दर र मनोहर गीत सुन्दै ध्रुवले आफ्ना पिताको राजमहलमा प्रवेश गरे ॥ ५८ ॥ ५९ ॥ त्यसपछि ध्रुव उत्तम मणिहरूको पंक्ति

सुसज्जित राजभवनमा आफ्ना पिताको लालन-पालन सम्बन्धी सुख भोग्दै स्वर्गनिवासी देवगणको समान सानन्द बस्न लागे ॥ ६० ॥ त्यस राज भवनमा दुग्ध-फेन समानका र कोमल शय्या, हात्ती दाँतका पलंग, सुवर्णले सज्जित पर्दा, मूल्यवान् आसन एवं अनेकानेक स्वर्णमयी वस्तुहरू विद्यमान थिए ॥ ६१ ॥ त्यस भवनको स्फटिक र मरकतमणिमयी भित्तामा उत्कीर्ण सुन्दरीगणका अंगमा अगणित मणिमय बत्ती बलिरहेथे ॥ ६२ ॥ महलको चारैतिर नाना प्रकारका कल्पद्रुमले सुशोभित उद्यान विद्यमान थिए, तिनमा पक्षिका युगल कलरव गर्थेर मत्त भ्रमरको गुञ्जन भइरहन्थ्यो ॥६३॥ ती बगैंचामा वैदूर्यमणिका खुड्किलाले शोभित अनेक सरोवर थिए—तिनमा राता, नीला र सेतो वर्णका कमल फक्रेका थिए र हंस, कारण्डव, चक्रवाक, सारस आदि पक्षिगण कलरव गरिरहेथे ॥६४॥ महाराज उत्तानपादले आफ्नो पुत्रको जब अतिशय अद्भुत प्रभाव सुनेर देखे तब उनलाई ठूलो आश्चर्य भयो ॥६५॥ त्यसपछि यो देखेर कि अब छोरो तरुणावस्थाको भयो र उनीप्रति प्रजाको पनि अनुराग बढिरहेको छ, तब राजाले आफ्ना मन्त्रीहरूको सम्मतिले ध्रुवको समस्त राज्यपदमा

पयःफेननिभाः शय्या दान्ता रुक्मपरिच्छदाः ॥ आसनानि महार्हाणि यत्र रौक्मा उपस्कराः ॥ ६१ ॥ यत्र स्फटिककुड्येषु महामारकतेषु च ॥ मणिप्रदीपा आभान्ति ललनारत्नसंयुताः ॥ ६२ ॥ उद्यानानि च रम्याणि विचित्रैरमरद्रुमैः ॥ कूजद्विहङ्गमिथुनैर्गायन्मत्तमधुव्रतैः ॥ ६३ ॥ वाप्यो वैदूर्यसोपानाः पद्मोत्पलकुमुद्वतीः ॥ हंसकारण्डवकुलैर्जुष्टाश्चक्राह्वसारसैः ॥६४॥ उत्तानपादो राजर्षिः प्रभावं तनयस्य तम् ॥ श्रुत्वा दृष्ट्वाऽद्भुततमं प्रपेदे विस्मयं परम् ॥ ६५ ॥ वीक्ष्योढवयसं तं च प्रकृतीनां च सम्मतम् ॥ अनुरक्तप्रजं राजा ध्रुवं चक्रे भुवः पतिम् ॥ ६६ ॥ आत्मानं च प्रवयसमाकलय्य विशांपतिः ॥ वनं विरक्तः प्रातिष्ठद्विमृशन्नात्मनो गतिम् ॥ ६७ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे ध्रुवराज्याभिषेकवर्णनं नाम नवमोऽध्यायः ॥ ९ ॥ मैत्रेय उवाच ॥ प्रजापतेर्दुहितरं शिशुमारस्य वै ध्रुवः ॥ उपयेमे भ्रमिं नाम तत्सुतौ कल्पवत्सरौ ॥ १ ॥ इलायामपि भार्यायां वायोः पुत्र्यां महाबलः ॥ पुत्रमुत्कलनामानं योषिद्रत्नमजीजनत् ॥ २ ॥ उत्तमस्त्वकृतोद्वाहो मृगयायां बलीयसा ॥ हतः पुण्यजनेनाद्रौ तन्माताऽस्य गतिं गता ॥ ३ ॥ ध्रुवो भ्रातृवधं श्रुत्वा कोपामर्षशुचार्पितः ॥ जैत्रं स्यन्दनमास्थाय गतः पुण्यजनालयम् ॥ ४ ॥ गत्वो-

अभिषेक गरिदिए ॥६६॥ त्यसपछि आफूलाई वृद्धावस्थामा प्राप्त भएको देखेर महाराज उत्तानपाद आत्मस्वरूपको ध्यान गर्दै संसारबाट विरक्त भएर वन गए ॥६७॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां नवमोऽध्यायः ॥९॥ (ध्रुवका दाजु उत्तमको वध र ध्रुवको यक्षका साथ भयङ्कर संग्राम ) मैत्रेयजी भन्दछन्—हे विदुर ! केही दिन पछि ध्रुवले प्रजापति शिशुमारकी कन्या भ्रमिसित विवाह गरे । तीबाट कल्प र वत्सर नामका दुइ पुत्र उत्पन्न भए ॥ १ ॥ महाबलवान ध्रुवकी अर्की पत्नी र वायुकी पुत्री इला थिइन् ॥ ती इलाबाट उनको उत्कल नामको पुत्र र स्त्रीहरूमा रत्नस्वरूपा यौटी कन्या जन्मिइन् ॥२॥ उत्तमलाई कुमारावस्थामै हिमालय पर्वतमा शिकार खेल्न जाँदा यौटा बलवान् यक्षले मारिदियो । तिनैसित उनकी आमा पनि मरिन् ॥३॥ जब ध्रुवले आफ्नो दाजूको मृत्युको समाचार सुने तब क्रोध, असहिष्णुता र शोकले व्याकुल भई यौटा विजयी रथमा चढेर

यक्षहरूको राजधानी अलकापुरीमा पुगे ॥ ४ ॥ त्यहाँ गएर महाराज ध्रुवले उत्तर दिशातिर हिमालयको घाटीमा रुद्रका अनुचर कुबेर द्वारा पालित र यक्षले भरिएको अलकापुरी देखे ॥ ५ ॥ त्यहाँ महाबाहु ध्रुवले आकाश तथा दिशा-विदिशाहरूलाई प्रतिध्वनित पार्दै आफ्नो शङ्ख बजाए। हे विदुर ! त्यो शङ्खको ध्वनि सुनेर यक्षका पत्नीहरू माहै नै आत्तिए र त्यो शब्द सहन नसकेर महाबलवान् यक्ष शूरवीर विविध प्रकारका शस्त्रास्त्र लिएका नगरबाट बाहिर निस्किए ॥ ६-७ ॥ त्यसै बखत प्रचण्ड धनुर्धारी र महारथी ध्रुवले तिनलाई सामुन्ने देखेर तीमध्ये प्रत्येकलाई तीन-तीन वाण हानेर एकै साथ घायल पारिदिए ॥८॥ यक्षहरूले आफ्नो मस्तकमा लागेका ती वाणले आफूलाई पराजित ठानेर ध्रुवको त्यस पराक्रमको धेरै-धेरै प्रशंसा गरे ॥ ९ ॥ अनि चुटिएको सर्प जस्तै ध्रुवको त्यो पराक्रम सहन नसकेर त्यस प्रहारको प्रतिशोध ( साटो ) फेर्ने इच्छाले सबै जना मिलेर ध्रुवमाथि एकैसाथ दोबर अर्थात् छ-छ वाण प्रहार गरे ॥ १० ॥ त्यसपछि ती तेह्र अयुत १३०००० यक्षले ध्रुवमित साटो फेर्ने अभिलाषाले अतिशय क्रोधित भई रथ, अश्व तथा

दीचीं दिशं राजा रुद्रानुचरसेविताम् ॥ ददर्श हिमवद्द्रोण्यां पुरीं गुह्यकसंकुलाम् ॥ ५ ॥ दध्मौ शंखं बृहद्बाहुः खं दिशश्चानुनादयन् ॥ येनोद्विग्न-दृशः क्षत्तरुपदेव्योऽत्रसन्भृशम् ॥ ६ ॥ ततो निष्क्रम्य बलिन उपदेवमहाभटाः ॥ असहन्तस्तन्निनादमभिपेतुरुदायुधाः ॥ ७ ॥ स तानापततो वीर उग्रधन्वा महारथः ॥ एकैकं युगपत्सर्वानहन्बाणैस्त्रिभिस्त्रिभिः ॥ ८ ॥ ते वै ललाटलग्नैस्तैरिषुभिः सर्व एव हि ॥ मत्वा निरस्तमात्मानमा-शंसन्कर्म तस्य तत् ॥९॥ तेऽपि चामुममृष्यन्तः पादस्पर्शमिवोरगाः ॥ शरैरविध्यन्युगपद्द्विगुणं प्रचिकीर्षवः ॥ १० ॥ ततः परिघनिस्त्रिंशैः प्रास-शूलपरश्वधैः ॥ शक्त्यृष्टिभिर्भुशुण्डीभिश्चित्रवाजैः शरैरपि ॥ ११ ॥ अभ्यवर्षन्प्रकुपिताः सरथं सहसारथिम् ॥ इच्छन्तस्तत्प्रतीकर्तुमयुतानि त्रयोदश ॥ १२ ॥ औत्तानपादिः स तदा शस्त्रवर्षेण भूरिणा ॥ न उपादृश्यतच्छन्नं आसारेण यथा गिरिः ॥ १३ ॥ हाहाकारस्तदैवासीत्सिद्धानां दिवि पश्यताम् ॥ हतोऽयं मानवः सूर्यो मग्नः पुण्यजनार्णवे ॥ १४ ॥ नदत्सु यातुधानेषु जयकाशिष्वथो मृधे ॥ उदतिष्ठद्रथस्तस्य नीहारादिव भास्करः ॥१५॥ धनुर्विस्फूर्जयन्दिव्यं द्विषतां खेदमुद्वहन् ॥ अस्त्रौघं व्यधमद्बाणैर्घनानीकमिवानिलः ॥ १६ ॥ तस्य ते चापनिर्मुक्ता भित्त्वा वर्माणि रक्षसाम् ॥ कायानाविविशुस्तिग्मा गिरीनशनयो यथा ॥ १७ ॥ भल्लैः संछिद्यमानानां शिरोभिश्चारुकुण्डलैः ऊरुभिर्हेमतालाभैर्दोर्भि-

सारथी सहित यक्षमाथि परिघ, खड्ग, प्रास, त्रिशूल परश्वध, ऋष्टि, भुशुण्डी तथा अनौठो प्वाँख भएका वाण वर्षाउन थाले ॥ ११-१२ ॥ त्यो डरलाग्दो शस्त्रवर्षाले ढाकिएका ध्रुव सहसा यस प्रकार अदृश्य भए—जस्तै घोर वर्षामा पर्वत अलक्षित हुन्छन् ॥ १३ ॥ अतः आकाशमा स्थित भएर युद्ध हेर्ने सिद्धगण भयङ्कर हाहाकार गर्दै कराउन लागे—हरे ! शिव ! आज यो यक्षसेनारूपी समुद्रमा यो मानवरूपी सूर्य ध्रुव डुबाइयो ॥ १४ ॥ त्यसै बखत युद्धमा आफ्नो विजय मान्ने भएका यक्षगणको जयघोषको साथै महाराज ध्रुवको रथ उसै गरी फेरि प्रकट भयो जसरी कुहिरोलाई छिचेर सूर्यनारायण निस्कन्छन् ॥ १५ ॥ शत्रुगणको हृदयमा खेद उत्पन्न गर्दै ध्रुवले आफ्नो दिव्य धनुषको टंकार गरे र वायुले मेघ-समूह छिन्न-भिन्न पारे झैं आफ्ना तीक्ष्ण वाणहरूले शत्रुका सारा शस्त्र समूहलाई नष्ट पारिदिए ॥ १६ ॥ ध्रुवका धनुषबाट छुटेका तीक्ष्ण वाण ती यक्षहरूको

कवच चिरेर तिनका शरीरमा यस प्रकार पसे, जस्तै एक वखत इन्द्रले छाडेको वज्र पर्वतमा पसेको थियो ॥१७॥ हे विदुर ! ध्रुवका वाणहरूले काटिएका अत्यन्त राम्रा र कुण्डल-विमण्डित शिरहरूले, तालवृक्ष समान सुनौला तिघ्राले, वलय-विभूषित बाहुदण्ड द्वारा हार, केयुर, मुकुट तथा बहुमूल्य फेटाले ढाकिएको एवं वीरका चित्तलाई उत्साहित पार्ने भएकी रणभूमि निकै राम्री देखिइन् ॥ १८-१९ ॥ वीर क्षत्रिय ध्रुवका वाणद्वारा मरेका यक्ष बाहेक जो यक्षगण बाँचेका थिए, ती अंग-भंग भएर सिंहद्वारा युद्ध-क्रीडामा पराजित गजराज झैं त्यस रणभूमिबाट भागेर गए ॥ २० ॥ नरवीर ध्रुवले जब देखे कि त्यो प्रशस्त रणभूमिमा कुनै पनि शत्रु हातमा अस्त्र-शस्त्र लिएर तिनको सामु उभिएको छैन, तब तिनको इच्छा यक्षको राजधानी अलकापुरी हेर्ने भयो, तर पछि उनले विचार गरे कि कुनै पनि पुरुष मायावी शत्रुको चाला राम्ररी बुझ्न सक्तैन। अतएव ती नगरी हेर्न गएनन् ॥२१॥ सारथीसित कुरा गर्दै आफ्नो विचित्र रथमा आरुढ ध्रुव शत्रुगणको आक्रमणबाट सावधान भएर बसे। त्यस वखत उनले समुद्रको गर्जन जस्तै प्रचण्ड वायुको भयङ्कर शब्द

वल्गुवल्गुभिः ॥ १८ ॥ हारकेयूरमुकुटैरुष्णीषैश्च महाधनैः ॥ आस्तृतास्ता रणभुवो रेजुर्वीरमनोहराः ॥ १९ ॥ हतावशिष्टा इतरे रणाजिराद्रक्षोगणाः क्षत्रियवर्यसायकैः ॥ प्रायो विवृक्णावयवा विदुद्रुवुर्मृगेन्द्रविक्रीडितयूथपा इव ॥ २० ॥ अपश्यमानः स तदाऽऽततायिनं महामृधे कञ्चन मानवोत्तमः ॥ पुरीं दिदृक्षन्नपि नाविशद्द्विषां न मायिनां वेद चिकीर्षितं जनः ॥ २१ ॥ इति ब्रुवंश्चित्ररथः स्वसारथिं यतः परेषां प्रतियोगशङ्कितः ॥ शुश्राव शब्दं जलधेरिवेरितं नभस्वतो दिक्षु रजोऽन्वदृश्यत ॥ २२ ॥ क्षणेनाच्छादितं व्योम घनानीकेन सर्वतः ॥ विस्फुरत्तडिता दिक्षु त्रासयत्स्तनयित्नुना ॥ २३ ॥ ववृषू रुधिरौघासृक्पूयविण्मूत्रमेदसः ॥ निपेतुर्गगनादस्य कबन्धान्यग्रतोऽनघ ॥ २४ ॥ ततः खेऽदृश्यत गिरिर्निपेतुः सर्वतो दिशम् ॥ गदापरिघनिस्त्रिंशमुसलाः साश्मवर्षिण ॥ २५ ॥ अहयोऽशनिनिःश्वासा वमन्तोऽग्निं रुषाक्षिभिः ॥ अभ्यधावन्गजा मत्ताः सिंहव्याघ्राश्च यूथशः ॥ २६ ॥ समुद्र ऊर्मिभिर्भीमः प्लावयन्सर्वतो भुवम् ॥ आससाद महाह्रादः कल्पान्त इव भीषणः ॥ २७ ॥ एवंविधान्यनेकानि त्रासनान्यमनस्विनाम् ॥ ससृजुस्तिग्मगतय आसुर्या माययाऽसुराः ॥ २८ ॥ ध्रुवे प्रयुक्तामसुरैस्तां मायामतिदुस्तराम् ॥ निशाम्य तस्य

सुनियो र उनले सबै दिशामा धूलो उडेको देखे ॥ २२ ॥ एक छिन भित्रमै सारा आकाश-मण्डल मेघले ढाकियो र त्यसमा सबैतिरबाट भयङ्कर गर्जनका साथ बिजुली चम्कन थाल्यो ॥ २३ ॥ हे अनघ ! ती मेघ रणभूमिमा रगतका धारा, कफ, पीप, विष्ठा, मूत्र तथा बोसो आदि अपवित्र वस्तुहरू वर्षाउन लागे र ध्रुवको समक्ष आकाशबाट अगणित कबन्ध अर्थात् गिड पृथ्वीमा गिर्नलागे ॥ २४ ॥ सहसा उनले आकाशमा गोटा विशाल पर्वत देखेर र सबै दिशामा ढुङ्गाको वर्षाका साथै आकाशबाट गदा, परिघ, खड्ग, तथा मुसल आदि शस्त्रास्त्र वर्षा देखे ॥ २५ ॥ ध्रुवले देखे कि बिजुलीको सदृश दीर्घ निःश्वास छाड्ने सर्पहरू आफ्नो रोषपूर्ण दृष्टिले अग्निको ज्वाला [illegible] लागे र अनेकानेक मतवाला हात्ती, सिंह तथा व्याघ्र उनैतिर ठूलो वेगले आइरहेछन ॥ २६ ॥ उता प्रलयकाल जस्तै भयङ्कर समुद्र उत्ताल तरंगले सम्पूर्ण पृथ्वीलाई डुबाउँदै भीषण गर्जना साथ उनैतिर बढ्दै आइरहेको छ ॥ २७ ॥ यस प्रकार ती तीव्रगति भएका असुरहरूले आफ्नो आसुरी माया द्वारा अनेक कौतुक देखाए, जो अधीर

पुरुषहरूलाई भयभीत पार्न समर्थ थिए ॥ २८ ॥ 'ध्रुवमाथि असुरहरूले आफ्नो दुस्तर माया फिजाएका छन्' यो समाचार सुनेर अनेक मुनि त्यहाँ आए र तिनले उनको शुभकामना गरे ॥२९॥ मुनिहरू भन्दछन्—हे महाराज उत्तानपादका कुमार ! जसको नाम सुनेर र कीर्तन गरेर मनुष्य सहजै अतिशय दुस्तर मृत्युको मुखबाट बाहिर निस्कन्छन्, ती नै शरणागत-भयहारी शार्ङ्गपाणि भगवान् वासुदेव तिम्रा शत्रुलाई नष्ट पारुन् ॥३०॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां दशमोऽध्यायः ॥ १० ॥ ( राजा स्वायम्भुव मनु आएर ध्रुवलाई युद्धबाट विमुख तुल्याउनु )—मैत्रेयजी भन्दछन्—हे विदुर ! ऋषिहरूको कथन सुनेर महाराज ध्रुवले आचमन गरे र आफ्नो धनुषमा नारायण निर्मित नारायणास्त्र सन्धाने ॥ १ ॥ हे विदुर ! जस्तै ज्ञानको उदय भएपछि अविद्याजनित क्लेश नष्ट हुन्छन् त्यसै गरी त्यस बाणलाई चढाउनासाथ यक्षले फिजाएका सारा माया तत्काल नष्ट भयो ॥ २ ॥ यो नारायणास्त्रलाई धनुषमा चढाउनासाथ त्यसबाट राजहंसका प्वाँखजस्तै सुनको टुप्पा भएका तीक्ष्ण बाण निस्केर जस्तै मयूर भीषण शब्द गर्दै वनमा पस्तै जान्छन्

मुनयः समशंसन्समागताः ॥ २६ ॥ मुनय ऊचुः ॥ औत्तानपादे भगवांस्तव शार्ङ्गधन्वा देवः क्षिणोत्ववनतार्तिहरो विपक्षान् ॥ यन्नामधेयमभिधाय निशम्य चाद्धा लोकोऽञ्जसा तरति दुस्तरमङ्ग मृत्युम् ॥ ३० ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे दशमोऽध्यायः ॥ १० ॥ मैत्रेय उवाच ॥ निशम्य गदतामेवमृषीणां धनुषि ध्रुवः ॥ संदधेऽस्त्रमुपस्पृश्य यन्नारायणनिर्मितम् ॥ १ ॥ संधीयमान एतस्मिन्माया गुह्यकनिर्मिताः ॥ क्षिप्रं विनेशुर्विदुर क्लेशा ज्ञानोदये यथा ॥ २ ॥ तस्याप्यथास्त्रं धनुषि प्रयुञ्जतः सुवर्णपुङ्खाः कलहंसवाससः ॥ विनिःसृता आविविशुर्द्विषद्बलं यथा वनं भीमरवाः शिखण्डिनः ॥ ३ ॥ तैस्तिग्मधारैः प्रधने शिलीमुखैरितस्ततः पुण्यजना उपद्रुताः ॥ तमभ्यधावन्कुपिता उदायुधाः सुपर्णमुन्नद्धफणा इवाहयः ॥ ४ ॥ स तान्पृषत्कैरभिधावतो मृधे निकृत्तबाहूरुशिरोधरोदरान् ॥ निनाय लोकं परमर्कमण्डलं व्रजन्ति निर्भिद्य यमूर्ध्वरेतसः ॥ ५ ॥ तान्हन्यमानानभिवीक्ष्य गुह्यकाननागसश्चित्ररथेन भूरिशः ॥ औत्तानपादिं कृपया पितामहो मनुर्जगादोपगतः सहर्षिभिः ॥ ६ ॥ मनुरुवाच ॥ अलं वत्सातिरोषेण तमोद्वारेण पाप्मना ॥ येन पुण्यजनानेतानवधीस्त्वमनागसः ॥ ७ ॥ नास्मत्कुलोचितं तात कर्मैतत्सद्विगर्हितम् ॥ वधो

त्यसै गरी उत्पन्न हरलाग्दा ती बाण स्वाँ-स्वाँ शब्द गर्दै शत्रुका सेनामा पसे ॥ ३ ॥ त्यस युद्धमा ती बाणले क्षत-विक्षत यक्ष—गरुडले छाडेका सर्पहरू झैं अत्यन्त कुपित भएर आफ्ना-आफ्ना शस्त्र लिएर यता-उताबाट ध्रुवतिर दगुरे ॥ ४ ॥ ध्रुवले आफूतिर आउन लागेका ती यक्षलाई, उनका बाहु, तिघ्रा, काँध र उदर आदि अनेक अङ्ग-प्रत्यङ्ग बाणहरूले काटिएका थिए, त्यस लोकमा पठाइदिए, जहाँ सूर्यमण्डललाई वेधेर उर्ध्वरेता मुनिजन जाने गर्दछन् ॥ ५ ॥ यस प्रकार ध्रुवद्वारा अनेकौं निरपराध यक्षहरूको संहार भएको देखेर तिनका पितामह स्वायम्भुव मनुलाई तीमाथि दया लाग्यो र उनले अनेक ऋषिहरूका साथै त्यहाँ गएर आफ्ना पौत्र ध्रुवसित भने ॥ ६ ॥ स्वायम्भुव मनु भन्दछन्—बाबु ! जसको वशमा परेर तिमीले यी निरपराध यक्षहरूलाई मार्‍यौ, त्यो क्रोधलाई अब त्यागिदेउ । यो पापी क्रोध नरकको द्वार नै हुनजान्दो छ ॥७॥ हे तात ! तिमीले

यी निरपराध यक्षहरूलाई मार्न आरम्भ गर्‍यौ, यो हाम्रो वंशको निम्ति अनुचित हो र साधुजन यस्ता कार्यको निन्दा गर्दछन् ॥८॥ हे प्रिय। भ्रातृवत्सल ! तिमीले आफ्नो दाजूको मृत्युले सन्तप्त भएर यौटा यक्ष अपराधी हुँदा अनेकलाई मारिदियौ ॥९॥ यस जड देहलाई नै आत्मा ठानेर यसको निम्ति पशुहरू झैं प्राणीहरूलाई मार्नु भगवान् विष्णुको भक्ति-गर्ने सज्जनहरूको बाटो होइन ॥ १० ॥ तिमीले बाल्यकालमा नै ठूलो कष्टले आराध्य र सबै जीवहरूका आश्रयस्थल भगवान्‌को सर्वभूतात्मभावले आराधना गरेर उनको परमपद पाइसकेका छौ ॥११॥ तिमीले एकाग्र मनले भगवान्‌को ध्यान गरेका छौ। सबै भक्तजन तिम्रो सम्मान गर्दछन् र तिमी सबै साधुजनका मार्गदर्शक हौ। यो सबै भएर

यदुपदेवानामारब्धस्तेऽकृतैनसाम् ॥ ८ ॥ नन्वेकस्यापराधेन प्रसङ्गाद्बहवो हताः ॥ भ्रातुर्वधाभितप्तेन त्वयाऽङ्ग भ्रातृवत्सल ॥ ९ ॥ नायं मार्गो हि साधूनां हृषीकेशानुवर्तिनाम् ॥ यदात्मानं पराग्गृह्य पशुवद्भूतवैशसम् ॥ १० ॥ सर्वभूतात्मभावेन भूतावासं हरिं भवान् ॥ आराध्याप दुराराध्यं विष्णोस्तत्परमं पदम् ॥ ११ ॥ स त्वं हरेरनुध्यातस्तत्पुंसामपि सम्मतः ॥ कथं त्ववद्यं कृतवाननुशिक्षन्सतां व्रतम् ॥ १२ ॥ तितिक्षया करुणया मैत्र्या चाखिलजन्तुषु ॥ समत्वेन च सर्वात्मा भगवान्संप्रसीदति ॥ १३ ॥ संप्रसन्ने भगवति पुरुषः प्राकृतैर्गुणैः ॥ विमुक्तो जीवनिर्मुक्तो ब्रह्म निर्वाणमृच्छति ॥ १४ ॥ भूतैः पञ्चभिरारब्धैर्योषित्पुरुष एव हि ॥ तयोर्व्यवायात्सम्भूतिर्योषित्पुरुषयोरिह ॥ १५ ॥ एवं प्रवर्तते सर्गः स्थितिः संयम एव च ॥ गुणव्यतिकराद्राजन्मायया परमात्मनः ॥ १६ ॥ निमित्तमात्रं तत्रासीन्निर्गुणः पुरुषर्षभः ॥ व्यक्ताव्यक्तमिदं विश्वं यत्र भ्रमति

पनि तिमीले यस्तो निन्द्य कर्म किन गर्‍यौ ? ॥ १२ ॥ सहनशीलता, दया मित्रता, मनोनिग्रह र साम्यभावले सर्वात्मा भगवान् प्रसन्न हुन्छन् ॥१३॥ ती भगवान् प्रसन्न भएपछि पुरुष प्राकृत गुणहरू तथा जीवभावबाट मुक्त भएर ब्रह्मनिर्वाणपद प्राप्त गर्दछ ॥१४॥ हे ध्रुव ! शरीर आदिको रूपमा परिणामलाई प्राप्त पंचभूत द्वारा स्त्री र पुरुष उत्पन्न हुन्छन् र ती स्त्री-पुरुषको समागमले नै अन्य स्त्री-पुरुषहरूको उ पत्ति हुन्छ ॥१५॥ हे राजन् ! ती भगवान्‌की मायाले सत्त्वादिगुणहरूमा न्यूनाधिक्यभाव भएपछि शरीरको उत्पत्ति, स्थिति तथा नाश हुन्छ ॥१६॥ हे पुरुषर्षभ ! निर्गुण परमात्मा त जगत्को उत्पत्ति, स्थिति र नाशमा निमित्तमात्र हुन्छ, जसको आश्रयले कार्य कारणरूपी सबै प्रपञ्च चुम्बकको बलले फलामको समान

※ दृष्टान्त—( मनोनिग्रह )—यौटा शिष्यले आफ्ना गुरुकहाँ गएर भन्यो—'म अनेक धर्मग्रन्थ पढ्दछु तापनि मेरो मनमा अनेक नजाति विचार किन उत्पन्न भइरहन्छन् ?' गुरुले भने—'यौटा मनुष्यले कुकुर पालेको थियो र त्यो त्यसलाई लिएर दिन रात डुलिरहन्थ्यो। त्यस कुकुरलाई आफ्नो बिछौनामा सुताउँथ्यो, काखमा लिन्थ्यो र कहिले काहीं त्यसको मुखमा म्वाईं पनि खान्थ्यो अन्त्यमा कुकुरसित त्यो अघायो। उसले त्यसलाई हटाउने अनेक उपाय गर्‍यो ] तर कुकुर पर जान मान्दैनथ्यो। एक दिन त्यो कुकुरदेखि निकै रिसायो र लात्तिले हिर्काएर गाउँको बाहिर धपाएर आयो। कुकुर एक दुइ पल्ट फेरि फर्केर आयो, तर त्यसले कुकुरको तिरस्कार गर्‍यो। अनि त्यसको आउन बन्द भयो। मनुष्यको मन पनि कुकुर जस्तै नै हो। यसलाई मनुष्यले धेरै समयदेखि प्यारो गरेर पालिराखेको छ। यही कारण यो मलिन विचारहरूमा गएर अल्झन्छन्। यदि त्यही कुकुर झैं यसको तिरस्कार गर्ने हो भने यो आफ्नो बानी छाड्दछ। 'मनलाई वशमा पार्नु' कठिन छ। त्यो वशमा किन हुँदैन ?' यस्तो केवल मुखले भनेर मात्र केही पनि हुन सक्तैन। यसको निम्ति त कठोर मनोनिग्रहको आवश्यकता पर्दछ।

पुगिरहन्छन् ॥१७॥ हे ध्रुव ! कालक्रमले गुणप्रवाहमा न्यूनाधिकता आइरहन्छ भने भगवान्‌को शक्तिमा पनि विषमता आउँछ । त्यस शक्ति-वैषम्यले नै भगवान् अकर्ता भएर पनि जगत् रचना र संहार गर्दछन् । साँचै भनौं भने ती सर्वव्यापक प्रभुका लीला अचिन्तनीय छन्–कसैले पनि त्यसको पार पाउन सक्तैन ॥१८॥ हे ध्रुव ! ती कालरूपी अव्यय परमात्मा स्वयं अन्तरहित भएर पनि यस जगत्‌को अन्त्य पार्छन् र अनादि भएर पनि सबैका आदि कारण मानिन्छन् । ती नै यौटा जीवबाट अर्को जीवको उत्पत्ति गराउँछन् र ती नै मारपाट अर्कोलाई मार्न लगाई त्यसको अन्त्य पार्दछन् ॥१९॥ सारा प्रजामा समान भावले अनुप्रविष्ट ती कालस्वरूप परमात्माको कोही स्वपक्ष र परपक्ष हुँदैन तर जस्तै वायु चल्नाले रजःकण पनि पोसित संगसँगै उड्न थाल्दछ, त्यसै गरी सबै जीव कर्मको अधीन भएर कालरूपी परमात्माको अनुगमन गर्न गर्दछन् ॥ २० ॥ ती सर्वव्यापक भगवान् कर्मबन्धनमा बाँधिएका जीवको आयु वृद्धि र क्षयको विधान गर्दछन् किन्तु स्वयं ती दुवैबाट रहित भएर आफ्नु स्वरूपमा स्थित रहन्छन् ॥२१॥ हे राजन् ! ती परमात्मालाई मीमांसकहरू कर्म, चार्वाक, प्रकृति,

लोहवत् ॥१७॥ स खल्विदं भगवान्कालशक्त्या गुणप्रवाहेण विभक्तवीर्यः ॥ करोत्यकर्तैव निहन्त्यहन्ता चेष्टा विभूम्नः खलु दुर्विभाव्या ॥१८॥ सोऽनन्तोऽन्तकरः कालोऽनादिरादिकृदव्ययः ॥ जनं जनेन जनयन्मारयन्मृत्युनाऽन्तकम् ॥ १९ ॥ न वै स्वपक्षोऽस्य विपक्ष एव वा परस्य मृत्योर्विशतः समं प्रजाः ॥ तं धावमानमनुधावन्त्यनीशा यथा रजांस्यनिलं भूतसंघाः ॥ २० ॥ आयुषोऽपचयं जन्तोस्तथैवोपचयं विभुः ॥ उभाभ्यां रहितः स्वस्थो दुःस्थस्य विदधात्यसौ ॥ २१ ॥ केचित्कर्म वदन्त्येनं स्वभावमपरे नृप ॥ एके कालं परे दैवं पुंसः काममुतापरे ॥ २२ ॥ अव्यक्तस्याप्रमेयस्य नानाशक्त्युदयस्य च ॥ न वै चिकीर्षितं तात को वेदाथ स्वसंभवम् ॥ २३ ॥ न चैते पुत्रक भ्रातुर्हन्तारो धनदानुगाः ॥ विसर्गादानयोस्तात पुंसो दैवं हि कारणम् ॥ २४ ॥ स एव विश्वं सृजति स एवावति हन्ति च ॥ अथापि ह्यनहंकारान्नाज्यते गुणकर्मभिः ॥ २५ ॥ एष भूतानि भूतात्मा भूतेशो भूतभावनः ॥ स्वशक्त्या मायया युक्तः सृजत्यत्ति च पाति च ॥ २६ ॥ तमेव मृत्युममृतं तात दैवं सर्वात्मनोपेहि जगत्परायणम् ॥ यस्मै बलिं विश्वसृजो हरन्ति गावो यथा वै नसि दामयन्त्रिताः ॥ २७ ॥ यः पञ्चवर्षो जननीं त्वं विहाय मातुः सपत्न्या वचसा

वैशेषिक काल, ज्योतिषी, दैव र वात्स्यायनादि कामशास्त्री 'काम' भन्ने गर्दछन् ॥२२॥ जसद्वारा महत्तत्त्वादि शक्तिहरू उत्पन्न भएका छन् र जो आफ्नो पनि उत्पत्ति स्थान छन्, ती अव्यक्त तथा अप्रमेय परमात्माले के गर्नु छ, यो कुरा कसैले पनि जान्दैन । तब स्वेच्छानुसार अवतरित भगवान्‌लाई कसैले जान्न सक्छ ? ॥ २३ ॥ हे पुत्र ! यी कुबेरका सेवकहरूले तिम्रो दाजुलाई मारेको होइन, किनकि मनुष्यको जन्म तथा मरणको वास्तविककारण तत्क्षमात्रदैव नै हो ॥२४॥ ती भगवान् नै संसारको रचना, पालन र संहार गर्दै रहन्छन् तथापि अहङ्कार रहित हुनाको हेतुले ती उनका गुण र कर्ममा लिप्त हुँदैनन् ॥२५॥ ती सब प्राणिका आत्मास्वरूप ईश्वर र रक्षक प्रभुनै आफ्नी माया शक्तिद्वारा युक्त भएर अखिल विश्वका जीवहरूको रचना, पालन र संहार गर्दै रहन्छन् ॥२६॥ अतएव हे तात ! नाकमा नाथ लगाइएका गोरु झैं आफ्नु स्वामीको भारी बसारिरहन्छ, त्यस्तै जगत्का रचयिता ब्रह्मादि देवता जसको आज्ञा पालन गर्दछन्, संहारका आश्रय, दुष्टहरूको निम्ति मृत्यु एवं भक्तजनको निम्ति अमृतस्वरूप हरिको शरण पर ॥२७॥ किनकि पाँच वर्षका अवस्थामै तिमी आफ्नी सौतेनी

आमाका वाग्-बाणले सिद्ध भएर आफ्नोपर छाडी वनतिर हिंडेका थियौ। वहाँ तपस्या द्वारा जुन हृषीकेश भगवान्‌को आराधना गरेर तिमीले त्रिलोक भन्दा माथि ध्रुवपद पाएका छौ। ती निर्गुण, अद्वितीय, अविनाशी, वैरभाव रहित, आफ्नो अन्तःकरणमा स्थित एवं नित्यमुक्त परमात्मालाई तिमी आफ्नू अन्तर्दृष्टि द्वरा खोज। तिनमा यो भेदभावमय प्रपञ्च झूठो प्रतीत भइरहेको छ ॥२८-२९॥ यस्तो गर्नाले प्रत्यगात्मा, आनन्दमात्र एवं सर्वशक्तिसम्पन्न भगवान् अनन्तमा तिम्रो बलियो भक्ति हुनेछ र त्यसको प्रभावले तिमी विस्तार-विस्तार म र मेरो को रूपमा दृढता प्राप्त अविद्यारूपी गाँठोलाई काट्न सक्नेछौ ॥३०॥ अतएव हे राजन् ! जस्तै औषधिले रोग शान्त पार्न सकिन्छ, त्यस्तै सदैव भगवान्‌का गुणको श्रवण गरेर तिमी कल्याणको बाटोमा ठूलो विरोध यो रिसलाई शान्त पार्न सक्नेछौ भगवान् तिम्रो कल्याण गरून् ॥३१॥ जसका वशीभूत पुरुषसित सबैलाई ठूलो खेद हुन्छ, अभयका इच्छुक र बुद्धिमान पुरुष त्यस रिसको अधीन कहिल्यै नहोओस् ॥३२॥ यो मेरा दाजुका घातक हुन्, यस्तो विचार गरेर रिसाई तिमीले जुन यक्षहरूलाई मार्‍यौ, यसले तिम्रो हातले भगवान् शंकरका सखा

भिन्नमर्मा ॥ वनं गतस्तपसा प्रत्यगक्षमाराध्य लेभे मूर्ध्नि पदं त्रिलोक्याः ॥२८॥ तमेनमङ्गात्मनि मुक्तविग्रहे व्यपाश्रितं निर्गुणमेकमक्षरम् ॥ आत्मानमन्विच्छ विमुक्तमात्मदृग् यस्मिन्निदं भेदमसत्प्रतीयते ॥ २९ ॥ त्वं प्रत्यगात्मनि तदा भगवत्यनन्त आनन्दमात्र उपपन्नसमस्तशक्तौ ॥ भक्तिं विधाय परमां शनकैरविद्याग्रन्थिं विभेत्स्यसि ममाहमिति प्ररूढम् ॥ ३० ॥ संयच्छ रोषं भद्रं ते प्रतीपं श्रेयसां परम् ॥ श्रुतेन भूयसा राजन्नगदेन यथाऽऽमयम् ॥३१॥ येनोपसृष्टात्पुरुषाल्लोक उद्विजते भृशम् ॥ न बुधस्तद्वशं गच्छेदिच्छन्नभयमात्मनः ॥ ३२ ॥ हेलनं गिरिशभ्रातुर्धनदस्य त्वया कृतम् ॥ यज्जघ्निवान्पुण्यजनान्भ्रातृघ्नानित्यमर्षितः ॥ ३३ ॥ प्रसादय वत्साशु सन्नत्या प्रश्रयोक्तिभिः ॥ न यावन्महतां तेजः कुलं नोऽभिभविष्यति ॥ ३४ ॥ एवं स्वायंभुवः पौत्रमनुशास्य मनुर्ध्रुवम् ॥ तेनाभिवन्दितः साकमृषिभिः स्वपुरं ययौ ॥ ३५ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे एकादशोऽध्यायः ॥ ११ ॥ मैत्रेय उवाच ॥ ध्रुवं निवृत्तं प्रतिबुद्ध्य वैशसादपेतमन्युं भगवान्धनेश्वरः ॥ तत्रागतश्चारणयक्षकिन्नरैः संस्तूयमानोऽभ्यवदत्कृताञ्जलिम् ॥ १ ॥ कुबेर उवाच ॥ भोः भोः क्षत्रियदायाद परितुष्टोऽस्मि तेऽनघ ॥ यस्त्वं पितामहादेशाद्वैरं दुस्त्यजमत्यजः ॥ २ ॥ न भवानवधीद्यक्षान्न यक्षा भ्रातरं तव ॥ काल एव हि भूतानां प्रभुरप्ययभावयोः ॥ ३ ॥ अहं त्वमित्यपार्था धीरज्ञानात्पुरुषस्य

कुबेरको पनि ठूलो तिरस्कार भयो ॥३३॥ यसै निम्ति ती महापुरुषको तेज तिम्रो कुललाई हानि नपुर्‍याओस् त्यो भन्दा पहिल्यै तिमी उनलाई आफ्नो नम्र वाणी र विनीत उपायले खुशी पार ॥३४॥ हे विदुरजी ! स्वायम्भुव मनु यस प्रकार आफ्नो पौत्र ध्रुवलाई सम्झाई-बुझाई उनीबाट अभिवन्दित भएर महर्षिहरू सहित आफ्नो घरमा गए ॥३५॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पं० गौरीशंकर'वसिष्ठ' कृत नेपाली भाषाटीकायां एकादशोऽध्यायः ॥११॥ (ध्रुवलाई कुबेरको वरदान र उनलाई ध्रुवलोक प्राप्त हुनु)—मैत्रेय भन्दछन्—हे विदुर ! ध्रुवको रिस शान्त भयो र ती युद्धबाट निवृत्त भए—यो कुरा थाहा पाएर कुबेरजी यक्ष, चारण र किन्नरादि द्वारा स्तूयमान हुँदै त्यहाँ आए र आफ्नो सामुन्ने हात जोरेर उभिएका ध्रुवलाई भन्न लागे ॥१॥ कुबेरले भने—हे क्षत्रिय-पुत्र ! आफ्ना पितामहको आज्ञानुसार जुन त्याग्नु कठिन थियो, त्यस वैरभावलाई त्यागिदियौ। अतः म तिमीमाथि प्रसन्न छु ॥२॥

वस्तुतः तिमीले न त यक्षलाई मार्‍यौ, न यक्षले उत्तमलाई नै मारेको हो। सबै जीवको उत्पत्ति तथा नाशको कारण एक मात्र काल नै हो ॥ ३ ॥ जसले गर्दा बन्धन तथा दुःख आदि विपरीत अवस्थाहरू प्राप्त हुन्छन्, ती 'म' आदि मिथ्या-बुद्धि हुने मनुष्यको अज्ञानवश स्वप्न जस्तै शरीर आदिमा आत्मतत्त्वको अभिनिवेश हुनाले नै भासमान हुन्छन् ॥४॥ अतएव हे ध्रुव ! अब तिमी जाऊ, तिम्रो कल्याण होस्। संसार-पाशबाट मुक्त हुनको निम्ति सम्पूर्ण प्राणी जसको ध्यान गर्दछन्,जो संसारको उत्पत्तिका लागि आफ्नी त्रिगुणात्मक माया शक्तिले युक्त भएर पनि वास्तवमा गुणहीन छन् र जसका चरण-कमल सेवन गर्ने योग्य छन्, ती संसार-पाशबाट मुक्त गर्ने भएका अधोक्षजलाई तिमी सर्वभूतात्मभावले भज ॥४६॥ हे प्रिय ! मैले सुनेको छु––तिमी सदैव भगवान् कमलनाभको चरण-कमलका नगीचै बस्तछौ। अतएव तिमी वर पाउने अधिकारी छौ। यसैनिम्ति हे महाराज उत्तानपादका पुत्र ! तिमीलाई जे इच्छा छ, त्यो वर मसित निःशंक भएर माग–म दिनेछु ॥ ७ ॥ मैत्रेयजी भन्दछन्––हे विदुर ! यक्षपति कुवेरले त्यसरी वर माग्नको निम्ति आग्रह गरेपछि महाभागवत

हि ॥ स्वाप्नीवाभात्यतद्धयानाद्यया बन्धविपर्ययौ ॥ ४ ॥ तद्गच्छ ध्रुव भद्रं ते भगवन्तमधोक्षजम् ॥ सर्वभूतात्मभावेन सर्वभूतात्मविग्रहम् ॥ ५ ॥ भजस्व भजनीयांघ्रिमभवाय भवच्छिदम् ॥ युक्तं विरहितं शक्त्या गुणमय्याऽऽत्ममायया ॥ ६ ॥ वृणीहि कामं नृप यन्मनोगतं मत्तस्त्वमौत्तानपदेऽविशङ्कितः ॥ वरं वराहोऽम्बुजनाभपादयोरनन्तरं त्वां वयमङ्ग शुश्रुम ॥ ७ ॥ मैत्रेय उवाच ॥ स राजराजेन वराय चोदितो ध्रुवो महाभागवतो महामतिः ॥ हरौ स वव्रेऽचलितां स्मृतिं यया तरत्ययत्नेन दुरत्ययं तमः ॥ ८ ॥ तस्य प्रीतेन मनसा तां दत्त्वैडविडस्ततः ॥ पश्यतोऽन्तर्दधे सोऽपि स्वपुरं प्रत्यपद्यत ॥ ९ ॥ अथायजत यज्ञेशं क्रतुभिर्भूरिदक्षिणैः ॥ द्रव्यक्रियादेवतानां कर्म कर्मफलप्रदम् ॥ १० ॥ सर्वात्मन्यच्युते सर्वे तीव्रौघां भक्तिमुद्वहन् ॥ ददर्शात्मनि भूतेषु तमेवावस्थितं विभुम् ॥ ११ ॥ तमेवं शीलसम्पन्नं ब्रह्मण्यं दीनवत्सलम् ॥ गोप्तारं धर्मसेतूनां मेनिरे पितरं प्रजाः ॥ १२ ॥ षट्त्रिंशद्वर्षसाहस्रं शशास क्षितिमण्डलम् ॥ भोगैः पुण्यक्षयं कुर्वन्नभोगैरशुभक्षयम् ॥ १३ ॥ एवं बहुसवं कालं महात्माऽविचलेन्द्रियः ॥ त्रिवर्गौपयिकं नीत्वा पुत्रायादान्नृपासनम् ॥ १४ ॥ मन्यमान इदं विश्वं मायारचितमात्मनि ॥ अविद्यारचितस्वप्नगन्धर्वनगरो-

र परम बुद्धिमान ध्रुवले ती भगवान्को सर्वदा स्मरण भइरहोस् भन्ने वर मागे, जसको भरमा मनुष्यलाई यो दुस्तर अज्ञानान्धकार तर्न सजिलो हुन्छ ॥८॥ अनि इडविडासुवन भगवान् कुवेरजी उनलाई प्रसन्न चित्तले अविचल भगवत्स्मृतिको वर दिएर तिनले हेर्दाहेर्दै अन्तर्धान भए र ध्रुव पनि आफ्नो नगरमा फर्किए ॥९॥ आफ्नो नगरीमा बस्ता ती द्रव्य, क्रिया तथा देवताहरू द्वारा गरिने सबै कर्मका फलदाता विष्णु भगवान्को अनेकानेक ठूला-ठूला दक्षिणा दिइने यज्ञ द्वारा पूजा गर्नलागे ॥१०॥ यस प्रकार सर्वात्मा तथा सर्वरूप भगवानमा प्रबल प्रवाहयुक्त भक्तिभाव राख्दै ती सबै प्राणिहरूमा सर्वव्यापक श्रीहरिलाई नै विराजमान देख्नलागे ॥ ११ ॥ शील सम्पन्न, ब्राह्मण, भक्त, दीनवत्सल तथा धर्मका मर्यादाका रक्षक ध्रुवलाई तिनका प्रजा पिता झैं मान्दथे र तिनको आदर गर्दथे। यस प्रकार विविध भाँतिका ऐश्वर्य भोगको साथै पुण्य र यज्ञादि कार्यहरू द्वारा पापको क्षय गर्दै ध्रुवजीले छत्तीस हजार वर्षसम्म राज्य गरे ॥ १२-१३ ॥ महात्मा ध्रुवले यस प्रकार संयतेन्द्रिय भएर, धर्म तथा कामको सिद्धिदिने धेरै वर्षहरूका समय बिताएर अन्त्यमा आफ्नो छोरालाई

राज्यासन प्रदान गरिदिए ॥१४॥ अविद्यारचित स्वप्न र गन्धर्व नगरको समान समस्त जगत्लाई आफ्नो आत्मामा नै मायाले रचिएको मानेर र यस्तो मानेर–शरीर, स्त्री, पुत्र, मित्र, सेना, सम्पत्ति-सम्पन्न कोश, अन्तः पुर, सुरम्य विहार भूमि तथा समुद्रसम्मको भूमण्डल–यी सबै कालका गालामा परिसकेका छन्–ती बद्रिकाश्रम हिँडिदिए ॥१५॥१६॥ त्यहाँको पवित्र जलमा स्नान गरेर शुद्धचित्त भई ती स्थिर आसनमा बसे। उनले प्राणमाथि विजय गरेर मनद्वारा इन्द्रिय-दमन गरी आफ्नु चित्त भगवानको विराट् रूपमा लगादिए। अविच्छिन्नरूपले भगवान्को त्यही स्वरूपको चिन्तन गर्दागर्द अन्त्यमा त्यसलाई पनि त्यागेर ती अविचल समाधिमा लीन भए ॥१७॥ तदनन्तर विष्णु भगवान्मा भक्तिभाव राख्तै र नेत्रमा वारम्बार आनन्दाश्रुको धारा बग्नाले तिनको हृदय पग्ले झैं भयो, तिनको शरीरमा रोमाञ्च भएर आयो र देहाभिमानको नाश भएको हुनाले तिनलाई 'म ध्रुव हुँ' यो सम्झना पनि रहेन ॥१८॥ त्यसै बखत उनले आकाश-मण्डलबाट यौटा अतिशय उत्तम विमान ओर्लन लागेको देखे—त्यो उदाउन लागेका चन्द्रमा झैं आफ्नो प्रकाशले दशै दिशाहरूलाई प्रकाशित पारि-

पमम् ॥ १५ ॥ आत्मस्त्र्यपत्यसुहृदो बलमृद्धकोशमन्तःपुरं परिविहारभुवश्च रम्याः ॥ भूमण्डलं जलधिमेखलमाकलय्य कालोपसृष्टमिति स प्रययौ
विशालाम् ॥ १६ ॥ तस्यां विशुद्धकरणः शिववार्विगाह्य बद्ध्वासनं जितमरुन्मनसा हृताक्षः ॥ स्थूले दधार भगवत्प्रतिरूप एतद्ध्यायंस्तद्-
व्यवहितो व्यसृजत्समाधौ ॥ १७ ॥ भक्तिं हरौ भगवति प्रवहन्नजस्रमानन्दबाष्पकलया मुहुरर्द्यमानः ॥ विक्लिद्यमानहृदयः पुलकाचिताङ्गो नात्मानम-
स्मरदसाविति मुक्तलिङ्गः ॥ १८ ॥ स ददर्श विमानाग्र्यं नभसोऽवतरद्ध्रुवः ॥ विभ्राजयद्दश दिशो राकापतिमिवोदितम् ॥ १९ ॥ तत्रानु देवप्रवरौ
चतुर्भुजौ श्यामौ किशोरावरुणाम्बुजेक्षणौ ॥ स्थिताववष्टभ्य गदां सुवाससौ किरीटहाराङ्गदचारुकुण्डलौ ॥ २० ॥ विज्ञाय तावुत्तमगायकिङ्कराव-
भ्युत्थितः साध्वसविस्मृतक्रमः ॥ ननाम नामानि गृणन्मधुद्विषः पार्षत्प्रधानाविति संहताञ्जलिः ॥ २१ ॥ तं कृष्णपादाभिनिविष्टचेतसं बद्धाञ्जलि
प्रश्रयनम्रकन्धरम् ॥ सुनन्दनन्दावुपसृत्य सस्मितं प्रत्यूचतुः पुष्करनाभसम्मतौ ॥ २२ ॥ सुनन्दनन्दावूचतुः ॥ भो भो राजन् सुभद्रं ते वाचं नोऽव-
हितः शृणुः ॥ यः पञ्चवर्षस्तपसा भवान्देवमतीतृपत् ॥ २३ ॥ तस्याखिलजगद्धातुरावां देवस्य शार्ङ्गिणः ॥ पार्षदाविह सम्प्राप्तौ नेतुं त्वां भगवत्पदम्

रहेको थियो ॥१९॥ त्यसमा दुइ श्रेष्ठ पार्षद गदा लिएर उभिएकाथिए। तिनका चारबाहु थिए र सुन्दर र श्यामशरीर थियो, किशोरावस्थाका थिए, अरुण कमल झैं विशाल उनका नेत्र थिए। ती राम्रा वस्त्र, किरीट, हार, अङ्गद ( बाजूबन्द ) एवं मनोहर कुण्डलादि आभूषणले विभूषित थिए ॥२०॥ तिनलाई भगवान्का उत्तम पार्षद जानेर ध्रुवले पूजाआदिको क्रम बिर्सेर सहसा जुरुक्क उठे र 'यी भगवान्का पार्षदमा मुख्य हुन्' यस्तो जानेर मधुसूदनको नाम लिई हात जोरेर प्रणाम गरे ॥२१॥ त्यसपछि भगवान् कमलनाभका ती माननीय पार्षद हरू अर्थात् सुनन्द र नन्दले–जसको मन भगवान् कृष्णका चरण-कमलमा लीन थियो र जो हात जोरेर निकै नम्रताले टाउको निहुराई सामुन्ने उभिएका थिए, ती ध्रुवका नजीक गएर मुसुमुसु हाँस्तै भन्दछन् ॥२२॥ सुनन्द र नन्द भन्दछन्–हे राजन्! तिम्रो कल्याण होस्। तिमी हाम्रो कुरा सावधान मनले सुन। जुन भगवान्लाई तिमीले पाँच वर्षको अवस्थामै प्रसन्न तुल्याएका थियौ, हामी उनै निखिल जगत्का नियन्ता शार्ङ्गपाणि विष्णु भगवान्का दूत हौं र तिमीलाई उनको परमधाम लिएर जानको निम्ति यस बखत आएका हौं ॥२३॥२४॥

जसलाई कर्मैले पनि जित्न सक्दैनन्, त्यो विष्णुपद तिमीले प्राप्त गरेका छौ। ज्ञानी सप्तर्षिले पनि त्यो पद नपाएर केवल तलबाट हेर्दै रहन्छन्। सूर्य-चन्द्रादि ग्रह, नक्षत्र र तारागण पनि जसको सदैव प्रदक्षिणा गर्ने गर्दछन्, त्यस परमपदमा तिमी प्राप्त हुनेछौ ॥२५॥ हे प्रिय ! तिम्रा पितृगण अथवा अरु कोही भए पनि जुन पदलाई आजसम्म पाउन सकेको छैन, तिमी विष्णु भगवान्‌को त्यो जगद्वन्द्य परम-पदमा विराजमान हुनेछौ ॥२६॥ यस श्रेष्ठ विमानलाई पुण्यकीर्ति-शिरोमणि श्रीविष्णु भगवान्‌ले पठाउनु भएको हो। हे, आयुष्मन् ! तिमी यसमा चढ ॥२७॥ मैत्रेय भन्दछन्—विष्णु भगवान्‌का मुख्य पार्षदका यी अमृतमय वचन सुनेर भगवद्भक्त ध्रुवले स्नान गरेर दैनिक मङ्गल कृत्य सकी बद्रिकाश्रम निवासी मुनीश्वरहरूलाई प्रणाम गरेर उनीहरूबाट आशीर्वाद लिए ॥ २८ ॥ त्यसपछि त्यो श्रेष्ठ विमानको प्रदक्षिणा र वन्दना गरी उनले पार्षदहरूलाई प्रणाम गरेर सुवर्णमय रूप-धारण गरी त्यसमा चढ्न तत्पर भए ॥२९॥ त्यसै बखत उत्तानपादका छोरा ध्रुवले देखे—काल मूर्तिमान् भएर उनको सामुन्ने उपस्थित छ। अतः ती कालको मस्तकमा खुट्टा

॥ २४ ॥ सुदुर्जयं विष्णुपदं जितं त्वया यत्सूरयोऽप्राप्य विचक्षते परम् ॥ आतिष्ठ तच्चन्द्रदिवाकरादयो ग्रहर्क्षताराः परियन्ति दक्षिणाम् ॥ २५ ॥
अनास्थितं ते पितृभिरन्यैरप्यङ्ग कर्हिचित् ॥ आतिष्ठ जगतां वन्द्यं तद्विष्णोः परमं पदम् ॥ २६ ॥ एतद्विमानप्रवरमुत्तमश्लोकमौलिना ॥ उपस्था-
पितमायुष्मन्नधिरोढुं त्वमर्हसि ॥ २७ ॥ मैत्रेय उवाच ॥ निशम्य वैकुण्ठनियोज्यमुख्ययोर्मधुच्युतं वाचमुरुक्रमप्रियः ॥ कृताभिषेकः कृतनित्यमङ्गलो
मुनीन्प्रणम्याशिषमभ्यवादयत् ॥ २८ ॥ परीत्याभ्यर्च्य धिष्ण्याग्र्यं पार्षदावभिवन्द्य च ॥ इयेष तदधिष्ठातुं बिभ्रद्रूपं हिरण्मयम् ॥ २९ ॥
तदोत्तानपदः पुत्रो ददर्शान्तकमागतम् ॥मृत्योर्मूर्ध्नि पदं दत्त्वा आरुरोहाद्भुतं गृहम् ॥ ३० ॥ तदा दुन्दुभयो नेदुर्मृदङ्गपणवादयः ॥ गन्धर्व-
मुख्याः प्रजगुः पेतुः कुसुमवृष्टयः ॥ ३१ ॥ स च स्वर्लोकमारोक्ष्यन्सुनीतिं जननीं ध्रुवः ॥ अन्वस्मरदहं हित्वा दीनां यास्ये त्रिविष्टपम् ॥ ३२ ॥
इति व्यवसितं तस्य व्यवसाय सुरोत्तमौ ॥ दर्शयामासतुर्देवीं पुरो यानेन गच्छतीम् ॥ ३३ ॥ तत्र तत्र प्रशंसद्भिः पथि वैमानिकैः सुरैः ॥ अवकी-
र्यमाणो ददृशे कुसुमैः क्रमशो ग्रहान् ॥ ३४ ॥ त्रिलोकीं देवयानेन सोऽतिव्रज्य मुनीनपि ॥ परस्ताद्यद्ध्रुवगतिर्विष्णोः पदमथाभ्यगात् ॥ ३५ ॥
यद्भ्राजमानं स्वरुचैव सर्वतो लोकास्त्रयो ह्यनुविभ्राजन्त एते ॥ यन्नाव्रजञ्जन्तुषु येऽननुग्रहा व्रजन्ति भद्राणि चरन्ति येऽनिशम् ॥ ३६ ॥ शान्ताः

राखेर विमानमा आरूढ भए ॥३०॥ अनि सबै देवता दुन्दुभी, मृदङ्ग, पणव आदि बाजा बजाउन लागे। आकाशबाट पुष्प वर्षा भयो ॥ ३१ ॥ स्वर्ग धाममा जाँदा भक्त ध्रुवजीलाई आफ्नी माता सुनीतिको सम्झना भयो। उनले विचार गरे—'म आफ्नी दीन-हीन आमालाई यहीं छाडेर स्वर्गलोकमा एक्लै जाने ?' ॥३२॥ तिनलाई चिन्ताग्रस्त देखेर देवश्रेष्ठ नन्द र सुनन्दले तिनको भाव बुझे र तीभन्दा पनि अगाडी विमानमा बसेर जान लागेकी माता सुनीतिलाई देखाइदिए ॥३३॥ अगाडि गएर ध्रुवले क्रमशः सूर्यादि ग्रहहरू देखे। बाटोमा जता-ततै विमानहरूमा बसेका देवता तिनको सहर्ष गर्दै पुष्पवर्षा गरिरहेका थिए ॥ ३४ ॥ यसरी यस दिव्य विमानमा आरूढ भएर ध्रुव-गति प्राप्त गर्ने भएका ध्रुव तीनै लोकलाई नाघेर सप्तर्षि मण्डल भन्दा पनि माथि भगवान् विष्णुको परम धाममा पुगे ॥ ३५ ॥ त्यो धाम सर्वत्र आफ्नो प्रकाशले प्रकाशित रहन्छ। त्यसको आलोकले

तीनैलोक आलोकित रहन्छन् । जीवहरूमा क्रूरता गर्नेजन त्यहाँ जान पाउन्नन् । जो निरन्तर शुभ कर्म गर्दछन्, ती मात्र त्यहाँ पुग्दछन् ॥३६॥ शान्त, समदर्शी शुद्ध तथा सबै प्राणीहरूलाई प्रसन्न ❋ भक्त भगवान् अच्युतका प्रिय बान्धव बनेर उनको परमपद सजिलै प्राप्त गर्दछन् ॥ ३७ ॥ यस प्रकार उत्तानपादका पुत्र भगवत्-परायण ध्रुव तीनै लोकको पनि माथि निर्मल चूडामणि झैं गएर विराजमान भए ॥ ३८ ॥ हे कुरुकुलनन्दन ! जस्तै खलिहानमा दाइँ गर्दा गोरु मुल खाँबोको चारैतिर घुमिरहन्छन्, त्यसै गरी ध्रुवलोकको भरमा गम्भीर वेग गएको ज्योतिश्चक्र सदैव घुमिरहन्छ ॥ ३९ ॥ तिनको महिमा देखेर देवर्षि नारदले प्रचेताहरूको यज्ञशालामा वीणा बजाएर हरिगुण गान गर्दै यी तीन श्लोक भनेका थिए ॥४०॥

समदृशः शुद्धाः सर्वभूतानुरञ्जनाः ॥ यान्त्यञ्जसाऽच्युतपदमच्युतप्रियबान्धवाः ॥ ३७ ॥ इत्युत्तानपदः पुत्रो ध्रुवः कृष्णपरायणः ॥ अभूत्त्रयाणां लोकानां चूडामणिरिवामलः ॥ ३८ ॥ गम्भीरवेगोऽनिमिषं ज्योतिषां चक्रमाहितम् ॥ यस्मिन्भ्रमति कौरव्य मेढ्यामिव गवां गणः ॥३९॥ महिमानं विलोक्यास्य नारदो भगवानृषिः ॥ आतोद्यं वितुदञ्श्लोकान्सत्रेऽगायत्प्रचेतसाम् ॥ ४० ॥ नारद उवाच ॥ नूनं सुनीतेः पतिदेवतायास्तपःप्रभावस्य सुतस्य तां गतिम् ॥ दृष्ट्वाऽभ्युपायानपि वेदवादिनो नैवाधिगन्तुं प्रभवन्ति किं नृपाः ॥ ४१ ॥ यः पञ्चवर्षो गुरुदारवाक्शरैर्भिन्नेन यातो हृदयेन दूयता ॥ वनं मदादेशकरोऽजितं प्रभुं जिगाय तद्भक्तगुणैः पराजितम् ॥ ४२ ॥ यः क्षत्रबन्धुर्भुवि तस्याधिरूढमन्वारुरुक्षेदपि वर्षपूगैः ॥ षट्पञ्चवर्षो यदहोभिरल्पैः प्रसाद्य वैकुण्ठमवाप तत्पदम् ॥ ४३ ॥ मैत्रेय उवाच ॥ एतत्तेऽभिहितं सर्वं यत्पृष्टोऽहमिह त्वया ॥ ध्रुवस्योद्दामयशसश्च-

नारदजीले भने—पतिपरायणा सुनीतिको छोरो ध्रुवलाई उनको तपस्याको प्रभावले जुन सद्गति प्राप्त भयो, त्यो भागवत धर्मका ज्ञाता वेदवादी मुनिगण पनि पाउन सक्तैनन् भने राजाहरूको के कुरा गर्न ? ॥४१॥ आफ्नो पाँच वर्षको उमेरमै सौतेनी आमाका वाग्बाणले मर्माहत भई दुःखी हृदयले वनमा गएर मेरै उपदेश अनुसार आचरण गर्दा छँदा आफ्ना भक्तजनको गुणगानद्वारा जितिने योग्य ती अजेय प्रभुलाई आफ्नो अधीन पारिलिएका थिए ॥४२॥ अहो ! आफ्नो पाँच-छ वर्षको अवस्थामै ध्रुवले केही दिनमै विष्णु भगवान्लाई प्रसन्न पारेर जुन परमपद प्राप्त गरेका छन्, त्यस पवित्र पदलाई अन्य कुनै क्षत्रिय त के अनेकौं वर्षसम्म तपस्या गरेर पनि पाउने कामना गर्न सक्छन् ? ॥४२॥ मैत्रेय भन्दछन्—

❋ दृष्टान्त—एक समय नारदजी डुल्दै-फिर्दै वैकुण्ठधाम गए । विष्णु भगवान्ले तिनको चामल गर्नु भयो । त्यसले नारदले ठाने—'म भगवान्को सर्वश्रेष्ठ भक्त हुँ । त्यसैले प्रभु मलाई यति बढी सम्मान दिइरहेका छन्, पोहि यी चित्तैमा मानव किन दिन्थे ? म निरन्तर यिनैको भजन गर्ने गर्दछु । म जस्तो भगवद्भक्त अर्को को छ !' परमात्मा अन्तर्यामी छन् । उनले नारदका मनको कुरा बुझे र भन्नलागे—'तिमी भन्दा श्रेष्ठ भक्त थोटा किसान छ । जाऊ त्यसको दर्शन गर । नारद त्यो किसानलाई भेट्न गए । किसान प्रातः उठेर र राती सुत्ने बेलामा ईश्वरको स्मरण गर्दथ्यो । त्यसलाई देखेर नारद फर्केर आए र तिनले भगवान्सित भने—'के यस्तै भक्तलाई हजुरले म भन्दा उत्तम मान्नुभयो ?' विष्णु भगवान्ले हाँसेर आज्ञा भयो—'लौ त, यो तेलले भरिएको थाल शिवलोकमा लैजाऊ र त्यहाँबाट अमृत भरिएको थाल लिएर आऊ । बाटोमा अलिकति पनि तेल पोखिन हुन्न । नभए पछि-पछि हिँडिरहने सुदर्शन चक्रले तिम्रो मस्तक काटेर जिउबाट अलग्ग पारिदिने छ ।' श्रीविष्णु भगवानको कथनानुसार नारद शिवलोक गए र भने अनुसार गरी फर्केर आए । भगवान्ले आज्ञा भयो—'तिमी थाल लिएर हिँडेदेखि अहिलेसम्म कतिपल्ट मेरो नाम स्मरण गर्‍यौ ?' नारदले भने—'एक पल्ट पनि गरिन ।' किनकि मेरो मन त थाल थामाउनतिर लागेको थियो ।' विष्णु भगवान्ले आज्ञा भयो—तिमीले त थोटा थाल नै थामाउनु थियो, तर त्यो गरीब किसानलाई त सबै काम हेर्नु थामाउनु थियो । तर त्यो दिन-रातमा दुइपल्ट भक्तिपूर्वक मेरो स्मरण गर्दछ । यसैले म त्यसलाई तिमीभन्दा श्रेष्ठ भक्त हो भनेर मान्दछु ।'

हे विदुरजी ! तिमीले जो सोध्यौ त्यो मैले साधु पुरुषहरूले सम्मानित परम यशस्वी ध्रुवको सारा चरित्र सुनाइदिएँ ॥ ४४ ॥ यो ध्रुव चरित्र सुन्नेको **धन,** यश र आयुष्य बढ्दछ । यो परम पवित्र र अत्यन्त पुनीत कथानक हो यति मात्र होइन, यो स्वर्ग तथा ध्रुवलोक प्रदान गर्दछ । यो मनोज्ञ, प्रशंसनीय एवं पापनाशक छ ॥४५॥ **श्री अच्युत** भगवान्‌का प्रिय ध्रुवको यस पवित्र चरित्रलाई श्रद्धापूर्वक बारम्बार सुन्नाले भगवान्‌को भक्ति प्राप्त हुन्छ, त्यसले सबै कष्ट निवारण भएर जान्छ ॥ ४६ ॥ ध्रुव चरित्र महत्त्वा**कांक्षीहरूलाई** महत्ता प्राप्त गराउँछ । यसलाई सुन्ने व्यक्तिलाई शील आदि सद्गुण प्राप्त हुन्छन् र तेज खोज्नेलाई तेज तथा मनस्वीहरूलाई यसद्वारा सम्मान प्राप्त हुन्छ ॥ ४७ ॥ पवित्र-**कीर्ति** ध्रुवको चरित्र सायं प्रातः ब्राह्मणादि द्विजातिहरूका समूहमा एकाग्र चित्तले भन्नु शुभ छ ॥ ४८ ॥ भगवानका परम पवित्र चरण-कमलका **आश्रित** भएर जो पूर्णिमा, अमावास्या, द्वादशी, श्रवण नक्षत्र, तिथिक्षय, व्यतीपात, संक्रान्ति तथा । रविवारको दिन श्रद्धालु पुरुषलाई सुनाउँछ, त्यसलाई यदि कुनै इच्छा छैन **भने पनि आफ्नो** आत्माद्वारा आत्मामै सन्तुष्ट **हुने**—महती

**रितं सम्मतं सताम् ॥ ४४ ॥ धन्यं यशस्यमायुष्यं पुण्यं स्वस्त्ययनं महत् ॥ स्वर्ग्यं ध्रौव्यं सौमनस्यं प्रशस्यमघमर्षणम् ॥ ४५ ॥ श्रुत्वैतच्छ्रद्धयाऽ-भीक्ष्णमच्युतप्रियचेष्टितम् ॥ भवेद्भक्तिर्भगवति यया स्यात्क्लेशसंक्षयः ॥ ४६ ॥ महत्त्वमिच्छतां तीर्थं श्रोतुः शीलादयो गुणाः ॥ यत्र तेजस्तदिच्छूनां मानो यत्र मनस्विनाम् ॥ ४७ ॥ प्रयतः कीर्तयेत्प्रातः समवाये द्विजन्मनाम् ॥ सायं च पुण्यश्लोकस्य ध्रुवस्य चरितं महत् ॥ ४८ ॥ पौर्णमास्यां सिनीवाल्यां द्वादश्यां श्रवणेऽथवा ॥ दिनक्षये व्यतीपाते संक्रमेऽर्कदिनेऽपि वा ॥ ४९ ॥ श्रावयेच्छ्रद्दधानानां तीर्थपादपदाश्रयः ॥ नेच्छंस्तत्रात्मनाऽऽत्मानं संतुष्ट इति सिद्ध्यति ॥५०॥ ज्ञानमज्ञाततत्त्वाय यो दद्यात्सत्पथेऽमृतम् ॥ कृपालोर्दीननाथस्य देवास्तस्यानुगृह्णते ॥ ५१ ॥ इदं मया तेऽभि-हितं कुरूद्वह ध्रुवस्य विख्यातविशुद्धकर्मणः ॥ हित्वाऽर्भकः क्रीडनकानि मातुर्गृहं च विष्णुं शरणं उजगाम ॥ ५२ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे द्वादशोऽध्यायः ॥ १२ ॥ सूत उवाच ॥ निशम्य कौषारविणोपवर्णितं ध्रुवस्य वैकुण्ठपदाधिरोहणम् ॥ प्ररूढभावो भगवत्यधोक्षजे प्रष्टुं पुनस्तं विदुरः प्रचक्रमे ॥ १ ॥ विदुर उवाच ॥ के ते प्रचेतसो नाम कस्यापत्यानि सुव्रत ॥ कस्यान्ववाये प्रख्याताः कुत्र वा सत्रमासते ॥ २ ॥ मन्ये महाभागवतं नारदं देवदर्शनम् ॥ येन प्रोक्तः क्रियायोगः परिचर्याविधिर्हरेः ॥ ३ ॥ स्वधर्मशीलैः पुरुषैर्भगवान्यज्ञपूरुषः ॥**

सिद्धि प्राप्त हुनेछ ॥ ४९-५० ॥ **जो पुरुष** भगवत्-मार्गबारे **मर्मबाट अनभिज्ञ** व्यक्तिहरूलाई यो भगवद्विषयक अमृतस्वरूप ज्ञान दिन्छ, ती दीनवत्सल कृपालु प्राणीमा देवता पनि **कृपा गर्दछन्** ॥५१॥ **हे कुरुकुलनन्दन ! जो आफ्नो बाल्यावस्थाको समय माताको** घर र **खेल्ने वस्तुहरू** त्यागेर भगवान् विष्णुको शरणमा गएका थिए र जसका **सुकर्म** सर्वत्र प्रसिद्ध **छन्** । ती ध्रुवको यो पवित्र चरित्र मैले **तिमीलाई सुनाइसकें** ॥ ५२ ॥ **इति श्रीमद्भागवते** महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां द्वादशोऽध्यायः ॥ १२ ॥ ( ध्रुववंशको विस्तार र अंगको चरित्र )—सूतजी भन्दछन्—हे मुने ! **मैत्रेयजीद्वारा** ध्रुवले विष्णुपद पाएका वृत्तान्त सुनेर हृदयमा विष्णु भगवान्‌को भक्ति उम्लिरहेको थियो, ती विदुरजी फेरि सोध्नलागे ॥ १ ॥ **विदुरले भने—हे सुव्रत ! ती प्रचेतागण को थिए** र कसका छोरा थिए ? ती कसका वंशज कहिन्थे ? अनि ती कहाँ यज्ञ गर्थे ॥ २ ॥ **हे ब्रह्मन् !**

जसले श्रीहरिको पूजाविधिस्वरूप कर्मयोगको निरूपण गरे, भगवान्को प्रत्यक्ष दर्शन प्राप्त गर्न भएका ती नारदलाई म परम भगवद्भक्त मान्दछु ॥३॥ हजुरको भनाईले यस्तो प्रतीत हुन्छ कि जब प्रचेताहरू आफ्नो धर्मको आचरण गर्दै भगवान् यज्ञपुरुषको भजन गरिरहेका थिए, उसै बखत नारदले पनि नारायणको गुण-गान गरेका थिए ॥४॥ हे ब्रह्मन् ! त्यस स्थानमा देवर्षि नारदजीले जो जो भगवच्चरित्र वर्णन गरेका हुनन्, त्यो मलाई सुनाउनोस् । त्यो सबै सुन्ने मेरो प्रबल अभिलाषा छ ॥५॥ मैत्रेयजी भन्दछन्–हे विदुरजी ! महात्मा ध्रुवका छोरा उत्कलले पिता वनमा गएपछि उनको सार्वभौम सम्पत्ति तथा राज्य-सिंहासनको अलिकति पनि इच्छा गरेनन् ॥६॥ ती जन्मैदेखि शान्तचित्त, असङ्ग, समदर्शी र सबै प्राणीहरूमा आफ्नो आत्मा र आफ्ना आत्मामा सम्पूर्ण लोक नै स्थित भएको देख्ने गर्दथे ॥७॥ अखण्ड योगाग्नि द्वारा कर्महरूको संस्कार भस्म हुनाले ती सबै भेदहरूबाट रहित एकमात्र ज्ञानस्वरूप, आनन्दमय, सर्वव्यापक तथा निर्वाणस्वरूप ब्रह्मलाई नै आफ्नो आत्मा मानेर आत्मा बाहेक अरू केही पनि देख्दैनथे ॥८॥९॥ ती बाटोमा हिंड्दा पनि

इज्यमानो भक्तिमता नारदेनेरितः किल ॥ ४ ॥ यास्ता देवर्षिणा तत्र वर्णिता भगवत्कथाः ॥ मह्यं शुश्रूषवे ब्रह्मन्कार्त्स्न्येनाचष्टुमर्हसि ॥ ५ ॥ मैत्रेय उवाच ॥ ध्रुवस्य चोत्कलः पुत्रः पितरि प्रस्थिते वनम् ॥ सार्वभौमश्रियं नैच्छदधिराजासनं पितुः ॥६॥ स जन्मनोपशान्तात्मा निःसङ्गः समदर्शनः ॥ ददर्श लोके विततमात्मानं लोकमात्मनि ॥ ७ ॥ आत्मानं ब्रह्म निर्वाणं प्रत्यस्तमितविग्रहम् ॥ अवबोधरसैकात्म्यमानन्दमनुसन्ततम् ॥ ८ ॥ अव्यवच्छिन्नयोगाग्निदग्धकर्ममलाशयः ॥ स्वरूपमवरुन्धानो नात्मनोऽन्यं तदैक्षत ॥ ९ ॥ जडान्धबधिरोन्मत्तमूकाकृतिरतन्मतिः ॥ लक्षितः पथि बालानां प्रशान्तार्चिरिवानलः ॥ १० ॥ मत्वा तं जडमुन्मत्तं कुलवृद्धाः समन्त्रिणः ॥ वत्सरं भूपतिं चक्रुर्यवीयांसं भ्रमेः सुतम् ॥ ११ ॥ स्वर्वीथिर्वत्सरस्येष्टा भार्याऽसूत षडात्मजान् ॥ पुष्पार्णं तिग्मकेतुं च इषमूर्जं वसुं जयम् ॥ १२ ॥ पुष्पार्णस्य प्रभा भार्या दोषा च द्वे बभूवतुः ॥ प्रातर्मध्यन्दिनं सायमिति ह्यासन्प्रभासुताः ॥ १३ ॥ प्रदोषो निशिथो व्युष्ट इति दोषासुतास्त्रयः ॥ व्युष्टः सुतं पुष्करिण्यां सर्वतेजसमादधे ॥ १४ ॥ स चक्षुः सुतमाकूत्यां पत्न्यां मनुमवाप ह ॥ मनोरसूत महिषी विरजान्नड्वला सुतान् ॥ १५ ॥ पुरुं कुत्सं त्रितं द्युम्नं सत्यवन्तमृतं व्रतम् ॥

अरूलाई जड, अन्धा, बहिरा, उन्मत्त तथा लाटा जस्तै ज्ञात हुन्थे, तर वास्तवमा ती त्यस्ता थिएनन् । ती त जसको ज्वाला शान्त भएको छ, त्यो आगो झैं गूढभावले परम-तेजस्वी थिये ॥१०॥ राज्यका बूढा-पाका र मन्त्रीहरूले तिनलाई मूर्ख र उन्मत्त ठानेर त्यसको भाइ वत्सरलाई, जो भ्रमि नामकी पत्नीका छोरो थियो, राजा बनाए ॥११॥ वत्सरकी प्रियतमा भार्या स्वर्वीथिले पुष्पार्ण, तिग्मकेतु, इष, ऊर्ज, वसु तथा जय नामका छ पुत्र जन्माइन ॥१२॥ पुष्पार्णकी प्रभा र दोषा नामकी दुइ पत्नी थिए । ती दुईमा प्रभाबाट प्रातः, मध्यन्दिन र सायं नामका तीन पुत्र भए ॥१३॥ दोषाका प्रदोष, निशीथ, तथा व्युष्ट यी तीन पुत्र जायमान भए । तिनमा व्युष्टले आफ्नी पत्नी पुष्करिणीबाट सर्वतेजसनामको यौटा पुत्र उत्पन्न गरे ॥१४॥ सर्वतेजसले आफ्नी आकूती नामकी भार्याबाट चक्षु-मनुलाईपुत्ररूपमा प्राप्त गरे । चक्षु मनुकी नड्वलाबाट पुरु, कुत्स, त्रित, द्युम्न, सत्यवान्, ऋत,-

व्रत, अग्निष्टोम, अतिरात्र, प्रद्युम्न, शिबि तथा उल्मुक यी बाह्र बालक जन्मिए ॥१५॥१६॥ उल्मुकको पुष्करिणी नामको पत्नीबाट अंग, सुमनस, ख्याति, क्रतु, अङ्गिरा र गय यी छ श्रेष्ठ पुत्र उत्पन्न भए ॥१७॥ त्यसपछि अङ्गको पत्नी सुनीथाबाट क्रूरकर्मा वेन उत्पन्न भयो, त्यसको दुष्टताले वाक्क भएर राजर्षि अङ्ग आफ्नो नगर छाडेर गएका थिए ॥१८॥ अनि हे विदुरजी ! वज्र झैं दुर्निवार वाक्य हुने केही मुनीश्वरहरूले रिसाई वेनलाई मनैं श्राप दिए। पछि तिनले वेनको मृत शरीरको दाहिने बाहु मथे ॥१९॥ यसरी समस्त पृथ्वी नै राजाले हीन भएपछि जब चोर, डाका समस्त प्रजालाई दुःख दिन लागे तब श्रीविष्णु भगवान्को अंशबाट सम्राट राजा पृथुको जन्म भयो ॥२०॥ यति कथा सुनेर विदुरले भने–हे ब्रह्मन् ! महाराज अङ्ग त ठूला शीलवान्, साधुस्वभाव, ब्राह्मण-भक्त तथा महात्मा थिए। तिनको घरमा वेन झैं दुष्ट पुत्र कसरी जन्मियो ? जसले गर्दा राजा अङ्ग नगरबाट गए ॥२१॥ धर्मज्ञाता मुनीश्वरले वेनमा यस्तो कुन दुष्टता देखे र त्यसको दमन गर्नु नै उचित ठाने, फेरि यस राजालाई शापरूपी ब्रह्मदण्ड दिए ? ॥२२॥

अग्निष्टोममतीरात्रं प्रद्युम्नं शिबिमुल्मुकम् ॥ १६ ॥ उल्मुकोऽजनयत्पुत्रान्पुष्करिण्यां षडुत्तमान् ॥ अङ्गं सुमनसं ख्यातिं क्रतुमङ्गिरसं गयम् ॥१७॥ सुनीथाऽङ्गस्य या पत्नी सुषुवे वेनमुल्बणम् ॥ यद्दौःशील्यात्स राजर्षिर्निर्विण्णो निरगात्पुरात् ॥ १८ ॥ यमङ्ग शेपुः कुपिता वाग्वज्रा मुनयः किल ॥ गतासोस्तस्य भूयस्ते ममन्थुर्दक्षिणं करम् ॥ १९ ॥ अराजके तदा लोके दस्युभिः पीडिताः प्रजाः ॥ जातो नारायणांशेन पृथुराद्यः क्षितीश्वरः ॥ २० ॥ विदुर उवाच ॥ तस्य शीलनिधेः साधोर्ब्रह्मण्यस्य महात्मनः ॥ राज्ञः कथमभूद्दुष्टः प्रजा यद्विमना ययौ ॥ २१ ॥ किं वांहो वेन उद्दिश्य ब्रह्मदण्डमयूयुजन् ॥ दंडव्रतधरे राज्ञि मुनयो धर्मकोविदाः ॥ २२ ॥ नावध्येयः प्रजापालः प्रजाभिरघवानपि ॥ यदसौ लोकपालानां बिभर्त्योजः स्वतेजसा ॥ २३ ॥ एतदाख्याहि मे ब्रह्मन्सुनीथात्मजचेष्टितम् ॥ श्रद्दधानाय भक्ताय त्वं परावरवित्तमः ॥ २४ ॥ मैत्रेय उवाच ॥ अङ्गोऽश्वमेधं राजर्षिराजहार महाक्रतुम् ॥ नाजग्मुर्देवतास्तस्मिन्नाहूता ब्रह्मवादिभिः ॥ २५ ॥ तमूचुर्विस्मितास्तत्र यजमानमथर्त्विजः ॥ हवींषि हूयमानानि न ते गृह्णन्ति देवताः ॥ २६ ॥ राजन्हवींष्यदुष्टानि श्रद्धयाऽऽसादितानि ते ॥ छन्दांस्ययातयामानि योजितानि धृतव्रतैः ॥ २७ ॥ न विद्मेह

प्रजापालक राजा यदि कुनै अपराध गर्दछ भने पनि प्रजाले त्यसको तिरस्कार गर्नु अनुचित हो, किनकि त्यो आफ्नो प्रभावले इन्द्रादि सबै लोकपालको तेज धारण गरेको हुन्छ ॥२३॥ हे ब्रह्मन् ! म जस्तो श्रद्धालु भक्तलाई सुनीथानन्दन वेनको सबै कथा सुनाउउनोस्। किनकि हजुर भूत-भविष्यका कुरा जान्नमा सर्वश्रेष्ठ मानिनु हुन्छ ॥२४॥ श्रीमैत्रेयजी भन्दछन्—हे विदुर ! एक वखतको कुरा हो, राजर्षि अङ्गले अश्वमेध नामको यज्ञ गरे। त्यस यज्ञमा वेदवादी ऋत्विजहरूले आवाहन गर्दा पनि देवगण आफ्नो-आफ्नो भाग लिन आएनन् ॥२५॥ अनि अति विस्मित भएर ऋत्विजहरूले आफ्ना यजमान अङ्गसित भने–हे राजन् ! हामीले आहुति दिंदा पनि देवगण हवि ग्रहण गरिरहेका छैनन्। हामीलाई थाहा छ तिम्रो हवन सामग्री पवित्र छ र तिमीले त्यसलाई ठूलो श्रद्धाले एकत्र पारेका छौ। ब्रह्मचर्यादि व्रतहरू पालन गर्न भएका ब्राह्मण द्वारा प्रयुक्त हाम्रा वेदमन्त्र पनि कसै गरी निर्बल हुन सक्तैनन् ॥२६॥२७॥ हामीलाई त यस्तो कुनै कुरा देखिएको छैन, जसले देवताहरूको अलिकति पनि तिरस्कार भएको होस्। तैपनि तिनको कर्माध्यक्ष देवता आएनन् भाग

गरिरहेका छैनन् ॥ २८ ॥ मैत्रेयजी भन्दछन्–हे विदुर ! ऋत्विजहरूको कुरा सुनेर यजमान अंग धेरै खिन्न भए । उनको आज्ञाले मौन भङ्ग गरेर उनले सदस्यहरूसित भने—॥२९॥ 'हे सदस्यगण ! सबै देवता आवाहन गर्दा पनि यहाँ आउन्नन् र आफ्नो भाग पनि लिन्नन् । अतः भन्नुहवस मद्वारा यस्तो कुन अपराध भएको छ ?' ।।३०।। अनि सदस्यहरूले भने– राजन् ! यस समय त तिमीले कुनै अपराध गरेका छैनौ, तर जुन कारणले तिमी अपुत्री छौ, तिमीद्वारा पूर्वजन्ममा यस्तो थोँटा अपराध भइसकेको छ ।।३१।। अतएव तिमी पहिले थोँटा अमल सन्तान हुने यज्ञ गर । तिम्रो मङ्गल होस् । भगवान् यज्ञपति पुत्रको कामनाले पूजित भएपछि तिमीलाई अवश्य पुत्र दिन्छन् ।।३२ । अतः जब तिमी सन्तानको निम्ति यज्ञपुरुष श्रीहरिको शरण पर्नेछौ, तब देवता तिमीले दिएको आफ्नो-आफ्नो भाग ग्रहण गर्नेछन् ॥ ३३ ॥ भक्त जुन वस्तु खोज्दछ, भगवान उसलाई त्यही पदार्थ दिन्छन् । जस्तो उनको आराधना गरिन्छ, त्यस्तै फल पनि मिल्दछ ।।३४।। यसरी पुत्र-प्राप्तिको निमित्त निश्चय गरेर ऋत्विजहरूले यज्ञरूपमा विराजमान रहने भएका श्रीविष्णु भगवान्‌को

देवानां हेलनं वयमण्वपि ॥ यन्न गृह्णन्ति भागान्स्वान् ये देवाः कर्मसाक्षिणः ॥ २८ ॥ मैत्रेय उवाच ॥ अङ्गो द्विजवचः श्रुत्वा यजमानः सुदुर्मनाः ॥ तत्प्रष्टुं व्यसृद्वाचं सदस्यांस्तदनुज्ञया ॥ २९ ॥ नागच्छन्त्याहुता देवा न गृह्णन्ति ग्रहानिह ॥ सदसस्पतयो ब्रूत किमवद्यं मया कृतम् ॥ ३० ॥ सदसस्पतय ऊचुः ॥ नरदेवेह भवतो नाघं तावन्मनाक् स्थितम् ॥ अस्त्येकं प्राक्तनमघं यदिहेदृक् त्वमप्रजः ॥ ३१ ॥ तथा साधय भद्रं ते आत्मानं सुप्रजं नृप ॥ इष्टस्ते पुत्रकामस्य पुत्रं दास्यति यज्ञभुक् ॥ ३२ ॥ तथा स्वभागधेयानि ग्रहीष्यन्ति दिवौकसः ॥ यद्यज्ञपुरुषः साक्षादपत्याय हरिर्वृतः ॥ ३३ ॥ तांस्तान्कामान्हरिर्दद्याद्यान्यान्कामयते जनः ॥ आराधितो यथैवैष तथा पुंसां फलोदयः ॥ ३४ ॥ इति व्यवसिता विप्रास्तस्य राज्ञः प्रजातये ॥ पुरोडाशं निरवपन् शिपिविष्टाय विष्णवे ॥ ३५ ॥ तस्मात्पुरुष उत्तस्थौ हेममाल्यमलाम्बरः ॥ हिरण्मयेन पात्रेण सिद्धमादाय पायसम् ॥ ३६ ॥ स विप्रानुमतो राजा गृहीत्वाञ्जलिनौदनम् ॥ अवघ्राय मुदा युक्तः प्रादात्पत्न्या उदारधीः ॥ ३७ ॥ सा तत्पुंसवनं राज्ञी प्राश्य वै पत्युरादधे ॥ गर्भं काल उपावृत्ते कुमारं सुषुवेऽप्रजा ॥ ३८ ॥ स बाल एव पुरुषो मातामहमनुव्रतः ॥ अधर्मांशोद्भवं मृत्युं तेनाभवदधार्मिकः ॥ ३९ ॥ स शरासनमुद्यम्य मृगयुर्वनगोचरः ॥ हन्त्यसाधुर्मृगान्दीनान्वेनोऽसावित्यरौज्जनः ॥ ४० ॥ आक्रीडे

आराधनाका निम्ति पुरोडाश अर्पण गरे ॥३५॥ अग्निमा आहुति हाल्नासाथ अग्निकुण्डबाट सुवर्णको माला निर्मल वस्त्रले अलंकृत थोँटा पुरुष प्रकट भयो । ती सुनको थोँटा पात्रमा सिद्धपायस लिएका थिए ॥ ३६ ॥ ऋत्विजहरूको मनाइअनुसार उदारबुद्धि राजा अङ्गले त्यो पायस आफ्नो अंजलीमा थापे र त्यो स्वयं सुँघेर प्रसन्नतापूर्वक आफ्नी पत्नी लाई दिए ॥ ३७ ॥ पुत्रहीन रानीले त्यो पुत्रदायिनी खीर खाएर आफ्ना पतिसित सहवासद्वारा गर्भ धारण गरिन् र बेला पुगेपछि तिनको कोखबाट थोँटा पुत्र उत्पन्न भयो ।।३८।। त्यो बालक वेन बाल्यावाथादेखि नै अधर्मको वंशमा उत्पन्न आफ्नो हजुरबाको मृत्युको अनुयायी बन्यो । अतः त्यो सदा अधार्मिक नै रह्यो ॥ ३९ ॥ युवा भएपछि दुष्ट वेन धनु-बाण लिए वनमा जान्थ्यो र व्याधा झैँ विचरा सोझा-सादा मृगलाई मार्दथ्यो । त्यो देखेर प्रजाजन–'ऊः वेन आयो वेन आयो' भनेर कराउन थाल्दथे ॥ ४० ॥ वेन यति वर्ता क्रूर र

निर्दयी थियो कि खेल्दा पनि अनेक बदरूप बालकहरूलाई समात-समातेर पशु-पशु हैं मारिदिन्थ्यो ॥४१॥ [illegible] राजा अंगले त्यसलाई धेरै सम्झाएर-बुझाए तर ती छोरोलाई राम्रो बाटोमा ल्याउन समर्थ भएनन्, यसनिमित्त तिनको मनमा क्लेश भयो ॥४२॥ [illegible] छन्, तिनले पूर्वजन्ममा अवश्य भगवानको आराधना गरेका होलान्, त्यसैले उनलाई कुपुत्रबाट हुने असह्य कष्टको अनुभव [illegible] नष्ट भएर जा छ, त्यसले अधर्मको भागी बन्नुपर्दछ, सबैसित विरोध हुन्छ, कहिल्यै पनि नहराउने मानसिक पीडा सहनु पर्दछ र [illegible] यस्तो कुन बुद्धिमान् प्राणी आदरको दृष्टिले हेर्न सक्ला ? ॥४३॥४४॥ हे विदुरजी ! यस प्रकार उदासीन [illegible] बाह

क्रीडतो बालान्वयम्यानतिदारुणः ॥ प्रसह्य निरनुक्रोशः पशुमारममारयत् ॥ ४१ ॥ तं विचक्ष्य खलं पुत्रं शासनैर्विविधैर्नृपः ॥ यदा न शासितुं कल्पो भृशमासीत्सुदुर्मनाः ॥ ४२ ॥ प्रायेणाभ्यर्चितो देवो येऽप्रजा गृहमेधिनः ॥ कदपत्यभृतं दुःखं ये न विन्दन्ति दुर्भरम् ॥ ४३ ॥ यतः पापीयसी कीर्तिरधर्मश्च महान्नृणाम् ॥ यतो विरोधः सर्वेषां यत आधिरनन्तकः ॥ ४४ ॥ कस्तं प्रजापदेशं वै मोहबन्धनमात्मनः ॥ पण्डितो बहु मन्येत यदर्थाः क्लेशदा गृहाः ॥ ४५ ॥ कदपत्यं वरं मन्ये सदपत्याच्छुचां पदात् ॥ निर्विद्येत गृहान्मर्त्यो यत्क्लेशनिवहा गृहाः ॥ ४६ ॥ एवं स निर्विण्णमना नृपो गृहान्निशीथ उत्थाय महोदयोदयात् ॥ अलब्धनिद्रोऽनुपलक्षितो नृभिर्हित्वा गतो वेनसुवं प्रसुप्ताम् ॥ ४७ ॥ विज्ञाय निर्विद्य गतं पतिं प्रजाः पुरोहितामात्यसुहृद्गणादयः ॥ विचिक्युरुर्व्यामतिशोककातरा यथा निगूढं पुरुषं कुयोगिनः ॥ ४८ ॥ अलक्षयन्तः पदवीं प्रजापतेर्हतोद्यमाः प्रत्युपसृत्य ते पुरीम् ॥ ऋषीन्समेतानभिवन्द्य साश्रवो न्यवेदयन्पौरव भर्तृविप्लवम् ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे त्रयोदशोऽध्यायः ॥१३॥ मैत्रेय उवाच ॥ भृग्वादयस्ते मुनयो लोकानां क्षेमदर्शिनः ॥ गोप्तर्यसति वै नृणां पश्यन्तः पशुसाम्यताम् ॥१॥

निद्रामा सुतेकी छाडेर कसैले पनि थाहै नपाई आफ्नो परमैश्वर्यपूर्ण महल त्यागेर अज्ञात स्थानमा गए। [illegible] ॥४६॥ [illegible] जब यो समाचार फैलियो—महाराज विरक्त भएर घरबाट गए—तब सारा प्रजाजन, पुरोहित, मन्त्री तथा सुहृद्गण [illegible] आफ्नै हृदयमा लुकेका नारायणलाई खोज्दछन् ॥४७॥४८॥ हे विदुर ! जब तिनले आफ्ना स्वामीलाई कहीं पाउन [illegible] समक्ष आँखामा आँसु भरेर राजा अङ्गको वियोग वृत्तान्त सुनाए ॥ ४९ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे [illegible] ॥१३॥ [illegible] मैत्रेयजी भन्दछन्—हे विदुरजी ! कुनै पृथ्वी पालक राजाको अभावमा मनुष्यहरूले पशु जस्तै आचरण [illegible] आदि [illegible]

वीरमाता सुनीथालाई सल्लाह लिएर मन्त्रीहरू सहमत नभए पनि बेनको नै भूमण्डलको राजपदमा 'अभिषेक गरिदिए ॥१॥२॥ त्यस उद्दण्ड बेन राज्यासनमा बसेको समाचार सुनेर सबै दस्यु डराएको मूसो झैं तत्काल यता-उता लुके ॥ ३ ॥ राज्यसिंहासन पाएपछि आठै लोकपालहरूको ऐश्वर्य मदले उन्मत्त भएर तथा अतिशय उद्दण्डतापूर्वक आफू-लाई सबैभन्दा ठूलो राजा मानेर महाभाग मुनीश्वरहरूको तिरस्कार गर्न लाग्यो ॥४॥ त्यस प्रकार ऐश्वर्य-मदले अन्धो भएर राजा बेन निरङ्कुश गजराज जस्तै रथमा बसेर पृथिवी तथा आकाशलाई थर्काउँदै सर्वत्र डुल्न लाग्यो ॥५॥ उसले आफ्नो राज्यमा यस्तो ढ्याली पिटायो—कुनै पनि ब्राह्मण कुनै प्रकारको यज्ञ, दान तथा हवन आदि केही नगरून् ।' यस प्रकार उसले सबै धर्म-कर्म बन्द पारिदियो ॥६॥ दुराचारी बेनका त्यस्ता कुकर्म देखेर तथा प्रजामाथि सङ्कट उपस्थित भएको ठानेर मुनीश्वरहरूको कृपावश एक स्थानमा जम्मा भई परस्पर सल्लाह गर्दै भने—॥७॥ 'अहो ! दुइतिरबाट बल्दो काठको माझमा बस्ने पिपीलिकादि जीवहरूको समान यस बखत राजा तथा डाका दुवै पट्टिले संसारलाई सहसा

वीरमातरमाहूय सुनीथां ब्रह्मवादिनः ॥ प्रकृत्यसम्मतं वेनमभ्यषिञ्चन्पतिं भुवः ॥ २ ॥ श्रुत्वा नृपासनगतं वेनमत्युग्रशासनम् ॥ निलिल्युर्दस्यवः सद्यः सर्पत्रस्ता इवाखवः ॥ ३ ॥ स आरूढनृपस्थान उन्नद्धोऽष्टविभूतिभिः ॥ अवमेने महाभागान् स्तब्धः सम्भावितः स्वतः ॥४॥ एवं मदान्ध उत्सिक्तो निरङ्कुश इव द्विपः ॥ पर्यटन्रथमास्थाय कम्पयन्निव रोदसी ॥५॥ न यष्टव्यं न दातव्यं न होतव्यं द्विजाः क्वचित् ॥ इति न्यवारयद्धर्मं भेरीघोषेण सर्वशः ॥ ६ ॥ वेनस्यावेक्ष्य मुनयो दुर्वृत्तस्य विचेष्टितम् ॥ विमृश्य लोकव्यसनं कृपयोचुः स्म सत्रिणः ॥ ७ ॥ अहो उभयतः प्राप्तं लोकस्य व्यसनं महत् ॥ दारुण्युभयतो दीप्ते इव तस्करपालयोः ॥८॥ अराजकभयादेष कृतो राजाऽतदर्हणः ॥ ततोऽप्यासीद्भयं त्वद्य कथं स्यात्स्वस्ति देहिनाम् ॥९॥ अहेरिव पयःपोषः पोषकस्याप्यनर्थकृत् ॥ वेनः प्रकृत्यैव खलः सुनीथागर्भसंभवः ॥१०॥ निरूपितःप्रजापालः स जिघांसति वै प्रजाः ॥ तथापि सान्त्वयेममुं नास्मांस्तत्पातकं स्पृशेत् ॥११॥ तद्विद्वद्भिरसद्वृत्तो वेनोऽस्माभिःकृतो नृपः ॥ सान्त्वितोयदि नो वाचं न ग्रहीष्यत्यधर्मकृत् ॥१२॥ लोकधिक्कारसंदग्धं दहिष्याम स्वतेजसा ॥ एवमध्यवसायैनं मुनयो गूढमन्यवः ॥ उपव्रज्याब्रुवन्वेनं सान्त्वयित्वा च सामभिः॥१३॥ मुनय ऊचुः ॥ नृपवर्य निबोधैतद्यत्ते

ठूलो भय आएर उपस्थित भएको छ ॥८॥ अराजकताको भयले नै योग्य नभए पनि हामीले बेनलाई राजा तुल्यायौं किन्तु अब उसबाट पनि प्रजालाई भय हुनलागेको छ भने सांसारिक जीवलाई कसरी सुख मिल्नेछ ? ॥९॥ दूधले सर्पको पोषण गरे झैं अब यसको पोषण गर्नु पनि पोषणकर्ताको नै अनर्थको कारण बनिरहेको छ। वास्तवमा सुनीथाको गर्भबाट उत्पन्न बेन स्वभावैले दुष्ट छ ॥१०॥ हामीले त यसलाई प्रजाको पालन गर्नको निम्ति राजपदमा अभिषिक्त गरेका थियौं, तर यो त ती प्रजाहरूलाई नै नष्ट पारिदिन खोजिरहेछ, तैपनि हामी यसलाई सम्झाउँला, जसले यो द्वारा गरिएका पापको हामीसित स्पर्श हुन नपाओस् । हामीले जानेर नै यस दुराचारीलाई राजा तुल्याएका थियौं । अतः सम्झाई-बुझाई गर्दा पनि यसले हाम्रो कुरा मानेन भने सबैले धिक्कार दिए दग्ध यस दुष्टलाई हामी आफ्नो तेजले भस्म पारिदिने छौं ।' यस्तो विचार गरेर उसको क्रोध गुप्त थियो, ती मुनिजन राजा बेनकहाँ गए र उसलाई शान्तिपूर्वक बुझाउँदै भन्न लागे ॥११-१३॥ मुनिहरूले भने–हे राजन् ! हामी जे जति भनिरहेका छौं, त्यो ध्यान दिएर सुन । हे तात ! यसले तिम्रो आयुष्य, श्री,शक्ति र कीर्ति

बढ्नेछ ।।१४।। हेर–मनुष्यहरू द्वारा मन, वाणी, शरीर तथा बुद्धिले आचरित धर्म निष्काम पुरुषका लागि शोकरहित लोक तथा अनन्त मोक्षपद प्रदान गर्दछ ।।१५।। अतः हे वीर ! प्रजागणको कल्याणरूपी त्यो धर्म तिमीले गर्दा नष्ट हुन नपाओस् । किनकि धर्म नष्ट भएपछि राजाको ऐश्वर्य नष्ट भएर जान्छ ।।१६।। हे राजन् ! दुष्ट मन्त्री तथा चोर टाँ आदिबाट प्रजाको रक्षा गरेर उचित तिरो लिने राजा इहलोक तथा परलोक दुवै स्थानमा सुख पाउँदछ ।।१७।। जसको राज्य तथा नगरमा वर्णाश्रम धर्मको पालन गर्ने पुरुषहरू द्वारा भगवान् यज्ञपुरुषको यजन हुन्छ तब हे महाभाग ! प्रजा द्वारा आफ्नो आज्ञाको पालन गराउने त्यस राजाप्रति भूतभावन भगवान् सदैव प्रसन्न रहन्छन् ।। १८ ।। १९ ।। ती जगदीश्वरहरूका पनि ईश्वर नारायण प्रसन्न भएपछि के कुरा अप्राप्य रहन सक्छ ? इन्द्रादि लोकपालसहित सबै लोकपाल पनि आदरपूर्वक उनलाई दर्शन दिन्छन् ।। २० ।। ती भगवान् सबै लोकपाल तथा यज्ञका स्वरूप हुन् । ती वेदत्रयीमय, द्रव्यमय र तपोमय छन् । हे राजन् ! जो जन तिम्रो बन्ढ्‌नेका लागि तिनको विविध प्रकारका यज्ञद्वारा यजन गर्दछन्, तिमीलाई

विज्ञापयाम भोः ।। आयुः श्रीबलकीर्तीनां तव तात विवर्धनम् ।। ४।। धर्म आचरितः पुंसां वाङ्मनःकायबुद्धिभिः ।। लोकान्विशोकान्वितरत्यथानन्त्यमसङ्गिनम् ।।१५।। स ते मा विनशेद्वीर प्रजानां क्षेमलक्षणः ।। यस्मिन्विनष्टे नृपतिरैश्वर्यादवरोहति ।।१६।। राजन्नसाध्वमात्येभ्यश्चोरादिभ्यः प्रजा नृप ।। रक्षन्यथा बलिं गृह्णन्निह प्रेत्य च मोदते ।। १७ ।। यस्य राष्ट्रे पुरे चैव भगवान्यज्ञपूरुषः ।। इज्यते स्वेन धर्मेण जनैर्वर्णाश्रमान्वितैः ।।१८।। तस्य राज्ञो महाभाग भगवान्भूतभावनः ।। परितुष्यति विश्वात्मा तिष्ठतो निजशासने ।।१९।। तस्मिंस्तुष्टे किमप्राप्यं जगतामीश्वरेश्वरे ।। लोकाः सपाला ह्येतस्मै हरन्ति बलिमादृताः।।२०।। तं सर्वलोकामरयज्ञसंग्रहं त्रयीमयं द्रव्यमयं तपोमयम् ।। यज्ञैर्विचित्रैर्यजतो भवाय ते राजन्स्वदेशाननुरोद्धुमर्हसि।।२१।।यज्ञेन युष्मद्विषये द्विजातिभिर्वितायमानेन सुरा कला हरेः ।। स्विष्टाः सुतुष्टाः प्रदिशन्तिवाञ्छितं तद्धेलनं नार्हसि वीर चेष्टितुम्।।२२।। वेन उवाच ।। बालिशा बत यूयं वा अधर्मे धर्ममानिनः ।। ये वृत्तिदं पतिं हित्वा जारं पतिमुपासते ।।२३।। अवजानन्त्यमी मूढा नृपरूपिणमीश्वरम् ।। नानुविन्दन्ति ते भद्रमिह लोके परत्र च ।। २४ ।। को यज्ञपुरुषो नाम यत्र वो भक्तिरीदृशी ।। भर्तृस्नेहविदूराणां यथा जारे कुयोषिताम् ।। २५ ।। विष्णुर्विरिञ्चो गिरिश इन्द्रो वायुर्यमो रविः ।। पर्जन्यो धनदः सोमः क्षितिरग्निरपां पतिः ।। २६ ।। एते चान्ये च विबुधाः प्रभवो वरशापयोः ।। देहे भवन्ति नृपतेः सर्वदे·

उनको अनुकूल आचरण गर्नुपर्दछ ।।२१।। यदि तिम्रो राज्यमा ब्राह्मणादि द्विजहरूद्वारा यज्ञको अनुष्ठान गरिन्छ तब श्रीहरिका अंशस्वरूप देवता धेरै प्रसन्न भएर तिमीलाई अभिलषित फल दिनेछन् । अतएव हे वीर ! तिमीले ती देवताहरूको तिरस्कार गर्नु अनुचित हो ।।२२।। वेनले भने—तिमीहरू ठूलो मूर्ख हौ । तिमीले अधर्मलाई नै धर्म मानेका छौ । किनकि तिमी आफ्नो पालक म राजालाई त्यागेर जारतुल्य पति परमात्माको आराधना गर्दछौ ।।२३।।जो मूर्ख राजारुपी परमेश्वरको तिरस्कार गर्दछन्, ती यसलोक र परलोकमा कहीं पनि सुखी रहन्नन् ।।२४।। जस्तै आफ्नो पतिसित प्रेम नराख्ने कुलटा स्त्रीको प्रीति जार पुरुषमा हुन्छ, त्यस्तै नै स्वामीको स्नेहबाट रहित तिमीहरूको, जसमा यति ठूलो भक्ति छ, त्यो यज्ञपुरुष को हो ? ।।२५।। ब्रह्मा, विष्णु, शिव, इन्द्र, वायु, यम, सूर्य, मेघ, कुबेर चन्द्रमा, पृथिवी तथा वरुण–यी र वर तथा श्राप दिनमा समर्थ सबै देवता राजाका शरीरमा

विद्यमान रहन्छन्, यसले राजा सर्वदेवमय कहिन्छन् ॥२६॥२७॥ हे विप्रगण ! तिमी मत्सररूपी *व्यसन छाडेर आफ्ना सबै कर्मद्वारा मेरो नै यज्ञ गर—मलाई नै बलि भाग गर । ममन्दा दूलो अरु कुन पुरुष अग्रपूजाको अधिकारी हुन्छ ? ॥२८॥ मैत्रेयजी भन्छन्—यस प्रकार जसको बुद्धि विपरीत भएको थियो, त्यस महापापी तथा कुमार्गगामी राजा वेनले बारम्बार नम्रतापूर्वक सम्झाउँदा-बुझाउँदा पनि मुनिहरूको प्रार्थनामा केही ध्यान दिएन, किनकि उसको पुण्य क्षीण भइसकेको थियो ॥ २९ ॥ हे विदुर ! आफूलाई पण्डित ठान्ने ती वेनसित यस प्रकार अपमानित भएपछि र आफ्नो कल्याणकारिणी माग व्यर्थ भएको देखेर ती सबै ब्राह्मण वेनमाथि सार्है कुपित भए ॥३०॥ ती भन्नलागे—यो महापापी स्वभावतः

वमयो नृपः ॥ २७ ॥ तस्मान्मां कर्मभिर्विप्रा यजध्वं गतमत्सराः ॥ बलिं च मह्यं हरत मत्तोऽन्यः कोऽग्रभुक् पुमान् ॥ २८ ॥ मैत्रेय उवाच ॥ इत्थं विपर्ययमतिः पापीयानुत्पथं गतः ॥ अनुनीयमानस्तद्याञ्चां न चक्रे भ्रष्टमङ्गलः ॥ २९ ॥ इति तेऽसत्कृतास्तेन द्विजाः पण्डितमानिना ॥ भग्नायां भव्ययाञ्चायां तस्मै विदुर चुक्रुधुः ॥ ३० ॥ हन्यतां हन्यतामेष पापः प्रकृतिदारुणः ॥ जीवञ्जगदसावाशु कुरुते भस्मसाद् ध्रुवम् ॥ ३१ ॥ नायमर्हत्यसद्वृत्तो नरदेववरासनम् ॥ योऽधियज्ञपतिं विष्णुं विनिन्दत्यनपत्रपः ॥ ३२ ॥ को वैनं परिचक्षीत वेनमेकमृतेऽशुभम् ॥ प्राप्त ईदृशमैश्वर्यं तदनुग्रहभाजनः ॥ ३३ ॥ इत्थं व्यवसिता हन्तुमृषयो रूढमन्यवः ॥ निजघ्नुर्हुंकृतैर्वेनं हतमच्युतनिन्दया ॥ ३४ ॥ ऋषिभिः स्वाश्र-

बडो दुष्ट छ । यदि यो बाँचिरह्यो भने केही दिनमै सम्पूर्ण संसार भस्म पार्नेछ । अतएव सबै मिलेर यसलाई मारिदिनोस्—मारिदिनोस् ॥३१॥ यो दुराचारी कहिले पनि राजा सिंहासनको योग्य हुन सक्दैन, किनकि यो निर्लज्ज साक्षात् यज्ञपति विष्णु भगवान्‌को निन्दक छ ॥ ३२ ॥ अहो ! जसको कृपाले यसलाई ऐश्वर्य मिल्यो, ती हरिको यो पापी वेन बाहेक अरु को निन्दा गर्न सक्दछ ? ॥३३॥ यस प्रकार अत्यन्त क्रुद्ध भएर वेनलाई मार्ने निश्चय गरेर भगवान्‌को निन्दा गर्नाले हतप्राय राजा वेनलाई आफ्नो एक हुँकारले नै भस्म

---

* दृष्टान्त ( मृत्युलाई निम्ता दिने व्यसन हुन्छ )— कौटा राजकुमार निकै प्यारो गरेर पालिएको थियो । अतः त्यसको हृदयमा अनेक व्यसनले घर बनाए । हुक्का तमाखु त्यसका आमा बाबु जस्तै थिए र गाँजा-भाँग त्यसका कुटुम्ब । केही दिनपछि राजपुत्र बिरामी भयो । राजाले धेरै औषधि गरे, तर रोग निको भएन । बरु मै औषधि खाए पनि संयम नगरी रोग कसरी निको हुने ? त्यसै बखत मानव-प्रकृति अनुसार उपचार गर्ने कौटा महात्मा आइपुगे । तिनले राजपुत्रलाई हेरेर भने - 'यस्ता यस्ता हजारौं रोगी मैले निको पारिसकें । भोलिदेखि मेरो औषधि आरम्भ गर ।' राजकुमारले सोधे—'पथ्य के दिनुहुन्छ ?' महात्माले भने— तिमी गाँजा, भाँग, रक्सी आदि दोबर सेवन गर्नु ।' व्यसनी कुमार प्रसन्न भयो र भन्यो—'यी वैद्य असल हुन् ।' महात्मासित त्यसको प्रेम भयो । अतः त्यो स्वयं उनीकहाँ औषधि लिन गयो र सोध्यो—'हजुरले मादक द्रव्य दोबर खान किन भन्नुभयो ? अनेक मूर्ख वैद्य त मलाई व्यसन छाडिदिनु भन्दछन् ।' महात्माले भने-'व्यसनमा चार गुण हुन्छन् । पहिलो—चोर आउँदैनन्, शरीर मोटो रहन्छ, बस्नलाई सवारी पाइन्छ र व्यसनी मनुष्य कहिल्यै बूढो हुँदैन !' कुमारले भन्यो—'त्यो कसरी ?' तिनले उत्तर दिए—तमाखुको व्यसनीलाई सधैँ खोकी लागिरहन्छ र निद्रा लाग्दैन । अतः चोर आए पनि डराई भाग्दछ । शरीर सुनिन्छ, अंग मरि डल्ला-डुल्लो निस्कन्छ, यसै कारण त्यो मोटो-घाटो देखिन्छ । बुढ्यामा शक्ति रहन्न, त्यसैले कहीं जान परे पनि वाहनको आवश्यकता पर्दछ । यस्तो मनुष्य जवानीमै मर्दछ, अनि बुढ्यावस्था किन आउँछ ?' महात्माको वचन सुनेर राजपुत्रले भन्यो—त्यसो भए व्यसन दुर्गुण भयो । म आजैदेखि यसलाई त्यागिदिन्छु ।' तदनुसार राजपुत्रले व्यसन त्यागिदियो र सधैँको निम्ति निरोग भयो ।

पारिदिए ॥३४॥ यसरी उसको वध गरेपछि जब ती मुनिहरू आफआफ्नो आश्रममा गए तब सुनीथा शोकाकुल भएर आफ्नो विद्याबलले छोराको शरीरको रक्षा गर्न लागिन्
॥३५॥ एक दिन ती मुनीश्वर सरस्वती नदीमा स्नान गरेर अब अग्निहोत्रबाट निवृत्त भई नदीकै तटमा हरि-चर्चा गर्नलागे ॥३६॥ अनि जता-तर्तै सबै जनहरूलाई भयभीत
पार्ने भएका अनेक उत्पात हुनलागेका देखेर ती भन्न लागे–'पृथिवी अनाथ हुनाले त्यसलाई दस्युहरूद्वारा पीडित हुन त परिरहेको छैन ? ॥३७॥ ती सबै मुनिहरू यस्तो विचार
गरिरहेकै थिए, उसै बखत तिनले प्रजाको धन लुटेर भाग्नलागेका चोरहरूको दगुराईले धूलो उड्नलागेको देखे ॥३८॥ त्यो उनीहरूले राजा नहुनाले प्रजाको धन लुटिएको र योटाले
अर्कोलाई मार्ने इच्छा भएका डाकाहरूको उपद्रव ठानेर अराजकताले बलहीन तथा चोर-डाकालाई मुनीश्वरहरूले आफू सबै तर्कबाट समर्थ भए पनि रोक-छेक गरेनन् ॥३९॥
॥४०॥ उनीहरूले विचार गरे—ब्राह्मण यदि समदर्शी तथा शान्त स्वभावका हुन् तापनि दीन-हीनको उपेक्षा गर्नालि तिनको ब्रह्मतेज त्यसै प्रकार नष्ट भएर खेर जान्छ, जस्तै

मपदं गते पुत्रकलेवरम् ॥ सुनीथा पालयामास विद्यायोगेन शोचती ॥ ३५ ॥ एकदा मुनयस्ते तु सरस्वत्सलिलाप्लुताः ॥ हुत्वाऽग्नीन्सत्कथाः
श्चक्रुरुपविष्टाः सरित्तटे ॥ ३६ वीक्ष्योत्थितान्महोत्पातानाहुर्लोकभयंकरान् ॥ अप्यभद्रमनाथाया दस्युभ्यो न भवेद्भुवः ॥ ३७ ॥ एवं मृशन्त
ऋषयो धावतां सर्वतो दिशम् ॥ पांसुः समुत्थितो भूरि चौराणामभिलुम्पताम् ॥ ३८ ॥ तदुपद्रवमाज्ञाय लोकस्य वसु लुम्पताम् ॥ भर्तर्युपरते तस्मि-
न्नन्योन्यं च जिघांसताम् ॥ ३९ ॥ चौरप्रायं जनपदं हीनसत्त्वमराजकम् ॥ लोकान्नावारयञ्छक्ता अपि तद्दोषदर्शिनः ॥ ४० ॥ ब्राह्मणः समदृ-
क्शान्तो दीनानां समुपेक्षकः ॥ स्रवते ब्रह्म तस्यापि भिन्न भाण्डात्पयो यथा ॥ ४१ ॥ नाङ्गस्य वंशो राजर्षेरेष संस्थातुमर्हति ॥ अमोघवीर्या हि
नृपा वंशेऽस्मिन्केशवाश्रयाः ॥ ४२ ॥ विनिश्चित्यैवमृषयो विपन्नस्य महीपतेः ॥ ममन्थुरूरुं तरसा तत्रासीद्बाहुको नरः ॥ ४३ ॥ काककृष्णोऽतिह्र-
स्वाङ्गो ह्रस्वबाहुर्महाहनुः ॥ ह्रस्वपान्निम्ननासाग्रो रक्ताक्षस्ताम्रमूर्धजः ॥ ४४ ॥ तं तु तेऽवनतं दीनं किं करोमीति वादिनम् ॥ निषीदेत्यब्रुवंस्तात
स निषादस्ततोऽभवत् ॥ ४५ ॥ तस्य वंशास्तु नैषादा गिरिकाननगोचराः ॥ येनाहरज्जायमानो वेनकल्मषमुल्बणम् ॥ ४६ ॥ इति श्रीमद्भागवते
महापुराणे चतुर्थस्कन्धे पृथुचरिते निषादोत्पत्तिर्नाम चतुर्दशोऽध्यायः ॥ १४ ॥ मैत्रेय उवाच ॥ अथ तस्य पुनर्विप्रैरपुत्रस्य महीपतेः ॥ बाहुभ्यां

फुटेको गाग्रोबाट पानी बगेर जान्छ ॥४१॥ राजर्षि अङ्गको वंश यस प्रकार समाप्त हुने योग्य छैन, किनकि यस वंशमा अनेक अमोघ बलवान् र भगवत्परायण राजाहरू भइसकेका छन्
॥४२॥ यस्तो निश्चय गरेर ती मुनीश्वरहरूले मरेका राजा वेनको तिघ्रा निकै बलपूर्वक मन्थन गरे । त्यसरी मथेपछि त्यसबाट योटा बाउन्ने पुरुष उत्पन्न भयो ॥ ४३ ॥ त्यो पुरुष
काग जस्तै कालो थियो, त्यसका सारा अङ्ग र बाहुहरू साना, नाक च्याप्टो, आँखा राता र कपाल ताम्रवर्णका ( राता ) थिए ॥४४॥ जब त्यस पुरुषले अ यन्त दीन र नम्र भएर भन्यो
'म के गरूँ ?' तब ऋषिले भने—'हे तात ! निषीद अर्थात् यहाँ बस ।' अतएव त्यो निषाद भयो ॥४५॥ त्यस पुरुषले जन्म लिएर नै दिवङ्गत राजा वेनका सबै भयंकर पाप हरण
गरिदियो, त्यसैले उसका वंशधर वन तथा पहाडका निवासी निषाद अर्थात् भिल्ल कहिए ॥४६॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपालीभाषाटीकायां चतुर्दशोऽध्यायः ॥१४॥

( भगवान् पृथुको जन्म र राज्याभिषेक )––मैत्रेयजी भन्दछन्–हे विदुरजी ! त्यसपछि जब ब्राह्मणहरूले वेनका बाहुको मन्थन गरे तब पुत्रहीन राजा वेनको बाहुबाट यौटा स्त्री-पुरुषको जोडी उत्पन्न भयो ॥१॥ त्यसरी उत्पन्न त्यो जोडीलाई भगवान्‌को कलाबाट उत्पन्न भएको जानेर ती ब्रह्मवादी मुनीश्वरले भने ॥२॥ ऋषिगण भन्दछन्–यो पुरुष जगत्‌लाई पालन गर्ने विष्णु भगवान्‌का कलाबाट उत्पन्न भएको छ यो स्त्री श्रीहरिसित कहिल्यै नछुट्टिने लक्ष्मीको अवतार हुन् ॥३॥ अतः यो पुरुष राजाहरूमा सर्वप्रधान हुनेछ र आफ्नो सुयश स्थापित गर्नेछ । यो महायशस्वी पृथु नामको राजा हुनेछ ॥४॥ यी राम्रा दाँत भएकी, आफ्ना गुणले आभूषणहरूलाई पनि आभूषित एवं उत्तम कटिप्रदेश हुने अर्चि नामकी स्त्री यी पृथुलाई नै आफ्नो पति रोज्नेछन्॥५॥यो साक्षात् श्रीहरिको अंश नै संसारको रक्षाका निमित्त अवतीर्ण भएको छ र यी देवी भगवान्‌सित कहिल्यै पनि पृथक् नरहने तथा निरन्तर उनैको सेवामा तत्पर साक्षात् लक्ष्मीकी अवतार हुन् ॥६॥ मैत्रेयजी भन्दछन्–हे विदुर ! यस प्रकार पृथुले अवतार लिएपछि सबै ब्राह्मण तिनको स्तुति

मथ्यमानाभ्यां मिथुनं समपद्यत ॥ १ ॥ तद्दृष्ट्वा मिथुनं जातमृषयो ब्रह्मवादिनः ॥ ऊचुः परमसन्तुष्टा विदित्वा भगवत्कलाम् ॥२॥ ऋषय ऊचुः ॥
एष विष्णोर्भगवतः कला भुवनपालिनी ॥ इयं च लक्ष्म्याः सम्भूतिः पुरुषस्यानपायिनी ॥ ३ ॥ अयं तु प्रथमो राज्ञां पुमान्प्रथयिता यशः ॥
पृथुर्नाम महाराजो भविष्यति पृथुश्रवाः ॥ ४ ॥ इयं च सुदती देवी गुणभूषणभूषणा ॥ अर्चिर्नाम वरारोहा पृथुमेवावरुन्धती ॥५॥ एष साक्षाद्ध-
रेरंशो जातो लोकररिक्षया ॥ इयं च तत्परा हि श्रीरनुजज्ञेऽनपायिनी ॥ ६ ॥ मैत्रेय उवाच ॥ प्रशंसन्ति स्म तं विप्रा गन्धर्वप्रवरा जगुः ॥
मुमुचुः सुमनोधाराः सिद्धा नृत्यन्ति स्वःस्त्रियः ॥७॥ शंखतूर्यमृदङ्गाद्या नेदुर्दुन्दुभयो दिवि ॥ तत्र सर्वे उपाजग्मुर्देवर्षिपितृणां गणाः ॥८॥ ब्रह्मा
जगद्गुरुर्देवैः सहासृत्य सुरेश्वरैः ॥ वैन्यस्य दक्षिणे हस्ते दृष्ट्वा चिह्नं गदाभृतः ॥ ९ ॥ पादयोररविन्दं च तं वै मेने हरेः कलाम् ॥ यस्याप्रतिहतं
चक्रमंशः स परमेष्ठिनः ॥ १० ॥ तस्याभिषेक आरब्धो ब्राह्मणैर्ब्रह्मवादिभिः ॥ आभिषेचनिकान्यस्या आजह्रुः सर्वतो जनाः ॥ ११ ॥
सरित्समुद्रा गिरयो नागा गावः खगा मृगाः ॥ द्यौः क्षितिः सर्वभूतानि समाजह्रुरुपायनम् ॥ १२ ॥ सोऽभिषिक्तो महाराजः सुवासाः

गर्नलागे, गन्धर्व गाउन लागे, सिद्धजन पुष्पको वर्षा गर्नलागे र अप्सरागण नाच्न लागे ॥७॥ उस बखत आकाशमा शंख, मृदङ्ग, तथा दुन्दुभी आदि बाजा बज्न लागे । देवता, ऋषि र पितृहरूको समूह त्यहीं आइपुग्यो ॥८॥ जब जगद्गुरु ब्रह्माजीले इन्द्रादि देवता सहित आएर वेन-तनय पृथुको दाहिने हातमा विष्णु भगवान्‌का रेखाहरू तथा चरणमा कमलको चिह्न देखे तब उनलाई साक्षात् श्रीहरिको अंश ठाने, किनकि जुनसुकैको पनि हातमा अन्य रेखाहरूसित नजोरिएको चक्रको चिह्न विद्यमान रहन्छ, त्यो साक्षात् नारायणको अंश हुन्छ ॥९॥१०॥ त्यसपछि वेदवादी ब्राह्मणहरूले महाराज पृथुको अभिषेक आयोजन गरे र सर्वतिरबाट अभिषेकको सामग्री जोरिन लागे ॥११॥ त्यस बखत नदी, समुद्र, पर्वत, वृक्ष गाई, मृग, स्वर्ग, पृथ्वी तथा सम्पूर्ण प्राणिहरूले उनलाई थरि-थरिका उपहार दिए ॥१२॥ यस प्रकार राज्याभिषेक भएपछि महाराज पृथुले राम्रा वस्त्राभूषण धारण गरे र नाना

प्रकारका अलङ्कारहरूले सुसज्जित आफ्नी प्रिया अर्चिसित अर्का अग्निदेव जस्ता शोभित भए ॥१३॥ हे वीरवर विदुरजी ! उनलाई कुबेरले सुनको सिंहासन र वरुणले जसबाट जलका थोपा चुहिरहेका थिए, यस प्रकार चन्द्रमा जस्तै श्वेत र प्रकाशमय छत्र अर्पण गरे ॥१४॥ त्यसै प्रकार वायुले दुइटा चमर, धर्मले कीर्तिमयी माला, इन्द्रले सुन्दर मुकुट, पापीहरूमा शासन गर्न यमराजले यमदण्ड, ब्रह्माले ब्रह्ममय कवच, सरस्वतीले उत्तम हार, विष्णुले सुदर्शन चक्र र लक्ष्मीले अविनाशिनी शोभा, शिवले दशचन्द्र हुने खड्ग, पार्वतीले सय चन्द्रमाका चिह्नहरूले चिह्नित ढाल, चन्द्रमाले अमृतमय अश्व, त्वष्टाले सुन्दर रथ, अग्निले सींग द्वारा निर्मित बलियो धनुष, सूर्यले किरणमय बाण, पृथ्वीले चरण-स्पर्श हुनासाथ इच्छित स्थानमा पुर्‍याउने खराऊ, स्वर्गका अभिमानी देवताहरूले नित्यप्रति हुने पुष्पहरूको वर्षा, आकाशगामी देवताहरूले नाच-गाना-बजाना र अन्तर्धान हुन सकिने शक्तिहरू, ऋषिहरूले अमोघ आशीर्वाद, समुद्रले आफूमा उत्पन्न शङ्ख, यी बाहेक सातै समुद्र, पर्वत, नदीहरूले महात्मा पृथुको रथलाई बाटो दिए। त्यसपछि सूत, मागध तथा

साध्वलंकृतः ॥ पत्न्याऽर्चिषाऽलंकृतया विरेजेऽग्निरिवापरः ॥ १३ ॥ तस्मै जहार धनदो हैमं वीरवरासनम् ॥ वरुणः सलिलस्रावमातपत्रं
शशिप्रभम् ॥ १४ ॥ वायुश्च वालव्यजने धर्मः कीर्तिमयीं स्रजम् ॥ इन्द्रः किरीटमुत्कृष्टं दण्डं संयमनं यमः ॥ १५ ॥ ब्रह्मा ब्रह्ममयं वर्म
भारती हारमुत्तमम् ॥ हरिः सुदर्शनं चक्रं तत्पत्न्यव्याहतां श्रियम् ॥ १६ ॥ दशचन्द्रमसिं रुद्रः शतचन्द्रं तथाऽम्बिका ॥ सोमोऽमृतमयानश्वां-
स्त्वष्टा रूपाश्रयं रथम् ॥ १७ ॥ अग्निराजगवं चापं सूर्यो रश्मिमयानिषून् ॥ भूः पादुके योगमय्यौ द्यौः पुष्पावलिमन्वहम् ॥१८॥ नाट्यं सुगीतं
वादित्रमन्तर्धानं च खेचराः ॥ ऋषयश्चाशिषः सत्याः समुद्रः शंखमात्मजम् ॥ १९ ॥ सिन्धवः पर्वता नद्यो रथवीथीर्महात्मनः ॥ सूतोऽथ मागधो
वन्दी तं स्तोतुमुपतस्थिरे ॥ २० ॥ स्तावकांस्तानभिप्रेत्य पृथुर्वैन्य प्रतापवान् ॥ मेघनिर्ह्रादया वाचा प्रहसन्निदमब्रवीत् ॥ २१ ॥ पृथुरुवाच ॥
भो सूत हे मागध सौम्य वन्दिँल्लोकेऽधुनाऽस्पष्टगुणस्य मे स्यात् ॥ किमाश्रयो मे स्तव एष योज्यतां मा मय्यभूवन्वितथा गिरो वः ॥ २२ ॥
तस्मात्परोक्षेऽस्मदुपश्रुतान्यलङ्करिष्यथ स्तोत्रमपीच्यवाचः ॥ सत्युत्तमश्लोकगुणानुवादे जुगुप्सितं न स्तवयन्ति सभ्याः ॥ २३ ॥ महद्गुणानात्मनि
कर्तुमीशः कः स्तावकैः स्तावयतेऽसतोऽपि ॥ तेऽस्याभविष्यन्निति विप्रलब्धो जनोपहासं कुमतिर्न वेद ॥ २४ ॥ प्रभवो ह्यात्मनः स्तोत्रं जुगुप्सन्त्यपि

बन्दीजन उनको स्तुति गर्न आइपुगे ॥१५-२०॥ ती स्तुति गर्ने बन्दीजन आदिलाई आफ्नो अभिमुख पारेर हाँस्तै परम प्रतापी महाराज पृथुले मेघको समान गम्भीर वाणीमा यस प्रकार भने ॥२१॥ पृथु भन्दछन्–हे सूत ! हे मागध ! हे सौम्य बन्दीजन ! अहिले यस लोकमा मेरो कुनै गुण प्रकट भएको छैन, अनि तिमीहरूद्वारा गरिएको मेरो यो स्तुति कुन गुणको भरमा अडिन सक्छ ? मेरो विषयमा तिमीहरूको वचन व्यर्थ हुन नपाओस् ॥२२॥ अतएव हे मृदुभाषी बन्दीजन ! मेरा प्रच्छन्न गुणहरू प्रकट भए पछि मात्र तिमीहरू मेरो स्तुति गर्नु, किनकि सभ्य पुरुष पवित्र-कीर्ति सम्पन्न भगवान्‌का गुणानुवाद छाडेर तुच्छ मनुष्यको स्तुति गर्दैनन् ॥२३॥ महान गुणहरूलाई धारण गर्नमा समर्थ भएर पनि यस्तो कुन बुद्धिमान् पुरुष छ, जो ती गुणहरू प्रकट नभएसम्म केवल सम्भावना मात्रले स्तुति गर्नेहरूद्वारा गरिएको आफ्नो स्तुति प्रसन्न मनले सुन्नेछ ? किनकि त्यस प्राणीमा अमुक गुण विकसित हुनेछन्। यस्तो स्तुति द्वारा जो आफूलाई ठूलो ठान्न थाल्दछ, त्यो दुर्बुद्धि मनुष्यहरू द्वारा गरिने आफ्नो उपहासलाई बुझ्न असमर्थ रहन्छ

॥२४॥ जस्तै लज्जावान् र उदार पुरुष आफ्नो अनिन्दित पुरुषार्थ चर्चालाई निन्द्य ठान्छन्, लोक विख्यात समर्थ पुरुष पनि आफ्नो स्तुति मनपराउन्नन् ॥ २५ ॥ हे बन्दीजन ! म अहिले आफ्ना श्रेष्ठ गुण भएर पनि लोकमा अप्रसिद्ध छु—तब तिमीहरूसित बालक झैं आफ्नो कीर्तिको वर्णन कसरी गराउँ ? ॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां पञ्चदशोऽध्यायः ॥१५॥ ( बन्दीजन द्वारा भगवान् पृथुको स्तुति )—मैत्रेयजी भन्दछन्—हे विदुरजी ! महाराज पृथुले यस्तो भनेपछि उनको वचनामृतको सेवन गर्नाले सन्तुष्ट बन्दीजन मुनिहरूको प्रेरणाले उनको स्तुति गर्नलागे ॥ १ ॥ तिनले भने-जुन सर्वश्रेष्ठ देवता आफ्नो मायाले अवतार लिएका छन्, तिनको महिमा वर्णन गर्न हामी असमर्थ छौं किनकि राजा वेनको शरीरबाट उत्पन्न हजुरको पुरुषार्थ बृहस्पति आदि ठूला-ठूला बुद्धिमानको पनि बुद्धिलाई छक्क पारिदिन्छ ॥ २ ॥ तथापि जो भगवान्का

विश्रुताः ॥ ह्रीमन्तः परमोदाराः पौरुषं वाऽविगर्हितम् ॥ २५ ॥ वयं त्वविदिता लोके सूताद्यापि वरीमभि ॥ कर्मभिः कथमात्मानं गापयिष्याम
बालवत् ॥ २६ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पृथुचरिते पञ्चदशोऽध्यायः ॥ १५ ॥ मैत्रेय उवाच ॥ इति ब्रुवाणं नृपतिं गायका
मुनिचोदिताः ॥ तुष्टुवुस्तुष्टमनसस्तद्वागमृतसेवया ॥ १ ॥ नालं वयं ते महिमाऽनुवर्णने यो देववर्योऽवतार मायया ॥ वेनाङ्गजातस्य च पौरुषाणि ते
वाचस्पतीनामपि बभ्रमुर्धियः ॥ २ ॥ अथाप्युदारश्रवसः पृथोर्हरेः कलावतारस्य कथाऽमृतादृताः ॥ यथोपदेशं मुनिभिः प्रचोदिताः श्लाघ्यानि
कर्माणि वयं वितन्महि ॥ ३ ॥ एष धर्मभृतां श्रेष्ठो लोकं धर्मेऽनुवर्तयन् ॥ गोप्ता च धर्मसेतूनां शास्ता तत्परिपन्थिनाम् ॥ ४ ॥ एष वै लोक-
पालानां बिभर्त्येकस्तनौ तनूः ॥ काले काले यथाभागं लोकयोरुभयोर्हितम् ॥ ५ ॥ वसु काले उपादत्ते काले चायं विमुञ्चति ॥ समः सर्वेषु
भूतेषु प्रतपन्सूर्यवद्विभुः ॥ ६ ॥ तितिक्षत्यक्रमं वैन्य उपर्याक्रमतामपि ॥ भूतानां करुणः शश्वदार्तानां क्षितिवृत्तिमान् ॥ ७ ॥ देवेऽवर्षत्यसौ देवो

कलावतार तथा यशस्वी छन्, त्यस्ता हजुर राजा पृथुको कथामृतको आदर गर्दै मुनिहरूको प्रेरणा र उनकै उपदेशानुसार हामी हजुरको प्रशंसनीय गुणहरू विस्तार वर्णन गर्दछौं ॥३॥ धर्मको रक्षा गर्नमा सर्वश्रेष्ठ राजा पृथु प्रजालाई धर्ममा प्रवृत्त पारेर धर्म मर्यादाका रक्षक हुनेछन् र धर्म-विरोधीलाई दण्ड दिनेछन् ॥ ४ ॥ यी एक्लै बेला-बेलामा दुवै लोकको हित साधनदा निम्ति सृष्टि-रचना आदि कामका लागि भिन्न-भिन्न लोकपालको अंश आफ्नो शरीरमा धारण गर्नेछन् ॥ ५ ॥ सबै प्राणिहरू प्रति समान भाव राख्ने उनको आज्ञा उल्लंघन गर्नन्। तिनको अपराध पनि यी पृथ्वी सदृश क्षमाशील भएर सहन गर्नछन् ॥ ७ ॥ जब श्रीपानी नपर्नाले प्रजामा प्राणसङ्कटको बेला आएर उपस्थित हुनेछ तब यी

उदाहरण ( राजा र पसले )—वि० सं० १७८० मा भारतवर्षको पश्चिमी भागमा भयानक अकाल पऱ्यो। अन्न-वस्त्र विना जन-जीवन त्रस्त भयो। अर्को वर्ष पनि यस्तै रह्यो। असारको महीना बित्नलाग्यो। तर एक थोपा पनि पानी परेन। अब के गर्ने ? राजाले अनेक उपाय गरे। ठूला-ठूला सिद्ध तान्त्रिक, फकीर बाकिए, तर केही भएन। अनि थोडा सज्जन आएर राजासित भने—'राजन्! तिम्रो शहरमा थोडा बनियाँ बस्तछ। त्यसमा पानी पार्ने शक्ति छ।' अनि राजा स्वयं त्यसकहाँ गए र हठपूर्वक भने—'सेठजी! मेरो निम्ति नभए पनि प्रजाको निम्ति तिमीले पानी पार्नै पर्दछ।' बनियाँले भन्यो—'सेठजी! म त थोडा तुच्छ मनुष्य हुँ। मैले भनेर किन पानी पर्दछ ? हजुर कुनै सिद्धपुरुषकहाँ जानुहोस।' यसरी कुरा गर्दागर्दै बाह्र बज्यो। नाँगै टाउको र नाँगो खुट्टाले राजा बनियाँको दुकानमा सत्याग्रह गरेर बसिरहे। प्रजाको दुःखले ती व्याकुल

राजवेषधारी पृथु भगवान् इन्द्र बनेर अनायास उसको रक्षा गर्नेछन् ॥ ८ ॥ यी आफ्नो चन्द्रमा समान मनोहर मुसकान तथा आफ्नो प्रेमपूर्ण दृष्टिले सबैलाई सुखी पार्ने छन् ॥ ९ ॥ जो अव्यक्तशील छन्, उसको कार्यलाई कोही जान्न सक्तैन जसको बुद्धि अतिशय गम्भीर छ र जसको धन राम्ररी सुरक्षित रहन्छ, जो अनन्त माहात्म्य र गुणहरूको एक मात्र भण्डार हुन्, त्यस्ता धैर्यचित्त यी महाराज पृथु सबै प्रकारले वरुण झैं उदार हुनेछन् ॥१०॥ वेनरूपी शमी काष्ठबाट उत्पन्न यो पृथुरूपी अग्नि अतिशय दुर्धर्ष र दुःसह छ। यी सबैका समीप भएर पनि धेरै परवर्तीको भाँती रहनेछन् र कुनै प्रकारले पनि यिनको तिरस्कार हुन सक्तैन ॥ ११ ॥ सबै प्राणिहरूमा विद्यमान प्राणवायु झैं यी राजराजेश्वर आफ्ना दूतहरू द्वारा समस्त जीवहरूको बाहिर-भित्रका कर्मलाई हेर्दै साक्षी आत्माको सदृश उदासीन रहने छन् ॥ १२ ॥ यो सदा धर्ममार्गमा स्थित रहेर आफ्ना शत्रुका पुत्रलाई पनि दण्डको योग्य नभएमा

नरदेववपुर्हरिः ॥ कृच्छ्रप्राणाः प्रजा ह्येष रक्षिष्यत्यञ्जसेन्द्रवत् ॥ ८ ॥ आप्याययत्यसौ लोकं वदनामृतमूर्तिना ॥ सानुरागावलोकेन विशद्स्मितचारुणा ॥ ९ ॥ अव्यक्तवर्त्मैष निगूढकार्यो गम्भीरमेधा उपगुप्तवित्तः ॥ अनन्तमाहात्म्यगुणैकधामा पृथुः प्रचेता इव संवृतात्मा ॥ १० ॥ दुरासदो दुर्विषह आसन्नोऽपि विदूरवत् ॥ नैवाभिभवितुं शक्यो वेनारण्युत्थितोऽनलः ॥११॥ अन्तर्बहिश्च भूतानां पश्यन्कर्माणि चारणैः ॥ उदासीन इवाध्यक्षो वायुरात्मेव देहिनाम् ॥ १२ ॥ नादण्ड्यं दण्डयत्येष सुतमात्मद्विषामपि ॥ दण्डयत्यात्मजमपि दण्ड्यं धर्मपथे स्थितः ॥ १३ ॥ अस्याप्रतिहतं चक्रं पृथोरामानसाचलात् ॥ वर्तते भगवानर्को यावत्तपति गोगणैः ॥ १४ ॥ रञ्जयिष्यति यल्लोकमयमात्मविचेष्टितैः अथामुमाहू ॥ राजानं मनोरञ्जनकैः प्रजाः ॥१५॥ दृढव्रतः सत्यसंधो ब्रह्मण्यो वृद्धसेवकः ॥ शरण्यः सर्वभूतानां मानदो दीनवत्सलः ॥१६॥ मातृभक्तिः परस्त्रीषु पत्न्यामर्ध इवात्मनः ॥ प्रजासु पितृवत्स्निग्धः किङ्करो ब्रह्मवादिनाम् ॥१७॥ देहिनामात्मवत्प्रेष्ठः सुहृदां नन्दिवर्धनः ॥ मुक्तसङ्गप्रसङ्गोऽयं दण्डपाणिरसाधुषु ॥ १८ ॥ अयं तु साक्षाद्भगवांस्त्र्यधीशः कूटस्थ आत्मा कलयाऽवतीर्णः ॥ यस्मिन्नविद्यारचितं निरर्थकं पश्यन्ति नानात्वमपि प्रतीतम् ॥१९॥ अयं

दण्ड दिने छैनन् र दण्डको योग्य छ भने आफ्नै छोरोलाई पनि दण्ड नदिई रहने छैनन् ॥ १३ ॥ श्रीसूर्यनारायण मानस पर्वतबाट लिएर जति प्रदेशहरूमा आफ्नो प्रकाश फैलाउँछन् उति नै प्रदेशहरूमा यी महाराज पृथुको निष्कण्टक राज्य हुनेछ ॥१४॥ यी आफ्नो चेष्टाहरूले सबै लोकलाई आनन्दित पार्नेछन्। इनको मनोरंजनात्मक आचरणद्वारा नै प्रजा यिनलाई 'राजा' भन्ने गर्नेछन ॥१५॥ यी ठूला दृढव्रती सत्यपरायण, ब्राह्मणभक्त, गुरुका सेवक, शरणागत वत्सल, सबै प्राणीहरूमा मान-दाता र दीन जनमा कृपालु हुने छन् ॥१६॥ यी परस्त्रीलाई आमा समान ठानेर श्रद्धा गर्नेछन्, आफ्नी पत्नीलाई यी आधा अङ्गको सदृश ठान्नेछन्, प्रजामा पिताको समान यिनको प्रेम रहने छ र यी वेदवादीहरूका सेवक हुनेछन् ॥१७॥ यी सबै प्राणीलाई आफ्नो आत्मा समान प्रिय सुहृदहरूका आनन्दवर्धक असंग पुरुषका संग गर्न भएका तथा असाधुका लागि दण्डपाणि यमराज समान कठोर हुने छन्॥१८॥यी तीनै गुणका

---

लियो र बनियाँ बारम्बार त्यसलाई डाल्दै रह्यो। अब बनियाँले बुझ्यो—यो राजाले मलाई छाड्दैन, तब उसले तुला ( तराजु ) हातमा लियो र भगवान्को ध्यान गर्दै भन्यो—'हे परमात्मा! [illegible] तौलेको छैन भने पानी पार्नुहवस्!' त्यसले यति भन्नासाथ त्यसरी पानी पर्न थाल्यो। अनि राजा प्रसन्न भएर र बनियाँलाई नमस्कार गरेर आफ्नो दरबारमा गए।

अधिष्ठाता र निर्विकार साक्षात् भगवान् नै आफ्नो अंशले अवतरित छन् । पण्डितजन अज्ञानको वशीभूत भएर यिनमा विचित्ररूपले प्रतीत हुनेछ गतलाई मिथ्यारूपमा देख्दछन् ॥१९॥ उदयाचल पर्वतपर्यन्त समस्त भूमण्डलका रक्षक यी अद्वितीय वीर महाराज पृथु आफ्नो विजयी रथमा आरूढ भएर हातमा धनुष बाणलिएर सूर्यको समान समस्त भूमण्डलको प्रदक्षिणा गर्नेछन् ॥२०॥ यिनलाई तत्र-तत्र लोकपालहरुले सहित सबै राजा बलि अर्पण गर्नेछन् र यिनको सुयश गान गर्दै नारीहरू यिनलाई साक्षात् विष्णु भगवान ठान्नेछन् ॥२१॥ प्रजालाई जीविका दिने यी प्रजापालक राजाधिराज पृथु गोरूपधारिणी पृथ्वीलाई दुहुने छन् र इन्द्र झैं आफ्नो धनुको टुप्पाले लीलापूर्वक सबै पर्वतलाई चूर्ण पार्दै सम्पूर्ण पृथ्वीलाई समतल पार्ने छन् ॥२२॥ वनमा पुच्छर उचालेर डुल्ने सिंह झैं यी आफ्ना शत्रुहरूका लागि दुःसह आजगव अर्थात् भेडा र गोरूका सीङले बनेको धनुष टङ्कार गर्दै संग्रामको निमित्त पृथ्वीतलमा डुल्ने छन्, तब यिनका दुष्ट शत्रु सबै दिशा-विदिशामा लुक्नेछन् ॥२३॥ जहाँबाट सरस्वती नदी निस्केकी छन्, त्यहीं यिनी सय अश्वमेध यज्ञ गर्नेछन् । अन्तिम यज्ञको

भुवो मण्डलमोदयाद्रेर्गोप्तैकवीरो नरदेवनाथः ॥ आस्थाय जैत्रं रथमात्तचापः पर्यस्यते दक्षिणतो यथार्कः ॥ २० ॥ अस्मै नृपालाः किल तत्र तत्र बलिं हरिष्यन्ति सलोकपालाः ॥ मंस्यन्त एषां स्त्रिय आदिराजं चक्रायुधं तद्यश उद्धरन्त्यः ॥ २१ ॥ अयं महीं गां दुदुहेऽधिराजः प्रजापतिर्वृत्तिकरः प्रजानाम् ॥ यो लीलयाऽद्रीन्स्वशरासकोट्या भिन्दन्समां गामकरोद्यथेन्द्रः ॥ २२ ॥ विस्फूर्जयन्नाजगवं धनुः स्वयं यदाचरत्क्ष्मामविषह्यमाजौ ॥ तदा निलिल्युर्दिशि दिश्यसन्तो लाङ्गूलमुद्यम्य यथा मृगेन्द्रः ॥ २३ ॥ एषोऽश्वमेधान् शतमाजहार सरस्वती प्रादुरभावि यत्र ॥ अहार्षीद्यस्य हयं पुरन्दरः शतक्रतुश्चरमे वर्तमाने ॥ २४ ॥ एष स्वसद्मोपवने समेत्य सनत्कुमारं भगवन्तमेकम् ॥ आराध्य भक्त्या लभतामलं तज्ज्ञानं यतो ब्रह्म परं विदन्ति ॥ २५ ॥ तत्र तत्र गिरस्तास्ता इति विश्रुतविक्रमः ॥ श्रोष्यत्यात्माश्रिता गाथाः पृथुः पृथुपराक्रमः ॥ २६ ॥ दिशो विजित्याप्रतिरुद्धचक्रः स्वतेजसोत्पाटितलोकशल्यः ॥ सुरासुरेन्द्रैरुपगीयमानमहानुभावो भविता पतिर्भुवः ॥ २७ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे षोडशोऽध्यायः ॥ १६ ॥ मैत्रेय उवाच ॥ एवं स भगवान्वैन्यः ख्यापितो गुणकर्मभिः ॥ छन्दयामास तान्कामैः प्रतिपूज्याभिनन्द्य च ॥ १ ॥

अवसरमा शतक्रतु इन्द्र यिनको घोडा चोरेर भाग्नेछन् ॥२४॥ यी आफ्नो भवनको बगैंचामा भगवान् सनत्कुमार नामका मुनीश्वरसित भेट भएपछि भक्तिपूर्वक उनको आराधना गरेर त्यो निर्मल ज्ञान प्राप्त गर्नेछन्, जसले परब्रह्मको प्राप्ति हुने गर्दछ ॥२५॥ यस प्रकार यिनको पराक्रम सर्वत्र विख्यात हुनेछ । यी परम पराक्रमी महाराज पृथु जता-तता आफ्नो नै चरित्रसित सम्बन्ध राख्ने वचन सुन्न पाउनेछन् ॥२६॥ यस प्रकार असको शासनको कसैले विरोध गर्न सक्नेछैन, यस्ता राजा दशैंदिशाहरूमा जाने र आफ्नो तेजले सबै लोकको दुःखरूपी काँढालाई निकालेर पृथ्वीका अधिपति बन्ने छन् । अनि सबै देवता र दैत्य यिनका प्रभावको वर्णन गर्नेछन् ॥२७॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां षोडशोऽध्यायः ॥१६॥ (राजा पृथु पृथ्वीमाथि रिसाउनु र पृथ्वीद्वारा उनको स्तुति)–मैत्रेयजी भन्दछन्–हे विदुर ! यस प्रकार आफ्नो गुण कर्मको वर्णनले बन्दीजनद्वारा प्रशंसित भएपछि राजा पृथुले तिनको प्रशंसा गरे र उनलाई वस्त्राभूषणादि इच्छित वस्तु दिएर प्रसन्न पारे ॥१॥ यदि उनले ब्राह्मणादि चारै वर्ण, सेवक, मन्त्रीगण, पुरोहित-

हरू, पुरवासीहरू, देशका प्रजा, भिन्न-भिन्न व्यवसायी जन र मन्त्रिहरूको सत्कार गरे ॥२॥ विदुरले सोधे–हे भगवन् ! जुन पृथ्वीलाई महाराज पृथुले दुहेका थिए, तिनले अनेक रूप धारण गर्नमा समर्थ भए पनि गाईको नै रूप किन धारण गरिन् ? गाई दुहुने वेलामा बाछो को थियो र त्यसबाट उनले के दुहे ? ॥ ३ ॥ जुन पृथ्वीदेवी पहिले स्वभावतः अग्लो-होचो थिइन्, तिनलाई समतल कसरी पारे र इन्द्रले तिनको यज्ञको अश्व किन चोरे ? ॥ ४ ॥ हे ब्रह्मन् ! अन्तिम अवस्थामा ब्रह्मज्ञानी सनत्कुमारबाट ज्ञान प्राप्त गरेर ती राजर्षि कुन गतिमा पुगे ? ॥५॥ यो बाहेक जसले पृथुरूपले पृथिवीलाई दुहेका थिए, यस्ता कीर्तिमान् भगवान् कृष्णका त्यस पृथु अवतारसित सम्बन्ध र जो पवित्र चरित्र छन्, त्यो सबै मलाई सुनाउनु हवस्, किनकि म हजुर र भगवान् श्रीकृष्णको अनुरक्त भक्त हुँ ॥६॥७॥ यति कथा सुनाएर सूतजी भन्दछन्–यस प्रकार भगवान् वासुदेवको कथाको निम्ति विदुरसित प्रेरित भएर मैत्रेयजी उनको सह्नी गर्दै प्रसन्न मनले भन्दछन्—॥८॥ मैत्रेयले भने—हे प्रिय ! ब्राह्मणहरूले पृथुको राज्याभिषेक गरेर जब उनलाई राजा

ब्राह्मणप्रमुखान्वर्णान्भृत्यामात्यपुरोधसः ॥ पौराञ्जानपदान् श्रेणीः प्रकृतीः समपूजयत् ॥ २ ॥ विदुर उवाच ॥ कस्माद्दधार गोरूपं धरित्री बहुरू-
पिणी ॥ यां दुदोह पृथुस्तत्र को वत्सो दोहनं च किम् ॥ ३ ॥ प्रकृत्या विषमा देवी कृता तेन समा कथम् ॥ तस्य मेध्यं हयं देवः कस्य हेतोर-
पाहरत् ॥ ४ ॥ सनत्कुमाराद्भगवतो ब्रह्मन्ब्रह्मविदुत्तमात् ॥ लब्ध्वा ज्ञानं सविज्ञानं राजर्षिः कां गतिं गतः ॥ ५ ॥ यच्चान्यदपि कृष्णस्य भवा-
न्भगवतः प्रभोः ॥ श्रवःसुश्रवसः पुण्यं पूर्वदेहकथाश्रयम् ॥ ६ ॥ भक्ताय मेऽनुरक्ताय तव चाधोक्षजस्य च ॥ वक्तुमर्हसि योऽदुह्यद्वैन्यरूपेण गामि-
माम् ॥ ७ ॥ सूत उवाच ॥ चोदितो विदुरेणैवं वासुदेवकथां प्रति ॥ प्रशस्य तं प्रीतमना मैत्रेयः प्रत्यभाषत ॥ ८ ॥ मैत्रेय उवाच ॥ यदाऽभिषिक्तः
पृथुरङ्ग विप्रैरामन्त्रितो जनतायाश्च पालः ॥ प्रजा निरन्ने क्षितिपृष्ठ एत्य क्षुत्क्षामदेहाः पतिमभ्यवोचन् ॥ ९ ॥ वयं राजञ्जाठरेणाभितप्ता यथाऽग्निना
कोटरस्थेन वृक्षाः ॥ त्वामद्य याताः शरणं शरण्यं यः साधितो वृत्तिकरः पतिर्नः ॥ १० ॥ तन्नो भवानीहतु रातवेऽन्नं क्षुधार्दितानां नरदेवदेव ॥
यावन्न नंक्ष्यामह उज्झितोर्जा वार्ता पतिस्त्वं किल लोकपालः ॥ ११ ॥ मैत्रेय उवाच ॥ पृथुः प्रजानां करुणं निशम्य परिदेवितम् ॥ दीर्घं
दध्यौ कुरुश्रेष्ठ निमित्तं सोऽन्वपद्यत ॥ १२ ॥ इति व्यवसितो बुद्ध्या प्रगृहीतशरासनः ॥ संदधे विशिखं भूमेः क्रुद्धस्त्रिपुरहा यथा ॥ १३ ॥

बनाइदिए, तब पृथ्वी अन्नहीन हुन गएकीले भोकले दुर्बल शरीर भएका प्रजाहरू आएर महाराज पृथुसित निवेदन गरे–॥९॥ हे राजन् ! जस्तै आफ्नो कोटमा भएको अग्निले वृक्ष डढ्दछन्, त्यस्तै हामी आज आफ्नै जठराग्निले डढिरहेका छौं । हजुर हामीलाई जीविकादान दिने हाम्रा स्वामी र शरणागतका रक्षक हुनुहुन्छ । हामी हजुरको शरणमा आएका छौं ॥१०॥ हजुर सबै लोकका रक्षक हुनुहुन्छ र हामीलाई जीविका दिन सक्षम हुनुहुन्छ । अतः हे राजराजेश्वर ! हामी अन्नको अभावमा मर्नुभन्दा पहिल्यै हामी भोकालाई अन्नदान दिने यत्न गर्नुहोस् ॥११॥ मैत्रेयले भने–हे कुरुश्रेष्ठ ! प्रजाको यो करुण-क्रन्दन सुनेर राजा पृथुले निकै बेरसम्म विचार गरे, अनि उनलाई पृथ्वी अन्नहीन हुने कारण ज्ञात भयो ॥१२॥ आफ्नो बुद्धिले केही निश्चय गरेर उनले आफ्नो धनुष उचाले र त्रिपुरनाशक भगवान् शङ्कर जस्तै अत्यन्त क्रोधित भएर पृथ्वीलाई लक्ष्य गरेर आफ्नो धनुषमा बाण राखे ॥१३॥

यस प्रकार महाराज पृथुलाई शस्त्र लिएर तम्सिएका देखेर कम्पित पृथ्वी गाईको रूप धारण गरेर व्याधाको डरले भाग्नलागेकी हरिणी झैं ठूलो वेगले भागिन् ॥१४॥ यता राजा पृथु रिसले राता-राता आँखा पारेर धनुषमा बाण राखी जहाँ-जहाँ पृथ्वी भाग्दै गइन् उहीं-उहीं पछि दगुर्दै गए ॥ १५ ॥ दिशा-विदिशा स्वर्ग, भूमि तथा त्यसको माझमा पर्ने अन्तरिक्ष आदि लोकमा भाग्दै जाँदा पृथ्वीले सबै स्थानमा महाराज पृथु धनुष लिएर आफ्नो पछि-पछि आएका देखिन् ॥ १६ ॥ जस्तै मनुष्यलाई मृत्युबाट कसैले रक्षा गर्न सक्तैन, त्यस्तै सम्पूर्ण जगत्मा वेन-पुत्र महाराज पृथुबाट बचाउने कोही भेटिएन । अनि डरले दुःखित भई पृथ्वी फेरि पछाडि फर्किन् र राजा पृथुसित भनिन्—हे धर्मज्ञ ! हे शरणागतवत्सल राजन् ! हजुर मेरो रक्षा गर्नुहवस् हे प्रभो ! हजुरले त सबै प्राणीको रक्षा गर्ने भार बोक्नु भएको छ ॥ १७-१८ ॥ अनि म दुखिया र निरपराधिनीलाई किन मार्न खोज्नु हुन्छ ? यसको अतिरि हजुर ठूला धर्मज्ञ पनि कहिनु हुन्छ अनि म स्त्रीको वध कसरी गर्नुहुन्छ ? ॥ १९ ॥ यदि स्त्रीबाट कुनै अपराध भए पनि साधारण जन पनि तिनलाई मार्दैनन्, तब हे राजन् ! हजुर जस्तै

प्रवेपमाना धरणी निशाम्योदायुधं च तम् ॥ गौः सत्यपाद्रवद्भीता मृगीव मृगयुद्रुता ॥ १४ ॥ तामन्धावत्तद्वैन्यः कुपितोऽत्यरुणेक्षणः ॥ शरं धनुषि संधाय यत्र यत्र पलायते ॥ १५ ॥ सा दिशो विदिशो देवी रोदसी चान्तरं तयोः ॥ धावन्ती तत्र तत्रैनं ददर्शानूद्यतायुधम् ॥ १६ ॥ लोके नाविन्दत त्राणं वैन्यान्मृत्योरिव प्रजाः ॥ त्रस्ता तदा निववृते हृदयेन विदूयता ॥ १७ ॥ उवाच तं महाभागं धर्मज्ञापन्नवत्सल ॥ त्राहि मामपि भूतानां पालनेऽवस्थितो भवान् ॥१८॥ स त्वं जिघांससे कस्माद्दीनामकृतकिल्बिषाम् ॥ अहनिष्यत्कथं योषां धर्मज्ञ इति यो मतः ॥१९॥ प्रहरन्ति न वै स्त्रीषु कृतागः स्वपि जन्तवः ॥ किमुत त्वद्विधा राजन्करुणा दीनवत्सलाः ॥ २० ॥ मां विपाट्याजरां नावं यत्र विश्वं प्रतिष्ठितम् ॥ आत्मानं च प्रजाश्चेमाः कथमम्भसि धास्यसि ॥ २१ ॥ पृथुरुवाच ॥ वसुधे त्वां वधिष्यामि मच्छासनपराङ्मुखीम् ॥ भागं बर्हिषि या वृङ्क्ते न तनोपि च नो वसु ॥ २२ ॥ यवसं जग्ध्यनुदिनं नैव दोग्ध्यौधसं पयः ॥ तस्यामेवं हि दुष्टायां दण्डो नात्र न शस्यते ॥ २३ ॥ त्वं खल्वो-षधिबीजानि प्राक् सृष्टानि स्वयंभुवा ॥ न मुञ्चस्यात्मरुद्धानि मामवज्ञाय मन्दधीः ॥ २४ ॥ अमूषां क्षुत्परीतानामार्तानां परिदेवितम् ॥ शमयि-

दयालु र दीनवत्सल पुरुष त यस्तो कहिल्यै गर्न सक्तैनन् ॥२०॥ हे राजन् ! जसमा अखिल विश्व अडिएको छ, त्यस पृथ्वीरूपा म सुदृढ डुङ्गा नष्ट पारेर हजुर आफूलाई तथा सम्पूर्ण प्रजालाई जलमा कसरी अड्याउनु हुन्छ ? ॥२१॥ राजाले भने—हे पृथ्वी ! तैंले मेरो आज्ञा लंघन गरिस, तँ यज्ञमा भाग लिन्छेस्, तर त्यसको साटो हामीलाई अन्नरूपी धन प्रदान गर्दिनस् । अतः म अवश्य तेरो वध गर्दछु ॥२२॥ गाईरूपले तँ सदैव घाँस त खान्छेस किन्तु औषधरूप दूध दुहुन दिन्नस् । तँ जस्ती दुष्टालाई दण्ड दिनमा कुनै पनि अपराध छैन ॥२३॥ तेरो बुद्धि साह्रै मन्द छ । तैंले पूर्वकालमा ब्रह्माद्वारा निर्मित औषधि र बीजहरू आफूभित्र लुकाएकी छस् । मेरो केही पर्वाह नराखी ती तँ आफ्नो गर्भबाट निकिर्दैकी छैनस् ॥२४॥ अतएव अब म आफ्नो बाणले तँलाई छिन्न-भिन्न पारेर तेरो मेदाबाट यी क्षुधातुर तथा दीन प्रजाजनहरूको दुःख निवारण गर्दछु । जुन अधम जीव आफ्नै प्रशंसक हुन्छ र अन्यान्य

प्राणीहरू प्रति निर्दय व्यवहार गर्दछ त्यो पुरुष स्त्री वा नपुंसक कांही पनि किन नहोस् राजाहरूका निम्ति त्यसलाई मार्नु पनि नमारे समान नै मानिन्छ ॥ २५-२६॥ मायाले गोरूपधारिणी तँ अतिशय अभिमानिनी एवं मदोन्मत्तका टुका-टुका पारेर म आफ्नो योगबलले सारा प्रजाको रक्षा गर्दछु ॥ २७ ॥ यस प्रकार काल झैं अत्यन्त क्रोधमयी मूर्ति धारण गर्न भएका महाराज पृथुलाई प्रणाम गरेर थर-थर काम्दै हात जोरेर पृथ्वीले भनिन्—॥२८॥ पृथ्वी भन्दछिन्–जो आफ्नी मायाले विविध रूप धारण गर्न तथा आफ्नो स्वरूपानुभवले द्रव्य अर्थात् पञ्चभूत, क्रिया र कारक याने इन्द्रिय र इन्द्रियहरूका अधिष्ठाता देवता तरङ्ग द्वारा भ्रमरीलाई शान्त पारिदिने गर्दछन्, ती निर्गुण स्वरूप परमपुरुषलाई मेरो प्रणाम छ ॥२९॥ जुन जगद्रचयिता प्रभुले मलाई सबै स्थावर जङ्गम प्राणिहरूले बस्नका लागि रचेका हुन् र जसबाट यो समस्त गुणरूप विश्व उत्पन्न भएको छ, अब ती नै स्वाधीन भगवान् शस्त्र उचालेर मलाई मार्न उद्यत छन् भने अब म कसको शरणमा जाऊँ ? ॥ ३० ॥ जसले कल्पको आरम्भमा आफ्ना आश्रित आफ्नी अचिन्त्य मायाले चराचर जगत् रचेका

घ्यामि मद्बाणैर्भिन्नायास्तव मेदसा ॥ २५ ॥ पुमान्योषिदुत क्लीव आत्मसंभावनोऽधमः ॥ भूतेषु निरनुक्रोशो नृपाणां तद्वधोऽवधः ॥ २६ ॥ त्वां स्तब्धां दुर्मदां नीत्वा मायागां तिलशः शरैः ॥ आत्मयोगबलेनेमा धारयिष्याम्यहं प्रजाः ॥ २७ ॥ एवं मन्युमयीं मूर्तिं कृतान्तमिव बिभ्रतम् ॥ प्रणता प्राञ्जलिः प्राह मही संजातवेपथुः ॥ २८ ॥ धरोवाच ॥ नमः परस्मै पुरुषाय मायया विन्यस्तनानातनवेऽगुणात्मने ॥ नमः स्वरूपानुभवेन निर्धुतद्रव्यक्रियाकारकविभ्रमोर्मये ॥ २९ ॥ येनाहमात्मायतनं विनिर्मिता धात्रा यतोऽयं गुणसर्गसंग्रहः ॥ स एव मां हन्तुमुदायुधः स्वराडुपस्थितोऽन्यं शरणं कमाश्रये ॥३०॥ य एतदादावसृजच्चराचरं स्वमाययाऽऽत्माश्रययाऽवितर्क्यया ॥ तयैव सोऽयं किल गोप्तुमुद्यतः कथं नु मां धर्मपरो जिघांसति ॥ ३१ ॥ नूनं बतेशस्य समीहितं जनैस्तन्मायया दुर्जययाऽकृतात्मभिः ॥ न लक्ष्यते यस्त्वकरोदकारयद्योऽनेक एकः परतश्च ईश्वरः ॥ ३२ ॥ सर्गादि योऽस्यानुरुणद्धि शक्तिभिर्द्रव्यक्रियाकारकचेतनात्मभिः ॥ तस्मै समुन्नद्धनिरुद्धशक्तये नमः परस्मै पुरुषाय वेधसे ॥३३॥ स वै भवानात्मविनिर्मितं जगद्भूतेन्द्रियान्तःकरणात्मकं विभो ॥ संस्थापयिष्यन्नज मां रसातलादभ्युज्जहाराम्भस आदिसूकरः ॥ ३४ ॥ अपामुपस्थे मयि नाव्यवस्थिताः प्रजा भवानद्य रिरक्षिषुः किल ॥ स वीरमूर्तिः समभूद्धराधरो यो मां पयस्युग्रशरो जिघांससि ॥ ३५ ॥ नूनं जनैरी-

हुन् त्यही मायाद्वारा जो यसको पालन गर्न उद्यत छन् तिनै धर्मगोप्ता भगवान् मलाई मार्न किन कटिबद्ध भएका छन् ? ॥ ३१ ॥ जो एक भएर पनि अनेक, ब्रह्मादि ईश्वरका पनि ईश्वर छन्, तिनै भगवान्ले जुन-जुन चेष्टा गरे र गराएका छन्, जसको दृष्टि उनको मायाले ढाकिएको छ ती असंयमी जन उनलाई जान्न सक्तैनन् ॥३२॥ अतः जो पंचभूत, इन्द्रिय, इन्द्रियाधिष्ठाता देवता र बुद्धि आदि आफ्ना वा जगत्को उत्पत्ति, स्थिति र संहार गर्दछन्, यस्ता उत्पत्ति र संहार आदि परस्पर विरुद्ध शक्तिहरूले युक्त परमात्मालाई प्रणाम छ ॥३३॥ हे विभो, हे अज ! भूत, इन्द्रिय तथा अन्तःकरणरूपी जगत्को स्थितिका निम्ति नै हजुर आदिपुरुष रूप धरेर जलभित्र स्थित मलाई रसातलबाट बाहिर ल्याउनुभएथ्यो ॥ ३४ ॥ एक समय वाराहरूपले पृथ्वीलाई धारण गरेथे, तिनै अब पृथु भई आएका छन्। जलमा नौकारूपिणी मलाई पृथ्वीका प्रजाको रक्षाका निम्ति मैले दूध दिइन, यति मात्र अपराधमा हजुर

आफ्नो बाणले मलाई मार्न खोज्नुहुन्छ ?॥३५॥ जसको चित्तरूपी मार्ग हजुरको ईश्वरको मायाको प्रभावबाट मोहित छन्, ती हामीजस्ता तुच्छ जीव हजुरका लीला जान्न सक्तैनौं। अतएव वीरहरूका यशको विस्तार गर्न महाप्रभुलाई मेरो प्रणाम छ ॥३६॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां सप्तदशोऽध्यायः॥१७॥ (महाराजा पृथुद्वारा पृथिवीको दोहन ) मैत्रेयजी भन्दछन्—हे विदुर ! रिसले कम्पित अधर भएका राजा पृथुको यसप्रकार स्तुति गरेर पृथ्वीले भयभीत भई आफ्नो मन विचारपूर्वक रोकेर भनिन्– ॥१॥ 'हे राजन् ! हजुर आफ्नो रिस शान्त गर्नुहोस्, अनि मलाई अभय मिल्नेछ, साथै मेरो यो कुरा पनि सुन्नुहोस्—प्रत्येक बुद्धिमान पुरुष भमरा झैं सबै स्थानबाट केवल सार ग्रहण गर्दछ ॥२॥ तत्त्वदर्शी मुनिले इहलोक र परलोकको कल्याणार्थ अनेकौं उपाय झिके र तिनलाई काममा ल्याए ॥ ३ ॥ ती पूर्वदर्शित उपायहरूको जो पुरुष श्रद्धापूर्वक राम्ररी अवलम्बन

हितमीश्वराणामस्मद्विधैस्तद्गुणसर्गमायया ॥ न ज्ञायते मोहितचित्तवर्त्मभिस्तेभ्यो नमो वीरयशस्करेभ्यः ॥ ३६ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पृथुविजये धरित्रीनिग्रहो नाम सप्तदशोऽध्यायः ॥ १७ ॥ मैत्रेय उवाच ॥ इत्थं पृथुमभिष्टूय रुषा प्रस्फुरिताधरम् ॥ पुनराहावनिर्भीता संस्तभ्यात्मानमात्मना ॥ १ ॥ सन्नियच्छाभिभो मन्युं निबोध श्रावितं च मे ॥ सर्वतः सारमादत्ते यथा मधुकरो बुधः ॥ २ ॥ अस्मिँल्लोकेऽथवाऽमुष्मिन्मुनिभिस्तत्त्वदर्शिभिः ॥ दृष्टा योगाः प्रयुक्ताश्च पुंसां श्रेयःप्रसिद्धये ॥ ३ ॥ तानातिष्ठति यः सम्यगुपायान्पूर्वदर्शितान् ॥ अवरः श्रद्धयोपेत उपायाविन्दतेऽञ्जसा ॥ ४ ॥ताननादृत्य यो विद्वानर्थानारभते स्वयम् ॥ तस्य व्यभिचरन्त्यर्था आरब्धाश्च पुनः पुनः ॥ ५ ॥ पुरा सृष्टा ह्योषधयो ब्रह्मणा या विशांपते ॥ भुज्यमाना मया दृष्टा असद्भिरधृतव्रतैः ॥ ६ ॥ अपालिताऽनादृता च भवद्भिर्लोकपालकैः ॥ चोरीभूतेऽथ लोकेऽहं यज्ञार्थेऽग्रसमोषधीः ॥ ७ ॥ नूनं ता वीरुधः क्षीणा मयि कालेन भूयसा ॥ तत्र योगेन दृष्टेन भवानादातुमर्हति ॥ ८ ॥ वत्सं कल्पय मे

गर्दछ, त्यो निकै सरलताले इच्छित फल पाउँदछ ॥४॥ जो तार्किक पुरुष तिनको आदर नगरेर आफ्ना कल्पित उपायहरूको आश्रय लिएर ○दोषारोपण गर्दछ, त्यसका सबै प्रयत्न निष्फल हुन्छन् ॥५॥ हे राजन् ! पूर्वकालमा ब्रह्माजीले जो औषधिहरू रचेका थिए, मैले देखें–तिनलाई यम-नियमादि नियमको उल्लंघन गर्ने दुराचारी मनुष्य भोग्दैछन् ॥६॥ सबै लोकका रक्षक राजाहरूले मेरो पालन र आदर गर्न छाडिदिए, यसले आज सबैजना चोर जस्तै भइरहेका छन्। अतः यज्ञको रक्षाका लागिनै मैले ती औषधिहरूलाई उदरस्थ

○ दृष्टान्त ( आरोप )—एउटा महात्मा बाटोमा समाधि लगाएर बसेका थिए। बिहानको बेला एउटा चोर त्यतैबाट गयो। महात्मालाई देखेर त्यसले विचार्यो—'यो कुनै चोर हो। रातभरि चोरी गरेर थाकेर यहाँ बसेर विश्राम गर्दैछ। अहिले पुलिस आउँछ र यसलाई समातेर लैजान्छ। अब म छिटो भाग्छु!' यस्तो विचार गरेर ऊ भाग्यो। त्यसपछि एउटा जँड्याहा आयो। उसले विचार गर्यो– 'यो पनि रातभरि पिएर ढलेछ, किन्तु धेरै मात लागेर यहाँ बसेछ। असल भयो मैले अलि थोरै पिएछु नभए मेरो पनि यही गति हुने थियो!' यसपछि एउटा ढोंगी व्यक्ति आयो। महात्मालाई देखेर त्यसले विचार गर्यो—'हेर! यो कसरी कपटको समाधि लगाएर बसिरहेछ? बाटो हिँड्नेलाई उनको निम्ति कस्तो बखान गरिरहेको छ! यस्ता-यस्ता ठगहरूले सारा संसारै ढाकिसकेका छन्। अब यस्ताका सामुन्ने म जस्तो सज्जन मानिसलाई कसले सोधिरहन्छ!' त्यसपछि एउटा सात्त्विक मनुष्य त्यस साधुलाई देखेर त्यहीं छिन्न उभियो। उसले सोच्यो–धन्य हुन् यस्ता पुरुष जो मायालाई छलेर तथा संसारी सबै प्रपञ्च त्यागेर ब्रह्मानन्दको सुख लुटिरहेका छन्। यस्तो सोचेर ती महात्माको सेवामा लागेर ऊ स्वयं पनि धन्य धन्य पुग्यो।

गरेको थिएँ ॥७॥ धेरै समय अहारको अभाव हुनाले ती औषधिहरू मेरो उदरमा कहीं क्षीण भएका छन् । पूर्वाचार्यहरूले बताएका उपाय गरेर हजुर ती झिक्नुहवस् ॥८॥ हे सर्वप्राणी-प्रतिपालक ! यदि हजुरलाई सबै प्राणिको बल बढाउने अन्नको इच्छा भए हे वीर ! कसैलाई मेरो बाछो बनाउनोस्, त्यसको स्नेहले म दुग्धरूपबाट हजुरको इच्छित पदार्थहरू दिनमा समर्थ हुनसकूँ । फेरि त्यो दूध राख्नयोग्य पात्र र कुनै दुहने मानिस पनि खोज्नुहवस् ॥९॥१०॥ हे राजन् ! पहिले मलाई सम्म पार्नुहवस्, जसले इन्द्रले वर्षाएको जल वर्षाऋतु बितिसक्दा पनि सर्वत्र भरिएको रहन्छ, यसले हजुरको कल्याण हुनेछ' ॥ ११ ॥ यसरी पृथ्वीले भनेको प्रिय र हितकारी वचन मानेर राजा पृथुले स्वायम्भुव मनुलाई बाछो बनाए र आफ्नो हातरूपी पात्रमा उनले पृथ्वीरूपिणी गाईबाट सबै औषधिहरू दुहीलिए ॥१२॥ पृथुको समान अन्य सबै पण्डितजन पनि सबै स्थानबाट सारभाग लिन्छन् । अतएव पृथुले दुहिसकेपछि अरु सबैले पनि राजाद्वारा वशीभूत पारिएकी ती पृथ्वीलाई आ-आफ्नो इच्छानुसार दुहे ॥१३॥ हे साधुश्रेष्ठ ! ऋषिहरूले बृहस्पतिलाई बाछो बनाएर आफ्ना समस्त इन्द्रियरूपी पात्रमा

वीर येनाहं वत्सला तव ॥ धोक्ष्ये क्षीरमयान्कामाननुरूपं च दोहनम् ॥ ९ ॥ दोग्धारं च महाबाहो भूतानां भूतभावन ॥ अन्नमीप्सितमूर्जस्वद्भगवान्वाञ्छते यदि ॥१०॥ समां च कुरु मां राजन्देववृष्टं यथा पयः ॥ अपर्तावपि भद्रं ते उपावर्तेत मे विभो ॥ ११ ॥ इति प्रियं हितं वाक्यं भुव आदाय भूपतिः ॥ वत्सं कृत्वा मनुं पाणावदुहत्सकलौषधीः ॥ १२ ॥ तथाऽपरे च सर्वत्र सारमाददते बुधाः ॥ ततोऽन्ये च यथाकामं दुदुहुः पृथुभाविताम् ॥१३॥ ऋषयो दुदुहुर्देवीमिन्द्रियेष्वथ सत्तम ॥ वत्सं बृहस्पतिं कृत्वा पयश्छन्दोमयं शुचि ॥ १४ ॥ कृत्वा वत्सं सुरगणा इन्द्रं सोममदूदुहन् ॥ हिरण्मयेन पात्रेण वीर्यमोजो बलं पयः ॥१५॥ दैतेया दानवा वत्सं प्रह्लादमसुरर्षभम् ॥ विधायादू दुहन्क्षीरमयःपात्रे सुरासवम् ॥ १६ ॥ गन्धर्वाप्सरसोऽधुक्षन्पात्रे पद्ममये पयः ॥ वत्सं विश्वावसुं कृत्वा गान्धर्वं मधु सौभगम् ॥१७॥ वत्सेन पितरोऽर्यम्णा कव्यं क्षीरमधुक्षत ॥ आमपात्रे महाभागाः श्रद्धया श्राद्धदेवताः ॥ १८ ॥ प्रकल्प्य वत्सं कपिलं सिद्धाः संकल्पनामयीम् ॥ सिद्धिं नभसि विद्यां च ये च विद्याधरादयः ॥ १९ ॥ अन्ये च मायिनो मायामन्तर्धानाद्भुतात्मनाम् ॥ मयं प्रकल्प्य वत्सं ते दुदुहुर्धारणामयीम् ॥ २० ॥ यक्षरक्षांसि भूतानि पिशाचाः पिशिताशनाः ॥ भूतेशवत्सा दुदुहुः कपाले क्षतजासवम् ॥ २१ ॥ तथाऽहयो दन्दशूकाः सर्पा नागाश्च तक्षकम् ॥ विधाय वत्सं दुदुहुर्बिलपात्रे विषं पयः ॥ २२ ॥

वेदरूपी पवित्र दूध दुहे ॥१४॥ स्वर्गका देवताहरूले इन्द्रलाई बाछो सुवर्णमय पात्रमा अमृत, वीर्य अर्थात् मनोबल, ओज अर्थात् इन्द्रियबल र बल अर्थात् शारीरिक बलरूपी दूध दुहे ॥१५॥ दैत्य र दानवहरूले दैत्यपति प्रह्लादलाई बाछो बनाएर फलामको पात्रमा सुरा ( रक्सी ) र आसवरूपी दूध दुहे ॥१६॥ गन्धर्वगण र अप्सराहरूले विश्वावसुलाई बाछो तुल्याएर कमलरूपी पात्रमा गान सम्बन्धी मधुरता तथा सुन्दरतारूपी दूध दुहे ॥१७॥ श्राद्धका अधिकारी देवता महाभागपितृहरूले अर्यमारूपी बाछोद्वारा काँचो माटोको पात्रमा श्रद्धापूर्वक कव्यरूपी दूध दुहे ॥१८॥ सबै सिद्धगण र विद्याधरहरूले कपिलदेवलाई बाछो तुल्याएर आकाशरूपी पात्रमा अष्टसिद्धि आदि विद्याहरूलाई दुग्धरूपमा दुहे ॥१९॥ यसबाहेक अतिरिक्त अन्य मायावीहरूले मयदानवलाई बाछो तुल्याएर शरीरलाई अन्तर्धान गरेर विचित्र रूप धारण गर्न आदि धारणामयी विद्याहरूलाई दुहे ॥ २० ॥ यसै प्रकार सबै

यक्ष, राक्षस तथा भूत-पिशाच आदि मांसभक्षी प्राणीहरूले रुद्र भगवान्लाई बाछो तुल्याएर कपालरूपी पात्रमा रुधिररूपी दुध दुहे ॥२१॥ अहि ( फणा नहुने सर्प ), दन्दशूक ( बिच्छी आदि टोक्ने जीव ), सर्प ( फणा हुने सर्प ), र नागहरू ( कद्रुका सन्तान ) ले तक्षकलाई बाछो तुल्याएर प्वालरूपी पात्रमा विषरूपी दुध दुहे ॥ २२ ॥ यसै प्रकार सबै पशुहरूले नन्दीश्वरलाई बाछो बनाएर वनरूपी पात्रमा तृणरूपी दुध दुहे । ठूला-ठूला दाँत-दाह्रा हुने मांसभक्षी जीवहरूले सिंहलाई बाछो तुल्याएर आफ्नो देहरूपी पात्रमा क्रव्य ( काँचो मासु ) रूपी दुध दुहे । गरुडलाई बाछो बनाएर पक्षिहरूले चर ( कीट-पतङ्गादि ) र अचर (फलादि) पदार्थरूपी दुध दुहे ॥२३-२४॥ वृक्षहरूले वटवृक्षलाई बाछो बनाएर विविध प्रकारका रसरूपी दुध र पर्वतहरूले हिमालयलाई बाछो तुल्याएर आफ्ना शिखररूपी पात्रहरूमा गेरु आदि अनेक धातुरूपी दुध दुहे ॥ २५ ॥ यसै प्रकार सबै प्राणीहरूले आफूमध्ये जो ठूलो थियो उसैलाई बाछो बनाएर भिन्न-भिन्न पात्रहरूमा महाराज पृथुद्वारा वशीभूत तथा सबै कामनाहरू पूर्ण पार्ने पृथ्वीबाट आफ्नो मनोरथरूपी दुध दुहे । हे कुरुनन्दन । यस प्रकार

पशवो यवसं क्षीरं वत्सं कृत्वा च गोवृषम् ॥ अरण्यपात्रे चाधुक्षन्मृगेन्द्रेण च दंष्ट्रिणः ॥ २३ ॥ क्रव्यादाः प्राणिनः क्रव्यं दुदुहुः स्वे कलेवरे ॥ सुपर्णवत्सा विहगाश्चरं चाचरमेव च ॥ २४ ॥ वटवत्सा वनस्पतयः पृथग्रसमयं पयः ॥ गिरयो हिमवद्वत्सा नानाधातून्स्वसानुषु ॥ २५ ॥ सर्वे स्वमुख्यवत्सेन स्वे स्वे पात्रे पृथक् पयः ॥ सर्वकामदुघां पृथ्वीं दुदुहुः पृथुभाविताम् ॥ २६ ॥ एवं पृथ्वादयः पृथ्वीमन्नादाः स्वन्नमात्मनः ॥ दोहवत्सादिभेदेन क्षीरभेदं कुरूद्वह ॥ २७ ॥ ततो महीपतिः प्रीतः सर्वकामदुघां पृथुः ॥ दुहितृत्वे चकारेमां प्रेम्णा दुहितृवत्सलः ॥ २८ ॥ चूर्णयन्स्वधनुष्कोट्या गिरिकूटानि राजराट् ॥ भूमण्डलमिदं वैन्यः प्रायश्चक्रे समं विभुः ॥ २९ ॥ अथास्मिन्भगवान्वैन्यः प्रजानां वृत्तिदः पिता ॥ निवासान्कल्पयांचक्रे तत्र तत्र यथार्हतः ॥३०॥ ग्रामान्पुरः पत्तनानि दुर्गाणि विविधानि च ॥ घोषान्व्रजान्सशिबिरानाकरान्खेटखर्वटान् ॥ ३१ ॥ प्राक्पृथोरिह नैवैषा पुरग्रामादिकल्पना ॥ यथासुखं वसन्ति स्म तत्र तत्राकुतोभयाः ॥ ३२ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पृथुविजयेऽष्टादशोऽध्यायः ॥१८॥ मैत्रेय उवाच ॥ अथादीक्षत राजा तु हयमेधशतेन सः ॥ ब्रह्मावर्ते मनोः क्षेत्रे यत्र प्राची सरस्वती ॥ १ ॥ तदभि-

पृथु आदि अन्न-भक्षणशील प्राणीले दोहन-पात्र तथा बाछाहरूको विभिन्नताबाट आफ्आफ्ना अन्नरूप भिन्न-भिन्न दुध दुहे ॥ २६-२७॥ त्यसपछि कन्यावत्सल राजा पृथुले सन्तुष्ट भएर सबै कामना पूर्ण पार्ने पृथ्वीलाई आफ्नी छोरी ठाने ॥२८॥ त्यसपछि परम समर्थ महाराज पृथुले आफ्नू धनुको टुप्पाले सबै पर्वतलाई फोरेर सम्पूर्ण भूमण्डललाई समतल ( टम्म ) पारिदिए ॥२९॥ पिता जस्तै प्रजापालनलाई जीविका दिने भएका महाराज पृथुले पृथ्वीमा जता-तते ग्राम, पुर, नगर दुर्ग, भिल्लहरूले बस्ने योग्य स्थान, गोठ, छाउनी, खानहरू किसानका गाउँ र पर्वतका फेदीमा गाउँ बसालेर सबैलाई यथायोग्य निवासस्थान प्रदान गरे ॥३०॥३१॥ राजा पृथुभन्दा अघि यस भूमण्डलमा कहीं पनि पुर ग्रामादिको बस्ती थिएन । तसम्म सबै जना निर्भय भएर सुखपूर्वक जहाँ मन लाग्दथ्यो, उहीं बस्ने गर्दथे ॥३२॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां अष्टादशोऽध्यायः॥१८॥
( यज्ञको घोडा चोर्नाको कारण इन्द्रलाई मार्नको निम्ति राजा पृथु कटिबद्ध हुनु र ब्रह्माजीले सम्झाएपछि उनी यज्ञबाट विरत हुनु)—मैत्रेयजी भन्दछन्—हे विदुरजी ! त्यसपछि पूर्ववाहि

सरस्वती नदीको तटमा महाराज मनुको ब्रह्मावर्त क्षेत्रमा राजा पृथुले सय अश्वमेध यज्ञ गर्ने दीक्षा लिए ॥१॥ त्यस बखत आफ्नै अंशरूप महाराज पृथुको त्यो उद्योग देखेर इन्द्रलाई त्यो यज्ञ महोत्सव सह्य भएन ॥ २ ॥ त्यस यज्ञमा सबैका गुरु साक्षात् यज्ञपति विष्णु भगवान्—जसको कीर्ति गन्धर्व, मुनि तथा अप्सरागण गाउँछन्, ती ब्रह्मा तथा महादेव अनुचरहरू र लोकपाल सहित त्यहाँ पाल्नुभएको थियो ॥३॥४॥ अनेक सिद्ध, विद्याधर, दैत्य, दानव, नन्द, सुनन्द आदि भगवानका मुख्य-मुख्य पार्षद र भगवान्‌को सेवाका लागि उत्सुक रहने कपिल, नारद, दत्तात्रय तथा सनकादि योगेश्वर पनि त्यहाँ आएका थिए ॥ ५ ॥ ६ ॥ हे भारत ! त्यस यज्ञमा सामग्रीहरू दिने भएकी पृथिवीले कामधेनु गाईको रूप धारण गरेर राजा पृथुका कामनाहरू पूर्ण पारिन् ॥ ७ ॥ नदीहरू दूध, दही अन्न, गोरस आदि सबै रसहरू नदी झैं बगाएर ल्याउँथे । मधु चुहिरहेका अनेक ठूला-ठूला वृक्ष र थरि-थरिका फल-फूल उत्पन्न गरिरहेका थिए ॥ ८ ॥ त्यस यज्ञमा समुद्रले अनेकौं रत्नराशिहरू, पर्वतगणले चार थरिका अन्न तथा लोकपाल सहित सबै लोकले अनेक थरिका उपहार

प्रेत्य भगवान्कर्मातिशयमात्मनः ॥ शतक्रतुर्न ममृषे पृथोर्यज्ञमहोत्सवम् ॥ २ ॥ यत्र यज्ञपतिः साक्षाद्भगवान्हरिरीश्वरः ॥ अन्वभूयत सर्वात्मा सर्वलोकगुरुः प्रभुः ॥ ३ ॥ अन्वितो ब्रह्मशर्वाभ्यां लोकपालैः सहानुगैः ॥ उपगीयमानो गन्धर्वैर्मुनिभिश्चाप्सरोगणैः ॥ ४ ॥ सिद्धविद्याधरा दैत्या दानवा गुह्यकादयः ॥ सुनन्दनन्दप्रमुखाः पार्षदप्रवरा हरेः ॥ ५ ॥ कपिलो नारदो दत्तो योगेशाः सनकादयः ॥ तमन्वीयुर्भागवता ये च तत्से- वनोत्सुकाः ॥ ६ ॥ यत्र धर्मदुघा भूमिः सर्वकामदुघा सती ॥ दोग्धि स्माभीप्सितानर्थान्यजमानस्य भारत ॥७॥ ऊहुः सर्वरसान्नद्यः क्षीरदध्यन्नगो- रसान् ॥ तरवो भूरिवर्ष्माणः प्रासूयन्त मधुच्युतः ॥ ८ ॥ सिन्धवो रत्ननिकरान्गिरयोऽन्नं चतुर्विधम् ॥ उपायनमुपाजह्रुः सर्वे लोकाः सपालकाः ॥ ९ ॥ इति चाधोक्षजेशस्य पृथोस्तु परमोदयम् ॥ असूयन्भगवानिन्द्रः प्रतिघातमचीकरत् ॥ १० ॥ चरमेणाश्वमेधेन यजमाने यजुष्पतिम् ॥ वैन्ये यज्ञपशुं स्पर्धन्नपोवाह तिरोहितः ॥ ११ ॥ तमत्रिर्भगवानैक्षत्त्वरमाणं विहायसा ॥ आमुक्तमिव पाखण्डं योऽधर्मे धर्मविभ्रमः ॥ १२ ॥ अत्रिणा चोदितो हन्तुं पृथुपुत्रो महारथः ॥ अन्वधावत संक्रुद्धस्तिष्ठ तिष्ठेति चाब्रवीत् ॥ १३ ॥ तं तादृशाकृतिं वीक्ष्य मेने धर्मशरीरिणम् ॥ जटिलं भस्मना छन्नं तस्मै बाणं न मुञ्चति ॥ १४ ॥ वधान्निवृत्तं तं भूयो हन्तवेऽत्रिरचोदयत् ॥ जहि यज्ञहनं तात महेन्द्रं विबुधाधमम् ॥ १५ ॥ एवं

अर्पण गरेका थिए ॥ ९ ॥ यस प्रकार जसका स्वामी एकमात्र विष्णुभगवान् नै थिए, ती महाराज पृथुको त्यस्तो उत्कर्ष सहन नसकेर भगवान् इन्द्रले त्यसमा विघ्न पारिदिए ॥ १० ॥ जब महाराज पृथु आफ्नो अन्तिम ( सयौं ) यज्ञद्वारा भगवान् यज्ञपतिको आराधना गर्दै थिए, त्यसै बेला इन्द्र ईर्ष्यावश गुप्तरूपले तिनको यज्ञको घोडा चोरेर भागे ॥११॥ अनि अधर्ममा नै धर्मको भ्रम उत्पन्न पार्ने कवचको समान पाखण्ड वेश धारण गरेर आकाशमार्गबाट घोडा लिएर शीघ्रतापूर्वक भागिरहेका इन्द्रलाई भगवान् अत्रिले देखे ॥१२॥ अतः अत्रि मुनिको प्रेरणाले राजा पृथुको महारथी छोरो इन्द्रलाई मार्नको निम्ति अतिशय क्रोधपूर्वक दगुरे र 'एखी चोर !' यसो भन्दै ललकार्न लागे ॥ १३ ॥ तर इन्द्रले टाउकोका जटाजूट र शरीरमा भस्म धारण गरेको त्यो वेशलाई देखेर पृथु-पुत्रले तिनलाई धर्मात्मा पुरुष ठाने । अतएव तीमाथि उनले बाण प्रहार गरेनन् ॥ १४ ॥ यस प्रकार इन्द्रको वधबाट पराङ्मुख

पृथुका राजकुमारलाई अत्रि ऋषिले इन्द्रको वध गर्नका लागि प्रेरित गरे । तिनले भने—'हे वत्स ! यज्ञमा विघ्न पार्ने देवतामा अधम इन्द्रलाई तिमी अहिल्यै मारिहाल ॥१५॥ अनि मुनिले यस्तो भनेपछि सार्न्है रिसाई पृथु-कुमार आकाशमार्गबाट जान लागेका इन्द्रको पछि-पछि यस प्रकार दगुरे जसरी रावणको पछि-पछि जटायु दगुरेको थियो ॥ १६ ॥ तब सुरराज इन्द्र यज्ञको घोडा र त्यो वेषलाई त्यागेर उनको सामुन्ने नै अन्तर्धान भए र वीर पृथु-पुत्र यज्ञ-पशुलाई लिएर आफ्ना पिताको यज्ञ-शालामा फर्कर आए ॥१७॥ हे विदुरजी ! राजपुत्रको अद्भुत पराक्रम देखेर महर्षिहरूले उसको नाम 'विजिताश्व' राखे । हे विदुरजी ! अनि त्यहाँ घोर अन्धकार उत्पन्न गरेर इन्द्रले सुटुक्क चषालयुक्त यूपमा सुनको सिक्रीले बाँधिएको अश्व फेरि हरण गरे ॥१९॥ त्यसपछि अत्रि ऋषिले राजपुत्रलाई आकाशमार्गबाट शीघ्रतापूर्वक भाग्न लागेका इन्द्रलाई फेरि देखाए, तर उनले कपाल, खट्वाङ्ग लिएका इन्द्रको बाटोमा कुनै प्रकारको विघ्न पारेनन् ॥२०॥ अत्रि ऋषिले फेरि उचालेपछि राजपुत्रले सार्न्है रिसाएर उनलाई ताकेर बाण प्रहार गरे । यो परिस्थिति देखेर

वैन्यसुतः प्रोक्तस्त्वरमाणं विहायसा ॥ अन्वद्रवदभिक्रुद्धो रावणं गृध्रराडिव ॥ १६ ॥ सोऽश्वं रूपं च तद्धित्वा तस्मा अन्तर्हितः स्वराट् ॥ वीरः स्वपशुमादाय पितुर्यज्ञमुपेयिवान् ॥ १७ ॥ तत्तस्य चाद्भुतं कर्म विचक्ष्य परमर्षयः ॥ नामधेयं ददुस्तस्मै विजिताश्व इति प्रभो ॥ १८ ॥ उपसृज्य तमस्तीव्रं जहाराश्वं पुनर्हरिः ॥ चषालयूपतश्छन्नो हिरण्यरशनं विभुः ॥ १६ ॥ अत्रिः संदर्शयामास त्वरमाणं विहायसा ॥ कपालखट्वाङ्गधरं वीरो नैनमबाधत ॥ २० ॥ अत्रिणा चोदितस्तस्मै संदधे विशिखं रुषा ॥ सोऽश्वं रूपं च तद्धित्वा तस्थावन्तर्हितः स्वराट् ॥ २१ ॥ वीरश्चाश्वमुपादाय पितृयज्ञमथाव्रजत् ॥ तदवद्यं हरे रूपं जगृहुर्ज्ञानदुर्बलाः ॥२२॥ यानि रूपाणि जगृहे इन्द्रो हयजिहीर्षया ॥ तानि पापस्य खण्डानि लिङ्गं खण्डमिहोच्यते ॥२३॥ एवमिन्द्रे हरत्यश्वं वैन्ययज्ञजिघांसया ॥ तद्गृहीतविसृष्टेषु पाखण्डेषु मतिर्नृणाम् ॥२४॥ धर्म इत्युपधर्मेषु नग्नरक्तपटादिषु ॥ प्रायेण सज्जते भ्रान्त्या पेशलेषु च वाग्मिषु ॥२५॥ तदभिज्ञाय भगवान्पृथुः पृथुपराक्रमः ॥ इन्द्राय कुपितो बाणमादत्तोद्यतकार्मुकः ॥२६॥ तमृत्विजः शक्रवधाभिसंधितं विचक्ष्य दुष्प्रेक्ष्यमसह्यरंहसम् ॥ निवारयामासुरहो महामते न युज्यतेऽत्रान्यवधः प्रचोदितात् ॥ २७ ॥ वयं मरुत्व-

स्वाधीन देवता इन्द्र त्यो घोडा र त्यस रूपलाई त्यागेर त्यहाँबाट अन्तर्धान भए ॥२१॥ अनि वीर विजिताश्व घोडा लिएर पिताको यज्ञशालामा फर्कर आए र ज्ञान-दुर्बल व्यक्तिहरूले इन्द्रको त्यो निन्द्य कपट-वेषलाई स्वीकार गरिलिए ॥२२॥ यस प्रकार अश्व-हरणको इच्छाले इन्द्रले जुन-जुन रूप धारण गरेका थिए, ती सबै पापका खण्ड अर्थात् चिह्न पाखण्ड कहिए, किनकि संसारमा मानिसहरू खण्डलाई लिङ्ग अर्थात् चिह्न भन्दछन् ॥ २३ ॥ महाराज पृथुको यज्ञ नष्ट गर्नको निम्ति इन्द्रले जुन रूप बारम्बार ग्रहण गरेर त्यागिदिएका थिए, ती पाखण्डपूर्ण, देख्दा राम्रा र ठूला-ठूला कुरा गर्ने भएका नग्न (जैन) तथा रक्तपट (बौद्ध) आदि सम्प्रदायमा जुन केवल उपधर्म मात्र हुन्छ, भ्रमवश त्यही धर्म मानिन लाग्यो । यस्तो भावना भएपछि मनुष्यहरूको बुद्धि प्रायः चक्र (भुमरी) मा पर्दछ ॥२४॥२५॥ इन्द्रको यस कुटिलताको थाहा भएपछि अत्यन्त पराक्रमी भगवान् पृथुले अतिशय कुपित भएर आफ्नो धनुष बाण उचाले र इन्द्रलाई ताकेर छाड्नको निम्ति बाणको सन्धान गरे ॥२६॥ क्रोधावेशको कारण उसको रूपतिर हेर्न पनि असम्भव थियो, उसको पराक्रम शत्रुको

[illegible] अस्त्र थियो, ती राजा पृथुलाई इन्द्रको वध गर्नको निम्ति तत्पर देखेर ऋत्विजहरूले रोक्तै भने—'हे महामते ! यज्ञानुष्ठानको अवसरमा शास्त्रविहित यज्ञपशु बाहेक अरु कसैको वध गर्नु उचित हुँदैन ॥२७॥ अतः हे राजन् ! जो हजुरको सुयशले नै ईर्ष्यावश तेजहीन भइरहेको छ, हजुरको काममा विघ्न पार्न भएका शत्रु इन्द्रको हामी आफ्ना अमोघ मन्त्रहरू द्वारा आवाहन गरेर उसलाई बलपूर्वक अग्निमा भस्म गरिदिन्छौं' ॥२८॥ हे विदुरजी ! महाराज पृथुका ऋत्विजहरूले यस्तो सल्लाह गरेर क्रोधपूर्वक इन्द्रको आवाहन गर्दै र जब स्रुवा लिएर आहुति दिन तत्पर भए, तब ब्रह्माजीले त्यहाँ पुगेर उनलाई रोकिदिँदै भने–॥२९॥ 'हे ऋत्विज हो ! जसलाई तिमी यस यज्ञद्वारा मार्न खोजिरहेका छौ, त्यो यज्ञको नामक इन्द्र साक्षात् विष्णु भगवान्‌को स्वरूप हो । तिमी यज्ञद्वारा जसको पूजा गर्दछौ, ती सबै देवता उनैका अंग हुन् । अतएव तिमीले इन्द्रको वध गर्नु उचित होइन ॥ ३० ॥ हे विप्र हो ! हेर, राजा पृथुको यज्ञमा विघ्न उपस्थित गर्नका लागि इन्द्रले धर्मको उच्छेदन गर्न कस्तो ठूलो पाखण्ड फैलाएका छन् ॥३१॥ परम कीर्तिसम्पन्न महाराज पृथुको यो यज्ञ उनान्सय यज्ञहरूले नै समाप्त होस् ! फेरि उनले राजासित भने–'हे राजन् ! तिमी मोक्षधर्मका ज्ञाता छौ । अतः विधिपूर्वक गरिएका यति नै यज्ञले सन्तुष्ट हुनुहोस् ॥३२॥ तिमी तथा

न्तमिहार्थनाशनं ह्वयामहे त्वच्छ्रवसा हतत्विषम् ॥ अयातयामोपहवैरनन्तरं प्रसह्य राजन् जुहवाम तेऽहितम् ॥ २८ ॥ इत्यामन्त्र्य क्रतुपतिं विदुरास्यर्त्विजो रुषा ॥ स्रुग्घस्ताञ्जुह्वतोऽभ्येत्य स्वयम्भूः प्रत्यषेधत ॥ २९ ॥ न वध्यो भवतामिन्द्रो यद्यज्ञो भगवत्तनुः ॥ यं जिघांसथ यज्ञेन यस्येष्टास्तनवः सुराः ॥३०॥ तदिदं पश्यत महद्धर्मव्यतिकरं द्विजाः ॥ इन्द्रेणानुष्ठितं राज्ञः कर्मैतद्विजिघांसता ॥ ३१ ॥ पृथुकीर्तेः पृथोर्भूयात्तर्ह्येकोनशतक्रतुः ॥ अलं ते क्रतुभिः स्विष्टैर्यद्भवान्मोक्षधर्मवित् ॥३२॥ नैवात्मने महेन्द्राय रोषमाहर्तुमर्हसि ॥ उभावपि हि भद्रं त उत्तमश्लोकविग्रहौ ॥३३॥ माऽस्मिन्महाराज कृथाः स्म चिन्तां निशामयास्मद्वच आदृतात्मा ॥ यद्ध्यायतो दैवहतं नु कर्तुं मनोऽतिरुष्टं विशते तमोऽन्धम् ॥३४॥ क्रतुर्विरमतामेष देवेषु दुरवग्रहः ॥ धर्मव्यतिकरो यत्र पाखण्डैरिन्द्रनिर्मितैः ॥ ३५ ॥ एभिरिन्द्रोपसंसृष्टैः पाखण्डैर्हारिभिर्जनम् ॥ ह्रियमाणं विचक्ष्वैनं यस्ते यज्ञध्रुगश्वमुट् ॥ ३६ ॥ भवान्परित्रातुमिहावतीर्णो धर्मं जनानां समयानुरूपम् ॥ वेनापचारादवलुप्तमद्य तद्देहतो विष्णुकलाऽसि वैन्य ॥३७॥ स त्वं विमृश्यास्य

इन्द्र दुवै जना पवित्र-कीर्ति एवं भगवान् विष्णुका अवतार हौ । अतएव हे राजन् ! तिम्रो कल्याण होस्, तिमीले आफ्नै स्वरूप इन्द्रसित रिस गर्नु उचित होइन ॥३३॥ हे महाराज ! तिम्रो यो यज्ञ निर्विघ्न सम्पन्न हुन पाएन, यसको निम्ति तिमीले चिन्ता लिनु पर्दैन । तिमी आदरपूर्वक मैले भनेका कुरा मान । किनकि जुन पुरुष विधाताले बिगारेका कर्मलाई पूर्ण पार्ने विचार गर्दछ, त्यसको मन अत्यधिक क्रोधमा भरिएर मोहमा प्राप्त हुन जान्छ ॥३४॥ अतः तिमी यस यज्ञलाई स्वतः बन्द गरिदेऊ । यसको कारण इन्द्रले रचेका पाखण्डहरूले धर्म नष्ट भइरहेको छ । यदि तिमीले यज्ञ बन्द गरेनौ भने धर्मको ह्रास कुनै प्रकारले पनि रोकिने छैन, किनकि देवता सार्है दुराग्रही हुन्छन् ॥३५॥ हे राजन् ! यदि इन्द्र तिम्रो यज्ञसित द्रोह गर्दछ–जो घोडा चोर हो, तब जनतालाई मोहित पार्न उसले रचेका पाखण्डहरूले मानिसहरू मोहित भएका देख्नुहुनेछ ॥३६॥ हे वैन्य ! तिमी विष्णुका अंश हौ । तिमीले दुष्ट राजा वेनको दुराचारले धर्मलाई लुप्त हुनलागेको देखेर जनताका सामयिक धर्मको रक्षा गर्न वेनको नै शरीरबाट जन्म लिएका हौ ॥ २७ ॥ अतएव हे प्रजापते ! हे प्रभो !

तिमी आफ्नो यस अवतारको उद्देश्य बुझेर भृगुआदि विश्वको रचना गर्नमा समर्थ अन्य मुनीश्वरहरूका सङ्कल्प पूर्ण गर र अधर्म उत्पन्न पार्ने यो प्रचण्ड तथा पाखण्डमार्गरूपिणी इन्द्रका मायाको अन्त्य पार' ॥३८॥ मैत्रेयजी भन्नुहुन्छ—हे विदुर ! अखिल लोकका गुरु भगवान् ब्रह्माजीले यसरी उपदेश दिएपछि राजा पृथुले त्यस्तै गरे र इन्द्रसित सन्धि गरिदिए ॥३९॥ त्यस यज्ञको भाग प्राप्त गरेर प्रसन्न वरदायक देवताहरूले अवभृत स्नानबाट निवृत्त परम पराक्रमी महाराज पृथुलाई अभिलषित वर दिए ॥४०॥ हे विदुरजी ! जसको आशिर्वाद सदा सत्य हुँदै आएका छन्, ती ब्राह्मणहरूले पनि श्रद्धापूर्वक दक्षिणा र सत्कारले सन्तुष्ट भई आदिराजा पृथुलाई आशिर्वाद दिंदै भने– ॥४१॥ 'हे महाबाहो ! तिमी-द्वारा आमन्त्रित हामी पितृ, देवता, ऋषि र मनुष्यादि सबै लोकहरूलाई शुद्ध हृदयले मान दिई सत्कार गर्‍यौ' ॥४२॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां

भवं प्रजापते सङ्कल्पनं विश्वसृजां पिपीपृहि ॥ ऐन्द्रीं च मायामुपधर्ममातरं प्रचण्डपाखण्डपथं प्रभो जहि ॥३८॥ मैत्रेय उवाच ॥ इत्थं स लोकगुरुणा समादिष्टो विशां पतिः ॥ तथा च कृत्वा वात्सल्यं मघोनाऽपि च संदधे ॥ ३९ ॥ कृतावभृथस्नानाय पृथवे भूरिकर्मणे ॥ वरान्ददुस्ते वरदा ये तद्बर्हिषि तर्पिताः ॥ ४० ॥ विप्राः सत्याशिषस्तुष्टाः श्रद्धया लब्धदक्षिणाः ॥ आशिषो युयुजुः क्षत्तरादिराजाय सत्कृताः ॥ ४१ ॥ त्वयाऽऽहूता महाबाहो सर्व एव समागताः ॥ पूजिता दानमानाभ्यां पितृदेवर्षिमानवाः ॥ ४२ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे पृथुविजये एकोनविंशोऽध्यायः ॥ १९ ॥ मैत्रेय उवाच ॥ भगवानपि वैकुण्ठः साकं मघवता विभुः ॥ यज्ञैर्यज्ञपतिस्तुष्टो यज्ञभुक् तमभाषत ॥१॥ श्रीभगवानुवाच ॥ एष तेऽकारषीद्भङ्गं हयमेधशतस्य ह ॥ क्षमापयत आत्मानममुष्य क्षन्तुमर्हसि ॥ २ ॥ सुधियः साधवो लोके नरदेव नरोत्तमाः ॥ नाभिद्रुह्यन्ति भूतेभ्यो यर्हि नात्मा कलेवरम् ॥ ३ ॥ पुरुषा यदि मुह्यन्ति त्वादृशा देवमायया ॥ श्रम एव परं जातो दीर्घया वृद्धसेवया ॥ ४ ॥ अतः काममिमं विद्वानविद्याकामकर्मभिः ॥ आरब्ध इति नैवास्मिन्प्रतिबुद्धोऽनुषज्जते ॥ ५ ॥ असंसक्ताः शरीरेऽस्मिन्नमुनोत्पादिते गृहे ॥ अपत्ये

एकोनविंशोऽध्यायः ॥१९॥ (महाराज पृथुले विष्णुभगवान्को प्रत्यक्ष दर्शन पाउनु)—मैत्रेय भन्दछन्—हे विदुरजी ! त्यसपछि इन्द्रसहित यज्ञका भोक्ता एवं यज्ञपति भगवान् विष्णुले अतिशय प्रसन्न भएर राजा पृथुसित भन्नुभयो ॥१॥ भगवान् आज्ञाहुन्छ—हे राजन् ! इन्द्रले तिम्रो सयौं यज्ञ अपूर्ण पारिदिए, तर यस बखत ती दीन-हीन बनेर तिमीसितआफ्नो अपराध क्षमा गराउन खोज्दैछन्, अतः अब तिमी यिनलाई क्षमा गर ॥२॥ हे राजन् ! जो बुद्धिमान् र साधुस्वभावका श्रेष्ठ व्यक्ति हुन्छन्, ती संसारमा अन्य जीवसित द्रोह गर्दैनन् । किनकि यो दृश्यमान शरीरनै आत्मा होइन ॥३॥ यदि तिमी जस्ता व्यक्ति पनि देवमायाले मोहित हुन्छन् भने–भक्ष करं लाग्यो–धेरै दिनसम्म गरेको गुरुजनहरूको सेवाले पनि

○ उदाहरण—( चित्त शुद्धि चाहिन्छ )—बोटा बाहुन थोरै पढेको थियो । त्यो दिनहुँ गरेर शुद्ध चित्तले एक दिन गीता पाठ गरेर प्रभुको स्मरण गर्ने गर्दथ्यो, तर त्यसद्वारा गीताका शब्दको शुद्ध उच्चारण हुँदैनथ्यो । एक दिन विश्व-विख्यात भक्त गौराङ्गदेवले ती ब्राह्मणसित सोधे–'हे भाई ! तिमीलाई गीता-पाठबाट कुन धेरै आनन्द प्राप्त हुन्छ त्यसको कारण के हो ?' तिनले उत्तर दिए–'म जबसम्म श्रीमद्भगवद्गीता पाठ गर्दछु, त्यति बेर साक्षात् चतुर्भुजी श्रीकृष्ण भगवानलाई अर्जुनको रथमा बसेर उपदेश दिइरहेको देख्दछु । यसैले मलाई अपार आनन्द प्राप्त हुन्छ ।' गौराङ्गदेवले तिनलाई अंकमाल गरेर भने—'प्रभु श्रीकृष्णको प्यारी गीताको महत्व तिमीले नै बुझेका छौ । हे भाई ! जसको हृदय शुद्ध हुन्छ, त्यसको भाषा शुद्ध होस् वा अशुद्ध, भगवान्लाई त्यसको चासो हुन्न ।'

श्रममात्र फल मिल्दो ॥४॥ अतएव बुद्धिमान् पुरुष यस शरीरलाई अविद्या, वासना र कर्महरूको निमित्त मानेर यसमा आसक्त हुँदैनन् । यसरी जो जन विनाशशील शरीरमा आसक्त हुँदैनन्, ती यसबाट उत्पन्न घर, पुत्र तथा धनादिमा कुनै प्रकारको ममता कसरी गर्न सक्छन् ? ॥५॥६॥ यो आत्मा एक शुद्ध, स्वयंज्योति, निर्गुण, गुणहरूको आश्रय स्थल, सर्वव्यापक, आवरण-विहीन, सबैको साक्षी, अन्य आत्माले रहित एवं शरीरादि मिथ्या पदार्थहरूभन्दा उत्तम छ ॥ ७ ॥ जो आफूभित्र विद्यमान आत्मालाई जान्दछ, त्यो शरीरमै रहेर पनि आफ्नो अन्तरात्मारूपी 'म' स्थित रहनाले कहिल्यै त्यसका विकारहरूमा टाँसिँदैन ॥८॥ हे राजन् ! जो पुरुष निष्काम भई श्रद्धापूर्वक वर्णाश्रमधर्महरूद्वारा मेरो आराधना गर्दछ, त्यसको मन बिस्तार बिस्तार पवित्र हुन्छ ॥९॥ यसरी विषयादिबाट पृथक्, सम्यग्दर्शी, शुद्धचित्त पुरुष ममा स्थित रहने शान्तिलाई, जो ब्रह्मकैवल्यको प्राप्ति हो, त्यसलाई पाउँछ॥१०॥ जो पुरुष द्रव्य, ज्ञान, क्रिया र मनको साक्षी एवं सबैतिर उदासीन झैं रहने यस निर्विकार आत्मालाई जान्दछ, त्यही कल्याण प्राप्त गर्दछ ॥११॥ हे राजन् ! पञ्चमहाभूत, इन्द्रियहरू,

द्रविणे वापि कः कुर्यान्ममतां बुधः ॥ ६ ॥ एकः शुद्धः स्वयंज्योतिर्निर्गुणोऽसौ गुणाश्रयः ॥ सर्वगोऽनावृतः साक्षी निरात्माऽऽत्मनः परः ॥ ७ ॥
त एवं सन्तमात्मानमात्मस्थं वेद पूरुषः ॥ नाज्यते प्रकृतिस्थोऽपि तद्गुणैः स मयि स्थितः ॥ ८ ॥ यः स्वधर्मेण मां नित्यं निराशीः श्रद्धयाऽ-
न्वितः ॥ भजते शनकैस्तस्य मनो राजन्प्रसीदति ॥ ९ ॥ परित्यक्तगुणः सम्यग्दर्शनो विशदाशयः ॥ शान्तिं मे समवस्थानं ब्रह्म कैवल्यमश्नुते
॥ १० ॥ उदासीनमिवाध्यक्षं द्रव्यज्ञानक्रियात्मनाम् ॥ कूटस्थमिममात्मानं यो वेदाप्नोति शोभनम् ॥ ११ ॥ भिन्नस्य लिङ्गस्य गुणप्रवाहो
द्रव्यक्रियाकारकचेतनात्मनः ॥ दृष्टासु सम्पत्सु विपत्सु सूरयो न विक्रियन्ते मयि बद्धसौहृदाः ॥ १२ ॥ समः समानोत्तममध्यमाधमः सुखे च दुःखे
च जितेन्द्रियाशयः ॥ मयोपक्लृप्ताखिललोकसंयुतो विधत्स्व वीराखिललोकरक्षणम् ॥ १३ ॥ श्रेयः प्रजापालनमेव राज्ञो यत्साम्पराये सुकृता-
त्षष्ठमंशम् ॥ हर्ताऽन्यथा हृतपुण्यः प्रजानामरक्षिता करहारोऽघमत्ति ॥ १४ ॥ एवं द्विजाग्र्यानुमतानुवृत्तधर्मप्रधानोऽन्यतमोऽवितास्याः ॥ ह्रस्वेन
कालेन गृहोपयातान् द्रष्टासि सिद्धाननुरक्तलोकः ॥ १५ ॥ वरं च मत्कंचन मानवेन्द्र वृणीष्व तेऽहं गुणशीलयन्त्रितः ॥ नाहं मखैर्वै सुलभस्त-

इन्द्रियाभिमानी देवता र चेतन यी सबैबाट पृथक् र परिच्छिन्न लिङ्ग-शरीरमा नै गुणहरूका कार्य हुन्छन्, साक्षी आत्मामा गुणको वश पर्दैन । ममा दृढ प्रेम राख्ने भएका बुद्धिमान् पुरुष सुख-दुःखको प्राप्तिमा कुनै प्रकारको विकार भावमा प्राप्त हुँदैनन् ॥१२॥ अतः हे वीर ! तिमी उत्तम, मध्यम र अधम पुरुषमा समान भाव राखेर सुख-दुःखलाई समान ठान र इन्द्रिय तथा मनलाई जितेर मद्वारा उपस्थित गरिएका मन्त्रीहरू सित सबै लोकको रक्षा गर ॥१३॥ प्रत्येक राजाको कल्याण प्रजाको पालन गर्नमा नै छ, किनकि प्रजाका पालक राजा परलोकमा प्रजाका पुण्यको छैठौं भाग पाउँछन् र यदि त्यो प्रजाको रक्षा नगरेर केवल कर लिन्छ नै आफ्नू कर्तव्य मान्दछ भने त त्यसको जो भएको पुण्य पनि क्षीण भएर जान्छ । अन्त्यमा त्यसले प्रजाको पाप पनि भोग्नु पर्दछ ॥१४॥ यसरी तिमी यदि उत्तम ब्राह्मणहरूको सम्मति लिएर अनासक्त भावले आफ्नू प्रधान धर्म पालन गर्दै यो पृथ्वीको रक्षा गर्दछौ भने अल्पकालपछि नै आफ्नू घरमा आएका सिद्धहरूको दर्शन गर्नेछौ र सबै जना तिमीसित प्रसन्न रहनेछन् ॥ १५ ॥ हे नरेन्द्र ! तिम्रो गुण र शील देखेर म तिम्रो

अधीन भएको छु । तिमी मसित कुनै आफ्नो अभिलषित वर माग । म सदा समान भावले रहने पुरुषहरूलाई जति सजिलैसित प्राप्त हुन्छु, त्यस्तो कुनै तप वा योगले प्राप्त हुन्न' ॥१६॥ मैत्रेयजी भन्दछन्–हे विदुरजी ! ती सर्वलोकका गुरु भगवान्‌ले त्यस्तो भनेपछि जगद्विजयी महाराज पृथुले उनको आज्ञा शिरो धार्य गरे ॥१७॥ अनि आफ्नो केही नजाति कर्ममा लज्जित भएर आफ्नो चरणमा न्युरेका इन्द्रलाई प्रेमले आलिङ्गन गरेर उनले आफ्नू हृदयबाट सारा द्वेषभाव फालिदिए ॥१८॥ अनि महाराज पृथुद्वारा पूजित र छिन-छिनमा बढ्ने भक्तिभावले पृथुको हात समातेर पुनीत चरण-कमल हुने र साधुजनका सुहृद् कमलदल-लोचन विष्णु भगवान् त्यहाँबाट जान उद्यत भएर पनि पृथुमाथि कृपा गर्नका लागि अडिए र राजातिर दयामयी दृष्टिले हेर्द रहे, ती एकाएक जान सकेनन् ॥१९॥२०॥ आदिराजा पृथुले पनि नेत्रमा जल भरिनाले गर्दा भगवान्‌को दर्शन गर्न पाएनन् र कण्ठ गद्गद् हुनाले केही बोल्न पनि सकेनन् । ती उनका कमनीय तथा कान्ति सम्पन्न रूपलाई हृदयले आलिङ्गन गरेर हात जोरी चुपचाप उभिइरहे ॥२१॥

पोऽभियोगेन वा यत्समचित्तवर्ती ॥ १६ ॥ मैत्रेय उवाच ॥ स इत्थं लोकगुरुणा विष्वक्सेनेन विश्वजित् ॥ अनुशासित आदेशं शिरसा जगृहे हरेः ॥ १७ ॥ स्पृशन्तं पादयोः प्रेम्णा व्रीडितं स्वेन कर्मणा ॥ शतक्रतुं परिष्वज्य विद्वेषं विससर्ज ह ॥ १८ ॥ भगवानथ विश्वात्मा पृथुनोपहृतार्हणः ॥ समुज्जिहानया भक्त्या गृहीतचरणाम्बुजः ॥ १९ ॥ प्रस्थानाभिमुखोऽप्येनमनुग्रहविलम्बितः ॥ पश्यन्पद्मपलाशाक्षो न प्रतस्थे सुहृत्सताम् ॥२०॥ स आदिराजो रचिताञ्जलिर्हरिं विलोकितुं नाशकदश्रुलोचनः ॥ न किंचनोवाच स बाष्पविक्लवो हृदोपगुह्यामुमधादवस्थितः ॥२१॥ अथावमृज्याश्रुकला विलोकयन्नतृप्तदृग्गोचरमाह पूरुषम् ॥ पदा स्पृशन्तं क्षितिमंस उन्नते विन्यस्तहस्ताग्रमुरङ्गविद्विषः ॥ २२ ॥ पृथुरुवाच ॥ वरान्विभो त्वद्वरदेश्वराद्बुधः कथं वृणीते गुणविक्रियात्मनाम् ॥ ये नारकाणामपि सन्ति देहिनां तानीश कैवल्यपते वृणे न च ॥ २३ ॥ न कामये नाथ तदप्यहं क्वचिन्न यत्र युष्मच्चरणाम्बुजासवः ॥ महत्तमान्तर्हृदयान्मुखच्युतो विधत्स्व कर्णायुतमेव मे वरः ॥ २४ ॥ स उत्तमश्लोक महन्मुखच्युतो भवत्पदाम्भोजसुधाकणानिलः ॥ स्मृतिं पुनर्विस्मृततत्त्ववर्त्मनां कुयोगिनां नो वितरत्यलं वरैः ॥ २५ ॥ यशः शिवं सुश्रव आर्यसङ्गमे यदृच्छया

केही बेर पछि आफ्ना नेत्रका आँसु पुछेर र अतृप्त नयनका समक्ष विराजमान चरण कमलले पृथ्वीको स्पर्श गर्ने तथा आफ्नो हातको अग्रभाग गरुडको काँधमा राखेर उभिएका ती भगवान्‌तिर हेर्दै भन्नलागे—॥२२॥ राजा पृथुले भने–हे प्रभो ! हजुर वरदायक र ब्रह्मादि देवताका पनि देवता हुनुहुन्छ । कोही पनि विवेकशील पुरुष हजुरका गुणहरू विकाररूपी शरीरमा अभिमान राख्ने पुरुषले भोग्ने योग्य विषयहरूको, जो नारकीय जीवलाई पनि प्राप्त हुनसक्तछ कसरीमाग्ला ? अतः हे मोक्षाधिपते, ईश्वर ! म हजुरसित विषय भोग माग्दिन ॥२३॥ हे नाथ ! जहाँ महापुरुषका हृदयबाट बाहिर निःसृत हजुरको चरण-कमलको कीर्तिरूपी मकरन्द विद्यमान छैन, त्यस पदलाई म पाउने इच्छा राख्दिन । म त केवल यही नै चाहन्छु कि हजुर मलाई दस हजार कान दिनुहस् जसलेम सधैं हजुरका चरित्र सुनिरहूँ ॥२४॥ हे पुण्यकीर्तिमान् प्रभो ! महापुरुषहरूका मुखबाट निस्केका एवं हजुरका चरण-कमल-मकरन्दका कणले सुवासित वायु तत्त्वमार्गलाई बिर्सका पतित योगीहरूको पनि स्मृतिलाई पुनः जागृत पारिदिने गर्दछ । अतः हजुरका सुयश-सुधा-पानको अतिरिक्त मलाई कहीं

अर्को वर चाहिन्न ॥२५॥ हे सत्कीर्तिसम्पन्न प्रभो ! सबै प्रकारका सद्गुण प्राप्त गर्ने कामनाले, जो सुन्ने वरदान साक्षात् लक्ष्मीजीले मागेकी थिइन्, हजुरको यो मङ्गलमय सुयशलाई संयोगवश साधुसमाजमा एकपल्ट सुनेपछि पशुबाहेक अरु कुन यस्तो गुणग्राही पुरुष होला, जो उनीसित उदासीन रहन सक्ला ॥ २६ ॥ अतः म पनि लक्ष्मीजी झैं उत्सुक भएर सबै पुरुषहरूमा श्रेष्ठ हजुर सर्वगुणधाम भगवान्को भजन गर्दछु, तर मलाई यस कुराको भय छ कि यौटा पतिको होडबाजी गर्ने र एकमात्र हजुरका चरणमा लीन हामी दुवै अर्थात् लक्ष्मी र ममा परस्पर झगडा नहोओस् ॥२७॥ हे जगदीश ! जगज्जननी भगवती लक्ष्मीसित मेरो वैमनस्य नहोओस्, किनकि म पनि हजुरको सेवारूपी कर्म गर्ने इच्छुक छु, तर हजुर दीन जनमा दया गर्नुहुन्छ, यसैनिम्ति दीन जनका तुच्छ कर्म पनि धेरै ठूलो गरेर सम्झनु हुन्छ। आफ्नो स्वरूपमैं रमण गर्ने हजुरको लक्ष्मीजीसित पनि के लिनु-दिनु छ ॥२८॥ अतएव साधुपुरुष मायिक गुणका कार्यबाट अलग्ग भएर हजुरको भजन गर्दछन्। हे भगवन् ! हजुरका चरणको स्मरण गर्नुबाहेक साधु पुरुषको कुनै अन्य

चोपश्रृणोति ते सकृत् ॥ कथं गुणज्ञो विरमेद्विना पशुं श्रीर्यत्प्रवव्रे गुणसंग्रहेच्छया ॥ २६ ॥ अथो भजे त्वाऽखिलपूरुषोत्तमं गुणालयं पद्मकरेव लालसः ॥ अप्यावयोरेकपतिस्पृधोः कलिर्न स्यात्कृतत्वच्चरणैकतानयोः ॥ २७ ॥ जगज्जनन्यां जगदीश वैशसं स्यादेव यत्कर्मणि नः समाहितम् ॥ करोति फल्ग्वप्युरु दीनवत्सलः स्व एव धिष्ण्येऽभिरतस्य किं तया ॥ २८ ॥ भजन्त्यथ त्वामत एव साधवो व्युदस्य मायागुणविभ्रमोदयम् ॥ भवत्पदानुस्मरणादृते सतां निमित्तमन्यद्भगवन्न विद्महे ॥ २९ ॥ मन्ये गिरं ते जगतां विमोहिनीं वरं वृणीष्वेति भजन्तमात्थ यत् ॥ वाचा नु तन्त्या यदि ते जनोऽसितः कथं पुनः कर्म करोति मोहितः ॥ ३० ॥ त्वन्माययाऽद्धा जन ईश खंडितो यदन्यदाशास्त ऋतात्मनोऽबुधः ॥ यथाऽऽचरेद्बालहितं पिता स्वयं तथा त्वमेवार्हसि नः समीहितुम् ॥ ३१ ॥ मैत्रेय उवाच ॥ इत्यादिराजेन नुतः स विश्वदृक् तमाह राजन्मयि भक्तिरस्तु ते ॥ दिष्ट्येदृशी धीर्मयि ते कृता यया मायां मदीयां तरति स्म दुस्त्यजाम् ॥ ३२ ॥ तत्त्वं कुरु मयाऽऽदिष्टमप्रमत्तः प्रजापते ॥ मदादेशकरो लोकः सर्वत्राप्नोति शोभनम् ॥ ३३ ॥ मैत्रेय उवाच ॥ इति वैन्यस्य राजर्षेः प्रतिनन्द्यार्थवद्वचः ॥ पूजितोऽनुगृहीत्वैनं गन्तुं चक्रेऽच्युतो

प्रयोजन त मैले बुझ्न सकिन ॥२९॥ हे भगवन् ! म हजुरको भजन गर्दछु। हजुरले जो मसित भन्नुभयो–'वर माग' हजुरको त्यस वाणीलाई पनि म जगतलाई मोहित पार्ने भएको मान्दछु। यदि मानिस वेदवाणीरूपिणी डोरीले नबाँधिएका भए तो मोहवश कर्महरू नै किन गर्दथे ? ॥३०॥ हे ईश ! मानव स्वभावतः हजुरको मायाले मोहित रहन्छ। अतः त्यो मूढ आफ्नो प्रिय आत्मालाई छाडेर स्त्री पुत्रादिको ममतामा अल्झिन्छ। यसनिम्ति पिता जसरी आफ्नो पुत्रको कल्याण गर्दछ, त्यसै गरी हजुर पनि मेरो कल्याणार्थ प्रयत्न गर्नुहवस् ॥३१॥ मैत्रेयजी भन्दछन्–महाराज पृथुबाट यसरी वन्दित भएर सर्वसाक्षी भगवान्ले भन्नुभयो–'हे राजन् ! ममा निरन्तर तिम्रो भक्ति बनिरहोस्—यो वडो सौभाग्यको कुरा छ कि तिमीले ममा यस प्रकार आफ्नो चित्त लगाइदिएका छौ कि जसले पुरुष अनायास मेरी दुस्तर मायालाई पनि नाघिदिन्छ ॥ ३२ ॥ अतः हे प्रजापते ! अब तिमी सावधान मनले मेरो आज्ञा पालन गर। जो प्राणी मेरो आज्ञाको पालन गर्दछ, त्यसको सर्वत्र मंगल नै मंगल हुन्छ' ॥३३॥ मैत्रेयजी भन्दछन्–हे विदुरजी ! यस प्रकार महाराज पृथुका सार्थक वचनको आदर

गर्दै उनीबाट पूजित भएर भगवान् राजा पृथुमाथि अनुग्रह गरेर त्यहाँबाट जान तयार हुनुभयो ॥३४॥ त्यसपछि देवता, ऋषि, पितृ, गन्धर्व, सिद्ध,चारण, नाग, किन्नर, अप्सरा मनुष्य पक्षी आदि विविध प्रकारका जीव तथा भगवान्का पार्षद—यी सबै जना पृथुद्वारा भगवद्बुद्धिले वाणी, धन तथा हात जोर्ने आदि शिष्टाचारहरूले भक्तिपूर्वक पूजित भएर आफ्ना स्थानमा फर्केर गए ॥३५॥३६॥ विष्णु भगवान् पनि उस्तै– उपाध्यायहरू सहित राजर्षि पृथुको चित्त चोर्दै आफ्नो धाममा गए ॥ ३७ ॥ अनि महाराज पृथुले आफ्नो स्वरूप देखाएर अन्तर्धान भएका देवताहरूका पनि देवता अव्यक्त भगवान्लाई नमस्कार गरेर आफ्नो नगरको लागि प्रस्थान गरे ॥ ३८ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे नेपाली भाषाटीकायां विंशोऽध्यायः ॥२०॥ ( राजा पृथुद्वारा प्रजालाई उपदेश दिनु )— मैत्रेयजी भन्दछन्—हे विदुरजी ! महाराज पृथुको आगमनको उपलक्षमा सारा नगर जतातते मोतिका माला फूलका माला, रंगी-चंगी वस्त्र, सुवर्णमयी झालर तथा अत्यन्त सुगन्धित धूपादिले सुशोभित भइरहेको थियो ॥१॥ नगरका सबै गल्ली, चोक तथा सडक चन्दन र अगरुको जलले

मतिम् ॥ ३४ ॥ देवर्षिपितृगन्धर्वसिद्धचारणपन्नगाः ॥ किन्नराप्सरसो मर्त्याः खगा भूतान्यनेकशः ॥ ३५ ॥ यज्ञेश्वरधिया राज्ञा वाग्वित्ताञ्जलि-भक्तितः ॥ सभाजिता ययुः सर्वे वैकुण्ठानुगतास्ततः ॥ ३६ ॥ भगवानपि राजर्षेः सोपाध्यायस्य चाच्युतः ॥ हरन्निव मनोऽमुष्य स्वधाम प्रत्यपद्यत ॥ ३७ ॥ अदृष्टाय नमस्कृत्य नृपः संदर्शितात्मने ॥ अव्यक्ताय च देवानां देवाय स्वपुरं ययौ ॥ ३८ ॥ इति श्रीमद्भागवते महापुराणे चतुर्थस्कन्धे विंशोऽध्यायः ॥ २० ॥ मैत्रेय उवाच ॥ मौक्तिकैः कुसुमस्रग्भिर्दुकूलैः स्वर्णतोरणैः ॥ महासुरभिभिर्धूपैर्मण्डितं तत्र तत्र वै ॥ १ ॥ चन्दनागुरुतोयार्द्ररथ्याचत्वरमार्गवत् ॥ पुष्पाक्षतफलैस्तोक्मैर्लाजैरर्चिभिरर्चितम् ॥ २ ॥ सवृन्दैः कदलीस्तम्भैः पूगपोतैः परिष्कृतम् ॥ तरुपल्लवमालाभिः सर्वतः समलंकृतम् ॥ ३ ॥ प्रजास्तं दीपबलिभिः संभृताशेषमंगलैः ॥ अभीयुर्मृष्टकन्याश्च मृष्टकुण्डलमण्डिताः ॥ ४ ॥ शंखदुन्दुभिघोषेण ब्रह्मघोषेण चर्त्विजाम् ॥ विवेश भवनं वीरः स्तूयमानो गतस्मयः ॥ ५ ॥ पूजितैः पूजयामास तत्र तत्र महायशाः ॥ पौराञ्जानपदांस्तांस्तान्प्रीतः प्रियवरप्रदः ॥ ६ ॥ स एवमादीन्यनवद्यचेष्टितः कर्माणि भूयांसि महान्महत्तमः ॥ कुर्वन् शशासावनिमण्डलं यशः स्फीतं निधायारुरुहे परं पदम् ॥७॥ सूत उवाच ॥ तदादिराजस्य यशो विजृम्भितं गुणैरशेषैर्गुणवत्सभाजितम् ॥ क्षत्ता महाभागवतः सदस्पते कौषारविं प्राह गृणंत-

सिंचित थिए । सारा नगर जहाँ-तहाँ राखिएका फूल, अक्षता, फल, जौका अंकुर, लावा र बत्ती आदिले पूजित थिए ॥ २ ॥ त्यो ठाउँ-ठाउँमा राखेका फूल-फलयुक्त केराका खाँबा र सुपारीका वृक्षले सान्है राम्रा लागिरहेथे र चारैतिर आँप आदि वृक्षका कोमल पल्लवले बनाएका झालरले अलंकृत थिए ॥ ३ ॥ महाराज पृथु नगरमा आउनासाथ बत्ती, उपहार तथा अनेक थरिका मङ्गलमयी सामग्री लिएका प्रजा र मनोहर कुण्डलले शोभायमान कपोल हुने सुन्दर कन्याहरू उनको सामुन्ने आए ॥४॥ गर्वविहीन वीरवर राजा पृथु बन्दीजनबाट स्तुति-गान सुन्नासाथ शङ्ख दुन्दुभि आदि माङ्गलिक वाद्यहरूको ध्वनि, ऋत्विजादिको वेदघोषका साथै महलमा पसे ॥ ५ ॥ बाटोमा ठाउँ-ठाउँमा पुरवासी र देशवासीहरूद्वारा पूजित हुँदै परम यशस्वी पृथुले तिनलाई ठूलो प्रसन्नताले अभिलषित वर दिएर प्रसन्न पारे ॥६॥ पवित्र कर्म र महान् भन्दा पनि महान् महाराज पृथुले यसै गरी अनेक काम गर्दै यस भूमण्डलको

शासन गरे र अन्त्यमा आफ्नो पवित्र यश स्थापित गरेर परमपदगामी भए ॥ ७ ॥ सूतजी भन्दछन्–हे साधुप्रवर शौनक ! महाभगवद्भक्त विदुरजी राजा पृथुका समस्त गुणले युक्त, गुणवान् व्यक्तिहरूद्वारा प्रशंसित तथा विशाल यज्ञको वर्णन गर्ने भएका श्रीमैत्रेयको सत्कार गर्दै भन्दछन्–॥ ८ ॥ विदुरजीले भने–ब्राह्मणहरू द्वारा अभिषिक्त हुँदा राजा पृथुले सबै देवताहरूसित दर्शन भेटको सामग्री पाएका थिए र पाखुरामा वैष्णव-तेज धारण तीबाट पृथ्वीलाई दुहेका थिए ॥९॥ उनको त्यो पृथ्वी-दोहनरूपी पराक्रमको उच्छिष्ट भागले सबै राजा तथा लोकपाल सहित सबै लोक इच्छानुसार जीवन धारण गर्दछन्, ती महाराज पृथुका कीर्ति यस्तो कुन पाठो पुरुष छ, जो सुन्दैन ! अतः तपाईं तिनका पवित्र कर्महरूको अझ अरु वर्णन गर्नुहवस् ॥१०॥ मैत्रेयले भने-महाराज पृथु गङ्गा-यमुनाको मध्यवर्ती ( ब्रह्मावर्त ) देशमा बसेर आफ्ना पवित्र कर्महरू क्षयदर्पण गर्ने कामनाले प्रारब्धवश प्राप्त अनेक भोगहरू भोग्नलागे ॥११॥ ब्राह्मण-वंश तथा विष्णु भगवान् उनका कुलदेव थिए, ती मनुष्य बाहेक सातै द्वीपका माथि निष्कण्टक राज्य गर्दथे ॥ १२ ॥ हे साधुजनमा श्रेष्ठ ! एक समयको कुरा हो–महाराज पृथुले यौटा महासत्रको दीक्षा लिए । त्यस मौकामा त्यहाँ देवता, ब्रह्मर्षि तथा राजर्षिहरूको भेरै ठूलो समागम भयो ॥ १३ ॥ त्यस सभामा पूजनीय अभ्यागतहरूको

मर्चयन् ॥ ८ ॥ विदुर उवाच ॥ सोऽभिषिक्तः पृथुर्विप्रैर्लब्धाशेषसुरार्हणः ॥ बिभ्रत्स वैष्णवं तेजो बाह्वोर्याभ्यां दुदोह गाम् ॥ ९ ॥ को न्वस्य कीर्तिं न शृणोत्यभिज्ञो यद्विक्रमोच्छिष्टमशेषभूपाः ॥ लोकाः सपाला उपजीवन्ति काममद्यापि तन्मे वद कर्म शुद्धम् ॥१०॥ मैत्रेय उवाच ॥ गंगायमुनयोर्नद्योर· न्तरा क्षेत्रमावसन् ॥ आरब्धानेव बुभुजे भोगान्पुण्यजिहासया ॥ ११॥ सर्वत्रास्खलितादेशः सप्तद्वीपैकदण्डधृक् ॥ अन्यत्र ब्राह्मणकुलादन्यत्राच्युत· गोत्रतः ॥१२॥ एकदासीन्महासत्रदीक्षा तत्र दिवौकसाम्॥ समाजो ब्रह्मर्षीणां च राजर्षीणां च सत्तम ॥१३॥ तस्मिन्नर्हत्सु सर्वेषु स्वर्चितेषु यथार्हतः ॥ उत्थितः सदसो मध्ये ताराणामुडुराडिव ॥ १४ ॥ प्रांशुः पीनायतभुजो गौरः कञ्जारुणेक्षणः ॥ सुनासः सुमुखः सौम्यः पीनांसः सुद्विजस्मितः ॥१५॥ व्यूढवक्षा बृहच्छ्रोणिर्वलिवल्गुदलोदरः ॥ आवर्तनाभिरोजस्वी काञ्चनोरुरुदग्रपात् ॥ १६ ॥ सूक्ष्मवक्रासितस्निग्धमूर्धजः कम्बुकन्धरः ॥ महाधने दुकूलाग्र्ये परिधायोपवीय च ॥ १७ ॥ व्यञ्जिताशेषगात्रश्रीर्नियमे न्यस्तभूषणः ॥ कृष्णाजिनधरः श्रीमान्कुशपाणिः कृतोचितः ॥ १८ ॥ शिशि·

समुचित सत्कार गर्नका लागि महाराज पृथु त्यस सभामा तारागणका मध्यमा उदित चन्द्रमाको समान उठेर ठिङ्ग उभिए ॥ १४ ॥ तिनको शरीर अग्लो र बाहु स्थूल, विशाल थिए, उनको शरीरको वर्ण सुवर्ण झैं र नेत्र कमल समान अरुण वर्णका एवं विशाल थिए । तिनको नासिका सलक्क परेको र मुख मनोहर थियो, अतिशय सौम्य स्वरूप, अग्लो काँध र राम्रा मनोहर दाँत टम्म मिलेका थिए ॥१५॥ विशाल वक्षस्थल र कटिप्रदेश स्थूल थियो, उदर त्रिवली रेखाले सुन्दर देखिन्थ्यो । तिनको नाभि भुमरी झैं गहिरो थियो ! तिघ्रा सुवर्ण सदृश टल्कन्थे । खुट्टाका अग्रभाग (पंजा) उच्च थिए ॥१६॥ तिनका केश सूक्ष्म, बटारिएका, काला-काला र चम्किने थिए । तिनको ग्रीवा ( घाँटी ) शङ्ख झैं राम्रो थियो र ती दुइटा बहुमूल्य वस्त्रहरू यौटा लगाएका र अर्को ओढेका थिए ॥१७॥ यज्ञको दीक्षा लिएका हुनाले तिनको आफ्नो शरीरबाट सबै आभूषण झिकेर अलग्ग राखिदिएका थिए तापनि तिनको देहको [illegible] न्यून आएको थिएन । तिनले शरीरमा कृष्ण-मृगचर्म लगाएका थिए र हातमा कुशको मुठा थियो । यसरी सबै उचित कार्यहरू गर्न भएका राजा पृथु श्रीसम्पन्न देखिइ-